राम्रा-राम्रा वेष-भूषाले देवताहरू जस्तै सुन्दर र निर्निमेष देखिन्थे ॥२३॥ भगवान्‌का लीलाहरूको श्रवण गर्ने र उनका आश्रित भक्त पुरुष त देवताहरूको मनपर्ने र प्रिय स्वर्गको पनि इच्छा गर्दैनन् ॥ २४ ॥ किनकि आफ्नो हृदयमा मुक्तिदाता भगवान्‌को साक्षात्कार गर्ने व्यक्तिहरूलाई स्वर्ग के हो र ? सिद्ध पुरुषहरूका लागि पनि दुर्लभ भोग्य पदार्थहरू पनि आत्मानन्दबाट तिरस्कृत गरिनाले गर्दा हर्षित पार्न सक्तैनन् । हे राजन् ! ती महाराज अम्बरीषले यस प्रकार तपस्याले युक्त भक्तियोग तथा आफ्नो धर्मद्वारा भगवान्‌लाई प्रसन्न पार्दै बिस्तार बिस्तार सबै आसक्तिहरूलाई पर-पर सारिदिए ॥२५-२६॥ गृह, स्त्री, पुत्र, बन्धु, उत्तम हात्ती, रथ घोडा, पैदल सेना, रत्न, आभूषण तथा आयुध आदि सबै वस्तुहरू र दहिल्यै पनि समाप्त नहुने ढुकुटी-खजानाहरूमा उनले 'यी सबै मिथ्या हुन्' यस्तो भावना गरेका थिए ॥२७॥ महाराज अम्बरीषको अनन्य भक्तिभावले प्रसन्न भएर भगवान्‌ले उनलाई भक्तहरूका रक्षक र विरोधीहरूलाई भयदायक आफ्नो सुदर्शनचक्र दिइराख्नुभएको थियो ॥२८॥ एक समयको कुरा हो– राजा अम्बरीषले भगवान् कृष्णको उपासना गर्नका निमित्त

॥२३॥ स्वर्गो न प्रार्थितो यस्य मनुजैरमरप्रियः ॥ शृण्वद्भिरुपगायद्भिरुत्तमश्लोकचेष्टितम् ॥ २४ ॥ समर्द्धयन्ति तान्कामाः स्वाराज्यपरि भविताः ॥ दुर्लभा नापि सिद्धानां मुकुन्दं हृदि पश्यतः ॥२५॥ स इत्थं भक्तियोगेन तपोयुक्तेन पार्थिवः ॥ स्वधर्मेण हरिं प्रीणन्सङ्गान्सर्वाञ्छनैर्जहौ ॥२६॥ गृहेषु दारेषु सुतेषु बन्धुषु द्विपोत्तमस्यन्दनवाजिपत्तिषु ॥ अक्षय्यरत्नाभरणायुधादिष्वनन्तकोशेष्वकरोदसन्मतिम् ॥ २७ ॥ तस्मा अदाद्धरिश्चक्रं प्रत्यनीकभयावपम् ॥ एकान्तभक्तिभावेन प्रीतो भृत्याभिरक्षणम् ॥२८॥ आरिराधयिषुः कृष्णं महिष्या तुल्यशीलया ॥ युक्तः सांवत्सरं वीरो दधार द्वादशीव्रतम् ॥ २९ ॥ व्रतान्ते कार्तिके मासि त्रिरात्रं समुपोषितः ॥ स्नातः कदाचित्कालिन्द्यां हरिं मधुवनेऽर्चयत् ॥ ३० ॥ महाभिषेकविधिना सर्वोपस्करसम्पदा ॥ अभिषिच्याम्बराकल्पैर्गन्धमाल्यार्हणादिभिः ॥ ३१ ॥ तद्गतान्तरभावेन पूजयामास केशवम् ॥ ब्राह्मणांश्च महाभागान्सिद्धार्थानपि भक्तितः ॥ ३२ ॥ गवां रुक्मविषाणीनां रूप्याङ्घ्रीणां सुवाससाम् ॥ पयःशीलवयोरूपवत्सोपस्करसम्पदाम् ॥ ३३ ॥ प्राहिणोत्साधुविप्रेभ्यो गृहेषु न्यर्बुदानि षट् ॥ भोजयित्वा द्विजानग्रे स्वाद्वन्नं गुणवत्तमम् ॥ ३४ ॥ लब्धकामैस्त्वनुज्ञातः पारणायोपचक्रमे ॥ तस्य तर्ह्यतिथिः साक्षाद्दुर्वासा भगवानभूत् ॥ ३५ ॥ तमानर्चातिथिं भूपः प्रत्युत्थानासनार्हणैः ॥ ययाचेऽभ्यवहाराय पादमूलमुपागतः ॥ ३६ ॥ प्रति-

आफूजस्तै स्वभावकी रानी सहित एक वर्षसम्म एकादशीको व्रत गर्ने सङ्कल्प गरे ॥२९॥ व्रतको समाप्ति भएपछि कार्तिक महीनामा तीन रातसम्म उपवास गरेर उनले यमुनाजीमा स्नान र मधुवनमा भगवान् कृष्णचन्द्रको पूजा गरे ॥३०॥ त्यसपछि महाभिषेक विधिको अनुसार सामग्री र सम्पत्तिहरूद्वारा अभिषेक तथा वस्त्र, आभूषण, चन्दन, फूल-माला एवं पाद्य-अर्घ्यादिद्वारा, पूर्ण तन्मयभावले श्रीकेशव भगवान्‌को पूजन गरेर सबै प्रकारले सन्तुष्ट ब्राह्मणहरूलाई पनि ठूलो भक्तिभावले सत्कृत पारे ॥३१-३२॥ त्यस पछि ती द्विजश्रेष्ठहरूलाई अतिशय गुणहरूले युक्त स्वादिष्ट अन्न भोजन गराए । त्यसपछि जसका सींङ सुवर्णले, खुर चाँदीले मोरिएका थिए, उत्तम वस्त्रले सुसज्जित एवं दूध, शील, नवयौवन, रूप तथा वस्त्राभूषणले युक्त साठी करोड गाईहरू दान गरेर साधु ब्राह्मणहरूको घरघरै पठाइदिए ॥३३-३४॥ यस प्रकार आफ्ना अभिलषित पदार्थहरू पाएर जब ब्राह्मणहरूले आज्ञा दिए, तब अम्बरीषले पारण

500

गर्न तयारी गरे । त्यस्तै बेला भगवान् दुर्वासा राजाका अतिथि भई उपस्थित भए ॥ ३५ ॥ राजा अम्बरीषले अभ्युत्थान, आसन र पूजादि द्वारा अतिथिदेवको विधिवत् पूजा गरेर गरेर उनका चरणमा प्रणाम र भोजनको निम्ति प्रार्थना गर ॥३६॥ दुर्वासा उनको प्रार्थना स्वीकार गरेर आवश्यक कृत्यबाट निवृत्त हुनको निम्ति गए । यता परब्रह्म परमात्माको ध्यान गर्दै श्रीयमुनाजीको पवित्र जलमा अवगाहन (स्नान) गर्नलागे ॥३७॥ जब द्वादशी केवल आधा मुहूर्त मात्र शेष रह्यो तब धर्मज्ञ अम्बरीषले ठूलो धर्मसङ्कटमा परेर पारण गर्नको विषयमा विद्वान् ब्राह्मणहरूसित परामर्श गरे ॥३८॥ उनले भने–'हे विप्र हो ! ब्राह्मणलाई भोजन नगराई स्वयं खानु र द्वादशीको पारण नगर्नु–दुवै नै सान्है ठूला दोष हुन्छन् । अतः यस बखत जे गर्नाले कल्याण हुन्छ र मलाई पाप लाग्दैन, त्यो भन्नु हवस् ॥३९॥ हे ब्राह्मण हो ! केवल जल लिएर पिउनु भोजन गर्ने या नगर्ने दुवैको समान नै हुन्छ । यो श्रुतिहरूको भनाई छ । अतएव म केवल जलले पारण गरिरहेको छु' ॥ ४० ॥ हे कुरुश्रेष्ठ ! यस प्रकार विचार गरेर राजर्षि अम्बरीष केवल पिएर आफ्नो मनमा श्रीअच्युत

नन्द्य स तथाशां कर्तुमावश्यकं गतः ॥ निममज्ज बृहद्ध्यायन्कालिन्दीसलिले शुभे ॥ ३७ ॥ मुहूर्तार्धावशिष्टायां द्वादश्यां पारणं प्रति ॥ चिन्तयामास धर्मज्ञो द्विजैस्तद्धर्मसङ्कटे ॥ ३८ ॥ ब्राह्मणातिक्रमे दोषो द्वादश्यां यदपारणे ॥ यत्कृत्वा साधु मे भूयादधर्मो वा न मां स्पृशेत् ॥ ३९ ॥ अम्भसा केवलेनाथ करिष्ये व्रतपारणम् ॥ प्राहुरब्भक्षणं विप्रा ह्यशितं नाशितं च तत् ॥ ४० ॥ इत्यपः प्राश्य राजर्षिश्चिन्तयन्मनसाऽच्युतम् ॥ प्रत्याचष्ट कुरुश्रेष्ठ द्विजागमनमेव सः ॥ ४१ ॥ दुर्वासा यमुनाकूलात्कृतावश्यक आगतः ॥ राज्ञाऽभिनन्दितस्तस्य बुबुधे चेष्टितं धिया ॥ ४२ ॥ मन्युना प्रचलद्गात्रो भ्रुकुटीकुटिलाननः ॥ बुभुक्षितश्च सुतरां कृताञ्जलिमभाषत ॥४३॥ अहो अस्य नृशंसस्य श्रियोन्मत्तस्य पश्यत ॥ धर्मव्यतिक्रमं विष्णोरभक्तस्येशमानिनः ॥४४॥ यो मामतिथिमायातमातिथ्येन निमन्त्र्य च ॥ अदत्त्वा भुक्तवांस्तस्य सद्यस्ते दर्शये फलम् ॥ ४५ ॥ एवं ब्रुवाण उत्कृत्य जटां रोषविदीपितः ॥ तया स निर्ममे तस्मै कृत्यां कालानलोपमाम् ॥ ४६ ॥ तामापतन्तीं ज्वलतीमसिहस्तां तदा भुवम् ॥ वेपयन्तीं समुद्वीक्ष्य न चचाल पदान्नृपः ॥ ४७ ॥ प्राग्दिष्टो भृत्यरक्षायां पुरुषेण महात्मना ॥ ददाह कृत्यां तां चक्रः क्रुद्धाहिमिव पावकः ॥ ४८ ॥

भगवान्को चिन्तन गर्दै दुर्वासाको आगमनको प्रतीक्षा गर्नलागे ॥४१॥ त्यसै बखत दुर्वासा पनि सबै आवश्यक कर्मबाट निवृत्त भएर यमुना तटबाट फर्कर आए र राजा अम्बरीषले प्रणाम गर्नासाथ उनले आफ्नो बुद्धिबलले तिनका सबै चेष्टाहरू जाने ॥४२॥ त्यस बेला उनलाई बेसरी भोक लागेको थियो । अतः म नआउँदै राजाले पारण गरिसके भन्ने कुरा जानेर, उनको शरीर क्रोधले थर-थर काम्नलाग्यो र भृकुटी उचालिनाले उनको अनुहार विकराल भयो । हात जोरेर उभिएका राजा अम्बरीषसित भने–॥४३॥ अहो ! भगवद्भक्तिले रहित र आफूलाई समर्थ मान्ने यी धनका उन्मादी एवं क्रूर राजाका अन्याय त हेर ॥ ४४ ॥ यिनले अतिथिरूपमा आएको मलाई आतिथ्यभावले निम्ता दिएर भोजन नदिई नै भोजन गरिलिए । हेर, म शीघ्र नै तिमीलाई यसको फल चाख्न दिन्छु' ॥४५॥ यति भन्दै उनले रिसले प्रज्वलित भएर आफ्नो जटाको यौटा रौं उखेले र त्यसले राजा अम्बरीषलाई मार्नको निम्ति प्रलयाग्निको समान भीषण यौटी कृत्या उत्पन्न गरे ॥ ४६ ॥ ती जलजलाउँदी कृत्यालाई हातमा खड्ग लिई तथा पादप्रहारले पृथ्वी कम्पित पार्दै आफूतिर

आउन लागेको देखेर राजा अम्बरीष स्थानबाट अलिकति पनि हटेनन् ॥४७॥ तर भगवान् पुरुषोत्तम द्वारा भक्तको रक्षाका निम्ति पहिलेदेखि नै नियुक्त सुदर्शन चक्रले, अग्निले क्रोधित सर्पलाई भस्म पारे झैं त्यस कृत्यालाई पोलेर भस्म पारिदियो ॥४८॥ यस प्रकार आफ्नो प्रयास निष्फल तथा चक्रलाई आफूतिर आएको देखेर महर्षि दुर्वासा अत्यन्त भयभीत भएर प्राण रक्षाको निम्ति सबै दिशा-विदिशाहरूमा भाग्न लागे ॥४९॥ जसरी सर्पको पछि-पछि अग्लो-अग्लो दावानल दगुर्छ, त्यस्तै नै पछि-पछि भगवान्‌को सुदर्शन चक्र दगुर्न लाग्यो । यस प्रकार चक्र आफ्नो पछिलागेको देखेर दुर्वासाजी सुमेरु पर्वतको गुफामा लुक्नको विचारले भागे ॥ ५० ॥ ती मुनीश्वर दिशा, आकाश, पृथ्वी, अतल-वितल आदि सात भूविवर समुद्र लोकपाल समेत समस्त लोक र स्वर्गलोकसम्म पुगे । ती जहाँ-जहाँ पुगे त्यहीं-त्यहीं त्यो दुःसह सुदर्शन चक्रलाई आफ्नो पछि-पछि आएको देखे ॥५१॥ जब उनलाई कहीं कोही रक्षक भेटिएन, अनि भयभीत भावले कोही आश्रय खोज्दै देवाधिदेव ब्रह्माजीको नगीचै पुगेर भने–'हे विधाता ! हे आत्मयोने श्रीविष्णु भगवान्‌को यस तेजबाट हजुर

तदभिद्रवदुद्वीक्ष्य स्वप्रयासं च निष्फलम् ॥ दुर्वासा दुद्रुवे भीतो दिक्षु प्राणपरीप्सया ॥ ४९ ॥ तमन्वधावद्भगवद्रथाङ्गं दावाग्निरुद्धूतशिखो यथाऽहिम् ॥ तथाऽनुषक्तं मुनिरीक्षमाणो गुहां विविक्षुः प्रससार मेरोः ॥ ५० ॥ दिशो नभः क्ष्मां विवरान्समुद्राँल्लोकान्सपालाँस्त्रिदिवं गतः सः ॥ यतो यतो धावति तत्र तत्र सुदर्शनं दुष्प्रसहं ददर्श ॥ ५१ ॥ अलब्धनाथः स यदा कुतश्चित्संत्रस्तचित्तोऽरणमेषमाणः ॥ देवं विरिञ्चं समगाद्विधातस्त्राह्यात्मयोनेऽजिततेजसो माम् ॥ ५२ ॥ ब्रह्मोवाच ॥ स्थानं मदीयं सहविश्वमेतत्क्रीडावमाने द्विपरार्धसंज्ञे ॥ भ्रूभङ्गमात्रेण हि संदिधक्षोः कालात्मनो यस्य तिरोभविष्यति ॥५३॥ अहं भवो दक्षभृगुप्रधानाःप्रजेशभूतेशसुरेशमुख्याः ॥ सर्वे वयं यन्नियमं प्रपन्ना मूर्ध्न्यर्पितं लोकहितं वहामः ॥५४॥ प्रत्याख्यातो विरिञ्चेन विष्णुचक्रोपतापितः ॥ दुर्वासा शरणं यातः शर्वं कैलासवासिनम् ॥ ५५ ॥ श्रीरुद्र उवाच ॥ वयं न तात प्रभवाम भूम्नि यस्मिन्परेऽन्येऽप्यजजीवकोशाः ॥ भवन्ति काले न भवन्ति हीदृशाः सहस्रशो यत्र वयं भ्रमामः ॥ ५६ ॥ अहं सनत्कुमारश्च नारदो भगवानजः ॥ कपिलोऽपान्तरतमो देवलो धर्म आसुरिः ॥ ५७ ॥ मरीचिप्रमुखाश्चान्ये सिद्धेशाः पारदर्शिनः ॥ विदाम न वयं सर्वे यन्मायां माय-

मेरो रक्षा गर्नुहवस ॥५२॥ ब्रह्माजीले भने–द्विपरार्धसंज्ञक समयको समाप्ति भएपछि जब भगवान्‌को यस सृष्टिमयी लीलाको अन्त्य हुने बेला आउँछ, अनि सारा संसारलाई दग्ध पार्ने इच्छुक कालरूपी श्रीहरिको केवल भ्रूभङ्ग मात्रले समस्त विश्वसमेत मेरो यो स्थान पनि लुप्त हुनेछ ।५३॥ उसको नियममा बाँधिएर म, शिवजी, दक्ष तथा भृगु आदि सबै प्रजापति भूतेश्वर र देवेश्वर उनको आज्ञालाई शिरमा राखेर लोकहितमा संलग्न रहन्छौं, ती विष्णु भगवान्‌का भक्तसित द्रोह गर्ने प्राणीको रक्षा म गर्न सक्तिन ॥५४॥ यस प्रकार ब्रह्माजीले अस्वीकार गरिदिएपछि विष्णु भगवान्‌को चक्रले सन्तप्त दुर्वासा कैलास निवासी श्रीमहादेवको शरणमा पुगे ॥ ५५ ॥ श्रीमहादेवले आज्ञा भयो–हे तात ! जुन महाप्रभुमा हामी जस्ता हजारौं लोकपाल भौंतारी रहन्छन्, यस्ता-यस्ता अगणित ब्रह्माण्ड जुन परमात्मामा कालक्रमले कहिले उत्पन्न र कहिले विलीन हुँदैरहन्छन् उनको चक्रबाट रक्षा गर्ने मेरा कुनै प्रकारको सामर्थ्य छैन ॥५६॥ म सनत्कुमार, नारद, ब्रह्माजी, कपिलदेव, अपान्तरतम, देवल, धर्म, आसुरि ॥ ५७ ॥ तथा मरीचि आदि सर्वज्ञ सिद्धेश्वरगण—यी सबै उनको

मायाको मायाले नै आवृत्त रहनाले जान्न सक्तैनन् ॥५८॥ ती विश्वेश्वर भगवान्‌को यो शस्त्र हाम्रो निम्ति सर्वथा असह्य छ। अतः तिमी उनैको शरणमा जाऊ। ती श्रीहरि अवश्य तिम्रो मङ्गल गर्नेछन् ॥५९॥ सबैतिरबाट निराश भएर अन्त्यमा दुर्वासा भगवान्‌को वैकुण्ठ लोकमा गए, जहाँ लक्ष्मीपति विष्णु महारानी लक्ष्मीसित नित्य निवास गर्दछन्॥६०॥ वैकुण्ठमा पुगेर सुदर्शन चक्रको ज्वालाले सन्तप्त भएर थर-थर काम्दै भगवान्‌का चरणमा लम्पसार परे र उनको गुणगान गर्दै भन्न लागे–'हे अच्युत ! हे भक्तप्रिय ! हे प्रभो ! हे विश्वभावन ! म अपराधीको रक्षा गर्नुहवस् ॥ ६१ ॥ हे भगवन् ! हजुरको प्रभावले अनभिज्ञ हुनाले गर्दा मैले हजुरका प्रिय भक्तको ठूलो अपराध गरेको छु। हे विधाता !

याऽऽवृताः ॥ ५८ ॥ तस्य विश्वेश्वरस्येदं शस्त्रं दुर्विषहं हि नः ॥ तमेव शरणं याहि हरिस्ते शं विधास्यति ॥ ५९ ॥ ततो निराशो दुर्वासा पदं भगवतो ययौ ॥ वैकुण्ठाख्यं यदध्यास्ते श्रीनिवासः श्रिया सह ॥६०॥ संदह्यमानोऽजितशस्त्रवह्निना तत्पादमूले पतितः सवेपथुः ॥ आहाच्युतानन्त सदीप्सित प्रभो कृतागसं माऽव हि विश्वभावन ॥६१॥ अजानता ते परमानुभावं कृतं मयाघं भवतः प्रियाणाम् ॥ विधेहि तस्यापचितिं विधातर्मुच्येत यन्नाम्न्युदिते नारकोऽपि ॥ ६२ ॥ श्रीभगवानुवाच ॥ अहं भक्तपराधीनो ह्यस्वतन्त्र इव द्विज ॥ साधुभिर्ग्रस्तहृदयो भक्तैर्भक्तजनप्रियः ॥ ६३ ॥ नाहमात्मानमाशासे मद्भक्तैः साधुभिर्विना ॥ श्रियं चात्यन्तिकीं ब्रह्मन् येषां गतिरहं परा ॥ ६४ ॥ ये दारागारपुत्राप्तान्प्राणान्वित्तमिमं परम् ॥ हित्वा मां शरणं याताः कथं तांस्त्यक्तुमुत्सहे ॥ ६५ ॥ मयि निर्बद्धहृदयाः साधवः समदर्शनाः ॥ वशे कुर्वन्ति मां भक्त्या सत्स्त्रियः सत्पतिं यथा ॥ ६६ ॥ मत्सेवया प्रतीतं च सालोक्यादिचतुष्टयम् ॥ नेच्छन्ति सेवया पूर्णाः कुतोऽन्यत्कालविद्रुतम् ॥ ६७ ॥ साधवो हृदयं मह्यं

हजुर मलाई बचाउनोस्, किनकि हजुरको नामोच्चारण गरेर नारकी प्राणी पनि मुक्त हुन्छ' ॥ ६२ ॥ श्रीभगवान् भन्न लाग्नुभयो—'हे द्विज ! म अस्वतन्त्र झैं सदा भक्तका अधीन रहन्छु। साधु भक्तहरूले मेरो हृदयमा आफ्नो अधिकार गरिराखेका छन् र म पनि ती भक्तजनको सधैं नै प्रिय रहेर आएको छु ॥ ६३ ॥ हे ब्रह्मन् ! जसको एकमात्र परम आधार म नै छु। ती आफ्ना साधु-स्वभाव भक्तगणलाई र अनपायिनी लक्ष्मीको पनि इच्छा गर्दिन ॥ ६४ ॥ जो आफ्नी स्त्री, पुत्र, घर, परमप्रिय प्राण, धन, इहलोक तथा परलोक सबै छाडेर मेरो शरणा आइसकेका हुन्छन्, ती भक्तजनलाई म कसरी छाड्न सक्तछु ? ॥ ६५ ॥ जस्तै पतिव्रता नारी पतिलाई आफ्नो वशमा पारेर राख्न समर्थ हुन्छन्,

¤ दृष्टान्त ( गायन त ईश्वरको नै गरिन्छ )—एक दिन तानसेनको गानाले प्रसन्न भएर बादशाह अकबरले सोधे–'यति राम्रो गायन तिमीले कोसित सिक्यौ ?' तानसेनले उत्तर दिए 'आफ्ना गुरु बाबा हरिदाससित सिकें।' अकबरले भने—'हिजो उनीकहाँ जाऔं।' त्यसपछि अकबर तानसेनलाई लिएर आफ्ना खास मण्डलीसमेत लिएर हरिदासको घर पुगे। हरिदास दिव्य ईश्वर-भक्तिमा लीन रहन्थे। ती ईश्वरको भजन बाहेक अरू कुनै गाना गाउँदैनथे। बादशाहले हरिदाससित कुनै गाना सुनाउने प्रार्थना गरे। बादशाहको आग्रहले उनले धेरै सुन्दर भजन सुनाए। बादशाह धेरै प्रसन्न भए र उनको यथोचित सत्कार गरेर फर्किए। एक दिन कचहरीमा अकबरले तानसेन उसैले न सुनेको भजन गाउन भने। तानसेनले भजन गाए, तर बादशाहलाई उस दिनको जस्तो आनन्द आएन। अकबरले उनीसित सोधे–'उस दिन जस्तो आनन्द आज किन आएन ?' तानसेनले उत्तर दिए– म हजुरलाई प्रसन्न पार्नको निम्ति नै गाउँछु, तर हाम्रा गुरुजीले हजुरलाई खुशी पार्न गाएका होइनन्, उनले त बादशाहहरूका पनि बादशाहलाई प्रसन्न पार्नको निम्ति गाए। यसै कारण त्यो आनन्द देखिएको हो। वस्तुतः भजन त उहीं हो।' यो सुनेर बादशाह प्रसन्न भयो र त्यसै बेलादेखि ती हरिदासको सत्संगमा विशेष रहन लागे।

त्यस्तै नै जसले आफ्नो हृदय ममा लगाइदिएको छ, ती समदर्शी साधु पुरुष मलाई आफ्नो अधीन पारिरहने गर्दछन् ॥६६॥ मेरा अनन्य भक्त त मेरो सेवाले नै सन्तुष्ट रहेर त्यस सेवाको प्रभावले प्राप्त हुने सालोक्य, सारूप्य, सार्ष्टि तथा सायुज्य नामक चारै थरिका मुक्ति पनि खोज्दैनन् । अनि कालक्रमले नष्ट भएर जाने अन्यभोगहरूको कुरा किन हुन सक्छ? ॥६८॥ धर्तां कति भनौं, ती साधु पुरुष साक्षात् मेरा हृदय हुन् र म उनको हृदय हुँ, किनकी ती म बाहेक अरु कुनै वस्तुलाई पनि प्रिय मान्दैनन् र मलाई पनि ती बाहेक अरु कुनै वस्तु अलिकति पनि प्रिय लाग्दैन ॥६८॥ हे प्रिय ! सुन–म यौटा उपाय बताउँछु । जसमाथि अभिचार प्रयोग गरेको कारण तिमीलाई यो विपरीत फल प्राप्त भयो, तिमी उनै अम्बरीषकहाँ जाऊ, किनकि निरपराध साधु पुरुषमा प्रयुक्त तेज प्रयोक्ताको नै अमङ्गल गर्दछ ॥६९॥ तप तथा विद्या, यी दुवै ब्राह्मणहरूका कल्याणका कारण हुन्छन् । किन्तु तिनै अन्यायी ब्राह्मणलाई विपरीत फल दिन थाल्दछन् ॥७०॥ यस निम्ति हे ब्रह्मन् ! तिम्रो कल्याण होस् । तिमी राजा अम्बरीषकहाँ जाऊ र ती महाभागसित नै आफ्नो अपराध

साधूनां हृदयं त्वहम् ॥ मदन्यत्ते न जानन्ति नाहं तेभ्यो मनागपि ॥ ६८ ॥ उपायं कथयिष्यामि तव विप्र शृणुष्व तत् ॥ अयं ह्यात्माभिचारस्ते यतस्तं यातु वै भवान् ॥ साधुषु प्रहितं तेजः प्रहर्तुः कुरुतेऽशिवम् ॥ ६९ ॥ तपो विद्या च विप्राणां निःश्रेयसकरे उभे ॥ त एव दुर्विनीतस्य कल्पेते कर्तुरन्यथा ॥ ७० ॥ ब्रह्मंस्तद्गच्छ भद्रं ते नाभागतनयं नृपम् ॥ क्षमापय महाभागं ततः शान्तिर्भविष्यति ॥ ७१ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धेऽम्बरीषचरिते चतुर्थोऽध्यायः ॥ ४ ॥

श्रीशुक उवाच ॥ एवं भगवतादिष्टो दुर्वासाश्चक्रतापितः ॥ अम्बरीषमुपावृत्य तत्पादौ दुःखितोऽग्रहीत् ॥१॥ तस्य सोद्यमनं वीक्ष्य पादस्पर्शविलज्जितः ॥ अस्तावीत्तद्धरेरस्त्रं कृपया पीडितो भृशम् ॥२॥ अम्बरीष उवाच ॥ त्वमग्निर्भगवान् सूर्यस्त्वं सोमो ज्योतिषां पतिः ॥ त्वमापस्त्वं क्षितिर्व्योम वायुर्मात्रेन्द्रियाणि च ॥३॥ सुदर्शन नमस्तुभ्यं सहस्राराच्युतप्रिय ॥ सर्वास्त्रघातिन्विप्राय स्वस्ति भूया इडस्पते ॥४॥ त्वं धर्मस्त्वमृतं सत्यं त्वं यज्ञोऽखिलयज्ञभुक् ॥ त्वं लोकपालः सर्वात्मा त्वं तेजः पौरुषं परम् ॥५॥ नमः सुनाभाखिलधर्मसेतवे ह्यधर्मशीलासुरधूमकेतवे ॥ त्रैलोक्यगोपाय विशुद्ध-

क्षमा गराऊ । यसले अवश्य तिमीलाई शान्ति प्राप्त हुनेछ ॥७१॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ'कृत नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥४॥

( महर्षि दुर्वासाको कष्ट निवारण )—श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान्बाट यस्तो आज्ञा पाएर सुदर्शन चक्रले सन्तप्त दुर्वासा अम्बरीषकहाँ पुगे र अत्यन्त दुःखी भएर उनले तिनका पाउ समाते ॥१॥ दुर्वासाको यो चेष्टा देखेर, चरण स्पर्शले लज्जित राजा अम्बरीष करुणाले द्रवीभूत भएर भगवान्को त्यो अस्त्रको स्तुति गर्नलागे । राजा अम्बरीषले भने–हे सुदर्शन ! तिमी अग्नि हौ, तिमी भगवान् सूर्य हौ र तिमी नै नक्षत्रनाथ चन्द्रमा हौ । तिमी जल, पृथ्वी, आकाश, वायु, पञ्चतन्मात्रा र सम्पूर्ण इन्द्रिय हौ ॥२॥३॥ हे प्रभुका प्रिय एवं सहस्र धार हुने सुदर्शनचक्र ! तिमीलाई प्रणाम ! हे सर्वशस्त्र संहारक, पृथ्वीका रक्षक ! यी विप्रको कल्याण गर । तिमी धर्म, ऋत र सत्य हौ, तिमी यज्ञ र सम्पूर्ण यज्ञका फलभोक्ता यज्ञपुरुष हौ, तिमी लोकका रक्षक, सर्वस्वरूप, हौ । एकमात्र तिमी नै परमपुरुष नारायणका उत्कृष्ट तेज हौ ॥४॥५॥ हे सुनाभ ! तिमीम र्यादाका रक्षक, अधर्मी जनहरूलाई

पोल्नको निम्ति अग्निस्वरूप, त्रैलोक्यका रक्षक, विशुद्ध तेजोमय, मन झैं द्रुतगामी र अद्भुत कर्म गर्ने हौ । म तिम्रो स्तुति गर्दछु ॥६॥ हे वाणीका पति ! तिम्रा धर्ममय तजल अगणित महापुरुषहरूको अज्ञान नष्ट गरिदिएको छ र तिमीले सूर्यादिको तेजलाई धारण गरेका छौ । तिम्रो महिमाको पार पाउनु कठिन काम छ । यो कार्य-करणात्मक सारा संसार तिम्रो नै स्वरूप हो ॥७॥ हे अजित ! जब तिमी निरञ्जनदेव द्वारा प्रहार गरिएपछि दैत्य-दानव सेनामा प्रविष्ट हुन्छौ तब तिनको भुजा, उदर, ऊरु, चरण र ग्रीवा आदि काट्तै युद्धस्थलमा सान्है राम्रा देखिन्छौ ॥८॥ हे विश्वरक्षक ! तिमी युद्धमा शत्रुका प्रहार सहन सक्छौ । तो भगवान् गदाधरले दुष्टहरूको दमनका निम्ति नै तिमीलाई नियुक्त गरिराखेयाछ । अब तिमी हाम्रो कुलको भाग्योदय गर्नको निम्ति यी विप्रको कल्याण गर । हामीमाथि तिम्रो यो ठूलो कृपा हुनेछ ॥ ९ ॥ यदि मैले दान, यज्ञ तथा आफ्नो धर्मको राम्ररी पालन गरेको भए र यदि हाम्रो कुल सधैंदेखि ब्राह्मण-भक्त रहँदै आएको छ भने यी विप्रवर सबै तरहबाट दुःख-मुक्त होउन् ॥ १० ॥ यदि सबै प्राणीहरूमा परमेश्वरलाई आत्मास्वरूपले

वर्चसे मनोजवायाद्भुतकर्मणे गृणे ॥६॥ त्वत्तेजसा धर्ममयेन संहृतं तमः प्रकाशश्च धृतो महात्मनाम् ॥ दुरत्ययस्ते महिमा गिरां पते तद्रूपमेतत्सदसत्परावरम् ॥७॥ यदा विसृष्टस्त्वमनञ्जनेन वै बलं प्रविष्टोऽजित दैत्यदानवम् ॥ बाहूदरोर्वङ्घ्रिशिरोधराणि वृश्चन्नजस्रं प्रधने विराजसे ॥८॥ स त्वं जगत्त्राण खलप्रहाणये निरूपितः सर्वसहो गदाभृता ॥ विप्रस्य चास्मत्कुलदैवहेतवे विधेहि भद्रं तदनुग्रहो हि नः ॥९ । यद्यस्ति दत्तमिष्टं वा स्वधर्मो वा स्वनुष्ठितः ॥ कुलं नो विप्रदैवं चेद्द्विजो भवतु विज्वरः ॥१०॥ यदि नो भगवान्प्रीत एकः सर्वगुणाश्रयः ॥ सर्वभूतात्मभावेन द्विजो भवतु विज्वरः ॥ ११ ॥ श्रीशुक उवाच ॥ इति संस्तुवतो राज्ञो विष्णुचक्रं सुदर्शनम् ॥ अशाम्यत्सर्वतो विप्रं प्रदहद्राजयाच्ञया ॥ १२ ॥ स मुक्तोऽस्त्राग्नितापेन दुर्वासाः स्वस्तिमाँस्ततः ॥ प्रशशंस तमुर्वीशं तमुर्वीश युञ्जानः परमाशिषः ॥ १३ ॥ दुर्वासा उवाच ॥ अहो अनन्तदासानां महत्त्वं दृष्टमद्य मे ॥ कृतागसोऽपि यद्राजन्मङ्गलानि समीहसे ॥ १४ ॥ दुष्करः को नु साधूनां दुस्त्यजो वा महात्मनाम् ॥ यैः संगृहीतो भगवान्सात्वतामृषभो हरिः ॥ १५ ॥ यन्नामश्रुतिमात्रेण पुमान्भवति निर्मलः ॥ तस्य तीर्थपदः किं वा दासानामवशिष्यते ॥१६॥ राजन्ननुगृहीतोऽहं त्वयाऽतिकरुणात्मना ॥ मदघं पृष्ठतः कृत्वा प्राणा यन्मेऽभिरक्षिताः ॥ १७ ॥ राजा तमकृताहारः प्रत्यागमनकाङ्क्षया ॥ चरणावुपसंगृह्य प्रसाद्य समभोजयत् ॥ १८ ॥

स्थिर देख्नाले गर्दा सबै गुणहरूका आधारस्वरूप श्रीभगवान् ममाथि प्रसन्न छन् भने यी ब्राह्मण-देवता तुरुन्त क्लेश-मुक्त होउन् ॥११॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! यसरी राजा अम्बरीषले स्तुति गरेपछि महामुनि दुर्वासालाई चारैतिरबाट पोल्ने भगवान्को सुदर्शनचक्र शान्त भयो । त्यो भयावह शस्त्राग्निको तापले मुक्त र स्वस्थ चित्त दुर्वासा राजा अम्बरीषलाई आशीर्वाद दिँदै उनको धेरै-धेरै प्रशंसा गर्नलागे ॥१२॥१३॥ दुर्वासाले भने—अहो ! राजन् ! मैले भगवान् अनन्तका भक्तको महिमा देखें, किनकि मैले अपराध गर्दा पनि तिमी यसरी मेरो मङ्गल कामना गरिरहेका छौ ॥ १४ ॥ जसले भक्तका परम आराध्यदेव भगवान् हरिलाई बलले रुमातेको छ, ती साधु पुरुषका निम्ति के वस्तु दुष्कर, अप्राप्य हुन सक्छ ? ती महात्मा कुन वस्तु त्याग्न सक्दैनन् ? ॥ १५ ॥ जसको केवल हरिनाम-स्मरणले पुरुष निर्मल-हृदय भइजान्छ, ती तीर्थपाद भगवान्को निम्ति कुन यस्तो काम

-305

शेष रहन्छ ? ॥१६॥ हे राजन् ! परम कारुणिक-स्वभाव-सम्पन्न तिमीले मेरो अपराधमा दृष्टिपात नगरेर जुन मेरो प्राणको रक्षा गर्‍यौ, यसले म तिमी अत्यन्त अनुगृहीत छु ॥१७॥ त्यसपछि हे राजन् ! जो अहिलेसम्म दुर्वासा फर्कने प्रतीक्षामा निराहार बसिरहे, ती राजा अम्बरीषले उनको पाउ समातेर उनलाई प्रसन्न पारेर भोजन गराए ॥१८॥ ती दुर्वासाले राजा द्वारा सादर ल्याइएको सबै कामनाहरू पूर्ण पार्ने अन्न भोजन गरेर चित्तमा सन्तुष्ट भई राजा अम्बरीषसित आदरपूर्वक भने–'अब तिमी पनि गएर भोजन गर ॥ १९ ॥ हे राजन् ! तिमी ठूला भगवद्भक्त हौ, म तिम्रो अनुगृहीत भएर तिम्रो दर्शन, स्पर्श वार्तालाप र परमात्मामा मन लगाउने हुनाले आतिथ्यले प्रसन्न भएको छु ॥२०॥ तिम्रो यस पवित्र कर्मको स्वर्गका देवाङ्गनाहरू बारम्बार गान गर्नेछन् र यी पृथ्वी पनि तिम्रो परम पावन कीर्तिको बखान गर्नेछन् ।' ॥२१॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! यसरी परम प्रसन्न दुर्वासा र राजा अम्बरीषको गुण-कीर्तन गरेर र उनीसित आज्ञा लिई आकाशमार्गले ब्रह्मलोक गए, जुन केवल निष्काम कर्म द्वारा नै प्राप्त गर्न सकिन्छ–अन्यथा सकिन्न ॥२२॥

सोऽशित्वाऽऽहृतमानीतमातिथ्यं सार्वकामिकम् ॥ तृप्तात्मा नृपतिं प्राह भुज्यतामिति सादरम् ॥१९॥प्रीतोऽस्म्यनुगृहीतोऽस्मि तव भागवतस्य वै॥दर्शन-स्पर्शनालापैरातिथ्येनात्ममेधसा ॥२०॥कर्मावदातमेतत्ते गायन्ति स्वःस्त्रियो मुहुः ॥ कीर्तिं परमपुण्यां च कीर्तयिष्यति भूरियम् ॥२१॥ श्रीशुक उवाच ॥ एवं सङ्कीर्त्य राजानं दुर्वासाः परितोषितः ॥ ययौ विहायसाऽऽमन्त्र्य ब्रह्मलोकमहैतुकम् ॥२२॥ संवत्सरोऽत्यगात्तावद्यावता नागतो गतः ॥ मुनिस्तद्दर्शनाकाङ्क्षी राजाऽब्भक्षो बभूव ह ॥ २३ ॥ गते च दुर्वाससि सोऽम्बरीषो द्विजोपयोगातिपवित्रमाहरत् ॥ ऋषेर्विमोक्षं व्यसनं च बुद्ध्वा मेने स्ववीर्यं च परानुभावम् ॥२४॥ एवंविधानेकगुणः स राजा परात्मनि ब्रह्मणि वासुदेवे ॥ क्रियाकलापैः समुवाह भक्तिं यया विरिञ्चान्निरयाँश्चकार ॥ २५ ॥ अथाम्बरीषस्तनयेषु राज्यं समानशीलेषु विसृज्य धीरः ॥ वनं विवेशात्मनि वासुदेवे मनो दधद्ध्वस्तगुणप्रवाहः ॥२६॥ इत्येतत्पुण्यमाख्यानमम्बरीषस्य भूपतेः ॥ सङ्कीर्तयन्ननुध्यायन्भक्तो भगवतो भवेत् ॥ २७ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धेऽम्बरीषचरितं नाम पञ्चमोऽध्यायः ॥ ५ ॥

श्रीशुक उवाच ॥ विरूपः केतुमाञ्छम्भुरम्बरीषसुतास्त्रयः ॥ विरूपात्पृषदश्वोऽभूत्तत्पुत्रस्तु रथीतरः ॥ १ ॥ रथीतरस्याप्रजस्य भार्यायां

जबसम्म सुदर्शन चक्रको डरले भागेका दुर्वासा ऋषि फर्केर आएनन्, त्यतिमा एक वर्षको समय बितिसकेको थियो, तर उनको दर्शनाभिलाषी महाराज अम्बरीष तबसम्म केवल पानी पिएर बसे ॥२३॥ मुनिराज दुर्वासा गएपछि महाराज अम्बरीषले ब्राह्मणको भोजनबाट अवशिष्ट अतिशय पवित्र अन्न भोजन गरे र दुर्वासाको कष्ट र कष्ट निवृत्तिलाई देखेर उनले आफ्नो त्यस प्रभावलाई पनि परमात्माको प्रभाव नै माने ॥ २४ ॥ यस प्रकार ती अनेक गुण सम्पन्न राजाले विविध प्रकारका क्रियाकलापहरू द्वारा परब्रह्म भगवान् वासुदेवमा आफ्नो भक्तिभाव बढाए, जसले ती ब्रह्मलोकसमेत सबै भोगलाई नरक झैं हेय ठान्नलागे ॥ २५ ॥ केही समयपछि जितेन्द्रिय राजा अम्बरीष आफू जस्तै स्वभावका छोराहरूलाई आफ्नो राज्य दिएर वनमा गए र भगवान् वासुदेवमा मन लगाई गुणका प्रवाहरूपी संसार-बन्धनबाट सदाको निम्ति मुक्त भए ॥२६॥ हे राजन् ! राजा अम्बरीषको यो परम पवित्र आख्यान-को संकीर्तन तथा मनन गर्नाले प्राणी भगवान्को भक्त बन्दछ ॥२७॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायां पञ्चमोऽध्याय ॥ ५ ॥

( महाराज इक्ष्वाकुको वंश वृत्तान्त एवं मान्धाता र सौभरि ऋषिको चरित्र )—श्री शुकदेव भन्नुहुन्छ—हे राजन् ! राजा अम्बरीषका विरूप, केतुमान् र शम्भु नामक तीन पुत्र भए। विरूपबाट पृषदश्व र पृषदश्वका छोरा रथीतर भए ॥ १ ॥ रथीतरका कुनै सन्तान थिएनन् । अब सन्तानको निम्ति उनले प्रार्थना गरे, तब महर्षि अङ्गिराले प्रयत्न गरेपछि उनकी भार्याबाट अनेक ब्रह्मतेजयुक्त जन्मिए ॥ २ ॥ रथीतरकी भार्याको गर्भबाट उत्पन्न ती पुत्र आङ्गिरस कहिए र रथीतरका अन्य छोरोको अपेक्षा ती श्रेष्ठ थिए। ती सबै क्षत्रियकर्मले युक्त ब्राह्मण भए ॥३॥ हे राजन् ! एकपल्ट मनुलाई हाछिउँ आयो र तिनको नाकबाट इक्ष्वाकु नामका पुत्र जन्मे। उनका सय पुत्रहरूमा विकुक्षि, निमि र दण्डक—यी तीन सर्वश्रेष्ठ थिए ॥४॥ हे नृप ! ती भन्दा कांछा पचीस पुत्र आर्यावर्त देशको पूर्वीभाग र पचीस पश्चिमी भागका राजा भए। तीन जना जेठा छोरा मध्यभागका र शेष सैंतालीस इक्ष्वाकु-पुत्र दक्षिणादि अन्य देशका राजा भए ॥५। एक समय राजा इक्ष्वाकुले, जब अष्टका श्राद्ध हुने भएको थियो, तब आफ्नो जेठो छोरोलाई भने—'हे विकुक्षे ! तिमी शुद्ध श्राद्धको योग्य मासु

तन्तवेऽर्थिवः ॥ अङ्गिरा जनयामास ब्रह्मवर्चस्विनः सुतान् ॥ २ ॥ एते क्षेत्रे प्रसूता वै पुनस्त्वाङ्गिरसाः स्मृताः ॥ रथीतराणां प्रवराः क्षत्रोपेता द्विजातयः ॥ ३ ॥ क्षुवतस्तु मनोर्जज्ञे इक्ष्वाकुर्घ्राणतः सुतः ॥ तस्य पुत्रशतज्येष्ठा विकुक्षिनिमिदण्डकाः ॥ ४ ॥ तेषां पुरस्ताद-भवन्नार्यावर्ते नृपा नृप ॥ पञ्चविंशति पश्चाच्च त्रयो मध्ये परेऽन्यतः ॥ ५ ॥ स एकदाऽष्टकाश्राद्ध इक्ष्वाकुः सुतमादिशत् ॥ मांसमानीयतां मेध्यं विकुक्षे गच्छ मा चिरम् ॥ ६ ॥ तथेति स वनं गत्वा मृगान्हत्वा क्रियार्हणान् ॥ श्रान्तो बुभुक्षितो वीरः शशं चाददपस्मृतिः ॥ ७ ॥ शेषं निवेदयामास पित्रे तेन च तद्गुरुः ॥ चोदितः प्रोक्षणायाह दुष्टमेतदकर्मकम् ॥ ८ ॥ ज्ञात्वा पुत्रस्य तत्कर्म गुरुणाऽभिहितं नृपः ॥ देशान्निः-सारयामास सुतं त्यक्तविधिं रुषा ॥ ९ ॥ स तु विप्रेण संवादं जापकेन समाचरन् ॥ त्यक्त्वा कलेवरं योगी स तेनावाप यत्परम् ॥ १० ॥ पितर्युपरतेऽभ्येत्य विकुक्षिः पृथिवीमिमाम् ॥ शासदीजे हरिं यज्ञैः शशाद इति विश्रुतः ॥ ११ ॥ पुरञ्जयस्तस्य सुत इन्द्रवाह इतीरितः ॥ ककुत्स्थ इति चाप्युक्तः शृणु नामानि कर्मभिः ॥ १२ ॥ कृतान्त आसीत्समरो देवानां सह दानवैः ॥ पार्ष्णिग्राहो वृतो राजा देवैर्दैत्यपराजितैः ॥ १३ ॥

ल्याऊ-अबेर नगरे' ॥६॥ त्यसै अनुसार वीरवर विकुक्षि 'हुन्छ' भनेर वनमा गएर त्यहाँ श्राद्धयोग्य मृगहरूको वध गरेर वर्ता थकाई लागेपछि श्राद्धको निम्ति मारेका पशु खान हुँदैन यो कुरा बिर्सेर उनले यौटा खरायो मारेर खाए ॥७॥ शेष मासु ल्याएर उसले पितालाई सुम्पिदिए। अब पिता इक्ष्वाकुले त्यसको प्रोक्षण गर्नको निम्ति भने तब गुरु वशिष्ठले त्यसलाई दूषित तथा श्राद्धको निम्ति अयोग्य ठहराए ॥८॥ हे राजन् ! आफ्नो छोरोको त्यो कर्म जानेर गुरुको आज्ञानुसार इक्ष्वाकुले शास्त्रविधिको उल्लंघन गर्ने छोरो (विकुक्षि) लाई रिसले देशबाट निकालिदिए ॥ ९ ॥ त्यसपछि गुरु वसिष्ठसित तत्वज्ञानका विषयको कुरा गरेर र योगयुक्त भई इक्ष्वाकुले शरीर त्यागिदिए र आफ्नू तत्वनिष्ठाले परमपद पाए ॥१०॥ पिताको देहान्त भएपछि विकुक्षि फर्केर घर आए र यस पृथ्वीको शासन गर्नलागे र 'शशाद' नामले विख्यात भएर अनेक यज्ञद्वारा उनले श्रीहरिको उपासना गरे ॥११॥ तिनको छोरोको नाम पुरञ्जय थियो, जो 'इन्द्रवाह' नामले प्रख्यात भए, तिनै 'ककुत्स्थ' पनि कहलाए। हे राजन् ! जुन कर्मले उनलाई यो ज्ञान भयो, त्यो वृत्तान्त ॥ १२ ॥ सत्ययुगको अन्त्यमा

देवता र दानवहरूको घोर संग्राम भयो। त्यस युद्धमा दैत्यगणद्वारा पराजित देवताहरूले राजा पुरञ्जनलाई आफ्नो सहायतार्थ डाके॥१३॥ अनि वाहनरूपले वरण गरिएका देवराज इन्द्र अखिलात्मा देवदेव विष्णु भगवान्‌को आदेशले उनको निम्ति ठूलो गोरू बने ॥१४॥ त्यस बखत युद्धको निम्ति तत्पर महाराज पुरञ्जय परम पुरुष परमात्मा विष्णु भगवान्‌को तेजले अतिशय वृद्धिमा प्राप्त भए। उनले कवच धारण गरे, हातमा दिव्य धनुष र तीखा बाण लिएर र त्यस महावृषभमा आरूढ भई उसको ककुद (जुरो) मा बसे। अनि देवताहरू साथै उनले दैत्यहरूको नगरमा पश्चिमतिरबाट घेरिलिए ॥ १५ ॥ १६ ॥ त्यसपछि दैत्यहरूसित उनको घोर एवं रोमाञ्चकारी संग्राम भयो। त्यस युद्धस्थलमा जुन-जुन दैत्य उनलाई

वचनाद्देवदेवस्य विष्णोर्विश्वात्मनः प्रभोः ॥ वाहनत्वे वृतस्तस्य बभूवेन्द्रो महावृषः ॥१४॥ स सन्नद्धो धनुर्दिव्यमादाय विशिखान्शितान् ॥ स्तूयमानः समारुह्य युयुत्सुः ककुदि स्थितः ॥ १५ ॥ तेजसाप्यायितो विष्णोः पुरुषस्य परात्मनः ॥ प्रतीच्यां दिशि दैत्यानां न्यरुणत्त्रिदशैः पुरम् ॥ १६ ॥ तैस्तस्य चाभूत्प्रधनं तुमुलं लोमहर्षणम् ॥ यमाय भल्लैरनयद्दैत्यान् येऽभिययुर्मृधे ॥ १७ ॥ तदिषुपाताभिमुखं युगान्ताग्निमिवोल्बणम् ॥ विसृज्य दुद्रुवुर्दैत्या हन्यमानाः स्वमालयम् ॥ १८ ॥ जित्वा पुरं धनं सर्वं सश्रीकं वज्रपाणये ॥ प्रत्ययच्छत्स राजर्षिरिति नामभिराहृतः ॥ १९ ॥ पुरञ्जयस्य पुत्रोऽभूदनेनास्तत्सुतः पृथुः ॥ विश्वरन्धिस्ततश्चन्द्रो युवनाश्वश्च तत्सुतः ॥२०॥ शावस्तस्तत्सुतो येन शावस्ती निर्ममे पुरी ॥ बृहदश्वस्तु शाबस्तिस्ततः कुवलयाश्वकः ॥ २१ ॥ यः प्रियार्थमुतङ्कस्य धुन्धुनामासुरं बली ॥ सुतानामेकविंशत्या सहस्रैरहनद्‌वृतः ॥ २२ ॥ धुन्धुमार इति ख्यातस्तत्सुतास्ते

देखिए, तिनलाई पुरञ्जयले आफ्ना बाणले यमराजको घर पठाइदिए ॥१७॥ अनेक दैत्य प्रलयाग्नि जस्तै उनको बाणवर्षाको सामु टिक्नमा असमर्थ भएर युद्धस्थलबाट आफ्ना घर भागेर गए ॥१८॥ अनि ती राजर्षिले दैत्यहरूको सम्पत्तिका साथै तिनका पुर तथा धन जितेर त्यो सबै इन्द्रलाई दिए। त्यसले ती 'इन्द्रवाह' र 'ककुत्स्थ' यी पदवीहरूले युक्त नामले प्रख्यात भए ॥१९॥ पुरञ्जयका छोरा अनेना र अनेनाका पृथु भए। पृथुका छोरा विश्वरन्धि र उनका चन्द्र, चन्द्रका छोरा युवनाश्व भए ॥ २० ॥ युवनाश्वका छोरा शावस्त भए। उनले शावस्ती नगरी बसाले। शावस्तका बृहदश्व र कुवलयाश्व नामका पुत्र उत्पन्न भए ॥ २१ ॥ राजा कुवलयाश्वले उत्तङ्क ऋषिको प्रिय गर्नका लागि आफ्ना एक्काईस

दृष्टान्त (पदवीमा प्रतिष्ठा छ वा मनुष्यतामा ?)—एकपल्ट सिकन्दरले आफ्नो एक सज्जन सेनापतिलाई अकारण सुबेदारको पदबाट हटाइदियो। केही दिनपछि कुनै काम परेर सिकन्दरले उसलाई डाक्दो। प्रसन्न मनले ऊ गयो। सिकन्दरले भन्यो—'म तिमीलाई पहिले भन्दा प्रसन्न देखिरहेको छु। यसको कारण के हो ?' सुबेदारले भन्यो—'अब मलाई झन् राम्रो लागिरहेछ। सारा फौजका सुबेदार मेरो विशेष सम्मान गर्दथे र तिनले सल्लाह माग्दथे। साधारण सिपाही जुन पहिले डरेर आउन सक्तो मान्दथे, ती अब खुशीले आउँछन्, र अब म तिनलाई राम्रो सल्लाह दिन सक्छु, तिनकि अब म थोदा सम्मानित मनुष्य भएको छु।' सिकन्दरले सोध्यो—'पद नभइरहँदा दुःख लाग्दैन ?' सुबेदारले भन्यो—'इज्जत दर्जामा छ वा मनुष्यतामा ? जो मनुष्य आफ्नो काम राम्रो गर्दछ र अर्कालाई मद्दत दिन्छ, त्यसैलाई सबैले मनादमी मान्दछन्। उच्च पदमा बसेर जो धूस या सौगात (फोसेकी) लिन्छन्, त्यो त सिपाही भन्दा पनि हेय मानिन्छ।' यो सत्य कुरा सुनेर सिकन्दर साह्रै प्रसन्न भयो।

हजार छोराहरू लिएर धुन्धु नामको दैत्यलाई मारेका थिए ॥२२॥ यसै कारण उनको 'धुन्धुमार' नाम हुनगयो । त्यस घोर युद्धमा धुन्धु दानवको मुखबाट निस्केको ज्वालामा कुवलयाश्वका तीन पुत्र बाहेक शेष सबै डढेर मरे ॥१३॥ हे भारत ! ती तीनजनाको नाम-दृढाश्व, कपिलाश्व र भद्राश्व थियो । दृढाश्वका छोरा हर्यश्व र उसको छोरो निकुम्भ भयो ॥२४॥ निकुम्भको बर्हणाश्व नामक पुत्र भयो । त्यस बर्हणाश्वको कृशाश्व, कृशाश्वको सेनजित् र सेनजित्का युवनाश्व नामका पुत्र भए । युवनाश्व पुत्रहीन थिए । यसैनिम्ति खिन्न भएर आफ्नी सय भार्याहरूसित वनमा हिँडिदिए । त्यहाँ कृपालु मुनीश्वरहरूले युवनाश्वलाई पुत्र प्राप्त गराउनको निम्ति सावधान मनले 'ऐन्द्र' यज्ञ गराए ॥२५॥२६॥ एक दिन रात्रिको बेलामा प्यासले व्याकुल राजा यज्ञशालामा गएर ऋषिहरूलाई निदाएका देखेर मन्त्राभिषिक्त पानी पिइदिए ॥ २७ ॥ हे राजन् ! बिहान उठेर जब ऋषिहरूले कलश रित्तो देखे तब सोधे–'यो काम कसको हो ? कसले यो पुंसवन ( पुत्र उत्पन्न गर्ने ) जल पियो ?' ॥ २८ ॥ त्यसपछि ईश्वरको प्रेरणाले राजाले नै त्यो जल पिए भन्ने कुरा जानेपछि

च जज्वलुः ॥ धुन्धोर्मुखाग्निना सर्वे त्रय एवावशेषिताः ॥ २३ ॥ दृढाश्वः कपिलाश्वश्च भद्राश्व इति भारत ॥ दृढाश्वपुत्रो हर्यश्वो निकुम्भस्तत्सुतः स्मृतः ॥२४॥ बर्हणाश्वो निकुम्भस्य कृशाश्वोऽथास्य सेनजित् ॥ युवनाश्वोऽभवत्तस्य सोऽनपत्यो वनं गतः ॥ २५ ॥भार्याशतेन निर्विण्ण ऋषयोऽस्य कृपालवः ॥ इष्टिं स्म वर्तयाञ्चक्रुरैन्द्रीं ते सुसमाहिताः ॥ २६ ॥ राजा तद्यज्ञसदनं प्रविष्टो निशि तर्षितः ॥ दृष्ट्वा शयानान्विप्रांस्तान्पपौ मन्त्रजलं स्वयम् ॥ २७ ॥ उत्थितास्ते निशाम्याथ व्युदकं कलशं प्रभो ॥ पप्रच्छुः कस्य कर्मेदं पीतं पुंसवनं जलम् ॥२८॥ राज्ञा पीतं विदित्वाऽथईश्वरप्रहितेन ते ॥ ईश्वराय नमश्चक्रुरहो दैवबलं बलम् ॥ २९ ॥ ततः काल उपावृत्ते कुक्षिं निर्भिद्य दक्षिणम् ॥ युवनाश्वस्य तनयश्चक्रवर्ती जजान ह ॥ ३० ॥ कं धास्यति कुमारोऽयं स्तन्यं रोरूयते भृशम् ॥ मां धाता वत्स मारोदीरितीन्द्रो देशिनीमदात् ॥ ३१ ॥ न ममार पिता तस्य विप्रदेवप्रसादतः ॥ युवनाश्वोऽथ तत्रैव तपसा सिद्धिमन्वगात् ॥ ३२ ॥ त्रसदस्युरितीन्द्रोऽङ्ग विदधे नाम तस्य वै ॥ यस्मात्त्रसन्ति ह्युद्विग्ना दस्यवो रावणादयः ॥ ३३ ॥ यौवनाश्वोऽथ मान्धाता चक्रवर्त्यवनीं प्रभुः ॥ सप्तद्वीपवतीमेकः शशासाच्युततेजसा ॥ ३४ ॥ ईजे च यज्ञं क्रतुभिरात्मविद्भूरिदक्षिणैः ॥ सर्वदेवमयं देवं सर्वात्मकमतीन्द्रियम् ॥ ३५ ॥ द्रव्यं मन्त्रो विधिर्यज्ञो यजमानस्तथर्त्विजः ॥ धर्मो देशश्च कालश्च सर्वमेतद्यदात्मकम् ॥ ३६ ॥

उनले भने–'अहो ! दैवबल नै सर्वप्रधान बल हो, यस्तो भन्दै ईश्वरलाई नमस्कार गरे ॥ २९ ॥ जब प्रसवको बेला आयो, तब राजा युवनाश्वको दाहिने कोखा फोरेर यौटा चक्रवर्ती छोरो जन्मियो ॥३०॥ जब त्यो बालक दूध पिउनको लागि बेसरी रुन लाग्यो तब ऋषिहरूले भने–'यो कसको दूध पिउँछ ?' अनि इन्द्रले भने–'मां धाता' अर्थात् मलाई पिउँछ र 'वत्स ! नरोउ' यति भनेर उनले आफ्नो तर्जनी औंला उसको मुखमा राखिदिए ॥३१॥ त्यसका पिता युवनाश्वले पनि ब्राह्मण र देवताहरूको कृपाले तपस्याद्वारा त्यसै स्थानमा सिद्धि प्राप्त गरे ॥३२॥ हे अङ्ग ( तात ) ! इन्द्रले त्यस बालकको नाम 'त्रयदस्यु' राखे, किनकि त्यसबाट उद्विग्न भएर रावणादि ठूला-ठूला दस्यु भयभीत भएका थिए ॥ ३३ ॥ जब युवनाश्व-तनय मान्धाता सार्वभौम ( चक्रवर्ती ) राजा भएर भगवान् नारायणको तेजले सम्पन्न भई एक्लै नै सातै द्वीपकी पृथिवीमा शासन गर्नलागे ॥ ३४ ॥ तब

उनले आत्मज्ञान-सम्पन्न भएर द्रव्य ( यज्ञसामग्री ) मन्त्र, विधि, यज्ञ, यजमान, ऋत्विज, धर्म, देश तथा काल–यी सबै जसका स्वरूप छन्, ती सर्वदेवमय सर्वात्मक अद्वितीय देवाधिदेव भगवान् यज्ञपुरुषको अनेक ठूला-ठूला दक्षिणायुक्त यज्ञहरूले आराधना गरे ॥ ३५-३६ ॥ जहाँ सूर्यको उदय हुन्छ र जहाँ अस्त हुन्छ, त्यहाँसम्मको सम्पूर्ण देश युवनाश्व-तनय मान्धाताको नै क्षेत्र अर्थात् अधिकृत भूमण्डल कहिन्थ्यो ॥ ३७ ॥ ती राजा मान्धाताले शशबिन्दुकी कन्या बिन्दुमतीसित पुरुकुत्स, अम्बरीष तथा योगी मुचुकुन्द नामका तीन पुत्र उत्पन्न गरे। तिनका पचास बहिनीहरूले सौभरि ऋषिलाई पतिरूपमा छाने ॥ ३८ ॥ परम तपस्वी सौभरि यमुनाको जलमा डुबेर तपस्या गर्दथे। एकपल्ट त्यहाँ मैथुन-धर्ममा मत्स्यराजको सुख देखेर उनलाई पनि विवाह गर्ने अभिलाषा भयो ! अतः उनले राजा मान्धाताकहाँ गएर उनीसित यौटी कन्या मागे। त्यो सुनेर राजाले भने—'हे ब्रह्मन् ! स्वयंवरमा यदि कन्याले हजुरलाई वरण गरे हजुर प्रसन्नतापूर्वक यौटी कन्या लिन सक्नुहुन्छ' ॥ ३९॥४० ॥ अनि ती ऋषि सौभरिले विचार गरे–'राजाले ठानेका

यावत्सूर्य उदेति स्म यावच्च प्रतितिष्ठति ॥ सर्वं तद्यौवनाश्वस्य मान्धातुः क्षेत्रमुच्यते ॥ ३७ ॥ शशबिन्दोर्दुहितरि बिन्दुमत्यामधान्नृपः ॥ पुरुकुत्समम्बरीषं मुचुकुन्दं च योगिनम् ॥ तेषां स्वसारः पञ्चाशत्सौभरिं वव्रिरे पतिम् ॥ ३८ ॥ यमुनान्तर्जले मग्नस्तप्यमानः परं तपः ॥ निर्वृतिं मीनराजस्य वीक्ष्य मैथुनधर्मिणः ॥३९॥ जातस्पृहो नृपं विप्रः कन्यामेकामयाचत ॥ सोऽप्याह गृह्यतां ब्रह्मन्कामं कन्या स्वयंवरे ॥ ४० ॥ स विचिन्त्याप्रियं स्त्रीणां जरठोऽयमसम्मतः ॥ वलीपलित एजत्क इत्यहं प्रत्युदाहृतः ॥ ४१ ॥ साधयिष्ये तथात्मानं सुरस्त्रीणामपीप्सितम् ॥ किं पुनर्मनुजेन्द्राणामिति व्यवसितः प्रभुः ॥ ४२ ॥ मुनिः प्रवेशितः क्षत्रा कन्यान्तःपुरमृद्धिमत् ॥ वृतश्च राजकन्याभिरेकः पञ्चशता वरः ॥४३॥ तासां कलिरभूद्भूयांस्तदर्थेऽपोह्य सौहृदम् ॥ ममानुरूपो नायं व इति तद्गतचेतसाम् ॥ ४४ ॥ बह्वृचस्ताभिरपारणीयतपः श्रियाऽनर्घ्यपरिच्छदेषु ॥ गृहेषु नानोपवनामलाम्भःसरःसु सौगन्धिककाननेषु ॥ ४५ ॥ महार्हशय्यासनवस्त्रभूषणस्नानानुलेपाभ्यवहारमाल्यकैः ॥ स्वलंकृतस्त्रीपुरुषेषु नित्यदा रेमेऽनुगायद्द्विजभृङ्गवन्दिषु ॥ ४६ ॥ यद्गार्हस्थ्यं तु संवीक्ष्य सप्तद्वीपवतीपतिः ॥ विस्मितः स्तम्भमजहात्सार्वभौमश्रियाऽन्वितम् ॥ ४७ ॥ एवं

होलान् यो बूढो छ, यसै निम्ति स्त्रीहरूलाई मनपर्दैन। यसको सारा शरीर चाउरी परेको छ। यसको कपाल पाकिसकेको छ र टाउको हल्लन्छ। यही विचारेर उनले मलाई खरो उत्तर दिएका हुन् ॥ ४१ ॥ यसै निम्ति म आफूलाई यस्तो तुल्याउँछु कि सुरसुन्दरी पनि मलाई रोज्न लाग्नेछन्'—यस्तो विचारेर ती समर्थ सौभरिले त्यसै गरे ॥४२॥ अनि अन्तः-पुरको रक्षकले ती मुनिश्रेष्ठलाई कन्याहरूको समृद्धिशाली अन्तःपुरमा पुर्‍यायो। त्यहाँ ती पचासै कन्याहरूले सौभरिलाई नै आफ्नो पति रोजे ॥४३॥ उनीमा सबैको मन लाग्नाले ती कन्याहरूले सौहार्द त्यागेर 'यी त मेरै योग्य छन्–तिम्रो होइन' भनेर सौभरिको निम्ति उनमा परस्पर कलह हुनलाग्यो ॥ ४४ ॥ हे राजन् ! अनि ऋग्वेदी सौभरि ऋषि आफ्नो अपार तपोबलले बहुमूल्य सामग्रीहरूले युक्त घरहरूमा, अनेक उपवनले सुशोभित तथा निर्मल जलले पूर्ण सरोवरहरूमा, कमलको वनमा, पक्षीहरू र बन्दीजनहरूले गुञ्जायमान एवं राम्रा गहनाले भूषित स्त्री पुरुषहरूले सुशोभित महलहरूमा, बहुमूल्य शय्या, आसन, वस्त्र, आभूषण, बुकुवा, मीठो भोजन र फूल-मालाहरूको उपभोग गर्दै विहार गर्नलागे ॥४५-४६॥ उनको गार्हस्थ्य-

सुख देखेर सप्तद्वीपवती पृथिवीका अधिपति महाराज मान्धाताले विस्मित भावले आफू सार्वभौम र सम्पत्तिवान् भएका गर्व त्यागिदिए ॥ ४७ ॥ यस प्रकार गार्हस्थ्य-भोगमा आसक्त भएर पनि औंभरि विषयहरूलाई अनेक इन्द्रियहरूले भोग्दै जाँदा पनि तृप्त भएनन्, जस्तै घिउका थोपाले अग्नि तृप्त हुँदैनन्। एक दिन बसिरहेका ती ऋग्वेदाचार्य मनमनै माछाको सहवासले प्राप्त आफ्नो तपोभङ्गमा विचार गर्दै भन्न लागे–॥४८-४९॥ 'अहो ! जसले राम्ररी व्रतादिको पालन गरेको थियो, त्यस्तो म तपस्वीको यस्तो पतन भएको हेर ! जुन ब्रह्मतेजलाई मैले धेरै दिनदेखि धारण गरिराखेको थिएँ, त्यो म जलभित्रको यौटा जल-जन्तुको संगले भ्रष्ट हुनगएँ ॥५०॥ प्रत्येक मोक्षाभिलाषी पुरुषको यो कर्तव्य हो कि त्यो सबै दाम्पत्य-धर्ममा रत रहने समस्त प्राणीहरूको सहवास त्यागिदेओस र आफ्ना इन्द्रियहरूलाई अलिकति पनि बहिर्मुख हुन नदेओस्। त्यो सदा एकान्त प्रदेशमा एक्लै विचरण गर्दै एकमात्र अनन्त ईश्वरमा नै मन लगाओस्। यदि उसलाई संग नै गर्ने इच्छा छ भने भगवत्-परायण साधु पुरुषहरूको सङ्गत गरोस् ॥५१॥ अहो ! पहिले म एक्लो तपस्वी थिएँ।

गृहेष्वभिरतो विषयान्विविधैः सुखैः ॥ सेवमानो न चातुष्यदाज्यस्तोकैरिवानलः ॥ ४८ ॥ स कदाचिदुपासीन आत्मापह्नवमात्मनः ॥ ददर्श बह्वृचाचार्यो मीनसङ्गसमुत्थितम् ॥ ४९ ॥ अहो इमं पश्यत मे विनाशं तपस्विनः सच्चरितव्रतस्य ॥ अन्तर्जले वारिचरप्रसङ्गात्प्रच्यावितं ब्रह्म परं धृतं यत् ॥५० ॥ सङ्गं त्यजेत मिथुनव्रतिनां मुमुक्षुः सर्वात्मना न विसृजेद्बहिरिन्द्रियाणि ॥ एकश्चरन्रहसि चित्तमनन्त ईशे युञ्जीत तद्व्रतिषु साधुषु चेत्प्रसङ्गः ॥ ५१ ॥ एकस्तपस्व्यहमथाम्भसि मत्स्यसङ्गात् पञ्चाशदासमुत पञ्चसहस्रसर्गः ॥ नान्तं व्रजाम्युभयकृत्यमनोरथानां मायागुणैर्हृतम· तिर्विषयेऽर्थभावः ॥ ५२ ॥ एवं वसन्गृहे कालं विरक्तो न्यासमास्थितः ॥ वनं जगामानुययुस्तत्पत्न्यः पतिदेवताः ॥ ५३ ॥ तत्र तप्त्वा तपस्ती· क्ष्णमात्मकर्षणमात्मवान् ॥ सहैवाग्निभिरात्मानं युयोज परमात्मनि ॥ ५४ ॥ ताः स्वपत्युर्महाराज निरीक्ष्याध्यात्मिकीं गतिम् ॥ अन्वीयुस्तत्प्रभावेण वह्निं शान्तमिवार्चिषः ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे सौभर्याख्याने षष्ठोऽध्यायः ॥ ६ ॥

श्रीशुक उवाच ॥ मान्धातुः पुत्रप्रवरो योऽम्बरीषः प्रकीर्तितः ॥ पितामहेन प्रवृतो यौवनाश्वश्च तत्सुतः ॥ हारीतस्तस्य पुत्रोऽभून्मान्धातृप्रवरा

जलमा माछाको सङ्गति गरेर पचास स्त्रीहरूको पति बनेर यौटाबाट पचास भएँ फेरि सन्तानरूपले बढेर पाँच हजार भए। विषयहरूमा मेरो अब सत्यबुद्धि भइसकेको छ। बुद्धि मायाका गुणमा अल्झेर म आफ्नो ऐहिक तथा पारलौकिक दुवै नै प्रकारका मनोरथलाई तर्न सकिरहेको छैन' ॥ ५२ ॥ यसरी विचार गर्दै ती केही समयसम्म घर त्यागिदिएर बनको बाटो समाए। तिनको संगसंगै तिनका पतिपरायण पत्नीहरू पनि गए ॥५३॥ त्यहाँ आत्मचिन्तनमा संलग्न भैभरिले शरीरलाई सुखाउने तपमा तत्पर भएर आहवनीयादि अग्निहरू सहित स्वयं आफूलाई परमात्मामा लय गराए ॥५४॥ हे महाराज ! आफ्ना पतिको आध्यात्मिक गति देखेर तिनका पत्नीहरू पनि उनैको प्रभावले अग्निमा लीन भएर शान्त ज्वालाहरूको समान उनको अनुगमन गर्दै सबै सती भएर गए ॥५५॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषा टीकायां षष्ठोऽध्यायः ॥ ६ ॥

( महाराज त्रिशंकुर र रहिश्चन्द्रका वृत्तान्त )–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! मान्धाताका सबै छोराहरूमा जेठा अम्बरीषको वर्णन गरिसकिएको छ। उनलाई तिनका पितामह

युवनाश्वले छोरो मनेर मानेका थिए । अम्बरीषका छोरा यौवनाश्व र उनका हारीत नामक छोरा भए । यी तीनै मान्धातृ-गोत्रमा प्रवर वा अवान्तर गोत्रका प्रवर्तक भए ॥१॥ नर्मदालाई तिनका भाइ नागहरूले पुरुकुत्ससित विवाह गरिदिएका थिए । ती नागराजको कथनानुसार राजा पुरुकुत्सलाई रसातल लिएर गए ॥२॥ त्यहाँ उनले विष्णुको शक्ति-सम्पन्न भई वधको योग्य गन्धर्वहरूलाई मारे र नागराजले यो वरदान पाए–'जो जन यस आख्यानको स्मरण गर्छन्, तिनलाई सर्पको भयर हुनेछैन' ॥ ३ ॥ पुरुकुत्सको छोरो त्रसदस्यु भए । त्रसदस्यु अनरण्यको पिता थिए । उनका पुत्र हर्यश्व, उनका अरुण र अरुणका त्रिबन्धन पुत्र भए ॥४॥ त्रिबन्धनका छोरा सत्यव्रत भए । जो पछि 'त्रिशंकु' यस नामले विख्यात भए । ती गुरु वसिष्ठको श्रापले चाण्डाल भएका थिए, तापनि विश्वामित्रको तपोबलले सशरीर स्वर्गलोक गए । त्यहाँबाट देवताहरूले तिनलाई तल टाउको पारेर घुचेटी दिए । तर उनै विश्वामित्रको तपोबलले हठात् बीचमैं रोकिदिनाले अझसम्म पनि ती आकाशमैं झुण्डिएका देखिन्छन् ॥५॥६॥ *तिनै त्रिशंकुका छोरा हरिश्चन्द्र भए, जसको निम्ति परस्पर श्रापले पक्षीको रूपमा

इमे ॥१॥ नर्मदा भ्रातृभिर्दत्ता पुरुकुत्साय योरगैः ॥ तया रसातलं नीतो भुजगेन्द्रप्रयुक्तया ॥२॥ गन्धर्वानवधीत्तत्रवध्यान्वै विष्णुशक्तिधृक् ॥ नागाल्लब्धवरः सर्पादभयं स्मरतामिदम् ॥३॥ त्रसदस्युः पौरुकुत्सो योऽनरण्यस्य देहकृत् ॥ हर्यश्वस्तत्सुतस्तस्मादरुणोऽथ त्रिबन्धनः ॥४॥ तस्य सत्यव्रतः पुत्रस्त्रिशंकुरिति विश्रुतः ॥ प्राप्तश्चाण्डालतां शापाद्गुरोः कौशिकतेजसा ॥५॥ सशरीरो गतः स्वर्गमद्यापि दिवि दृश्यते ॥ पातितोऽवाक्शिरा देवैस्तेनैव स्तम्भितो बलात् ॥६॥ त्रैशङ्कवो हरिश्चन्द्रो विश्वामित्रवसिष्ठयोः ॥ यन्निमित्तमभूद्युद्धं पक्षिणोर्बहुवार्षिकम् ॥७॥ सोऽनपत्योविषण्णात्मा नारदस्योपदेशतः ॥ वरुणं शरणं यातः पुत्रो मे जायतां प्रभो ॥८॥ यदि वीरो महाराज तेनैव त्वां यजे इति ॥ तथेति वरुणेनास्य पुत्रो जातस्तु रोहितः ॥ ९ ॥ जातः सुतो ह्यनेनाङ्ग मां यजस्वेति सोऽब्रवीत् ॥ यदा पशुर्निर्दशः स्यादथ मेध्यो भवेदिति ॥ १० ॥ निर्दशे च स आगत्य जयस्वेत्याह सोऽब्रवीत् ॥ दन्ताः पशोर्यज्जायेरन्नथ मेध्यो भवेदिति ॥ ११ ॥ जाता दन्ता यजस्वेति स प्रत्याहाथ सोऽब्रवीत् ॥ यदा पतन्त्यस्य दन्ता अथ

परिणत विश्वामित्र र वसिष्ठजीमा धेरै वर्षसम्म युद्ध चलिरह्यो ॥७॥ राजा हरिश्चन्द्रका छोरा थिएनन् । यसै निम्ति साह्रै खिन्न भएर ती नारदको उपदेश अनुसार वरुणको शरणमा गए र उनीसित प्रार्थना गर्दै भने–'हे प्रभो ! मेरो पुत्रहोस् ॥८॥ हे महाराज ! मेरो वीरपुत्र भयो भने म त्यसैको बलि दिएर हजुरको पूजा गर्नेछु ।' तब वरुणले 'ल्याँ, हुन्छ' भनेर स्वीकार गरेपछि उनको रोहित नामको छोरो जन्म्यो ॥९॥ त्यो छोरो जन्मनासाथ वरुणले आई भने–'हे तात ! तिम्रो छोरो भयो, अब यसैले मेरो पूजा गर ।' राजाले प्रार्थना गरे—'पुत्ररूप पशु जब दस दिनको हुनेछ, अनिमात्र मेध्य ( पवित्र) होला' ॥१०॥ दस दिन बितिसकेपछि वरुणले फेरि आएर भने—'ल्याँ त, अब मेरो पूजा गर ।' अनि राजाले टार्दै भने–'जब पशुका दाँत निस्कन्छन्, अनि मात्र यो पवित्र होला' ॥११॥ दाँत निस्किसकेपछि वरुणदेव आएर फेरि भने–'यसका दाँत पनि निस्किए, अब तिमी मेरो पूजा गर ।' अनि हरिश्चन्द्रले

* कुनै बखत राजा त्रिशंकुले विवाह हुँदा एउटी ब्राह्मण-कन्याको अपहरण गरेका थिए अतएव उनका पिताले उनलाई श्राप दिए । यसै प्रकार अज्ञानवश गुरु वसिष्ठकी गाईको वध गर्नाले वसिष्ठले पनि उनलाई श्राप दिएका थिए । महर्षि विश्वामित्रले हरिश्चन्द्रसित राजसूय यज्ञ गराएर सारा धन लिए । यसले कुपित भएर कुलगुरु वसिष्ठले उनलाई श्राप दिए–'तिमी आडी नामको पक्षी होइजाऊ । अनि विश्वामित्रले पनि वसिष्ठलाई बकपक्षी हुने श्राप दिए । यस प्रकार परस्परको श्रापले आडी र बक पक्षी भएपछि तिनमा धेरै वर्षसम्म युद्ध चल्दै रह्यो ।

भने–'अब यसका दाँत साटिन्छन्, तब यो मेध्य हुनेछ' ॥ १२॥ दाँत साटिएपछि जब वरुणले भने–'अब त यसका दाँत पनि साटिइसके, मेरो पूजन गर ।' राजाले भने–'अब यसको फेरि नयाँ दाँत उम्रन्छन्, अनि योग्य मेध्य हुनेछ' ॥१३॥ त्यसपछि जब वरुणले भने–'अब त यसका नयाँ दाँत पनि उम्रिसकेका छन्, यसनिम्ति मेरो यज्ञ गर ।' राजाले फेरि भने–हे देवता ! अब राजपुरुषरूपी पशु कवच धारण गर्ने योग्य होओस्, अनि यो पवित्र मानिने छ' ॥ १४ ॥ यसरी आफ्नू पुत्र-प्रेममा स्नेहयुक्त मनले बराबर समय बिताउँदै गरेर ती भिन्न-भिन्न समय माग्दै गए र वरुणदेव पनि समयको प्रतीक्षा गर्दै रहे ॥१५॥ जब रोहितलाई आफ्ना पिताको सङ्कल्पित समयको राम्ररी ज्ञान भयो, तब हातमा धनुष बाण लिएर आफ्नो प्राण बचाउनको लागि वनमा भागेर गयो ॥१६॥ केही दिनपछि आफ्ना पितालाई वरुण देवताले ग्रस्त तथा महोदररोगले पीडित छन् भन्ने सुनेर रोहित जब घर फर्कनलाग्यो, तब इन्द्रले उसलाई रोकिदिए ॥ १७ ॥ इन्द्रले रोहितसित भने–'हे वत्स ! यज्ञ पशु बनेर मर्नुभन्दा अनेक पुण्यक्षेत्रहरूमा भ्रमण गर्दै पृथिवीमा चारैतिर डुलिरहनु धेरै राम्रो हुनेछ ।'

मेध्यो भवेदिति ॥ १२ ॥ पशोर्निपतिता दन्ता यजस्वेत्याह सोऽब्रवीत् ॥ यदा पशोः पुनर्दन्ता जायन्तेऽथ पशुः शुचिः ॥ १३ ॥ पुनर्जाता यजस्वेति स प्रत्याहाथ सोऽब्रवीत् ॥ सान्नाहिको यदा राजन्राजन्योऽथ पशुः शुचिः ॥ १४ ॥ इति पुत्रानुरागेण स्नेहयन्त्रितचेतसा ॥ कालं वञ्चयता तं तमुक्तो देवस्तमैक्षत ॥ १५ ॥ रोहितस्तदभिज्ञाय पितुः कर्म चिकीर्षितम् ॥ प्राणप्रेप्सुर्धनुष्पाणिररण्यं प्रत्यपद्यत ॥ १६ ॥ पितरं वरुणग्रस्तं श्रुत्वा जातमहोदरम् ॥ रोहितो ग्राममेयाय तदेन्द्रः प्रत्यषेधत ॥ १७ ॥ भूमेः पर्यटनं पुण्यं तीर्थक्षेत्रनिषेवणैः ॥ रोहितायादिशच्छक्रः सोऽप्यरण्येऽवसत्समाम् ॥ १८ ॥ एवं द्वितीये तृतीये चतुर्थे पञ्चमे तथा ॥ अभ्येत्याभ्येत्य स्थविरो विप्रो भूत्वाऽऽह वृत्रहा ॥ १९ ॥ षष्ठं संवत्सरं तत्र चरित्वा रोहितः पुरीम् ॥ उपव्रजजीगर्तादक्रीणान्मध्यमं सुतम् ॥ २० ॥ शुनःशेपः पशुं पित्रे प्रदाय समवन्दत ॥ ततः पुरुषमेधेन हरिश्चन्द्रो महायशाः ॥ २१ ॥ मुक्तोदरोऽयजद्देवान्वरुणादीन्महत्कथः ॥ विश्वामित्रोऽऽभवत्तस्मिन्होता चाध्वर्युरात्मवान् ॥ २२ ॥ जमदग्निरभूद्ब्रह्मा वसिष्ठोऽयास्य सामगः ॥ तस्मै तुष्टो ददाविन्द्रः शातकौम्भमयं रथम् ॥ २३ ॥ शुनःशेपस्य माहात्म्यमुपरिष्टात्प्रचक्ष्यते । सत्यसारां धृतिं दृष्ट्वा सभार्यस्य चमूपतेः ॥ २४ ॥ विश्वामित्रो भृशं प्रीतो ददावविहतां गतिम् ॥ मनः पृथिव्यां तामद्भिस्तेजसापोऽनिलेनतत् ॥ २५ ॥ खे वायुं धारयंस्तच्च भूतादौ

यस्तो उपदेश पाएर रोहित एक वर्षसम्म अरु वनमै लुकिरहे ॥१८॥ यसरी दोस्रो, तेस्रो, चौथो र पाँचौं वर्ष बितेपछि पनि इन्द्र वृद्ध ब्राह्मणको रूपमा आएर बराबर उसलाई तीर्थयात्रा गरिरहने उपदेश दिँदैरहे ॥१९॥ छैठौं वर्षको समाप्तिमा रोहित आफ्ना नगरमा फर्कन लाग्दा उसले अजीगर्तबाट त्यसको शुनःशेप नामक माहिलो छोरो किनेर त्यसलाई यज्ञ पशुको रूपमा आफ्ना पितालाई सुम्पिदिई प्रणाम गरे । अनि महायशस्वी र महापुरुषबाट कीर्तित गुण हुने राजा हरिश्चन्द्रले उदररोगबाट मुक्ति पाई नरमेध यज्ञद्वारा वरुणादि देवताहरूको आराधना गरे । त्यस यज्ञमा विश्वामित्र होता, आत्मवान् जमदग्नि अध्वर्यु, वसिष्ठ ब्रह्मा, अयास्य मुनि उद्गाता बनेका थिए । त्यसले प्रसन्न भई इन्द्रले राजा हरिश्चन्द्रलाई एउटा स्वर्णरथ प्रदान गरेका थिए ॥२०-२३॥ हे राजन् ! शुनःशेपको महिमा अगाडि गएर विश्वामित्रका छोराहरूको प्रसङ्गमा बताउनेछु । आफ्नी स्त्रीसहित राजा हरिश्चन्द्रको सत्यमा

दृढता देखेर विश्वामित्र निकै प्रसन्न भए र उनलाई तत्त्वज्ञानको उपदेश दिए । राजा हरिश्चन्द्रले आफ्नो मन पृथ्वीमा, पृथिवीलाई जलमा, जललाई तेजमा, तेजलाई वायुमा, वायुलाई आकाशमा, आकाशलाई भूतादिमा तथा भूतादिलाई महत्तत्त्वमा लीन गरिदिए । महत्तत्त्वमा ज्ञानकलाको गर्दै उनले आफ्नो अज्ञान भस्म पारिदिए ॥ २४-२६ ॥ त्यसपछि निर्वाण सुखको अनुभवद्वारा त्यस ज्ञानकलालाई पनि त्यागेर सबै बन्धनहरूबाट निस्केर, जसको कथन तथा अनुमान पनि गर्न सकिन्न, यस्ता स्व-स्वरूपमा स्थित हुन पुगे ॥ २७ ॥
इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां सप्तमोऽध्यायः ॥ ७ ॥

( राजा सगरको चरित्र )–श्रीशुकदेव भन्नहुन्छ–हे राजन् ! रोहितको छोरो हरितबाट चम्प भयो, जसले चम्पापुरी बसालेको थियो । चम्पकको छोरो सुदेव र सुदेवको विजय नामको

तं महात्मनि ॥ तस्मिञ्ज्ञानकलां ध्यात्वा तयाऽज्ञानं विनिर्दहन् ॥ २६ ॥ हित्वा तां स्वेन भावेन निर्वाणसुखसंविदा ॥ अनिर्देश्याप्रतर्क्येण तस्थौ विध्वस्तबन्धनः ॥ २७ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे हरिश्चन्द्रोपाख्यानं नाम सप्तमोऽध्यायः ॥ ७ ॥

श्रीशुक उवाच ॥ हरितो रोहितसुतश्चम्पस्तस्माद्विनिर्मिता ॥ चम्पापुरी सुदेवोऽतो विजयो यस्य चात्मजः ॥१॥ भरुकस्तत्सुतस्तस्माद्वृकस्तस्यापि बाहुकः ॥ सोऽरिभिर्हृतभू राजा सभार्यो वनमाविशत् ॥२॥ वृद्धं तं पञ्चतां प्राप्तं महिष्यनुमरिष्यती ॥ और्वेण जानतात्मानं प्रजावन्तं निवारिता॥३॥ आज्ञायास्यै सपत्नीभिर्गरो दत्तोऽन्धसा सह ॥ सह तेनैव संजातःसगराख्यो महायशाः॥४॥सगरश्चक्रवर्त्यासीत्सागरो यत्सुतैः कृतः ॥ यस्तालजङ्घान्यवनाञ्छकान्हैहयबर्बरान् ॥ ५ ॥ नावधीद्गुरुवाक्येन चक्रे विकृतवेषिणः ॥ मुण्डाञ्छ्मश्रुधरान्कांश्चिन्मुक्तकेशार्धमुण्डितान् ॥ ६ ॥ अनन्तर्वाससः

छोरो भयो ॥ १ ॥ विजयका पुत्र भरुक, भरुकबाट वृक, वृकबाट बाहुक भयो । बाहुक शत्रुहरूद्वारा पृथिवी हरण गरिनाले आफ्नी स्त्रीहरूसमेत वनमा भागेर गए ॥ २ ॥ उनी त्यहाँ वृद्धावस्थामा राजा मरेपछि तिनकी राजमहिषी सती जान तयार भइन्, तर गुरुवर और्वले गर्भवती थाहा पाएर तिनलाई सती जान दिएनन् ॥ ३ ॥ जब तिनका सौताहरूले यो समचार थाहा पाए तब त्यसलाई खानेकुरासित विष ख्वाइदिए, तर त्यो यशस्वी बालक गरल ( विष ) का साथै उत्पन्न भयो, त्यसै कारण उसको 'सगर' नाम भयो ॥४॥ सगर चक्रवर्ती राजा भयो । सगरका छोराहरूले सागर खनेका थिए । गुरु और्वले भने अनुसार तालजङ्घ, यवन, शक, हैहय तथा बर्बर जातिका मनुष्यलाई मारेन बरु तिनलाई कुरूप छाडिदियो । तीमध्ये

---

* उदाहरण ( छोरो परमात्माको नासो हो );—लिखरिया यौटी उच्च विचारकी महिला थिई । त्यसका पतिको नाम थियो—'महात्मा रब्बी ।' ऊ पनि ठूलो विद्वान र ज्ञानी थियो । उसका आफ्नै समान प्रतिभा-सम्पन्न दुइ छोरा थिए । दुर्भाग्यवश ती दुवै छोरा अग्लो ठाउँबाट लडेर मरे । त्यस बखत महात्मा रब्बी घरमा थिएनन् । यस आघातले ती महिलालाई ठूलो कष्ट भयो, तर पछि विचार आयो—जन्म मरणलाई कसैले रोक्न सक्दैन । परमात्माको माया यस्तै रहेछ । पति घरमा उपस्थित नहुनाले उसले शवलाई यौटा कोठामा राखिदिई । उसका पति रब्बी जब घर आए तब केही पनि नभए जस्तै मुसु-मुसु हाँसी भेटी र सम्मानपूर्वक बसाली । पछि प्रेमपूर्वक सोधी—'तिमीसित यौटा कसैको नासो राखिएको छ, त्यो म फर्काइदिउँ ?' रब्बीले भन्यो—'फर्काइदेउ ।' त्यसपछि उसले दुवै छोराको मृत शरीर देखाई । ती छक्क परे । स्त्रीले भनी—'परमात्माले दिए र उनैले लगे । यसमा आफ्नो के थियो र ?' रब्बी आफ्नी पत्नीको ज्ञान देखेर प्रसन्न भयो । यस्ती नारीहरू गृहलक्ष्मी कहिन्छन् र तिनैले घरको शोभा बढ्छ ।

कतिको टाउको मुडाउन लगायो, कतिको खुँघा-दाह्री काट्न लगाए, कतिलाई फुकेका केशको पार्नलाए र कतिलाई आधा मुडेर छाडिदिए ॥ ५ ॥ ६ ॥ कतिलाई, केवल ओढ्ने लुगा र कतिलाई केवल लँगोटी मात्र लाउनदिए। अनि महाराज सगरले और्व ऋषिको उपदिष्ट विधि अनुसार सम्पूर्ण वेद र देवस्वरूप परमात्मा जगदीश्वर श्रीहरिको पूजनार्थ अश्वमेध यज्ञ आरम्भ गरे, त्यसै बखत यज्ञमा छाडेका यज्ञपशुरूपी घोडालाई इन्द्रले हरण गरे ।।७-८।। अनि राजाकी सुमति नामकी महारानीका पुरुषार्थी र पिताका आज्ञापालक पुत्रहरूले त्यस यज्ञको अश्वलाई खोज्दा-खोज्दै सारा पृथ्वी खनिदिए ॥९॥ अन्त्यमा उनलाई पूर्वोत्तर दिशामा कपिल मुनिकहाँ बाँधेको आफ्नो घोडा देखियो। त्यसलाई देखेर ती साठी हजार छोरा आफाफ्ना शस्त्रास्त्र लिएर–'हेर ! यो घोडा चोर्ने यहाँ आँखा चिम्लेर बसिरहेको छ। यस पापीलाई तुरुन्त मारिदेओ' यसो भन्दै मुनितिर हम्के, तब अमौन कपिल मुनिले नेत्र उघारे

कांश्चिदवहिर्वाससोऽपरान् ॥ सोऽश्वमेधैरयजत् सर्ववेदसुरात्मकम् ॥ ७ ॥ और्वोपदिष्टयोगेन हरिमात्मानमीश्वरम् ॥ तस्योत्सृष्टं पशुं यज्ञे जहाराश्वं पुरन्दरः ॥ ८ ॥ सुमत्यास्तनया दृप्ताः पितुरादेशकारिणः ॥ हयमन्वेषमाणास्ते समन्तान्न्यखनन् महीम् ॥ ९ ॥ प्रागुदीच्यां दिशि हयं ददृशुः कपिलान्तिके ॥ एष वाजिहरश्चौर आस्ते मीलितलोचनः ॥ १० ॥ हन्यतां हन्यतां पाप इति षष्टिसहस्रिणः ॥ उदायुधा अभिययुरुन्मिमेष तदा मुनिः ॥ ११ ॥ स्वशरीराग्निना तावन्महेन्द्रहृतचेतसः ॥ महद्व्यतिक्रमहता भस्मसादभवन्क्षणात् ॥ १२ ॥ न साधुवादो मुनिकोपभर्जिता नृपेन्द्रपुत्रा इति सत्त्वधामनि ॥ कथं तमो रोषमयं विभाव्यते जगत्पवित्रात्मनि खे रजो भुवः ॥ १३ ॥ यस्येरिता सांख्यमयी दृढेह नौर्यया मुमुक्षुस्तरते दुरत्ययम् ॥ भवार्णवं मृत्युपथं विपश्चितः परात्मभूतस्य कथं पृथङ्मतिः ॥ १४ ॥ योऽसमञ्जस इत्युक्तः स केशिन्या नृपात्मजः ॥ तस्य पुत्रोंऽ-

॥१०॥११॥ इन्द्रको मायाले विमुग्ध सबै राजकुमार महात्मा कपिलका अपराधी हुनाले उनको दृष्टि पर्नासाथ एक क्षणमै उत्पन्न अग्निद्वारा डढेर खरानीको थुप्रो हुन गए ॥ १२ ॥ हे राजन् ! सगरका पुत्र कपिल मुनिको क्रोधले भस्म भए, यो भन्नु अनुचित हो। जसको शरीर सम्पूर्ण जगत्लाई पवित्र पारिरहेथ्यो, ती सत्वरूप कपिल मुनिमा क्रोधरूपी तमोगुणको कल्पना कसरी गर्न सकिन्छ ? पृथ्वीका रजको कहिल्यै आकाशसित सम्बन्ध हुन सक्ला ? ॥१३॥ जसको मुमुक्षु व्यक्ति मृत्युको मार्गरूपी यस तरिनसक्नु संसार सागरलाई नाघेर पारी तर्दछन्, ती सांख्यमयी बलियो डुङ्गा जसले यस लोकमा प्रवृत्त गरे, ती परमात्मा स्वरूप तथा सर्वज्ञ मुनिलाई 'अमुक व्यक्ति शत्रु हो' यो भेद-बुद्धि किन र कसरी हुन

---

दृष्टान्त (मौनका नौ गुण)—कोही विदुषी नारीकहाँ त्यसकी छिमेकी स्त्री आएर भन्न लागी–'दिदी ! मेरा पतिको रिस सार्है नराम्रो छ। त्यो देखेर मलाई पनि रिस उठेर आउँछ। यसैले गर्दा कहिले काहीं तयार भइसकेको काम-कुरा पनि त्यसै रहिरहन्छ र हामी थोकै सुख प्राप्त हुन्छौं। हामी आपसमा बाझी रहन्छौं र कलहाग्नि दन्कन्दै जान्छ।' विदुषी स्त्रीले भनी—'हरे! यो कुन ठूलो कुरा हो र! म सित थोरा यसको औषधि छ—यस ले। यसमा थाली राखिने छ। जसै तिम्रा पति बोल्न थाल्दछन्, उसै बखत औषधिको पानी मुखमा राख र नबोली कन चुपलागेर बस। यति भनेर उसले औषधिको शीशी दिई। त्यस स्त्रीले घर गएर उस्तै गरी, जसले गर्दा उसका पतिले एकदिन कराएर चुपलाग्यो। त्यसपछि उसले विदुषी स्त्रीकहाँ गएर भनी–'दिदी ! तिम्रो औषधि सार्है असल रहेछ।' विदुषीले भनी–'यसमा कुनै औषधि छैन। त्यो त केवल पानी थियो। मुखमा पानी भएपछि बोल्न सकिन्न। तिमी नबोलेपछि उनी पनि एक दिन बोलेर स्वयं चुपलाग्छ। यही यसको रहस्य हो।' छिमेकीले कुरा बुझी र पति-पत्नी प्रेमपूर्वक बस्नलागे। 'मौनका नौगुण' भन्ने उखान पनि छ।

515

सक्छ ? ॥१४॥ हे राजन् ! सगरका जुन छोरा 'असमञ्जस' नामले विख्यात भए, ती सगरकी केशिनी रानीका छोरा थिए । ती असमञ्जसका छोरा अंशुमान् सदैव आफ्ना पितामहको हितमा लागिरहन्थे ॥१५॥ असमञ्जस पूर्वजन्ममा योगी थिए, तर नजाति सङ्गतमा परेर योगभ्रष्ट हुन गएका थिए । उनलाई आफ्नो पूर्वजन्मको सबै कुरा याद थियो । अतएव 'मलाई फेरि कुसङ्ग नपरोस्' यस भावनाले ती संसारमा आफ्ना बन्धुहरूलाई अप्रिय वा निन्दनीय कर्म गर्दै विपरीत आचरण देखाउँदथे । ती आफ्ना प्रजा-जनहरूलाई उद्विग्न पार्नको निम्ति तिनका खेलिरहेका बालकहरूलाई सरयू नदीमा फालिदिने गर्दथे ॥१६॥१७॥ तिनको त्यस्तो विपरीत आचरण देखेर पिताले पुत्र स्नेह त्यागी उनलाई देशबाट निकालिदिए। अनि ती आफ्नो योगबलले ती मरिसकेका बालकहरू फेरि जीवित पारेर हिँडिदिए ॥१८॥ आफ्ना बालक फेरि आएका देखेर सबै अयोध्यावासी आश्चर्यमा परे र राजालाई पनि पछुतो पर्नगयो ॥१९॥ जब राजा सगरको आज्ञाले अंशुमान घोडा खोज्न गए र उनले पितृव्यहरूले खनेको बाटोबाट जाँदा-जाँदा त्यस घोडालाई खरानीको थुप्रोनेर उभिएको देखे ॥२०॥

शुमान्नाम पितामहहिते रतः ॥१५॥ असमञ्जस आत्मानं दर्शयन्नसमञ्जसम् ॥ जातिस्मरः पुरा सङ्गाद्योगी योगाद्विचालितः ॥ १६ ॥ आचरन्ग-र्हितं लोके ज्ञातीनां कर्म विप्रियम् ॥ सरय्वां क्रीडतो बालान्प्रास्यदुद्वेजयञ्जनम् ॥ १७ ॥ एवंवृत्तः परित्यक्तः पित्रा स्नेहमपोह्य वै ॥ योगैश्वर्येण बालांस्तान्दर्शयित्वा ततो ययौ ॥ १८ ॥ अयोध्यावासिनः सर्वे बालकान्पुनरागतान् ॥ दृष्ट्वा विसिस्मिरे राजन्राजा चाप्यन्वतप्यत ॥ १९ ॥ अंशुमाँश्चोदितो राज्ञा तुरङ्गान्वेषणे ययौ ॥ पितृव्यखातानुपथं भस्मान्ति ददृशे हयम् ॥ २० ॥ तत्रासीनं मुनिं वीक्ष्य कपिलाख्यमधोक्षजम् ॥ अस्तौत्समाहितमनाः प्राञ्जलिः प्रणतो महान् ॥ २१ ॥ अंशुमानुवाच ॥ न पश्यति त्वां परमात्मनोऽजनो न बुध्यतेऽद्यापि समाधियुक्तिभिः ॥ कुतोऽपरे तस्य मनः शरीरधीविसर्गसृष्टा वयमप्रकाशाः ॥ २२ ॥ ये देहभाजस्त्रिगुणप्रधाना गुणान्विपश्यन्त्युत वा तमश्च ॥ यन्मायया मोहितचे-तसस्ते विदुः स्वसंस्थं न बहिःप्रकाशाः ॥ २३ ॥ तं त्वामहं ज्ञानघनं स्वभावप्रध्वस्तमायागुणभेदमोहैः ॥ सनन्दनाद्यैर्मुनिभिर्विभाव्यं कथं हि मूढः परिभावयामि ॥ २४ ॥ प्रशान्तमायागुणकर्मलिङ्गमनामरूपं सदसद्विमुक्तम् ॥ ज्ञानोपदेशाय गृहीतदेहं नमामहे त्वां पुरुषं पुराणम् ॥ २५ ॥

त्यहाँ साक्षात् भगवान्का अवतार कपिल मुनिलाई बसेका देखेर ती अतिशय समाहित चित्तले हात जोरी विनयपूर्वक स्तुति गर्दै भन्नलागे ॥ २१ ॥ अंशुमानले भने–'भगवन् ! जब अजन्मा भगवान् ब्रह्माजी पनि आफूभन्दा पनि अतीत हजुरलाई प्रत्यक्ष देख्न पाउन्नन्, न आजसम्म समाधि तथा युक्तिबाट हजुरलाई परोक्षरूपले नै जान्नसके । अनि तिनको मन, बुद्धि र शरीरले हुने सृष्टिद्वारा देवता, मनुष्यादिको रूपमा रचित हामी अज्ञानी जन हजुरलाई कसरी जान्न सक्दछौं ? ॥२२॥ जुन हजुरको मायाले मोहित चित्त देहधारी प्राणी जो तीनै गुणहरूका वशीभूत रहन्छन्, ती जाग्रत र स्वप्नमा केवल गुणमय पदार्थ र अज्ञानलाई नै देख्दछन् र बहिर्मुख हुनाले गर्दा आफ्नो अन्तःकरणमा स्थित हजुरलाई देख्न सक्तैनन् ॥२३॥ उनै ज्ञानस्वरूप हजुरको भावना म मूढमति कसरी गर्न सक्छु ? किनकि हजुर त जसको आत्मस्वरूपको अनुभवले गुणमय वेदरूपी मोह टरिसकेको रहन्छ, ती सनन्दनादि मुनिहरूद्वारा ध्यान गरिने योग्य हुनुहुन्छ ॥२४॥ अतः जसमा मायिक गुण, कर्म, लिंग र नाम-रूपको तिरोभाव भइसकेको छ, जो कार्यकारणभावले रहित छन्,ती केवल ज्ञानोपदेशको

निम्ति नै शरीर धारण गर्ने हजुर पुराण पुरुषलाई म प्रणाम गर्दछु ॥२५॥ हे प्रभो ! काम, लोभ, ईर्ष्या तथा मोहादिले भ्रान्त-चित्त भएका पुरुष हजुरको मायाले रचित यस लोकमा परमार्थ-बुद्धि गरेर गृहस्थी आदिमा भौंतारिई रहन्छन् ॥२६॥ हे सर्वभूतात्मन् ! आज हजुरको दर्शन पाएर विषयाभिलाषी, कर्म र इन्द्रियहरूका आश्रयरूपी मेरो बलियो मोहपाश राम्ररी काटियो ॥२७॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! यसरी आफ्नो प्रभावको वर्णन सुनेर भगवान् कपिल मुनि अंशुमानप्रति हृदयले अनुग्रह गर्दै यस प्रकार भन्न लागे ॥२८॥ कपिलजी भन्दछन्–हे वत्स ! यो घोडा तिम्रा पितामहको यज्ञ पशु हो, तिमी यसलाई लिएर जाऊ । यी तिम्रा दग्ध पितृगण गङ्गाजल पाएरनै तर्न सक्दछन् ॥२९॥ त्यसपछि अंशुमानले कपिल मुनिको परिक्रमा गरी, शिर न्युराई प्रणाम गरे त त्यो घोडा यज्ञ मण्डपमा ल्याए । अनि सगरले त्यस यज्ञपशुले आफ्नो यज्ञ पूर्ण गरे ॥३०॥ त्यसपछि अंशुमानलाई राज्य दिएर निःस्पृह र बन्धनहीन भएर और्व ऋषिको उपादिष्ट मार्गबाट परमपद पाए ॥३१॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायामष्टमोऽध्यायः ॥८॥

त्वन्मायारचिते लोके वस्तुबुद्धया गृहादिषु ॥ भ्रमन्ति कामलोभेर्ष्यामोहविभ्रान्तचेतसः ॥ २६ ॥ अद्यनः सर्वभूतात्मन्कामकर्मेन्द्रियाशयः ॥ मोहपाशो दृढश्छिन्नो भगवंस्तव दर्शनात् ॥ २७ ॥ श्रीशुक उवाच ॥ इत्थं गीतानुभावस्तं भगवान्कपिलो मुनिः ॥ अंशुमन्तमुवाचेदमनुगृह्य धिया नृप ॥२८॥ श्रीभगवानुवाच ॥ अश्वोऽयं नीयतां वत्स पितामहपशुस्तव ॥ इमे च पितरो दग्धा गङ्गाम्भोऽर्हन्ति नेतरम् ॥ २९ ॥ तं परिक्रम्य शिरसा प्रसाद्य हयमानयत् ॥ सगरस्तेन पशुना क्रतुशेषं समापयत् ॥ ३० ॥ राज्यमंशुमति न्यस्य निःस्पृहो मुक्तबन्धनः ॥ और्वोपदिष्टमार्गेण लेभे गतिमनुत्तमाम् ॥ ३१ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे सगरोपाख्यानेऽष्टमोऽध्यायः ॥ ८ ॥

श्रीशुक उवाच ॥ अंशुमाँश्च तपस्तेपे गङ्गानयनकाम्यया ॥ कालं महान्तं नाशक्नोत्ततः कालेन संस्थितः ॥१॥ दिलीपस्तत्सुतस्तद्वदशक्तः कालमेयिवान् ॥ भगीरथस्तस्य पुत्रस्तेपे स सुमहत्तपः ॥२॥ दर्शयामास तं देवी प्रसन्ना वरदाऽस्मि ते ॥ इत्युक्तः स्वमभिप्रायं शशंसावनतो नृपः ॥३॥ कोऽपि धारयिता वेगं पतन्त्या मे महीतले ॥ अन्यथा भूतलं भित्त्वा नृप यास्ये रसातलम् ॥४॥ किं चाहं न भुवं यास्ये नरा मय्यामृजन्त्यघम् ॥ मृजामि तदघं कुत्र राजँस्तत्र विचिन्त्यताम् ॥५॥ भगीरथ उवाच ॥ साधवो न्यासिनः शान्ता ब्रह्मिष्ठा लोकपावनाः ॥ हरन्त्यघं तेऽङ्गसङ्गात्तेष्वास्ते

( गङ्गाजीको अवतरण र राजा सौदासको वृत्तान्त ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! राजा अंशुमानले गङ्गाजीलाई ल्याउनका निम्ति चिरकालसम्म तपस्या गरे, तर ती आफ्नो काममा सफल भएनन् र अन्त्यमा काल उपस्थित भएपछि परमधाम गए ॥१॥ त्यस्तै तिनका पुत्र दिलीप पनि असफल भएर नै देहत्याग गरेर गए । त्यसपछि दिलीपका पुत्र भगीरथले अत्यन्त घोर तपस्या गरे ॥२॥ त्यसले प्रसन्न भएर गङ्गादेवीले उनलाई दर्शन दिइन् र भनिन्–'म तिमीलाई वर दिन आएकी हुँ ।' अनि राजा भगीरथले अति विनयपूर्वक आफ्नो अभिप्राय भनेर सुनाए ॥३॥ गङ्गाजीले भनिन्–हे राजन् ! जब म स्वर्गबाट पृथिवीतलमा बर्सनेछु, तब कोही मेरो वेग थाम्न सक्ने पनि त चाहियो ! नभए म पृथिवीलाई फोरेर सोझै रसातलमा पुग्नेछु ॥४॥ यसको अतिरिक्त यौटा कारण अर्को पनि छ, जसले म पृथिवीमा आउनै सक्तिन, किनकि त्यहाँका मानिसहरू ममा आफ्ना सबै पाप

पखाल्नेछन्, अनि मैले ती पापहरू कहाँ पखाल्ने ? यो पनि विचार गर ॥५॥ राजा भगीरथले भने–'हे माता ! तीनैं थरिका एषणाहरू त्यागिसकेका शान्त, ब्रह्मनिष्ठ र लोकहरूलाई पवित्र पार्ने सज्जन आफ्ना अङ्ग-अङ्गबाट हजुरका सबै पाप नष्ट पारिदिन्छन् किनकि उनमा सर्वपापहारी भगवान् विद्यमान रहनु हुन्छ ॥६॥ जसमा यो सारा जगत् धागोमा वस्त्र जस्तै एकाकार रहन्छ, ती सबै देहधारीहरूका आत्मा रुद्रभगवान् हजुरको वेग थाम्छन् ॥७॥ यति भनेर राजा भगीरथले तपस्याद्वारा शिवजीलाई प्रसन्न पारे। हे राजन् ! थोरै नै समयमा भगवान शिव राजामाथि प्रसन्न भए ॥ ८ ॥ अनि सर्वलोक-हितकारी श्रीशङ्कर भगवान्ले राजाको कथनलाई 'तथास्तु' भनेर स्वीकार गरेर र जसको पावन जल भगवान् विष्णुको चरणोदक हुनाले पवित्र मानिएको छ, ती गङ्गालाई आफ्नो मस्तकमा धारण गरे ॥ ९ ॥ त्यसपछि राजर्षि भगीरथ त्रिभुवन पावनी गङ्गालाई त्यहाँ लिएर हिंडे, जहाँ उनका पितृ भस्मीभूत भएर पढिरहेका थिए ॥१०॥ वायु झैं वेग हुने रथमा गइरहेको अनुगमन गर्ने भएकी गङ्गाजीले सबै देश-देशान्तरहरूलाई पवित्र पार्दै भस्मीभूत सगर-पुत्रहरूलाई आफ्नो जलले

ह्यघभिद्धरिः॥६॥धारयिष्यति ते वेगं रुद्रस्त्वात्मा शरीरिणाम्॥ यस्मिन्नोतमिदं प्रोतं विश्वं शाटीव तन्तुषु॥७॥ इत्युक्त्वा स नृपो देवं तपसाऽतोषयच्छिवम् ॥ कालेनाल्पीयसा राजँस्तस्येशः समतुष्यत ॥ ८ ॥ तथेति राज्ञाऽभिहितं सर्वलोकहितः शिवः ॥ दधारावहितो गङ्गां पादपूतजलां हरेः ॥ ९ ॥ भगीरथः स राजर्षिर्निन्ये भुवनपावनीम् ॥ यत्र स्वपितृणां देहा भस्मीभूताः स्म शेरते ॥ १० ॥ रथेन वायुवेगेन प्रयान्तमनुधावती ॥ देशान्पुनन्ती निर्दग्धनासिञ्चत्सगरात्मजान् ॥११॥ यज्जलस्पर्शमात्रेण ब्रह्मदण्डहता अपि ॥ सगरात्मजा दिवं जग्मुः केवलं देहभस्मभिः ॥ १२ ॥ भस्मीभूताङ्गसङ्गेन स्वर्याताः सगरात्मजाः ॥ किं पुनः श्रद्धया देवीं ये सेवन्ते धृतव्रताः ॥१३॥ न ह्येतत्परमाश्चर्यं स्वर्धुन्या यदिहोदितम् ॥ अनन्तचरणाम्भोज प्रसूताया भवच्छिदः ॥१४॥ तन्निवेश्य मनो यस्मिञ्छ्रद्धया मुनयोऽमलाः ॥ त्रैगुण्यं दुस्त्यजं हित्वा सद्यो यातास्तदात्मताम् ॥ १५ ॥ श्रुतो भगीरथाज्जज्ञे तस्या नाभोऽपरोऽभवत् ॥ सिन्धुद्वीपस्ततस्तस्मादयुतायुस्ततोऽभवत् ॥ १६ ॥ ऋतुपर्णो नलसखो योऽश्वविद्यामयान्नलात् ॥ दत्त्वाऽक्षहृदयं चास्मै सर्वकामाँस्तु तत्सुतः ॥ १७ ॥ ततः सुदासस्तत्पुत्रो मदयन्तीपतिर्नृप ॥ आहुर्मित्रसहं यं वै कल्माषांघ्रिमुत क्वचित् ॥ वसिष्ठशापाद्रक्षोऽभूदनपत्य.

सिंची दिइन् ॥११॥ आफ्ना भस्तीभूत शरीरमा त्यस जलको स्पर्शमात्र हुनाले गर्दा सगर-पुत्र ब्रह्मशापले हत भएका भए पनि स्वर्गवासी भए। अहो ! ती सगर-पुत्र त त्यस जलले केवल आफ्नो भस्मीभूत शरीरहरूको संसर्ग हुनाले नै स्वर्ग गएका थिए–अनि जो व्रती जन गङ्गाजीको श्रद्धापूर्वक नित्य सेवन गर्दछन् उनको विषयमा भन्ने कुरा नै के छ ?॥१२-१३॥ जसमा निर्मल स्वभावका मुनिजन श्रद्धासाथ चित्त लगाएर, जसबाट मुक्त हुनु कठिन छ, तीनैं गुणलाई त्यागेर तद्रूप हुन्छन् । ती भव-बन्धनाशक भगवच्चरणारविन्दबाट निस्केकी पवित्र श्रीगाङ्गको विषयमा यहाँ जे जति भनिएको छ, त्यो कुनै छक्क पर्ने कुरा होइन ॥१४-१५॥ राजा भगीरथबाट श्रुत, त्यसबाट नाभ, नाभबाट सिन्धुद्वीप र त्यसबाट अयुतायु नामको छोरो उत्पन्न भयो । त्यस युतायुबाट राजा ऋतुपर्ण नलको मित्र जन्मियो ! ऋतुपर्णले नललाई पासा फ्याँक्ने विद्याको रहस्य सिकाएर उनीबाट अश्वविद्या सिकेका थिए । त्यसको छोरो सर्वकाम जन्म्यो ॥१६-१७॥ सर्वकामको छोरो सुदास भयो,जो दमयन्तीको पति थियो । यसैलाई कहीं मित्रसह र कहीं कल्माषपाद पनि भन्दछन् । वसिष्ठको श्रापले त्यो राक्षस

भएका थियो र आफ्नो कर्मले जीवनभरि सन्तानहीन रह्यो । यति कथा सुनेर राजा परीक्षितले भने–हे भगवन् ! म यो जान्न इच्छा गर्दछु–महात्मा सौदासलाई गुरुको श्राप किन परेको थियो ? यदि यो कुरा गोपनीय छैन भने हजुर सुनाउनु हवस् ॥१८-१९॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! कुनै एक समयको कुरा हो–राजा सौदासले शिकार खेल्ने प्रसङ्गमा कुनै राक्षसलाई मारिदिए, तर त्यसको भाईलाई छाडिदिए । अनि त्यो ( राक्षसको भाई ) त्यसको साटो फेर्ने इच्छाले भान्से बनेर राजाकहाँ बस्नलाग्यो र भोजन इच्छुक गुरु वसिष्ठलाई मानिसको मासु पकाएर पस्किदियो ॥२०-२१॥ त्यस अभक्ष्य भोजन पस्केको देखेर वसिष्ठजीले सहसा रिसाएर राजालाई श्राप दिए—मलाई नर-मांस दिने अपराधमा तँ राक्षस हुनेछस्' ॥२२॥ जब उनले यो त राक्षसको काम हो भन्ने थाहा पाए तब त्यस श्रापको अवधि बाह्र वर्ष निश्चित गरिदिए । अनि सौदास पनि अंजलिमा जल लिएर गुरु वसिष्ठलाई श्रापदिनको निम्ति उद्यत भए ॥२३॥ तर रानी मदयन्तीले छेकिन् र उनले त्यो श्राप-जल दिशा, आकाश तथा पृथ्वी सबैलाई जीवमय जानेर अन्यत्र नछाडेर आफ्नै खुट्टामा

स्वकर्मणा ॥ १८ ॥ राजोवाच ॥ किंनिमित्तो गुरोः शापः सौदासस्य महात्मनः ॥ एतद्वेदितुमिच्छामः कथ्यतां न रहो यदि ॥ १९ ॥ श्रीशुक उवाच ॥ सौदासो मृगयां किञ्चिच्चरन्रक्षो जघान ह ॥ मुमोच भ्रातरं सोऽथ गतः प्रतिचिकीर्षया ॥२०॥ स चिन्तयन्नघं राज्ञः सूदरूपधरो गृहे ॥ गुरवे भोक्तुकामाय पक्त्वा निन्ये नरामिषम् ॥२१॥ परिवेक्ष्यमाणं भगवान्विलोक्याभक्ष्यमञ्जसा ॥ राजानमशपत्क्रुद्धो रक्षो ह्येवं भविष्यसि ॥२२॥ रक्षःकृतं तद्विदित्वा चक्रे द्वादशवार्षिकम् ॥ सोऽप्यपोऽञ्जलिनादाय गुरुं शप्तुं समुद्यतः ॥ २३ ॥ वारितो मदयन्त्यापो रुशतीः पादयोर्जहौ ॥ दिशः खमवनीं सर्वं पश्यञ्जीवमयं नृपः ॥ २४ ॥ राक्षसं भावमापन्नः पादे कल्माषतां गतः ॥ व्यवायकाले ददृशे वनौकोदम्पती द्विजौ ॥ २५ ॥ क्षुधार्तो जगृहे विप्रं तत्पत्न्याहाकृतार्थवत् ॥ न भवान्राक्षसः साक्षादिक्ष्वाकूणां महारथः ॥२६॥ मदयन्त्याः पतिर्वीर नाधर्मं कर्तुमर्हसि ॥ देहि मेऽपत्यकामाया अकृतार्थं पतिं द्विजम् ॥२७॥ देहोऽयं मानुषो राजन्पुरुषस्याखिलार्थदः ॥ तस्मादस्य वधो वीर सर्वार्थवध उच्यते ॥२८॥ एषहि ब्राह्मणो विद्वांस्तपःशीलगुणान्वितः ॥ आरिराधयिषुर्ब्रह्म महापुरुषसंज्ञितम् ॥ सर्वभूतात्मभावेन भूतेष्वन्तर्हितं गुणैः ॥ २९ ॥ सोऽयं ब्रह्मर्षिवर्यस्ते राज-

खन्याए । यस प्रकार मित्र अर्थात् पत्नीको कुरा स्वीकार गर्नाले ती 'मित्रसह' यस नामले विख्यात भए ॥२४॥ यस प्रकार ती राक्षस भावमा प्राप्त भए तर त्यस श्रापको जल पर्नाले तिनका खुट्टा कल्माषवर्णका भए । यसै कारण उनको नाम 'कल्माषपाद' भन्ने रह्यो । एक दिन तिनले मैथुन कार्यमा रत ब्राह्मण दम्पतीलाई देखे । ती दम्पती वनवासी थिए । 'भोका हुनाले उनले ब्राह्मणलाई समाए । पत्नीकी अपूर्ण कामा जस्ती भएर बोलिन्–'वास्तवमा तिमी राक्षस होइनौ, तिमी साक्षात् इक्ष्वाकु वंशमा उत्पन्न र महारानी मदयन्तीका पति तथा यौटा धेरै ठूला महारथी हौ । हे वीर ! तिमीले अधर्म गर्नु उचित छैन । म सन्तानकी इच्छुक छु । यसै निम्ति तिमी मलाई अकृतार्थ पति फर्काइदेऊ ॥२५-२७॥ हे राजन् ! यो मानव शरीर जीवका सबै पुरुषार्थको दाता छ । अतएव हे वीर ! यसको वध सबै पुरुषार्थहरूको वध मानिन्छ, फेरि यो ब्राह्मण त असाधारण विद्वान् तथा तप, शील र गुणहरूले युक्त छन् । यी अहङ्कारादि गुणका कार्यहरू द्वारा सबै प्राणीहरूमा लुकेको परमपुरुषसंज्ञक परब्रह्म परमात्माको सबै प्राणीहरूका आत्मस्वरूपले उपासना गर्नेको अभिलाषी छन् ॥२८॥२९॥

हे समर्थ ! हे धर्मज्ञ ! पिताको हातबाट पुत्र-वधको समान तिमी राजर्षि-श्रेष्ठका हातबाट यी ब्रह्मर्षिश्रेष्ठको वध कसरी उचित हुन सक्तछ ? ॥३०॥ तिमी त साधु-समाजमा आदरणीय मानिन्छौ । अनि यौटी कपिला गाईको समान यी साधु-स्वभाव, निर्दोष, श्रोत्रिय तथा वेदवादी ब्राह्मणको वध किन गर्न खोजिरहेका छौ ? ॥३१॥ यदि तिमी यिनलाई आफ्नो भक्ष्य बनाउन भन्दा पहिले मलाई मारेर खाऊ किनकि यिनी नभएपछि म मृतक समान भएर एक क्षण पनि बाँच्न सक्नेछैन' ॥३२॥ ती करुणभाषिणी अबलाले यस प्रकार अनाथिनी जस्तै

षिप्रवराद्विभो ॥ कथमर्हति धर्मज्ञ वधं पितुरिवात्मजः ॥ ३० ॥ तस्य साधोरपापस्य भ्रूणस्य ब्रह्मवादिनः ॥ कथं वधं यथा बभ्रोर्मन्यते सम्मतो भवान् ॥ ३१ ॥ यद्ययं क्रियते भक्षस्तर्हि मां खाद पूर्वतः ॥ न जीविष्ये विना येन क्षणं च मृतकं यथा ॥ ३२ ॥ एवं करुणभाषिण्या विल-पन्त्या अनाथवत् ॥ व्याघ्रः पशुमिवाखादत्सौदासः शापमोहितः ॥ ३३ ॥ ब्राह्मणी वीक्ष्य दिधिषुं पुरुषादेन भक्षितम् ॥ शोचात्यात्मानमुर्वीशम-शपत्कुपिता सती ॥३४॥ यस्मान्मे भक्षितः पाप कामार्तायाः पतिस्त्वया ॥ तवापि मृत्युराधानादकृतप्रज्ञ दर्शितः ॥३५॥ एवं मित्रसहं शप्त्वा पति-लोकपरायणा ॥ तदस्थीनि समिद्धेऽग्नौ प्रास्य भर्तुर्गतिं गता ॥ ३६ ॥ विशापो द्वादशाब्दान्ते मैथुनाय समुद्यतः ॥ विज्ञाय ब्राह्मणीशापं महिष्या

धेरै विलाप गरेपछि पनि शापग्रस्त सौदासले ती ब्राह्मणलाई यस प्रकार खाइदिए, जसरी *व्याघ्र पशुलाई खाइदिन्छ ॥३३॥ ती ब्राह्मणीले आफ्नो गर्भाधानकारी ब्राह्मणलाई राक्षसद्वारा खाइएको देखेर शोक गर्दागर्दै बेसरी रिसाएर उनले राजालाई यस्तो शाप दिइन्–॥३४॥ हे पापी ! तैंले म कामविह्वला नारीको पतिलाई खाइदिएको छस् । अतएव हे मन्दमते ! तेरो मृत्यु पनि गर्भाधान गर्नाको कारणले नै हुनेछ' ॥३५॥ मित्रसह ( सौदास ) लाई यसरी शाप दिएर ती पति पतिपरायणा ब्राह्मणी आफ्ना पतिको हाडहरू बालेर अग्निमा हालिन् र

---

* उदाहरण ( उपकारी वैद्य र पाइने बाघ )—यौटा बाघ कुनै शिकारीको कालले पाइते भएर झाडीभित्र छटपटाइरहेको थियो । त्यहीं मार्गबाट यौटा दयालु वैद्य पनि जाँदै थिए । बाघको विकलता देखेर वैद्यलाई दया लाग्यो र त्यसको घाउ धोई-पुछी, मलहमपट्टी गरिदिएर जाने निश्चय गरे । त्यहीं अर्को वृक्षमा यौटा चमेरा बसेको थियो । उसले वैद्यलाई सावधान गर्दै भन्यो—'बाघ ठूलो पातक र पापकी प्राणी हुन्छ । यसलाई निको पारेर केही लाभ छैन ।' वैद्यले भने– 'बाघले आफ्नो स्वभावको अनुसरण गरे पनि मैले त यौटा दयालु मनुष्यको कर्तव्य पालन गर्नैपर्दछ ।' यति भनेर बाघको उपचार गरेर त्यहाँबाट हिँडिदिए । त्यति मात्र होइन ती दिनहुँ गएर त्यसको पट्टी फेरेर त्यसको घाउ निको पार्दै रहे । अन्त्यमा जब बाघ राम्रै निको भयो, तब वैद्यले त्यसलाई नमस्कार गरे । वैद्यलाई आशा थियो—बाघ मेरो यस उत्तम सेवामा आभार मान्ला र कुनै ठूलो वस्तु देला, तर तिनले ठूलो दुःख र आश्चर्यले देखे—बाघ आफ्नो नंग्रा उनको पाखुरामा राखेर भन्न लाग्यो—'वैद्यराज ! तिमी यसै उम्केर जान सक्तैनौ । निकै दिनदेखि खान नपाएर भोकले मर्न लागेको छु । यस वनमा कुनै अर्को शिकार पनि पाइन्न । अतः तिमी नै शिकार गर्नु बाहेक अरु कुनै उपाय पनि छैन । क्षमा गर्नोस् वैद्यजी ! तिमीले मेरो धेरै ठूलो सेवा गरेका छौ । तर मैले पनि यतिका दिनसम्म तिमीलाई ज्यूँदै घर जान दिएँ, यो तिम्रो सेवा को लागि कुनै साधारण पुरस्कार होइन ।' यति सुनेर वैद्यलाई आफ्नो मूर्खतामा ठूलो पछुतो भयो, तर तिनले साहस छाडेनन् । समयसूचक व्यवहार गर्दै उनले भने–'वनराज ! तिमी मलाई खान खोज्दैछौ, त्यसमा मलाई कुनै आपत्ति छैन । तिम्रो भक्ष्य बनेपछि मलाई मुक्ति मिल्नेछ । तर अहिले तिम्रा आँखामा दृष्टि पर्नासाथ मैले थाहा पाएँ–तिमीलाई डरलाग्दो नेत्ररोग भएको छ । यसको उपचार गरेनौ भने तिमी चाँडै नै मर्नेछौ । यति सुन्नासाथ बाघ नम्र भएर भन्न लाग्यो –'जसरी भए पनि मेरो यो रोग निको पारिदेउ । म जन्मभरि तिम्रो ठाकार मान्नेछु र तिमीलाई जीवन-दान पनि दिनेछु ।' वैद्यले स्वीकार गरेर त्यहाँ यौटा औषध खान दिए । त्यो विषयुक्त थियो । त्यो औषधि खानासाथ बाघ पछारियो र तत्काल मर्‍यो । घातक, धोखा दिने र कृतघ्न मनुष्यमा दया गर्नाले अपकार नै हुन्छ । तीबाट यसो होला भन्ने आशा गर्नु मूर्खता हो ।

उसैसित सती भएर आफू पनि पतिकै गतिमा प्राप्त भईं ॥ ३६ ॥ यता बाह्र वर्ष बितिसकेपछि जब राजा मित्रसह श्रापबाट मुक्त भएर मैथुन गर्न प्रवृत्त भए, तब महारानीले उनै ब्राह्मणीको श्राप स्मरण गरेर तिनलाई राम्ररी सुझाएर राखिन् ॥३७॥ त्यसै समयदेखि तिनले स्त्रीसुख पूर्णरूपेण त्यागिदिए। यस प्रकार आफ्नो कर्मवश जन्मभरि ती सन्तानहीन बनिरहे। त्यसपछि उनको अनुमतिले वशिष्ठजीले रानी मदयन्तीमा सन्तान उत्पन्न गर्ने अभिप्रायले गर्भाधान गरे ॥३८॥ रानीले सात वर्षसम्म त्यो गर्भ धारण गरिरहिन्, तैपनि बालक उत्पन्न भएन। अनि वसिष्ठले त्यसको पेटमा ढुङ्गाले हिर्काए। त्यसले जुन बालक जन्मियो, त्यो 'अश्मक' यस नामले प्रख्यात भयो ॥३९॥ अश्मकबाट मूलक उत्पन्न भयो। परशुरामले पृथ्वीलाई क्षत्रियहीन पार्ने बेलामा स्त्रीहरूले उसलाई बचाएका थिए। अतः उसको 'नारी-कवच' पनि नाम रह्यो र पृथ्वी क्षत्रिय-हीन भइसकेपछि त्यही क्षत्रियवंशको मूल बन्यो॥४०॥ त्यस मूलकका दशरथ, दशरथबाट ऐडविड, ऐडविडबाट राजा विश्वसह र विश्वसहका छोरा चक्रवर्ती खट्वाङ्ग भए ॥४१॥ त्यस दुर्जय वीर खट्वाङ्गले देवगणले विनय गरेपछि युद्धमा

स निवारितः ॥ ३७ ॥ तत ऊर्ध्वं स तत्याज स्त्रीसुखं कर्मणाऽप्रजः ॥ वसिष्ठस्तदनुज्ञातो मदयन्त्यां प्रजामधात् ॥ ३८ ॥ सा वै सप्त समा गर्भम्-बिभ्रन्न व्यजायत ॥ जघ्नेऽश्मनोदरं तस्याः सोऽश्मकस्तेन कथ्यते ॥ ३९ ॥ अश्मकान्मूलको जज्ञे यः स्त्रीभिः परिरक्षितः ॥ नारीकवच इत्युक्तो निःक्षत्रे मूलकोऽभवत् ॥४०॥ ततो दशरथस्तस्मात्तस्मात्पुत्र ऐडविडस्ततः ॥ राजा विश्वसहो यस्य खट्वाङ्गश्चक्रवर्त्यभूत् ॥ ४१ ॥ यो देवैरर्थितो दैत्यानवधीद्युधि दुर्जयः ॥ मुहूर्तमायुर्ज्ञात्वैत्य स्वपुरं सन्दधे मनः ॥४२॥ न मे ब्रह्मकुलात्प्राणाः कुलदैवान्न चात्मजाः ॥ न श्रियो न मही राज्यं न दाराश्चातिवल्लभाः ॥ ४३ ॥ न बाल्येऽपि मतिर्मह्यमधर्मे रमते क्वचित् ॥ नापश्यमुत्तमश्लोकादन्यत्किञ्चन वस्त्वहम् ॥ ४४ ॥ देवैः कामवरो दत्तो मह्यं त्रिभुवनेश्वरैः ॥ न वृणे यमहं कामं भूतभावनभावनः ॥ ४५ ॥ ये विक्षिप्तेन्द्रियधियो देवास्ते स्वहृदि स्थितम् ॥ न विन्दन्ति प्रियं शश्वदात्मानं किमुतापरे ॥ ४६ ॥ अथेशमायारचितेषु सङ्गं गुणेषु गन्धर्वपुरोपमेषु ॥ रूढं प्रकृत्यात्मनि विश्वकर्तुर्भावेन हित्वा तमहं प्रपद्ये ॥४७॥ इति व्यवसितो बुद्ध्या नारायणगृहीतया ॥ हित्वाऽन्यभावमज्ञानं ततः स्वं भावमाश्रितः ॥ ४८ ॥ यत्तद्ब्रह्म परं सूक्ष्ममशून्यं शून्यकल्पितम् ॥

दैत्यहरूलाई मारेका र आयु केवल एक मुहूर्त मात्रको थाहा पाएर नगरमा आई उनले आफ्नो मन भगवान्मा लगाइदिए ॥ ४२ ॥ उनले विचारे—मलाई कुलदेव स्वरूप ब्राह्मणवंश-भन्दा बढी प्राण, पुत्र, धन, धरती, राज्य र रानीहरू पनि प्रिय थिएनन् ॥ ४३ ॥ मेरो बुद्धि बाल्यावस्थामै पनि कहिल्यै अधर्ममा लागेन र मैले पवित्रकीर्ति श्रीहरि बाहेक अरू कुनै वस्तु देखेकै छैन ॥४४॥ त्रिभुवनपति देवगणले मलाई अभिलषित दिन्छु भनेका थिए, तर ती भूतभावन भगवानमा नै नित्य भावना राख्नाले नै मैले उनीसित केही पनि भोग्य पदार्थ मागीन ॥४५॥ किनकि जसको चित्त र इन्द्रियवर्ग चञ्चल रहन्छन्, ती सत्त्वप्रधान भएर पनि आफ्नो अन्तःकरणमा स्थित परमप्रिय सनातन आत्मा श्रीहरिलाई प्राप्त गर्न असमर्थ हुन्छन् भने अरूको विषयमा के कुरा गर्ने ? ॥४६॥ अतएव भवानकी मायाले रचित गन्धर्व-नगर सदृश विषयहरूको आसक्ति, जो स्वभावैले चित्तमा टाँसिएको छ, त्यागेर जगत्कर्ता जगदीश्वरको भावनाले म उनैको शरण पर्दछु ॥४७॥ हे राजन् ! भगवदाकृष्ट-बुद्धिद्वारा यस्तो निश्चय गरेर राजा खट्वाङ्ग अनन्यभावले गृहादिमा आत्मबुद्धिरूपी अज्ञानलाई

त्यागेर त्यो आत्मस्वरूपमा स्थित भए, जुन अतिशय सूक्ष्म परब्रह्म शून्य समान भएर पनि अशून्य तथा सत्यरूपले भासमान छन्छ र जसलाई भक्तजन 'भगवान् वासुदेव' भन्दछन् ॥४८॥ ९॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥९॥

(श्रीरामचन्द्रको चरित्र)—श्रीशुकदेव भन्नुहुन्छ–राजा खट्वाङ्गबाट दीर्घबाहु, दीर्घबाहुबाट रघु, रघुबाट अज र अजबाट महाराज दशरथको जन्म भयो ॥१॥ देवताहरूले प्रार्थना गरेपछि राजा दशरथकहाँ साक्षात् ब्रह्मस्वरूप भगवान् हरि आफ्ना अंशांशले राम, लक्ष्मण, भरत र शत्रुघ्न चार रूप धारण गरेर पुत्रभावमा प्राप्त भए ॥२॥ हे राजन् ! ती सीतापति रामचन्द्रको चरित्र धेरै तत्त्वज्ञानी मुनीश्वरहरूले अनेक प्रकारले वर्णन गरेका छन् र तिमीले पनि धेरैपल्ट सुनिसकेका छौ, तैपनि योप्रसङ्ग संक्षेपमा वर्णन गर्दछु ॥३॥ राम आफ्ना पिताको आज्ञा पालन गर्न राज्य त्यागेर आफ्नी प्रिया सीताका करपल्लवको स्पर्श सहन गर्नमा पनि असमर्थ सुकुमार चरणकमल द्वारा वन-वन डुले। अनि कपिराज हनुमान

भगवान्वासुदेवेति यं गृणन्ति हि सात्वताः ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे सूर्यवंशानुवर्णने नवमोऽध्यायः ॥ ९ ॥

श्रीशुक उवाच ॥ खट्वाङ्गाद्दीर्घबाहुश्च रघुस्तस्मात्पृथुश्रवाः ॥ अजस्ततो महाराजस्तस्माद्दशरथोऽभवत् ॥ १ ॥ तस्यापि भगवानेष साक्षाद्ब्रह्ममयो हरिः ॥ अंशांशेन चतुर्धाऽगात्पुत्रत्वं प्रार्थितः सुरैः ॥ रामलक्ष्मणभरतशत्रुघ्ना इति संज्ञया ॥२॥ तस्यानुचरितं राजन्नृषिभिस्तत्त्वदर्शिभिः ॥ श्रुतं हि वर्णितं भूरि त्वया सीतापतेर्मुहुः ॥ ३ ॥ गुर्वर्थे त्यक्तराज्यो व्यचरदनुवनं पद्मपद्भ्यां प्रियायाः पाणिस्पर्शाक्षमाभ्यां मृजितपथरुजो यो हरीन्द्रानुजाभ्याम् ॥ वैरूप्याच्छूर्पणख्याः प्रियविरहरुषारोपितभ्रूविजृम्भत्रस्ताब्धिर्बद्धसेतुः खलदवदहनः कोसलेन्द्रोऽवतान्नः ॥४॥ विश्वामित्राध्वरे येन मारीचाद्या निशाचराः ॥ पश्यतो लक्ष्मणस्यैव हता नैर्ऋतपुङ्गवाः ॥५॥ यो लोकवीरसमितौ धनुरैशमुग्रं सीतास्वयंवरगृहे त्रिशतोपनीतम् ॥ आदाय बालगजलील इवेक्षुयष्टिं सज्जीकृतं नृप विकृष्य बभञ्ज मध्ये ॥ ६ ॥ जित्वाऽनुरूपगुणशीलवयोऽङ्गरूपां सीताभिधां श्रियमुरस्यभिलब्धमानाम् ॥ मार्गे व्रजन्भृगुपतेर्व्यनयत्प्ररूढं दर्पं महीमकृत यः स्थिरराजबीजाम् ॥ ७ ॥ यः सत्यपाशपरिवीतपितुर्निदेशं स्त्रैणस्य चापि शिरसा जगृहे सभार्यः ॥ राज्यं

तथा लक्ष्मणजी जसको बाटोका बाधाहरू हटाउँदै थिए, रावणकी बहिनी शूर्पणखालाई विरूप पार्नाले प्राप्त प्रिया-विरहले क्रोधवश खैचिएका भृकुटीले समुद्र पनि डराएका थिए र समुद्रमा पुल बाँधेर दुष्टदलरूपी वनको निम्ति दावानल सिद्ध भएका थिए, ती कोसलपति भगवान् राम हाम्रो रक्षा गरुन् ॥ ४ ॥ जसले विश्वामित्रको यज्ञमा लक्ष्मणको सामुन्ने राक्षसहरूमा प्रधान मारीच आदिलाई मारे ॥५॥ हे नृप ! जसले सीता-स्वयंवर तथा संसारका सबै वीरहरूको सभामा तीन सय वीरले ल्याइएको शिवको प्रचण्ड धनुष, उखु भाँचिदिने बालगज झैं ख्याल-ख्यालमै उचालेर ताँदो चढाएर तान्दा भाँचियो ॥६॥ यस्तो पुरुषार्थ देखाई जसले पहिलेदेखि नै आफ्नो हृदयमा बसालेकी रूप, गुण, शील अवस्था र शरीरको बनोटमा आफ्नै अनुरूप सीता नामकी लक्ष्मीलाई जिते र बाटोमा जाँदा पृथ्वीलाई एक्काईस पल्ट क्षत्रियहीन पार्ने परशुरामको बढेको गर्वलाई खर्व गरेका थिए ॥७॥ जुन राम र तिनकी प्राणप्रिया सीताले स्त्रीको वशीभूत भएर पनि सत्यपाशमा बद्ध आफ्ना पिताको आज्ञालाई स्वीकार गरे र प्राण झैं प्रियराज्य, सम्पत्ति, प्रेमी, सुहृद् र निवास-

S22

स्वान त्यागी असङ्ग भावले वनमा हिंडिदिए, ती कोसलपति राम हाम्रा कल्याण गरून् ॥ ८ ॥ अयोध्याबाट वनमा पुगेर श्रीरामले राक्षसराज रावणका बहिनी तथा अशुद्ध बुद्धि सूर्पणखालाई कुरूप पारे। त्यसका पृष्ठपोषक खर, दूषण र त्रिशिरा आदि चौध हजार राक्षस-बन्धुहरूलाई मारेर हातमा दुर्जय धनुष धारण गरी डुल्दै ठूलो कष्टपूर्वक वनमा निवास गरे ॥९॥ हे राजन्! त्यसपछि सूर्पणखाको मुखबाट सीताजीको सौन्दर्यको कुरा सुनेर कामातुर रावणले पठाएको विचित्र मृगवेषधारी मारीचद्वारा आश्रमबाट निकै पर पुऱ्याएपछि भगवान् रामले त्यसलाई एकै बाणले यस प्रकार यति छिटै मारिदिए, जसरी दक्षप्रजापतिलाई वीरभद्रले मारेका थिए ॥१०॥ त्यसैबेला मौका पाएर परोक्षमा हिंसक जन्तु झैं राक्षसाधम रावणद्वारा विदेह राजकुमारी जानकी हरिएपछि 'स्त्रीमा आसक्त पुरुषहरूको गति यस्तै हुन्छ' भन्ने देखाउनका लागि आफ्नी प्रियसित वियुक्त भएर अत्यन्त दीन जस्तै भएर भाई लक्ष्मणका साथ वनमा डुल्न लागे ॥११॥ अति ममता-सेवा रूपी विचित्र कृत्यले जसको सबै कर्मसमूह दग्ध भइसकेका थिए, ती जटायुको दाह गरेर कबन्धलाई मारेर अनि

श्रियं प्रणयिनः सुहृदो निवासं त्यक्त्वा ययौ वनमसूनिव मुक्तसङ्गः ॥ ८ ॥ रक्षःस्वसुर्व्यकृत रूपमशुद्धबुद्धेस्तस्याः खरत्रिशिरदूषणमुख्यबन्धून् ॥ जघ्ने चतुर्दशसहस्रमपारणीयकोदण्डपाणिरटमान उवास कृच्छ्रम् ॥९॥ सीताकथाश्रवणदीपितहृच्छयेन सृष्टं विलोक्य नृपतेर्दशकन्धरेण ॥ जघ्नेऽद्भुतैणवपुषाऽऽश्रमतोऽपकृष्टो मारीचमाशु विशिखेन यथा कमुग्रः ॥१०॥ रक्षोऽधमेन वृकवद्विपिनेऽसमक्षं वैदेहराजदुहितर्यपयापितायाम् ॥ भ्राता वने कृपणवत्प्रियया वियुक्तः स्त्रीसङ्गिनां गतिमिति प्रथयंश्चचार ॥ ११ ॥ दग्ध्वात्मकृत्यहतकृत्यमहन्कबन्धं सख्यं विधाय कपिभिर्दयितागतिं तैः ॥ बुद्ध्वाथ वालिनि हते प्लवगेन्द्रसैन्यैर्वेलामगात्स मनुजोऽजभवार्चिताङ्घ्रिः ॥ १२ ॥ यद्रोषविभ्रमविवृत्तकटाक्षपातसंभ्रान्तनक्रमकरो भयगीर्णघोषः ॥ सिन्धुः शिरस्यर्हणं परिगृह्य रूपी पादारविन्दमुपगम्य बभाष एतत् ॥ १३ ॥ न त्वां वयं जडधियो नु विदाम भूमन् कूटस्थमादिपुरुषं जगतामधीशम् ॥ यत्सत्त्वतः सुरगणा रजसः प्रजेशा मन्योश्च भूतपतयः स भवान्गुणेशः ॥१४॥ कामं प्रयाहि जहि विश्रवसोऽवमेहं त्रैलोक्यरावणमवाप्नुहि वीर पत्नीम् ॥ बध्नीहि सेतुमिह ते यशसो वितत्यै गायन्ति दिग्विजयिनो यमुपेत्य भूपाः ॥१५॥ बद्ध्वोदधौ रघुपतिर्विविधाद्रिकूटैः सेतुं कपीन्द्रकरकम्पितभूरुहाङ्गैः ॥

बानरसँग मित्रता गरेर तिनैद्वारा आफ्नी प्रियाको पत्तो लगाए र जसका चरण कमल ब्रह्मा तथा महादेवद्वारा पूजित थिए, ती मायामनुष्य-रूपधारी रघुनाथजी बानरराजको सेनाका साथ समुद्रतटमा गए ॥१२॥ त्यसबेला जब कि क्रोधले गर्दा फैलिएका उनका कटाक्षहरूले समुद्रका नक्र-मकर आदि जीव आत्तिन लागे र भयले गर्दा, गर्जिरहने सिन्धुको गर्जन स्तम्भित भएको थियो, त्यो समुद्र मूर्तिमान् भएर आफ्नो सिरमा अनेक रत्न बोकी उनका चरण कमलमा उपस्थित भएर भन्न लागे– ॥१३॥ 'हे भूमन्! जडबुद्धि भएका हुनाले म हजुरलाई जान्न सक्दिन। हजूर कूटस्थ आदिपुरुष र सबै लोकका अधीश्वर हुनुहुन्छ। हजुरका सत्त्वगुणले देवता, रजोगुणले प्रजापति र तमोगुणले भूतपति उत्पन्न भएका हुन् र हजुर सबै गुणका नियन्ता हुनुहुन्छ ॥१४॥ हे वीर! हजुर प्रसन्नताले जानुस् र तीनै लोकलाई रुवाउने विश्रवाको मलरूपी रावणलाई मारेर आफ्नी प्रियालाई प्राप्त गर्नुस्। सुयशको विस्तारार्थ यहाँ यस्तो सेतु तयार गर्नुहवस् जसको नजीक पुगेर सबै दिग्विजयी भूपाल हजुरको कीर्तिगान गरून्' ॥ १५ ॥ त्यसपछि रघुनाथजी वृक्षका हाँगाहरूले युक्त एवं

वानर वीरहरूका बाहुले ल्याइएका अनेक शैल-शिखरहरूले समुद्रमा सेतु बनाएर विभीषणले देखाएका मार्गबाट सुग्रीव, नल तथा हनुमान आदि वानर यूथपतिका साथै त्यस लंकामा पसे, जसलाई पहिले हनुमानजीले पोलेर भस्म पारेका थिए ॥१६॥ ती लङ्कापुरीका क्रीडास्थान, धान्यागार गृहद्वार, पुरद्वार, सभा-भवन, अट्टालिका र पक्षीहरू बस्ने स्थान वानरराज (सुग्रीव) का सेनाले व्याप्त भए र वेदी, ध्वजा, सुवर्णकलशमय चौबाटाहरू भत्किनाले गजयूथ द्वारा मर्दित नदी जस्तै त्यो पुरी अस्तव्यस्त भयो ॥१७॥ नगरको त्यस्तो दशा देखेर राक्षस-राज रावणले निकुम्भ, कुम्भ, धूम्राक्ष, दुर्मुख, सुरान्तक, नरान्तक, आफ्नो छोरो मेघनाद, प्रहस्त, अतिकाय र विकम्पन आदि आफ्ना सबै अनुयायीहरूलाई र अन्त्यमा कुम्भकर्णलाई पनि भगवान् रामसित युद्ध गर्नका निम्ति संग्रामभूमिमा पठायो। अनि तरवार-त्रिशूल, बाण, ऋष्टि, शक्ति, पाश, भाला र खड्ग आदि अस्त्रहरूले दुर्गम त्यो राक्षस-सेनासित लड्नका लागि श्रीरामचन्द्र, सुग्रीव, लक्ष्मण, गन्धमादन, नील, अंगद, जम्बवान एवं पनस आदि वीरहरूसाथै अघिबढे ॥ ८-१८॥ रघुनाथका अङ्गदादि सेनापति राक्षसहरूका हात्ती

सुग्रीवनीलहनुमत्प्रमुखैरनीकैर्लङ्कां विभीषणदृशाऽऽविशदग्रदग्धाम् ॥ १६ ॥ सा वानरेन्द्रबलरुद्धविहारकोष्ठश्रीद्वारगोपुरसदोवलभीविटङ्का ॥ निर्भज्यमानधिषणध्वजहेमकुम्भशृङ्गाटका गजकुलैर्ह्रदिनीव घूर्णा ॥ १७ ॥ रक्षःपतिस्तदवलोक्य निकुम्भकुम्भधूम्राक्षदुर्मुखसुरान्तनरान्तकादीन् ॥ पुत्रं प्रहस्तमतिकायविकम्पनादीन्सर्वानुगान्समहिनोदथ कुम्भकर्णम् ॥१८॥ तां यातुधानपृतनामसिशूलचापप्रासर्ष्टिशक्तिशरतोमरखड्गदुर्गाम् ॥ सुग्रीवलक्ष्मणमरुत्सुतगन्धमादनीलाङ्गदर्क्षपनसादिभिरन्वितोऽगात्॥१९॥तेऽनीकपा रघुपतेरभिपत्य सर्वे द्वन्द्वं वरूथमिभपत्तिरथाश्वयोधैः ॥ जघ्नुर्द्रुमैर्गिरिगदेषुभिरङ्गदाद्याः सीताभिमर्शहतमङ्गलरावणेशान्॥२०॥रक्षःपतिःस्वबलनष्टिमवेक्ष्य रुष्ट आरुह्य यानकमथाभिससार रामम् ॥ स्वःस्यन्दने द्युमति मातलिनोपनीते विभ्राजमानमहनन्निशितैः क्षुरप्रैः ॥२१॥ रामस्तमाह पुरुषादपुरीष यन्नः कान्ताऽसमक्षमसतापहृता श्ववत्ते ॥ त्यक्तत्रपस्य फलमद्य जुगुप्सितस्य यच्छामि काल इव कर्तुरलङ्घ्यवीर्यः ॥२२॥ एवं क्षिपन्धनुषि सन्धितमुत्ससर्ज बाणं स वज्रमिव तद्धृदयं बिभेद ॥ सोऽसृग्वमन्दशमुखैर्न्यपतद्विमानाद्धाहेति जल्पति जने सुकृतीव रिक्तः ॥२३॥ ततो निष्क्रम्य लङ्काया यातुधान्यः सहस्रशः ॥ मन्दोदर्या समं तस्मिन्प्ररुदत्य उपाद्रवन् ॥२४॥

रथ, अश्व-सवार र पैदल सेनासित द्वन्द्वयुद्धको रीतिले लड्नलागेर सीताजीको स्पर्श गर्नाले मङ्गलहीन रावण नै जसको स्वामी थियो, ती वीरहरूलाई वृक्ष, पर्वतशिखर, गदा तथा बाणहरूले मार्नलागे ॥२०॥ यस प्रकार आफ्नो सेना विध्वंस भएको देखेर कुपित राक्षसराज रावण विमानमा चढेर भगवान् रामको साम्हने आयो र मातलिद्वारा हाँकिएको त्यो परम तेजस्वी स्वर्गीय रथमा विराजमान श्रीरामचन्द्रमाथि तीखा-तीखा बाणले आक्रमण गर्दै झम्टियो ॥ २१ ॥ अनि भगवान् रामले रावणसित भन्नुभयो—ए राक्षसहरूको विष्ठारूपी पापिष्ठ रावण ! तँ कुकुर जस्तै लुकेर गएर हाम्रो अनुपस्थितिमा मेरी प्राणप्रियालाई चोरेर ल्याइस्। अतः जस्तै अमोघवीर्य पापकर्मा पुरुषलाई उसका पापको फल दिन्छ, त्यस्तै नै तँ दुष्ट निर्लज्जलाई आज म तेरा निन्दित कर्मको फल दिइरहेको छु ॥२२॥ यस प्रकार रावणको तिरस्कार गर्दै भगवानले आफ्नो धनुषमा राखेको बाण छाड्नुभयो र उसले वज्र समान कठोर रावणको हृदय विदीर्ण पारिदियो। अतः पुण्यकर्महरू समाप्त भएपछि स्वर्गबाट झरेका पुण्यात्मा व्यक्ति झैं रावण दशै मुखबाट रक्त वमन गर्दै पुष्पक विमानबाट खस्यो। यस्तो देखेर

त्यहाँ भएका सबै हाहाकार गर्नलागे ॥२३॥ अनि मन्दोदरीसमेत हजारौं राक्षसीहरू लङ्काबाट बाहिर निस्केर रुँदै त्यहाँ पुगे। युद्धभूमिमा लक्ष्मणजीका बाणले दलित आफाफना बन्धु-बान्धवलाई हृदयमा टाँसेर ती आफ्नो छाती पिट्तै अतिशय दीन भएर उच्चस्वरले विलाप गर्न लागे ॥२४-२५॥ ती बोले—हरे ! सबै लोकलाई थर्काउने महाप्रभु रावण ! आज तिमी नहुँदा हामी मर्न भयौं। अब तिम्रो अभावमा शत्रुद्वारा पीडित यो लङ्कापुरी कसको शरणमा जानेछ ? ॥२६॥ हे महाभाग ! कामको वशीभूत भएर तिमीले यो कुरा बुझ्न सकेनौ कि सीताजीको तेजको प्रभाव कस्तो छ। यसैले आज तिम्रो यो दशा भयो ॥२७॥ हे कुलनन्दन ! महारानी सीताको हरण गरेर तिमीले लङ्कापुरीका हामी सबैलाई विधवा तुल्याइदियौ तिमीले आफ्नो शरीर गिद्धको आहार तथा आफ्नो आत्मालाई नरकमा जानेयोग्य तुल्यायौ' ॥२८॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! अनि कोसलराज श्रीरामचन्द्रको अनुमति पाएर विभीषणले आफ्ना सबै कुटुम्बहरूको पितृयज्ञको विधानले, शास्त्रले जे भनेको छ, त्यो सबै और्ध्वदैहिक कर्म सम्पन्न गरे ॥ २९ ॥ त्यसपछि भगवान् रामचन्द्रले अशोकवनको आश्रममा

स्वान्स्वान्बन्धुन्परिष्वज्य लक्ष्मणेषुभिरर्दितान् ॥ रुरुदुः सुस्वरं दीना घ्नन्त्य आत्मानमात्मना ॥ २५ ॥ हा हताः स्म वयं नाथ लोकरावण रावण ॥ कं यायाच्छरणं लङ्का त्वद्विहीना परार्दिता ॥ २६ ॥ नैवं वेद महाभाग भवान्कामवशं गतः ॥ तेजोऽनुभाव सीताया येन नीतो दशामिमाम् ॥२७॥ कृतैषा विधवा लङ्का वयं च कुलनन्दन ॥ देहःकृतोऽन्नं गृध्राणामात्मा नरकहेतवे ॥ २८ ॥ श्रीशुक उवाच ॥ स्वानां विभीषणश्चक्रे कोसलेन्द्रानुमोदितः ॥ पितृमेधाविधानेन यदुक्तं साम्परायिकम् ॥२९॥ ततो ददर्श भगवानशोकवनिकाश्रमे ॥ क्षामां स्वविरहव्याधिं शिंशपामूलमास्थिताम् ॥३०॥ रामः प्रियतमां भार्यां दीनां वीक्ष्यान्वकम्पत ॥ आत्मसंदर्शनाह्लादविकसन्मुखपङ्कजाम् ॥ ३१ ॥ आरोप्यारुरुहे यानं भ्रातृभ्यां हनुमद्युतः । विभीषणाय भगवान्दत्त्वा रक्षोगणेशताम् ॥ ३२ ॥ लङ्कामायुश्च कल्पान्तं ययौ चीर्णव्रतः पुरीम् ॥ अवकीर्यमाणः कुसुमैर्लोकपालार्पितैः पथि ॥ ३३ ॥ उपगीयमानचरितः शतधृत्यादिभिर्मुदा ॥ गोमूत्रयावकं श्रुत्वा भ्रातरं वल्कलाम्बरम् ॥३४॥ महाकारुणिकोऽतप्यज्जटिलं स्थण्डिलेशयम् ॥ भरतः प्राप्तमाकर्ण्य पौरामात्यपुरोहितैः ॥ ३५ ॥ पादुके शिरसि न्यस्य रामं प्रत्युद्यतोऽग्रजम् ॥ नन्दिग्रामात्स्वशिबिराद्गीतवादित्रनिःस्वनैः ॥ ३६ ॥

सीँटा शिंशपा वृक्षको तल बसेकी आफ्नो विरहको व्याधिले अतिशय दुर्बल सीतालाई देख्नुभयो ॥३०॥ अनि आफ्नो दर्शनजनित आह्लादले प्रसन्न मुखारविन्द अत्यन्त दीन प्राणप्रिया सीतालाई देखेर रामचन्द्रले उनीमाथि अनुकम्पा गर्नुभयो ॥३१॥ विभीषणलाई राक्षसहरूको आधिपत्य, लङ्कापुरी र एककल्पको आयु दिएर पहिले सीताजीलाई विमानमा चढाए अनि भाइहरू, लक्ष्मण र सुग्रीव एवं हनुमानको साथै स्वयं पनि त्यसमा बस्नुभयो। चौधवर्ष वनमा बस्ने नियम पूरा गरेर मार्गमा लोकपालहरूले गरेको पुष्पवर्षाले ढाकिँदै रामले आफ्नो पुरीमा प्रस्थान गरे ॥३२-३३॥ हे राजन् ! ब्रह्मादि लोकेश्वरराज पनि अति आनन्दित भएर जसको गुण गाउँछन्, ती महाकारुणिक रघुनाथजीले यो सुनेर—मेरा भाई भरतजी म वनवास गएको दिनदेखि भूमिको वेदीमा सुतेर जटा एवं वल्कल वस्त्र धारण गरेर गोमूत्रमा पकाएको जौंको भ्याचल खाएर बस्तछन्, अनि राम साह्रै दुःखी भए। यता आफ्ना दाजू रामको आगमन सुखासाथ भरत पुरवासी र पुरोहितादिलाई लिएर भगवान्को पादुका सिरमा राखेर उनको स्वागत गर्न हिंडे। ती आफ्नो निवासस्थान नन्दिग्रामबाट वेदध्वनिका गाथा

बारम्बार स्तुतिपाठ गर्दै वेदपाठी ब्राह्मणहरूका साथै आनन्दपूर्वक गान-बजान गर्दै सुनहला झुल्ला भएका ध्वजा-पताका र चित्र-विचित्र फूल मालाहरूले सुशोभित सामग्रीले सज्जित-रास्रा घोडाहरूले युक्त रथ, कनक-कवचधारी योद्धा, वाराङ्गनाहरूको समूह, पैदल सेवक तथा महाराजाहरूको योग्य सबै साना-ठूला सामग्री लिएर प्रेमले गद्गद् हृदय एवं आँखामा आँसु भरेर भरत भगवान्का चरणमा लम्पसार परे । अनि भगवान्को सामुन्ने उनको पादुका राखेर हात जोरी आँखका धारा बगाउँदै उठेर उभिए । भगवान्ले तिनलाई हृदयमा टाँसेर धेरै बेरसम्म आफ्नू नेत्र-जलले स्नान गराउनुभयो ॥३९-४०॥ अनि सीता र लक्ष्मणका साथै भगवान् रामले प्रजावर्गसित नमस्कृत हुँदै ब्राह्मणहरू तथा अन्य पूजनीय जनहरूलाई स्वयं प्रणाम गरे ॥४१॥ भगवान् अयोध्या पुगेपछि आफ्ना स्वामी धेरै दिनपछि फर्कनुभएको देखेर सबै उत्तरकोसल देशका निवासी आफ्ना उत्तरीय वस्त्र अर्थात् ओढ्ने हल्लाउँदै र फूल छर्दै अपार आनन्दका विह्वल भएर नाच्नलागे ॥४२॥ अनि भरतजीले भगवान्का पादुका (खराउ) उचाले, विभीषण र सुग्रीवले उत्तम चँमर र व्यजन ( पंखा ) लिएर । हनुमानजीले

ब्रह्मघोषेण च मुहुः पठद्भिर्ब्रह्मवादिभिः ॥ स्वर्णकक्षपताकाभिर्हैमैश्चित्रध्वजै रथैः ॥ ३७ ॥ सदश्वै रुक्मसन्नाहैर्भटैः पुरटवर्मभिः ॥ श्रेणीभिर्वार-मुख्याभिर्भृत्यैश्चैव पदानुगैः ॥ ३८ ॥ पारमेष्ठ्यान्युपादाय पण्यान्युच्चावचानि च ॥ पादयोर्न्यपतत्प्रेम्णा प्रक्लिन्नहृदयेक्षणः ॥ ३९ ॥ पादुके न्यस्य पुरतः प्राञ्जलिर्बाष्पलोचनः ॥ तमाश्लिष्य चिरं दोर्भ्यां स्नापयन्नेत्रजैर्जलैः ॥ ४० ॥ रामो लक्ष्मणसीताभ्यां विप्रेभ्यो येऽर्हसत्तमाः ॥ तेभ्यः स्वयं नमश्चक्रे प्रजाभिश्च नमस्कृतः ॥ ४१ ॥ धुन्वन्त उत्तरासङ्गान्पतिं वीक्ष्य चिरागतम् ॥ उत्तराः कोसला माल्यैः किरन्तो ननृतुर्मुदा ॥ ४२ ॥ पादुके भरतोऽगृह्णाच्चामरव्यजनोत्तमे ॥ विभीषणः ससुग्रीवः श्वेतच्छत्रं मरुत्सुतः ॥ ४३ ॥ धनुर्निषङ्गाञ्छत्रुघ्नः सीता तीर्थकमण्डलुम् ॥ अबिभ्रदङ्गदः खड्गं हैमं चर्मर्क्षराण्नृप ॥ ४४ ॥ पुष्पकस्थोऽन्वितः स्त्रीभिः स्तूयमानश्च वन्दिभिः ॥ विरेजे भगवान्राजन्ग्रहैश्चन्द्र इवोदितः ॥ ४५ ॥ भ्रातुभिर्वन्दितः सोऽपि सोत्सवां प्राविशत्पुरीम् ॥ प्रविश्य राजभवनं गुरुपत्नीः स्वमातरम् ॥ ४६ ॥ गुरून्वयस्यावरजान्पूजितः प्रत्यपूजयत् ॥ वैदेही लक्ष्मणश्चैव यथावत्समुपेयतुः ॥ ४७ ॥ पुत्रान्स्वमातरस्तास्तु प्राणाँस्तन्व इवोत्थिताः ॥ आरोप्याङ्केऽभिषिञ्चन्त्यो बाष्पौघैर्विजहुः शुचः ॥ ४८ ॥ जटा निर्मुच्य विधिवत्कुलवृद्धैः समं गुरुः ॥ अभ्यषिञ्चद्यथैवेन्द्रं चतुःसिन्धुजलादिभिः ॥ ४९ ॥ एवं कृतशिरःस्नानः सुवासाः स्रग्व्यलं-

श्वेत छत्र उठाए ॥४३॥ हे नृप ! शत्रुघ्नजीले धनुष र ठोक्रो समाते, सीताजीले तीर्थहरूका जलले भरिएको कमण्डलु लिइन् र वालितनय अङ्गदले सुवर्णजडित खड्ग र जाम्बवानले ढाल लिए ॥४४॥ हे राजन् ! पुष्पक विमानमा नारीहरूका माझमा बसेका तथा बन्दीजनले स्तूयमान हुँदै भगवान् राम नक्षत्र-मण्डलको माझमा उदाएका चन्द्रमा झैं सुशोभित भए । यसरी आफ्ना भाइहरूद्वारा सम्मानित भएर राम कृपापूर्वक अयोध्यापुरीमा प्रविष्ट हुनुभयो र राजभवनमा पुगेर आफ्नी माताहरू–पिता दशरथजीका अन्य पत्नीहरू, गुरुपत्नी, समवयस्कहरू र आफूभन्दा सानाको यथोचित स्वागत गरे र उनीहरूले पनि प्रभुको उचित सम्मान गरे । यसै प्रकार महारानी जानकीजी र लक्ष्मणजी पनि सबैसित यथोचित व्यवहार गर्दै उनको साथ-साथै गए ॥४५-४७॥ जस्तै गएको प्राण फर्कन्दा शरीर सजीव हुन्छ, त्यस्तै गरी कौशल्या आदि आमाहरू आफ्ना छोरालाई काखमा लिई उनलाई

नेत्र-जलले स्नान गराएर आफ्नो शोक धपाउन लागे ॥४८॥ त्यसपछि गुरु वसिष्ठले अन्य कुलवृद्धहरू साथ विधिपूर्वक भगवान्‌का जटा खोराउन लगाई समुद्रको जलले उनको अभिषेक गरे, जस्तै बृहस्पतिले इन्द्रको गरेका थिए ॥४९॥ यसरी स्नान गरेर राम्रा लुगा र मालाहरूले विभूषित भगवान् राम सुन्दर वस्त्रालङ्कारले सुसज्जित भएर भार्या तथा भाइहरूका साथ शोभायमान भए ॥५०॥ त्यसपछि भाई भरतले प्रणामपूर्वक प्रार्थना गर्दा दुनाले भगवान् रामचन्द्रले अतिशय प्रसन्न भएर राजसिंहासन स्वीकार गरेर आफ्नो धर्ममा तत्पर एवं वर्णाश्रम-धर्मयुक्त प्रजाहरूको पिताको समान पालन गर्नलागे। ती रामचन्द्रजीका प्रजा पनि उनलाई पिताको सदृश मान्दथे ॥५१॥ हे राजन् ! सबै प्राणीहरूका सुखदायक तथा परम धर्मज्ञ श्रीरामचन्द्र राजा भएपछि त्रेतायुग नै भए पनि त्यस समय सत्ययुगको समान भएको थियो ॥५२॥ हे भरत-श्रेष्ठ ! वन, नदीहरू, पर्वत, देश, द्वीप तथा समुद्र यी सबै प्रजाजनहरूलाई अभिलषित वस्तु दिनलाग ॥ ५३ ॥ जब भगवान् राम राज्य-शासन गर्दथे तब आधि, व्याधि, जरा, ग्लानि, दुःख, शोक, भय तथा थकाईको अभाव भएको थियो

कृतः ॥ स्वलंकृतैः सुवासोभिर्भ्रातृभिर्भार्यया बभौ ॥५०॥ अग्रहीदासनं भ्रात्रा प्रणिपत्य प्रसादितः ॥ प्रजाः स्वधर्मनिरता वर्णाश्रमगुणान्विताः ॥ जुगोप पितृवद्रामो मेनिरे पितरं च तम् ॥५१॥ त्रेतायां वर्तमानायां कालः कृतसमोऽभवत् ॥ रामे राजनि धर्मज्ञे सर्वभूतसुखावहे ॥५२॥ वनानि नद्यो गिरयो वर्षाणि द्वीपसिन्धवः ॥ सर्वे कामदुघा आसन्प्रजानां भरतर्षभ ॥५३॥ नाधिव्याधिजराग्लानिदुःखशोकभयक्लमाः ॥ मृत्युश्चानिच्छतां नासीद्रामे राजन्यधोक्षजे ॥ ५४ ॥ एकपत्नीव्रतधरो राजर्षिचरितः शुचि ॥ स्वधर्मं गृहमेधीयं शिक्षयन्स्वयमाचरन् ॥५५॥ प्रेम्णाऽनुवृत्त्या शीलेन प्रश्रयावनता सती ॥ धिया ह्रिया च भावज्ञा भर्तुः सीताऽहरन्मनः ॥५६॥ इति श्रीमद्भागवतेमहापुराणे नवमस्कन्धे रामचरिते दशमोऽध्यायः ॥१०॥

श्रीशुक उवाच ॥ भगवानात्मनात्मानं राम उत्तमकल्पकैः ॥ सर्वदेवमयं देवमीज आचार्यवान्मखैः ॥ १ ॥ होत्रेऽददाद्दिशं प्राचीं ब्रह्मणे दक्षिणां प्रभुः ॥ अध्वर्यवे प्रतीचीं च उदीचीं सामगाय सः ॥ २ ॥ आचार्याय ददौ शेषां यावती भूस्तदन्तरा ॥ मन्यमान इदं कृत्स्नं ब्राह्मणोऽर्हति निस्पृहः ॥ ३ ॥ इत्ययं तदलङ्कारवासोभ्यामवशेषितः ॥ तथा राज्ञ्यपि वैदेही सौमङ्गल्यावशेषिता ॥ ४ ॥ ते तु ब्रह्मण्यदेवस्य वात्सल्यं वीक्ष्य संस्तु-

र उमेर नपुगी कसैको पनि मृत्यु हुँदैनथ्यो ॥५४॥ ती श्रीरामचन्द्र भगवान् एकपत्नीव्रती, राजर्षिहरू जस्तै आचरणशील तथा राग-द्वेषादिले रहित थिए। गृहस्थहरूलाई धर्म-शिक्षा दिनका लागि स्वयं पनि धर्मको आचरण गर्न गर्दथे ॥५५॥ आफ्ना स्वामीको मनोभाव राम्ररी जान्ने भएकी विनयावनत रहीं सीताजीले पनि प्रेम, सेवा, साधुस्वभाव, बुद्धि तथा लज्जा आदि गुणहरू द्वारा आफ्नू पतिको मन जितिसकेकी थिइन् ॥५६॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥१०॥

( श्रीरामचन्द्रका अन्य चरित्र ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान् रामचन्द्रले वशिष्ठजीलाई आचार्य तुल्याएर उत्तम सामग्रीहरूले युक्त यज्ञद्वारा सर्वदेवमय, प्रकाशस्वरूप आफ्नो नै यजन गरे। त्यस यज्ञमा उनले होतालाई पूर्व, ब्रह्मालाई दक्षिण, अध्वर्युलाई पश्चिम र उद्गातालाई उत्तर दिशाको प्रदेश दान दिए। आचार्यलाई तिनका माझको शेष सम्पूर्ण भूमि दिए, किनकि उनको यस्तो विश्वास थियो—निस्पृह ब्राह्मण नै सारा भूमण्डल पाउने अधिकारी हुन् ॥१-३॥ यस प्रकार यज्ञमा सर्वस्व दान दिएर उनले आफ्नो शरीर पहिरे-

वस्त्र र अलङ्कार मात्र आकुसित राखे । यसै प्रकार महारानी सीताजीसित पनि केवल माङ्गलिक वस्त्राभूषण नै शेष रहन गए । उनले पनि आफ्नो सर्वस्व दान गरेर दिइन् ॥४॥ ती ब्रह्मण्यदेव भगवान् रामचन्द्रको ब्राह्मणहरू प्रति यस्तो प्रशंसनीय वात्सल्यभाव देखेर ती आचार्यादि सान्है प्रसन्न भए र प्रेमार्द्रहृदयले उनलाई त्यो सबै फर्काइदिएर यस प्रकार भन्नलागे– ॥५॥ 'हे सर्वलोकेश्वर भगवन् ! हजुर जब हाम्रा अन्तःकरणमा विराजमान भएर आफ्नो कान्तिले हाम्रो अज्ञानान्धकार नष्ट गरिरहनु भएको छ, तब हजुरले हामीलाई के दिनु भएन ? ॥६॥ ब्राह्मणलाई देवता मान्ने, अकुण्ठबुद्धि, पुण्यश्लोक शिरोमणि र पर-पीडा नाश गरिदिने मुनीश्वरका निम्ति आफ्ना चरण-कमल अर्पण गरिदिने भगवान् रामलाई हामी प्रणाम

तम् ॥ प्रीताः क्लिन्नधियस्तस्मै प्रत्यर्प्येदं बभाषिरे ॥ ५ ॥ अप्रत्तं नस्त्वया किं नु भगवन्भुवनेश्वर ॥ यन्नोऽन्तर्हृदयं विश्यनमो हंसि स्वरोचिषा ॥ ६ ॥ नमो ब्रह्मण्यदेवाय रामायाकुण्ठमेधसे ॥ उत्तमश्लोकधुर्याय न्यस्तदण्डार्पिताङ्घ्रये ॥ ७ ॥ कदाचिल्लोकजिज्ञासुर्गूढो रात्र्यामलक्षितः ॥ चरन्वाचोऽशृणोद्रामो भार्यामुद्दिश्य कस्यचित् ॥ ८ ॥ नाहं बिभर्मि त्वां दुष्टामसतीं परवेश्मगाम् ॥ स्त्रीलोभी बिभृयात्सीतां रामो नाहं भजे पुनः ॥ ९ ॥ इति लोकाद्बहुमुखाद्दुराराध्यादसंविदः । पत्या भीतेन सा त्यक्ता प्राप्ता प्राचेतसाश्रमम् ॥ १० ॥ अन्तर्वत्न्यागते काले यमौ सा सुषुवे सुतौ ॥ कुशो लव इति ख्यातौ तयोश्चक्रे क्रिया मुनिः ॥११॥ अङ्गदश्चित्रकेतुश्च लक्ष्मणस्यात्मजौ स्मृतौ ॥ तक्षः पुष्कल इत्यास्तां भरतस्य महीपते

गर्दछौं' ॥७॥ हे राजन् ! एक समयको कुरा हो–'साधारण मानिस मेरो विषयमा के भन्दछन्' यो जान्नको निम्ति अज्ञातरूपमा रात्रिको बेला डुलिरहेका भगवान् रामले यौटा पुरुष (धोबी)ले आफ्नी भार्यासित भनेको सुने–॥८॥ ए दुष्टा ! अर्काको घरमा बस्न जाने तँलाई अब म आफ्नूघरमा राख्न तयार छैन स्त्रीलोभी राम नै सीतालाई स्वीकार गर्न सक्तछ, म तँलाई अब केही गर पनि स्वीकार गर्न तयार छैन ॥९॥ यस प्रकार अनेक थरिका कुरा गर्न भएका, हठी र मूर्ख व्यक्तिहरूसित भयभीत भएर आफ्ना पतिदेवले त्यागिदिएपछि सीताजी महर्षि वाल्मीकिको आश्रममा गइन् ॥१०॥ ती गर्भवती थिइन् आश्रममा गएपछि उनले कुश र लव नामले दुइ यमज ( जम्ल्याहा ) पुत्र उत्पन्न गरिन् । तिनको जातकर्मादि

---

कथान्तर ( जोडिदिने )—एक दिन यौटा भलादमी कुनै महात्मासित गृहस्थ-विरक्तहरूको चर्चा गरिरहेका थिए । महात्माले भने–महाशय ! तपाईंलाई गृहस्थ विरक्त हुन्छन् भन्ने के थाहा छ ! ती जे जति धन कमाउँछन्, स्त्रीलाई सुम्पिदिन्छन् र पत्नी ले नै सबै खर्च गर्दछिन् । यस प्रकार आफ्नो काम चलाउँछन् र भन्दै हिंड्छन्–'म त रुपियाँ हातले पनि छुन्न, फेरि मलाई धन सं तिको के काम ! यौटा त्यस्तै खालका गृहस्थ विरक्त थिए । एक दिन कुनै ब्राह्मण तिनीकहाँ केही माग्न आए । विरक्तले भने–तिमी मलाई किन दिक्क पारिरहेका छौ ! म त रुपियाँ पैसा छुँदा पनि छुन्न ।' परन्तु त्यति हुँदा पनि ब्राह्मणले विरक्तलाई छाडेनन् । अनि विरक्तले ती ब्राह्मण सान्है दीन-हीन रहेछन् । तिनलाई एक रुपियाँ दिने पर्ने त्यस्तो विचार गरेर ब्राह्मणलाई भने–'तिमी भोलि आऊ । तिम्रो भाग्यमा जे जति होला, पाउने छौ ।' ब्राह्मण फर्केर गएपछि गृहस्थ विरक्तले घरमा गएर पत्नीसित भने—'ती ब्राह्मण सान्है दुःखी रहेछन्, तिनलाई एक रुपियाँ दिनुपर्दछ ।' पत्नीलाई ओग्नेमाथि निकै रिस उठ्यो र कर्किन्दै भन्नलागी—'रुपियाँ तपाईंका आँखामा बिझाइरहेका छन् ! टुलावानी बन्न लागिरहेछौ ! म एक रुपियाँ त कदापि दिन्न । यदि मान्दैनौ भने एक आना लैजाऊ, बाहुनलाई दिनु ।' विरक्त के गर्न सक्थे र नबोलिकन एकन्नी लिएर हिंडे । भोलिपल्ट जब ब्राह्मण आए तब उनलाई एक आना मात्र प्राप्त भने–'स्वयैले त भन्दछु–गृहस्थ विरक्त कहिल्यै धर्मात्मा हुँदैनन्, बरू घोइदिने हुन्छन् ।' ती भूरिसंख्यक साधु मतका पन्थ भेद अनन्त छन् । अवधूत, यति, नागा, उदासी, सन्त र महन्त छन् । हरे ! ती यस्तष भन्दा बढी आज रागी देखिन्छन् । बरू अल्पज्ञ नै उच्चा विरागी र त्यागी देखिन्छन् ।

वाल्मीकिले स्वयं गरे ॥ ११ ॥ हे राजन् ! लक्ष्मणजीका अङ्गद चित्रकेतु तथा तक्ष र पुष्कल भरतजीका छोरा कहिन्छन् ॥१२॥ सुबाहु र श्रुतसेन यी दुवै पुत्र शत्रुघ्नका थिए । पछि दिग्विजयको प्रसङ्गमा भरतले करोडौं गन्धर्वलाई मारे ॥१३॥ अनि तिनको सबै धन ल्याएर महाराज रामलाई अर्पण गरिदिए । उता शत्रुघ्नले मधुको छोरा लवण राक्षसलाई मारेर मधुवनमा मथुरापुरी बसाले ॥ १४ ॥ यता पतिद्वारा निर्वासित सीताजी मुनिवर वाल्मीकिलाई आफ्ना दुवै छोरा सुम्पेर श्रीरामका चरणको ध्यान गर्दै पृथ्वीमा विलीन भइन् ॥ १५॥ त्यो समचार सुनेर श्रीरामचन्द्रले आफ्नो बुद्धिबल द्वारा शोकावेग रोक्न खोजे, तर परम समर्थ भएर पनि सीताका भिन्न-भिन्न गुणहरूको सम्झना भइदिनाले गर्दा उनी त्यसलाई रोक्नमा समर्थ भएनन् ॥ १६ ॥ स्त्री-पुरुषको सम्बन्ध सर्वत्र यसै गरी त्रास दिन्छ । ठूला-ठूला सामर्थ्यवान् पनि यसले विचलित हुन्छन् भने साधारण गृहासक्त विषयी पुरुषका विषयमा के भन्ने ! ॥ १७ ॥ हे राजन् ! त्यसपछि श्रीरामले ब्रह्मचर्य-व्रत धारण गरेर तेह्र हजार वर्षसम्म अखण्डित रूपले अग्निहोत्र गरे ॥१८॥ त्यसपछि आफ्नू स्मरण गर्नेहरूका र

॥ १२ ॥ सुबाहुः श्रुतसेनश्च शत्रुघ्नस्य बभूवतुः ॥ गन्धर्वान्कोटिशो जघ्ने भरतो विजये दिशाम् ॥ १३ ॥ तदीयं धनमानीय सर्वं राज्ञे न्यवेदयत् ॥ शत्रुघ्नश्च मधोः पुत्रं लवणं नाम राक्षसम् ॥ हत्वा मधुवने चक्रे मथुरां नाम वै पुरीम् ॥ १४ ॥ मुनौ निक्षिप्य तनयौ सीता भर्त्रा विवासिता ॥ ध्यायन्ती रामचरणौ विवरं प्रविवेश ह ॥ १५ ॥ तच्छ्रुत्वा भगवान् रामो रुन्धन्नपि धिया शुचः ॥ स्मरंस्तस्या गुणाँस्ताँस्तान्नाशक्नोद्रोद्धुमीश्वरः ॥ १६ ॥ स्त्रीपुंप्रसङ्ग एतादृक्सर्वत्र त्रासमावहः ॥ अपीश्वराणां किमुत ग्राम्यस्य गृहचेतसः ॥ १७ ॥ तत ऊर्ध्वं ब्रह्मचर्यं धारयन्नजुहोत्प्रभुः ॥ त्रयोदशाब्दसाहस्रमग्निहोत्रमखण्डितम् ॥ १८ ॥ स्मरतां हृदि विन्यस्य विद्धं दण्डककण्टकैः ॥ स्वपादपल्लवं राम आत्मज्योतिरगात्ततः ॥ १९ ॥ नेदं यशो रघुपतेः सुरयाच्ञयात्तलीलातनोरधिकसाम्यविमुक्तधाम्नः ॥ रक्षोवधो जलधिबन्धनमस्त्रपूगैः किं तस्य शत्रुहनने कपयः सहायाः ॥२०॥ यस्यामलं नृपसदःसु यशोऽधुनापि गायन्त्यघघ्नमृषयो दिगिभेन्द्रपट्टम् ॥ तं नाकपालवसुपालकिरीटजुष्टपादाम्बुजं रघुपतिं शरणं प्रपद्ये ॥ २१ ॥ स यैः स्पृष्टोऽभिदृष्टो वा सम्विष्टोऽनुगतोऽपि वा ॥ कोशलास्ते ययुः स्थानं यत्र गच्छन्ति योगिनः ॥२२॥ पुरुषो रामचरितं श्रवणैरुपधारयन् ॥ आनृशंस्यपरो राजन्कर्मबन्धैर्विमुच्यते ॥ २३ ॥ राजोवाच ॥ कथं स भगवान्रामो भ्रातॄन्वा स्वयमात्मनः ॥ तस्मिन्वा तेऽन्व-

भक्तजनको हृदयमा दण्डकारण्यका काँडाले छेडेका आफ्ना चरण-कमल स्थापित गरेर भगवान् राम आफ्नो धाममा पाल्नुभयो ॥१९॥ हे राजन् ! सुन भगवानभन्दा ठूलो वा उसको समवक्ष प्रतापशाली कोही छैन, देवताहरूको प्रार्थनाले लीला-मानवरूपधारी ती रघुनाथजीले शस्त्रसमूहद्वारा राक्षसलाई मार्नु र समुद्रमा सेतु बाँधिदिनु कुनै ठूलो सुयशको काम थिएन । ती लीलाधारीलाई आफ्ना शत्रुहरूको संहार गर्नका निम्ति वानरहरूको सहयताको के आवश्यकता थियो ? तात्पर्य के भने यो सबै उनका लीला थिए ॥२०॥ सबै दिशा-विदिशामा समस्त दिग्गजलाई आच्छादित पार्ने वस्त्र झैं उसको पापापहारी निर्मल सुयश यस बेला पनि मार्कण्डेयादि मुनि, युधिष्ठिरादि भूपालका सभाहरूमा गाउने गर्दछन् र जसका चरण-कमल देवेन्द्र र नरेन्द्रका मुकुटहरूले सेव्यमान छन्, म ती रघुनाथजीलाई प्रणाम गर्दछु ॥२१॥ जस-जसले श्रीरामको स्पर्श, दर्शन, सहवास तथा अनुगमन गरेका थिए, ती र सबै कोशलवासी

त्यस स्थानमा गएर प्राप्त भए, जहाँ अन्तमा योगी-महात्मा पुग्दछन् ॥२२॥ हे राजन् ! जो प्राणी यो रामचरित्रलाई श्रवणपुटले श्रवण गर्दछन्, ती कोमलता, सरलता, आदि गुणहरूले युक्त भएर सबै कर्मबन्धनबाट मुक्त भएर जान्छन् ॥२३॥ यति कथा सुनिसकेर राजा परीक्षितले सोधे–ती भगवान् रामचन्द्र आफ्नै अंशस्वरूप भाइहरूसित स्वयं के कस्तो व्यवहार गर्दथे र रामको प्रति तिनका भाई, प्रजाजन एवं पुरवासी आदि सबैको व्यवहार कस्तो हुन्थ्यो ? ॥२४॥ श्री शुकदेव भन्नुहुन्छ–हे राजन् ! त्रिभुवनपति भगवान् रामले राजसिंहासनमा बसेपछि आफ्ना भाइहरूलाई दिग्विजय गर्ने आज्ञा दिए र स्वयं पुरवासीहरूलाई दर्शन-भेट दिँदै आफ्ना अनुचरका साथै पुरीको हेर-विचार गर्नलागे ॥२५॥ रामराज्यमा अयोध्याका सबै मार्ग सुगन्धित जल र मत्ता हात्तीहरूका मदकणले सिँचि। रहन्थे र त्यो पुरी आफ्ना स्वामीलाई हेरी-हेरी मतवाली झैं भइरहेकी थिई ॥२६॥ पुरीका महल, नगर-द्वार, सभा, चैत्य तथा देवालयहरूमा सुवर्ण-कलश राखिएका थिए र त्यो चारैतिर ध्वजा-पताकाले सज्जित रहन्थ्यो ॥२७॥ फलका गुच्छा समेत पूगीफल, कदली-वृक्ष, राम्रा वस्त्रले त्यो अलंकृत

वर्तन्त प्रजाः पौराश्च ईश्वरे ॥ २४ ॥ श्रीशुक उवाच ॥ अथादिशद्दिग्विजये भ्रातॄँस्त्रिभुवनेश्वरः ॥ आत्मानं दर्शयन्स्वानां पुरीमैक्षत सानुगः ॥२५॥ आसिक्तमार्गां गन्धोदैः करिणां मदशीकरैः ॥ स्वामिनं प्राप्तमालोक्य मत्तां वा सुतरामिह ॥ २६ ॥ प्रासादगोपुरसभाचैत्यदेवगृहादिषु ॥ विन्यस्तहेमकलशैः पताकाभिश्च मण्डिताम् ॥ २७ ॥ पूगैः सवृन्तै रम्भाभिः पट्टिकाभिः सुवाससाम् ॥ आदर्शैरंशुकैः स्रग्भिः कृतकौतुकतोरणाम् ॥२८॥ तमुपेयुस्तत्र तत्र पौरा अर्हणपाणयः ॥ आशिषो युयुजुर्देव पाहीमां प्राक् त्वयोद्धृताम् ॥ २९ ॥ ततः प्रजा वीक्ष्य पतिं चिरागतं दिदृक्षयोत्सृष्टगृहाः स्त्रियो नराः ॥ आरुह्य हर्म्याण्यरविन्दलोचनं अतृप्तनेत्राः कुसुमैरवाकिरन् ॥३०॥ अथ प्रविष्टः स्वगृहं जुष्टं स्वैः पूर्वराजभिः ॥ अनन्ताखिलकोशाढ्यमनर्घ्योरुपरिच्छदम् ॥३१॥ विद्रुमोदुम्बरद्वारैर्वैदूर्यस्तम्भपंक्तिभिः ॥ स्थलैर्मारकतैः स्वच्छैर्भ्राजत्स्फटिकभित्तिभिः ॥३२॥ चित्रस्रग्भिः पट्टिकाभिर्वासोमणिगणांशुकैः ॥ मुक्ताफलैश्चिदुल्लासैः कान्तकामोपपत्तिभिः ॥ ३३ ॥ धूपदीपैः सुरभिभिर्मण्डितं पुष्पमण्डनैः ॥ स्त्रीपुम्भिः सुरसंकाशैर्जुष्टं भूषणभूषणैः ॥३४॥ तस्मिन्स भगवान्रामः स्निग्धया प्रिययेष्टया ॥ रेमे स्वारामधीराणामृषभः सीतया किल ॥३५॥ बुभुजे च यथाकालं कामान्धर्ममपीडयन् ॥

र दर्पण, वस्त्र तथा मालाहरूको उत्सवमयी झालरहरूले सुसज्जित रहिरहन्थ्यो ॥२८॥ एक समय जहाँ तहाँबाट अगणित पुरवासी धेरै भेट लिएर भगवान्को नजीक आए र उनीहरूले प्रार्थना गरे–'हे देव ! पूर्वकालमा अर्थात् वाराहरूपले स्वयं द्वारा उद्धार गरिएकी यस पृथ्वीको हजुर पालन गर्नुहवस् ।' हे राजन् ! त्यसबेला धेरै दिनपछि आफ्ना स्वामीलाई आएका भन्ने जानेर प्रभुलाई हेनको निम्ति नगरका सबैजसो नर-नारी आफ्ना-आफ्ना घर-द्वार छाडेर अटालीहरूमा चढ्दै कमल-लोचन रामलाई अतृप्त नेत्रले हेर्दै प्रभुमाथि पुष्प-वर्षा गर्नलागे । अनि भगवान् राम आफ्ना पूर्वजद्वारा सेवित, सबै खजानाले पूर्ण र बहुमूल्य सामग्रीले युक्त महलमा प्रविष्ट भए ॥२९-३१॥ महलका द्वार विद्रुम रत्नले बनेका थिए । त्यसका स्तम्भ वैदूर्य मणिका थिए । त्यसका पटाङ्गिनी मरकत मणिका थिए ॥३२॥ रङ्गी-चङ्गी माला, पताका, वस्त्र, भोग-सामग्री, सुगन्धित धूप र पुष्पका आभूषणहरूले सुसज्जित पारिएका थियो र त्यो महल सबै आभूषणलाई पनि विभूषित पार्ने देवता तुल्य स्त्री-पुरुषले सुसेवित थियो ॥३३॥३४॥ हे राजन् ! ती महलमा आत्माराम तथा जितेन्द्रिय पुरुषमा श्रेष्ठ

भगवान् रामचन्द्र आफ्नी प्रियतमा सीताजीसित विहार गर्दथे ॥३५॥ सबै जना जसका पदपल्लवको ध्यान गर्दछन्, ती भगवान् रामचन्द्रले धर्मको अतिक्रमण नगरेर अनेक वर्षसम्म सबै प्रकारका भोगहरूको उपभोग गरे । सबै प्रजानन उनको गुण-गान गर्दथे ॥३६॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायामेकादशोऽध्यायः ॥११॥

( इक्ष्वाकुका शेष राजाहरूको वर्णन ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! कुशका छोरा अतिथि भए । अतिथिका निषध, निषधका नभ, नभका पुण्डरीक तथा पुण्डरीकका क्षेमधन्वा नामका छोरा उत्पन्न भए ॥१॥ क्षेमधन्वाका देवानीक, देवानीकका छोरा पारियात्र, पारियात्रका छोरा बलस्थल तथा उनैबाट सूर्यको अंशले उत्पन्न पुत्र वज्रनाभ जायमान भए ॥२॥ वज्रनाभका खगण, खगणका विधृत र विधृतबाट हिरण्यनाभको जन्म भयो, जुन जैमिनिका शिष्य तथा योगाचार्य पनि थिए । कोसलदेशवासी याज्ञवल्क्य ऋषिले तिनका शिष्य बनेर हृदयका संशयरूपिणी ग्रन्थि छेदन गर्ने र महान् सिद्धिप्रद आत्मयोगको शिक्षा पाएका थिए ॥३॥४॥ हिरण्यनाभका छोरा पुष्य, पुष्यका ध्रुवसन्धि, ध्रुव-

वर्षपूगान्बहूनृणामभिध्यातांघ्रिपल्लवः ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे श्रीरामोपाख्याने एकादशोऽध्यायः ॥ ११ ॥

श्रीशुक उवाच ॥ कुशस्य चातिथिस्तस्मान्निषधस्तत्सुतो नभः ॥ पुण्डरीकोऽथ तत्पुत्रः क्षेमधन्वाऽभवत्ततः ॥ १ ॥ देवानीकस्ततोऽनीहः पारियात्रोऽथ तत्सुतः ॥ ततो बलस्थलस्तस्माद्वज्रनाभोऽर्कसम्भवः ॥ २ ॥ खगणस्तत्सुतस्तस्माद्विधृतिश्चाभवत्सुतः ॥ ततो हिरण्यनाभोऽभूद्योगाचार्यस्तु जैमिनेः ॥ ३ ॥ शिष्यः कौसल्य अध्यात्मं याज्ञवल्क्योऽध्यगाद्यतः ॥ योगं महोदयमृषिर्हृदयग्रन्थिभेदकम् ॥ ४ ॥ पुष्यो हिरण्यनाभस्य ध्रुवसन्धिस्ततोऽभवत् ॥ सुदर्शनोऽथाग्निवर्णः शीघ्रस्तस्य मरुः सुतः ॥ ५ ॥ योऽसावास्ते योगसिद्धः कलापग्राममाश्रितः ॥ कलेरन्ते सूर्यवंशं नष्टं भावयिता पुनः ॥ ६ ॥ तस्मात्प्रसुश्रुतस्तस्य सन्धिस्तस्याप्यमर्षणः ॥ महस्वांस्तत्सुतस्तस्माद्विश्वसाह्वोऽन्वजायत ॥ ७ ॥ ततः प्रसेनजित्तस्मात्तक्षको भविता पुनः ॥ ततो बृहद्बलो यस्तु पित्रा ते समरे हतः ॥ ८ ॥ एते हीक्ष्वाकुभूपाला अतीताः शृण्वनागतान् ॥ बृहद्बलस्य भविता पुत्रो नाम बृहद्रणः ॥९॥ उरुक्रियस्ततस्तस्य वत्सवृद्धो भविष्यति ॥ प्रतिव्योमस्ततो भानुर्दिवाको वाहिनीपतिः ॥१०॥ सहदेवस्ततो वीरो बृहदश्वोऽथ भानुमान् ॥ प्रतीकाश्वो भानुमतः सुप्रतीकोऽथ तत्सुतः ॥ ११ ॥ भविता मरुदेवोऽथ सुनक्षत्रोऽथ पुष्करः ॥ तस्यान्तरिक्षस्तत्पुत्रः

सन्धिका छोरा सुदर्शन, सुदर्शनका पुत्र अग्निवर्ण, अग्निवर्णका शीघ्र तथा शीघ्रका पुत्र मरु जायमान भए ॥ ५ ॥ जुन यस बखत योगसिद्धि प्राप्त गरेर कलापग्राममा बसिरहेछन् र कलियुगको अन्त्यमा नष्ट सूर्यवंशलाई पुनः फिंजाउने कार्य गर्नेछन् ॥ ६ ॥ मरुका प्रसुश्रुत, प्रसुश्रुतका सन्धि, सन्धिका अमर्षण, अमर्षणका महस्वान्, तिनका विश्वसाह्व नामका पुत्र जन्मिए ॥७॥ विश्वसाह्वका प्रसेनजित्, प्रसेनजित्का तक्षक र उनका बृहद्बल पुत्र जन्मे, जसको तिम्रा पिता अभिमन्युले युद्ध मा वध गरेका थिए ॥८॥ हे राजन् ! यी सबै इक्ष्वाकु-वंशका राजा पूर्वकालमा भइसकेका छन् । अगाडि हुने राजाहरूको विषयमा पनि भन्दछु सुन । पछि गएर भविष्यमा बृहद्बलको छोरा बृहद्रण हुनेछन् ॥९॥ बृहद्रणका उरुक्रिय, उरुक्रियका वत्सवृद्ध, वत्सवृद्धका प्रतिव्योम, भानु र भानुका सेनापति दिवाक नामका पुत्र हुनेछन् ॥१०॥ दिवाकका वीरवर तथा वीरवरका सहदेव, सहदेवका

बृहदश्व, उनका भानुमान्, भानुमानका प्रतीकाय र प्रतीकायका सुप्रतीक नामका पुत्र हुनन् ॥ ११ ॥ सुप्रतीकका मरुदेव उनका सुनक्षत्र, सुनक्षत्रका पुष्कर, पुष्करका अन्तरिक्ष, तिनका सुतपा र सुतपाका अमित्रजित् नामका पुत्र हुनन् ॥१२॥ अमित्रजितका बृहद्राज, उनका बर्हि, बर्हिका कृतञ्जय, कृतञ्जयका रणञ्जय र उनका सञ्जय पुत्र हुनन् ॥१३॥ सञ्जयका शाक्य, शाक्यका शुद्धोद र शुद्धोदका लाङ्गल नामका पुत्र जन्मनन् । लाङ्गलका प्रसेनजित् र उनका क्षुद्रक नामका छोरा हुनन् ॥ १४ ॥ क्षुद्रकका रणक, रणकका सुरथ र सुरथका यस वंशका अन्तिम राजा सुमित्र हुनन् । यी सबै राजा बृहद्बलका वंशधर मानिने छन् ॥ १५ ॥ यो इक्ष्वाकु राजाहरूका वंश सुमित्रपर्यन्त नै चल्नेछ किनकि ती राजापछि कलियुगमा यस वंशको अन्त्य हुनेछ ॥१६॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥

सुतपास्तदमित्रजित् ॥ १२ ॥ बृहद्राजस्तु तस्यापि बर्हिस्तस्मात्कृतञ्जयः ॥ रणञ्जयस्तस्य सुतः सञ्जयो भविता ततः ॥ १३ ॥ तस्माच्छाक्योऽथ शुद्धोदो लाङ्गलस्तत्सुतः स्मृतः ॥ ततः प्रसेनजित्तस्मात्क्षुद्रको भविता ततः ॥ १४ ॥ रणको भविता तस्मात्सुरथस्तनयस्ततः ॥ सुमित्रो नाम निष्ठान्त एते बार्हद्बलान्वयाः ॥ १५ ॥ इक्ष्वाकूणामयं वंशः सुमित्रान्तो भविष्यति ॥ यतस्तं प्राप्य राजानं संस्थां प्राप्स्यति वै कलौ ॥ १६ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे इक्ष्वाकुवंशवर्णनं नाम द्वादशोऽध्यायः ॥ १२ ॥

श्रीशुक उवाच ॥ निमिरिक्ष्वाकुतनयो वसिष्ठमवृतर्त्विजम् ॥ आरभ्य सत्रं सोऽप्याह शक्रेण प्राग्वृतोऽस्मि भोः ॥ १ ॥ निर्वर्त्यागमिष्यामि तावन्मां प्रतिपालय ॥ तूष्णीमासीद्गृहपतिः सोऽपीन्द्रस्याकरोन्मखम् ॥ २ ॥ निमिश्चलमिदं विद्वान्सत्रमारभतात्मवान् ॥ ऋत्विग्भिरपरैस्तावन्नागमद्यावता गुरुः ॥३॥ शिष्यव्यतिक्रमं वीक्ष्य निवर्त्य गुरुरागतः ॥ अशपत्पतताद्देहो निमेः पण्डितमानिनः॥४॥ निमिः प्रतिददौ शापं गुरवेऽधर्मवर्तिने ॥ तवापि

( निमि-वंशको वृत्तान्त ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! राजा इक्ष्वाकुका छोरा महाराज निमिले यज्ञ आरम्भ गरेर त्यसको निम्ति वसिष्ठलाई ऋत्विज नियत गरे । वसिष्ठले भने–'इन्द्रले मलाई पहिले नै वरण गरिसकेका छन् ॥ १ ॥ अतः जबसम्म म उनको यज्ञ सकेर फर्कन्न, तबसम्म मेरो बाटो हेरिरहनु ।' वसिष्ठको यो कुरा सुनेर यजमान राजा निमी केही पनि बोलेनन् र वसिष्ठले इन्द्रको यज्ञ आरम्भ गराइदिए ॥ २ ॥ यता केही काल प्रतीक्षा गरेर आत्मज्ञानी निमिले विचार गरे–जीवन सार्है चञ्चल छ । यसनिम्ति गुरुजी फर्केर आएनन् अनि अन्य ऋत्विजद्वारा उनले यज्ञ आरम्भ गराइदिए ॥ ३ ॥ इन्द्रको यज्ञ गराएर फर्केपछि जब गुरु वसिष्ठले शिष्यद्वारा आफ्नो आज्ञा उल्लङ्घन गरेको देखेर तत्काल श्राप दिए–'आफूलाई पण्डित मान्ने राजा निमिको देह पतनहोस्' ॥४॥ निमिले पनि अधर्ममा प्रवृत्त गुरु वसिष्ठको श्रापको साटो यो श्रापदिए–'तिमीले *लोभवश आफ्नो धर्म जानेकेनौ

* दृष्टान्त ( लोभ पापको मूल )–यौटा हजाम रूखमुनिबाट बसेर गइरहेको थियो । उसै बखत यो शब्द त्यसका कानमा परे–'तँ सुनले भरिएका सातौटा गाग्रा लिन्छस् ?' हजामले चकित भएर चारैतिर हेर्‍यो, तर कोही पनि देखिएन, तर सातौटा सुनले भरिएका गाग्राको नाम सुनेर त्यसको मनमा लोभ आयो र उसले कराएर भन्यो—हो, म सुनले भरिएका सातौटा गाग्रा लिन्छु ।' त्यतिमै अर्को शब्द त्यसका कानमा परे–'तँ आफ्नो घर जा, मैले सुनभरिएका सात गाग्रा तेरो घर पुर्‍याइदिएको छु ।' यो कुरा सत्य हो कि होइन भन्ने जान्नका निम्ति हजाम दगुर्दै घर पुग्यो र सातौटा गाग्रा राखेको देखेर दङ्ग पर्‍यो । अब त्यसले गाग्राको [illegible]

यसैनिम्ति तिम्रो देह पनि नष्ट होओस् ॥५॥ यति भनेर आत्मविद्यामा निपुण निमिले आफ्नू शरीर त्यागिदिए र हाम्रा प्रपितामह वशिष्ठले पनि आफ्नू शरीर त्यागेर उर्वशीको गर्भबाट मित्रावरुणको वीर्यद्वारा जन्म ग्रहण गरे ॥६॥ उता राजा निमिको देहलाई उनका ऋत्विज मुनिहरूले सुगन्धित वस्तुहरूमा राखिदिए र यज्ञ पूर्ण भएपछि त्यहाँ आएका देवताहरूसित भने—॥७॥ हे देवा हो ! यदि यस यज्ञले हजुरहरू प्रसन्न भए राजा निमिको यो देह सजीव भएर उठोस् ।' देवताहरूले 'तथास्तु' भनेपछि जीवित हुनासाथ निमिले भने–'मलाई देहको बन्धन प्राप्त नहोस्, किनकि सबै भगवत् परायण मुनिजन यसको वियोगले डराएर यसको संयोग कदापि खोज्दैनन् । अतः म सर्वदा भगवत् चरणारविन्दलाई

पतताद्देहो लोभाद्धर्ममजानतः ॥५॥ इत्युत्ससर्ज स्वं देहं निमिरध्यात्मकोविदः ॥ मित्रावरुणयोर्जज्ञे उर्वश्यां प्रपितामहः ॥६॥ गन्धवस्तुषु तद्देहं निधाय मुनिसत्तमाः ॥ समाप्ते सत्रयागेऽथ देवानूचुः समागतान् ॥७॥ राज्ञो जीवतु देहोऽयं प्रसन्नाःप्रभवो यदि ॥ तथेत्युक्ते निमिः प्राह माभून्मेदेहबन्धनम् ॥८॥यस्ययोगं न वांछन्ति वियोगभयकातराः ॥ भजन्ति चरणाम्भोजं मुनयो हरिमेधसः ॥९॥ देहं नावरुरुत्सेऽहं दुःखशोकभयावहम् ॥ सर्वत्रास्य यतो मृत्युर्मत्स्यानामुदके यथा ॥१०॥ देवा ऊचुः ॥ विदेह उष्यतां कामं लोचनेषु शरीरिणाम् ॥ उन्मेषणनिमेषाभ्यां लक्षितोऽध्यात्मसंस्थितः ॥११॥ अराजकभयं नृणां मन्यमाना महर्षयः ॥ देहं ममन्थुः स्म निमेः कुमारः समजायत ॥ १२ ॥ जन्मना जनकः सोऽभूद्वैदेहस्तु विदेहजः ॥ मिथिलो

भजिरहन्छन ॥ ८-९ ॥ यसैनिम्ति दुःख, शोक र भय प्राप्त गराउने यो देह ग्रहण गर्ने मेरो अलिकति पनि इच्छा छैन । किनकि जलमा बस्ने माछा जस्तै यसको सर्वत्र नै मृत्यु हुन सक्छ' ॥१०॥ देवताहरूले भने–हे मुनिजन हो ! यी राजा निमि आफ्नू इच्छानुसार शरीर धारण नगरेर नै सबै देहधारीका आँखाका परेलामा निवास गर्नेछन् । यी सबैका नेत्रमा आँखा चिम्लने र उघार्नेले लक्षित हुनेछन् ॥११॥ तब राजाबिना मनुष्यहरूमा अराजकता फैलिने भयले महर्षिहरूले निमिको शरीर मथे, उनको देहबाट योटा बालक उत्पन्नभयो॥१२॥

हुन्थ्यो, तब छ्योटा घडा सुनले भरिएका र योटा आधामात्र भरिएको थियो । त्यो आधा घडा देखेर हजामको मनमा चिन्ता भयो—जबसम्म यो सातौं घडा भरिन्न तबसम्म मलाई पूर्ण सुख प्राप्त हुन सक्दैन । अनि उसले घरका सबै सुन चाँदीका गहना बेचेर असर्फीहरू किनेर घडामा हाल्यो । तर घडा भरिएन । अनि उसले सबै [illegible] र [illegible] असर्फी किनेर घडामा हाल्यो । त्यो घडा तैपनि भरिएन । हजाम राजाको नोकरी गर्दथ्यो र राजा त्योसित प्रसन्न थिए । उसले राजासित प्रार्थना गर्यो 'मलाई [illegible] पुग्दैन, कष्ट छ ।' राजाले उसको तलब दोब्बर गरि दए । हजामले त्यो पनि सबै जम्मा गरेर असर्फीहरू किनेर त्यही घडामा हाल्यो । घडा तैपनि भरिएन । [illegible] हजाम घरघरै भिक्षा माग्न लाग्यो र जे जति काम गरेर प्राप्त हुन्थ्यो, त्यो सबै त्यही घडामा हाल्दैजान्थ्यो, तर घडा तैपनि रित्तो नै रहन्थ्यो । एक दिन राजाले त्यस हजामलाई भने–'तँ यति दुःखी र खिन्न किन रहन्छस् ? [illegible] तेरो तलब [illegible] थियो [illegible] प्रसन्न थिइस्, तर अबदेखि तेरो तलब बढाइयो, तँ झन् दुःखी देखिन्छस् । कतै तँले सातौंटा घडा त [illegible] ?' राजाको कुरा सुनेर हजाम छक्क पर्यो र भन्यो—'महाराज ! [illegible]' राजाले भने—'यो लक्षण त्यसैको हो भन्ने तँलाई थाहा छैन, यस [illegible] आफ्ना सात घडा [illegible] । उसको यही गति हो । मलाई पनि ती सात घडा लेउ भनेको थियो । [illegible] निम्ति हो ?' यति सुन्नासाथ [illegible] । तँलाई त्यो धन खर्च गर्न सक्दैन भन्ने थाहा छैन । त्यो घडा लिनेलाई केवल धन बढ्दै इच्छा बढ्दछ । [illegible] सद्व्यय गर्न जान्दैन, त्यसको यही गति हुन्छ । यो [illegible] नहुनु नै असल छ, त्यसैका निम्ति [illegible] मुक्ति पाइन्छ । —'जति [illegible]' [illegible] ।

त्यसैले जन्मद्वारा 'जनक' विदेहबाट उत्पन्न हुनाले 'वैदेह' र मन्थनबाट उत्पन्न हुनाले 'मिथिल' कहिए । उनैले मिथिलापुरी बसालेका थिए ॥ १३ ॥ हे राजन् ! जनकबाट उदावसु भए, उदावसुका छोरा नन्दिवर्धन, तिनका पुत्र सुकेतु र सुकेतुका छोरा देवरात भए ॥१४॥ देवरातका बृहद्रथ, उनका सुधृति तिनका महावीर्य, सुधृतिका धृष्टकेतु, धृष्टकेतुका हर्यश्व र हर्यश्वका मरु नामका छोरा जन्मिए ॥ १५ ॥ मरुका प्रतीपक, प्रतीपका कृतिरथ, कृतिरथका देवमीढ, देवमीढका विश्रुत र विश्रुतका महाधृति पुत्र जन्मे ॥ १६ ॥ महाधृतिका कृतिरात तथा कृतिरातबाट महारोमाको जन्म भयो । महारोमाका पुत्र स्वर्णरोमा र स्वर्णरोमा, उनका ह्रस्वरोमा पुत्र जन्मिए ॥१७॥ ह्रस्वरोमाका सीरध्वज नामका छोरा जन्मिए । एकसमय महाराज सीरध्वज यज्ञको निम्ति भूमि जोतिरहेका थिए, तब उनको सीर अर्थात् हलोको अग्रभाग फालीबाट सीताजी निस्केकी थिइन् । त्यसैले ती 'सीरध्वज' कहिए ॥ १८ ॥ सीरध्वजका पुत्र कुशध्वज, उनका धर्मध्वज भए । धर्मध्वजका कृतध्वज र मितध्वज दुइ छोरा भए ॥१९॥ उनमा कृतध्वजबाट केशिध्वज, उनका मितध्वज र मितध्वजबाट खाण्डिक्य

मथनाज्जातो मिथिला येन निर्मिता ॥१३॥ तस्मादुदावसुस्तस्य पुत्रोऽभून्नन्दिवर्धनः ॥ ततः सुकेतुस्तस्यापि देवरातो महीपते ॥१४॥ तस्माद्बृहद्रथस्तस्य महावीर्यः सुधृतिपिता ॥ सुधृतेर्धृष्टकेतुर्वै हर्यश्वोऽथ मरुस्ततः ॥१५॥ मरोःप्रतीपकस्तस्माज्जातः कृतिरथो यतः ॥देवमीढस्तस्य सुतो विश्रुतो थ महाधृतिः ॥१६॥ कृतिरातस्ततस्तस्मान्महारोमाऽथ तत्सुतः ॥ स्वर्णरोमा सुतस्तस्य ह्रस्वरोमा व्यजायत ॥१७॥ ततः सीरध्वजो जज्ञे यज्ञार्थं कर्षतो महीम् ॥ सीता सीराग्रतो जाता तस्मात्सीरध्वजः स्मृतः ॥१८॥ कुशध्वजस्तस्य पुत्रस्ततो धर्मध्वजो नृपः ॥ धर्मध्वजस्य द्वौ पुत्रौ कृतध्वजमितध्वजौ ॥१९॥ कृतध्वजात्केशिध्वजः खाण्डिक्यस्तु मितध्वजात् ॥ कृतध्वजसुतो राजन्नात्मविद्याविशारदः ॥ २० ॥ खाण्डिक्यः कर्मतत्त्वज्ञो भीतः केशिध्वजाद्द्रुतः ॥ भानुमाँस्तस्य पुत्रोऽभूच्छतद्युम्नस्तु तत्सुतः ॥ २१ ॥ शुचिस्तत्तनयस्तस्मात्सनद्वाजस्ततोऽभवत् ॥ ऊर्ध्वकेतुः सनद्वाजादजोऽथ पुरुजित्सुतः ॥२२॥ अरिष्टनेमिस्तस्यापि श्रुतायुस्तत्सुपार्श्वकः ॥ ततश्चित्ररथो यस्य क्षेमधिर्मिथिलाधिपः ॥२३॥ तस्मात्समरथस्तस्य सुतः सत्यरथस्ततः॥ आसीदुपगुरुस्तस्मादुपगुप्तोऽग्निसंभवः ॥२४॥ वस्वनन्तोऽथ तत्पुत्रो युयुधो यत्सुभाषणः ॥ श्रुतस्ततो जयस्तस्माद्विजयोऽस्मादृतः सुतः ॥२५॥ शुनकस्तत्सुतो जज्ञे वीतहव्यो धृतिस्ततः ॥ बहुलाश्वो धृतेस्तस्य कृतिरस्य महावशी ॥२६॥ एते वै मैथिला राजन्नात्मविद्याविशारदाः ॥ योगेश्वर-

जन्मे । हे राजन् ! कृतध्वजका छोरा केशिध्वज आत्मविद्यामा निपुण थिए ॥२०॥ खाण्डिक्य कर्मकाण्डका:पण्डित थिए । ती केशिध्वजको डरले भागे । केशिध्वजका छोरा भानुमान् र उनका पुत्र शतद्युम्न भए ॥११॥ शतद्युम्नका छोरा शुचि, शुचिका सनद्वाज, सनद्वाजका ऊर्ध्वकेतु, उनका अज र अजका छोरा पुरुजित् भए॥२२॥उनका अरिष्टनेमि, अरिष्टनेमिका श्रुतायु, श्रुतायुका सुपार्श्वक सुपार्श्वका चित्ररथ र चित्ररथका मिथिलापति क्षेमधि नामका छोरा जन्मिए ॥ २३ ॥ क्षेमाधिका समरथ, समरथका सत्यरथ, सत्यरथका उपगुरु र उपगुरुका अग्निका अंशज उपगुप्त नामका छोरा उत्पन्न भए ॥२४॥ उपगुप्तबाट वस्वनन्त, वस्वनन्तबाट युयुध, उनका सुभाषण, सुभाषणका श्रुत, श्रुतका जय, जयका विजय, विजयका ऋत नामका पुत्र उत्पन्न भए ।२५॥ ऋतका शुनक नामका छोरा भए । शुनकका वीतहव्य, वीतहव्यका धृति, धृतिका बहुलाश्व, बहुलाश्वका कृति र कृतिका महावशी भन्ने पुत्र उत्पन्न

भए ॥२६॥ हे राजन् ! यी मिथिल-वंशमा उत्पन्न राजाहरू आत्मविद्यामा कुशल थिए र याज्ञवल्क्यादि योगेश्वरहरूका कृपाले गृहस्थाश्रममा रहेर पनि सबै प्रकारका द्वन्द्वबाट परै बस्तथे ॥२७॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली-भाषा टीकायां त्रयोदशोऽध्यायः ॥१३॥

( चन्द्रवंशी राजाहरूको वृत्तान्त, बुधको जन्म र राजा पुरूरवाको चरित्र )–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! अब म जसमा पुरूरवा आदि पवित्रकीर्ति राजाहरूका गुण गाइएका छन्, त्यो पवित्र चन्द्रवंशको वर्णन गर्दछु सुन ॥ १ ॥ सहस्रशिर भगवान् नारायणका नाभि-सरोवरबाट उत्पन्न कमल द्वारा जन्मेका ब्रह्माजीबाट उनकै समान गुणवान् अत्रि नामका पुत्र उत्पन्न भए ॥२॥ अत्रिका नेत्रबाट अमृतमय चन्द्रमा नामका यौटा छोरा उत्पन्न भए। तिनलाई ब्रह्माजीले ब्राह्मण वर्ग, औषधिहरू तथा नक्षत्रगणका अधिपति बनाइदिए। उसले सारा त्रैलोक्य जितेर राजसूय यज्ञको द्वारा भगवान्‌को यजन गरे र गर्वले गर्दा बृहस्पतिकी पत्नी ताराको बलपूर्वक अपहरण गरे ॥३॥४॥ देवगुरु बृहस्पतिले बारम्बार

प्रसादेन द्वन्द्वैर्मुक्ता गृहेष्वपि ॥ २७ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे निमिवंशानुवर्णनं नाम त्रयोदशोऽध्यायः ॥ १३ ॥

श्रीशुक उवाच ॥ अथातः श्रूयतां राजन्वंशः सोमस्य पावनः ॥ यस्मिन्नैलादयो भूपाः कीर्त्यन्ते पुण्यकीर्तयः ॥ १ ॥ सहस्रशिरसः पुंसो नाभिह्रदसरोरुहात् ॥ जातस्यासीत्सुतो धातुरत्रिः पितृसमो गुणैः ॥ २ ॥ तस्य दृग्भ्योऽभवत्पुत्रः सोमोऽमृतमयः किल ॥ विप्रौषध्युडुगणानां ब्रह्मणा कल्पितः पतिः ॥ ३ ॥ सोऽयजद्राजसूयेन विजित्य भुवनत्रयम् ॥ पत्नीं बृहस्पतेर्दर्पात्तारां नामाहरद्बलात् ॥ ४ ॥ यदा स देवगुरुणा याचितोऽभीक्ष्णशो मदात् ॥ नात्यजत्तत्कृते जज्ञे सुरदानवविग्रहः ॥ ५ ॥ शुक्रो बृहस्पतेर्द्वेषादग्रहीत्सासुरोडुपम् ॥ हरो गुरुसुतं स्नेहात्सर्वभूतगणावृतः ॥ ६ ॥ सर्वदेवगणोपेतो महेन्द्रो गुरुमन्वगात् ॥ सुरासुरविनाशोऽभूत्समरस्तारकामयः ॥ ७ ॥ निवेदितोऽथाङ्गिरसा सोमं निर्भर्त्स्य विश्वकृत् ॥ तारां स्वभर्त्रे प्रायच्छदन्तर्वत्नीमवैत्पतिः ॥ ८ ॥ त्यज त्यजाशु दुष्प्रज्ञे मत्क्षेत्रादाहितं परैः ॥ नाहं त्वां भस्मसात्कुर्यां स्त्रियं सान्तानिकः सति ॥ ९ ॥ तत्याज व्रीडिता तारा कुमारं कनकप्रभम् ॥ स्पृहामाङ्गिरसश्चक्रे कुमारे सोम एव च ॥ १० ॥ ममायं न तवेत्युच्चैस्तस्मिन्विव-

माग्दा पनि जब चन्द्रमाले अभिमानवश तारालाई छाडेनन्, अनि त्यसको निम्ति देवासुर संग्राम मच्चियो ॥५॥ बृहस्पतिको द्वेषले शुक्राचार्यले आफ्ना शिष्य असुर सहित चन्द्रको पक्ष लिएर शिवजीले स्नेहवश सबै गणका साथ गुरुपुत्र* बृहस्पतिको मद्दत दिन स्वीकार गरे ॥६॥ इन्द्रले पनि सबै देवगण सहित गुरु बृहस्पतिको अनुसरण गरे। यस प्रकार ताराको निम्ति देवताहरू र असुरहरूको नाश पारिदिने घोर तारकामय संग्राम हुन लाग्यो ॥७॥ तब महामुनि अङ्गिराले भनेपछि जगत्-रचयिता भगवान् ब्रह्माले चन्द्रमालाई हप्काएर तीबाट तारा बृहस्पतिलाई फिर्ता दिलाए। बृहस्पतिले तारालाई गर्भिणी जानेर भने–॥८॥ 'हे दुष्ट बुद्धि भएकी स्त्री ! मेरो क्षेत्रमा अन्य पुरुष द्वारा स्थापित यस गर्भलाई तुरुन्त फालिदेउ। म तिमीलाई भस्म पार्दिन, किनकि तिमीद्वारा मलाई सन्तान उत्पन्न गर्ने कामना छ' ॥९॥ अनि ताराले लज्जित भएर आफ्नो गर्भबाट यौटा सुवर्ण समान कान्ति भएको बालक

* कुनै समय श्री शिवजीले बृहस्पति का पिता अङ्गिराबाट विद्या पढेका थिए। त्यही नाताले बृहस्पति उनका गुरुभाई थिए।

उत्पन्न गरिन् । त्यो बालकलाई चन्द्रमा र बृहस्पति दुवैले लिन खोजे ॥१०॥ तिनीहरू 'यो मेरो हो, तिम्रो होइन' भनी परस्पर बाझ्न लागेका देखेर र ऋषिहरूले यस विषयमा तारालाई नै केर-कार पारे तर तिनले लज्जावश केही भनिनन् ॥११॥ अनि ताराको लाजले रिसाई बालकले स्वयं आमासित भन्यो–'ए पापाचारिणी ! तिमी किन बोलिरहेकी छैनौ ! मलाई झट्ट कुकर्मको कुरा भन' ॥१२॥ अनि ब्रह्माजीले एकान्तमा डाकेर फकाई सोधे । ताराले बिस्तारै भनिन्–'यो गर्भ चन्द्रमाको थियो ।' अतः बालक चन्द्रमाले नै पाए ॥१३॥ हे राजन् ! भगवान् ब्रह्माजीले त्यस बालकको 'बुध' भन्ने नाम राखे, किनकि ऊ गम्भीर बुद्धिले सम्पन्न थियो । छोरो पाएर चन्द्रमालाई ठूलो आनन्द मिल्यो ॥१४॥बुधद्वारा इलाको गर्भबाट राजा पुरूरवाको जन्म भयो–यसको उल्लेख मैले पहिले नै गरिसकेको छु । हे राजन् ! एकपल्ट इन्द्र-भवनमा देवर्षि नारद द्वारा पुरूरवाको रूप, गुण, औदार्य, शील, सम्पत्ति तथा पराक्रमको गाथा सुनेर उर्वशी नामकी देवाङ्गना कामबाणले विद्ध भएर उनीकहाँ पुगी ॥१५-१६॥ उर्वशीलाई मित्रावरुणको श्राप थियो । यसै निम्ति उसले मर्त्यमण्डलमा आउनु

दमानयोः ॥ प्रपच्छुर्ऋषयो देवा नैवोचे व्रीडिता तु सा ॥११॥ कुमारो मातरं प्राह कुपितोऽलीकलज्जया ॥ किं न वोचस्यसद्वृत्ते आत्मावद्यं वदाशु मे ॥१२॥ ब्रह्मा तां रह आहूय समप्राक्षीच्च सान्त्वयन् ॥ सोमस्येत्याह शनकैः सोमस्तं तावदग्रहीत् ॥ १३ ॥ तस्यात्मयोनिरकृत बुध इत्यभिधां नृप ॥ बुद्ध्या गम्भीरया येन पुत्रेणापोडुराण्मुदम् ॥ १४ ॥ ततः पुरूरवा जज्ञे इलायां य उदाहृतः ॥ तस्य रूपगुणौदार्यशीलद्रविणविक्रमान् ॥ १५ ॥ श्रुत्वोर्वशीन्द्रभवने गीयमानान्सुरर्षिणा ॥ यदन्तिकमुपेयाय देवी स्मरशरार्दिता ॥ १६ ॥ मित्रावरुणयोः शापादापन्ना नरलोकताम् ॥ निशम्य पुरुषश्रेष्ठं कन्दर्पमिव रूपिणम् ॥ धृतिं विष्टभ्य ललना उपतस्थे तदन्तिके ॥१७॥ तां विलोक्य नृपतिर्हर्षेणोत्फुल्ललोचनः ॥ उवाच श्लक्ष्णया वाचा देवीं हृष्टतनूरुहः ॥ १८ ॥ राजोवाच ॥ स्वागतं ते वरारोहे आस्यतां करवाम किम् ॥ संरमस्व मया साकं रतिर्नौ शाश्वतीः समाः ॥१९॥ उर्वश्युवाच ॥ कस्यास्त्वयि न सज्जेत मनो दृष्टिश्च सुन्दर ॥ यदङ्गान्तरमासाद्य च्यवते ह रिरंसया ॥२०॥ एतावुरणकौ राजन्न्यासो रक्षस्व मानद ॥ संरंस्ये भवता साकं श्लाघ्यः स्त्रीणां वरः स्मृतः ॥ २१ ॥ घृतं मे वीर भक्ष्यं स्यान्नेक्षे त्वाऽन्यत्र मैथुनात् ॥ विवाससं तत्तथेति प्रतिपेदे महामनाः

पर्‍यो तर ती पुरुष श्रेष्ठलाई कामदेव झैं राम्रा सुनेर धैर्य धारण गरेर ती सुरसुन्दरी उनको नजीक आएर उपस्थित भइन् ॥ १७ ॥ तिनलाई देखेर राजा पुरूरवाका नेत्र हर्षले प्रफुल्लित भए र पुलकित-शरीर भएर ती अति मधुर वाणीमा बोले ॥१८॥ राजाले भने–हे सुमध्यमे ! तिमी आयौ, राम्रो भयो । बस, म तिम्रो के सेवा गरूँ ? मेरो इच्छा छ तिमी मसित रमण गर र तिम्रो र मेरो विहार अनन्त कालसम्म चलिरहोस् ॥ १९ ॥ उर्वशीले भनिन्–हे सुन्दर ! तिमीलाई देखेर कुन कामिनीका नेत्र र मन तिमीमा नअल्झनन् ? जब कि तिम्रो वक्षस्थल हेरेर म देवाङ्गनाको पनि मन र नेत्र रमणको इच्छाले अन्त कतै गइरहेका छैनन् ॥२०॥ हे राजन् ! जो पुरुष आफ्नू रूप, गुण आदिले प्रशंसनीय हुन्छन् तिनै स्त्रीहरूलाई मनपर्दछन् । अतः म तिमीसित रमण गर्छु । तर हे मानद ! मेरो प्रतिज्ञा छ—भेडाका या बच्चा म तिमीलाई नासोको रूपमा दिन्छु जिनको तिमी यत्नपूर्वक रक्षा गर ॥२०॥ मेरो आहार केवल घिउ हुनेछ र म मैथुन बाहेक अरु कुनै वेला तिमीलाई नांगो देख्ने छैन । यदि यी कुरा स्वीकार भए म तिमीसित बस्न तयार छु । अनि उदारचित्त

पुरूरवाले 'हुन्छ' भनेर तिनका कुरा स्वीकार गरे ॥२२॥ र भने—'अहो ! सारा मानव-समाजलाई मोहित पार्ने तिम्रो रूप र भाव कति राम्रो छ ! नडाकीकन स्वयं आएकी तिमी झैं सुरसुन्दरीसित रमण नगर्ने कुन पुरुष होला ?' ॥ २३ ॥ हे राजन् ! अनि यथायोग्य सेवा गर्ने भएकी ती देवाङ्गनासित पुरुषश्रेष्ठ पुरूरवा देवताहरूको सुरम्य क्रीडास्थल चैत्ररथ, नन्दन आदि वनहरूमा यथेच्छ विहारगर्नलागे ॥ २४ ॥ कमल-केसर जस्तै सुगन्धयुक्त ती कामिनीसित रमण गर्दै ती उनको मुखको सुगन्धले मुग्ध भएर धेरै वर्षसम्म आनन्द गर्दै रहे ॥२५॥ उता उर्वशीलाई नदेखेर एक दिन देवराज इन्द्र 'उर्वशी विना मलाई यो स्थान मनपरेन' भन्दै उसलाई ल्याउन गन्धर्वहरूलाई पठाए ॥२६॥ ती गन्धर्व आधारातको अँध्यारोमा उर्वशीका दुवै भेडालाई, जुन उसले राजकहाँ नासोको रूपमा राखेकी थिई—लिएर भागे ॥ २७ ॥ यसरी हेरेर लगिरहेका ती भेडाले रोएको सुनेर उर्वशीले भनिन्—'हरे ! आफूलाई असाधारण वीर मान्ने यी नपुंसक र निन्दनीय पतिले गर्दा मेरा पुत्रतुल्य र सर्वस्व नष्ट भएर गयो ॥ २८ ॥

॥ २२ ॥ अहो रूपमहो भावो नरलोकविमोहनः ॥ को न सेवेत मनुजो देवीं त्वां स्वयमागताम् ॥ २३ ॥ तया स पुरुषश्रेष्ठो रमयन्त्या यथार्हतः ॥ रेमे सुरविहारेषु कामं चैत्ररथादिषु ॥२४॥ रममाणस्तया देव्या पद्मकिञ्जल्कगन्धया ॥ तन्मुखामोदमुषितो मुमुदेऽहर्गणान्बहून् ॥२५॥ अपश्यन्नुर्वशीमिन्द्रो गन्धर्वान्समनोदयत् ॥ उर्वशीरहितं मह्यमास्थानं नातिशोभते ॥ २६ ॥ ते उपेत्य महारात्रे तमसि प्रत्युपस्थिते ॥ उर्वश्या उरणौ जह्रुर्न्यस्तौ राजनि जायया ॥ २७ ॥ निशम्याक्रन्दितं देवी पुत्रयोर्नीयमानयोः ॥ हताऽस्म्यहं कुनाथेन नपुंसा वीरमानिना ॥ २८ ॥ यद्विश्रम्भादहं नष्टा हृतापत्या च दस्युभिः ॥ यः शेते निसि संत्रस्तो यथा नारी दिवा पुमान् ॥ २९ ॥ इति वाक्सायकैर्विद्धः प्रतोत्रैरिव कुञ्जरः ॥ निशि निस्त्रिंशमादाय विवस्त्रोऽभ्यद्रवद्रुषा ॥ ३० ॥ ते विसृज्योरणौ तत्र व्यद्योतन्त स्म विद्युतः ॥ आदाय मेषावायान्तं नग्नमैक्षत सा पतिम् ॥ ३१ ॥ ऐलोऽपि शयने जायामपश्यन्विमना इव ॥ तच्चित्तो विह्वलः शोचन्बभ्रामोन्मत्तवन्महीम् ॥ ३२ ॥ स तां वीक्ष्य कुरुक्षेत्रे सरस्वत्यां च तत्सखीः ॥ पञ्च प्रहृष्टवचनाः प्राह सूक्तं पुरूरवाः ॥३३॥ अहो जाये तिष्ठ तिष्ठ घोरे न त्यक्तुमर्हसि ॥ मां त्वमद्याप्यनिर्वृत्य वचांसि कृणवावहै ॥ ३४ ॥ सुदेहोऽयं

जिनको भरमा परेर दस्युहरूद्वारा आफ्ना पुत्र हरण गरिनाले मैले यसरी नष्ट हुनु पर्‍यो । अहो ! यी दिउँसो त मर्द बन्दछन्, तर रात्रिमा भयभीत भएर स्त्रीहरू झैं सुतिरहन्छन्' ॥२९॥ हे राजन् ! अंकुशले घोचिएको हात्ती झैं उर्वशीका वचन-वाणले घोचिएर पुरूरवा निकै रिसाएर तथा त्यो रात्रिको अन्धकारमा तरवार लिएर नाङ्गै गन्धर्वलाई लखेट्तै दगुरे ॥३०॥ राजा आएका देखेर गन्धर्वले भेडा त्यहीं छाडिदिए र बिजुली जस्तै तेजस्वी भएर झल्कन लागे । अतः उर्वशीले भेडाहरू लिएर आउन लागेका आफ्ना पतिलाई नाङ्गो देखिन् र तत्काल राजालाई छाडेर गइन् ॥३१॥ हे राजन् ! राजा पुरूरवाले आफ्नो शयनागारमा जब प्रियतमालाई देखेनन्, तब ती अन्यमनस्क भएर उनैमा मन लगाई शोकले विह्वल भई उन्मत्त झैं पृथ्वीमा यता-उता घुम्नलागे ॥३२॥ एक पल्ट उनले कुरुक्षेत्रमा सरस्वती नदीको किनारमा उर्वशी र उसका पाँच प्रसन्नमुखी सखीहरूलाई देखेर मीठो वचन भने-॥ ३३ ॥ हे प्रिये ! पर्ख, पर्ख ! मलाई राम्ररी आनन्दित नपारेर नै यस घोर कष्टमा छाडेर तिमी कहीं नजाऊ । आऊ हामी दुवै

एक छिन कुरा त गरौं ॥३४॥ हेर, तिमीले मेरो सुन्दर शरीर आफूबाट टाढा पारिदियौ । यो यहीं मरेर ढल्नेछ र यसलाई काग, गिद्ध आदिले खानेछन् । के तिमो मेरो यो कुराले पनि प्रसन्न हुन्नौ ? ॥ ३५ ॥ उर्वशी बोलिन्—हे राजन् ! तिमी पुरुष भएर यसरी प्राण नत्यागा हेर तिमी यस्तो गर कि तिमीलाई गिद्धले खान नपाउन् । स्त्रीहरूको मैत्री कसैसित पनि स्थायी रहन्न । चितुवा झैं यिनको हृदय क्रूर हुन्छ ॥ ३६ ॥ नारी निर्दयी, निष्ठुर र असहनशील हुन्छन् । ती आफ्नो सुखको निम्ति आँट्नै नसकिने साहसका काम पनि गरिदिन्छन् । आफ्नो सानो स्वार्थका लागि ती विश्वासपात्र पति तथा भाईलाई पनि मारिदिन्छन् भने अरूको त कुरै छैन ॥ ३७ ॥ यी एकदम सौहार्दशून्य हुन्छन् । यी

पतत्यत्र देवि दूरं हृदस्त्वया ॥ खादन्त्येनं वृका गृध्रास्त्वत्प्रसादस्य नास्पदम् ॥ ३५ ॥ उर्वश्युवाच ॥ मा मृथाः पुरुषोऽसि त्वं मा स्म त्वाद्युर्वृका इमे क्वापि सख्यं न वै स्त्रीणां वृकाणां हृदयं यथा ॥ ३६ ॥ स्त्रियो ह्यकरुणाः क्रूरा दुर्मर्षाः प्रियसाहसाः ॥ घ्नन्त्यल्पार्थेऽपि विश्रब्धं पतिं भ्रातरमप्युत ॥३७॥ विधायालीकविश्रम्भमज्ञेषु त्यक्तसौहृदाः ॥ नवं नवमभीप्सन्त्यः पुंश्चल्यः स्वैरवृत्तयः ॥३८॥ सम्वत्सरान्ते हि भवानेकरात्रं महेश्वर ॥ वत्स्यत्यानि च ते भविष्यन्त्यपराणि भोः ॥ ३९ ॥ अन्तर्वत्नीमुपालक्ष्य देवीं स प्रययौ पुरम् ॥ पुनस्तत्र गतोऽब्दान्ते उर्वशीं वीरमातरम् ॥४०॥ उपलभ्य मुदा युक्तः समुवास तया निशाम् ॥ अथैनमुर्वशी प्राह कृपणं विरहातुरम् ॥ ४१ ॥ गन्धर्वानुपधावेमाँस्तुभ्यं दास्यन्ति मामिति ॥ तस्य संस्तुवतस्तुष्टा अग्निस्थालीं ददुर्नृप ॥ उर्वशीं मन्यमानस्तां सोऽबुध्यत चरन्वने ॥ ४२ ॥ स्थालीं न्यस्य वने गत्वा गृहानाध्यायतो निशि ॥

लाटो-सोझो पुरुषलाई मिथ्या विश्वासमा पारेर व्यभिचारिणी र स्वेच्छाचारिणि भएर नित्य नयाँ-नयाँ पति खोज्दै रहन्छन्* ॥ ३८ ॥ हे राजेश्वर ! एक वर्षपछि फेरि तिमी एक रात मसंग रहने छौ, अनि अरू पनि अनेक सन्तान उत्पन्न हुनेछन् ॥ ३९ ॥ राजा पुरूरवा उर्वशीलाई गर्भवती जानेर आफ्नो नगरमा फर्के । एक वर्ष बितेपछि ती फेरि उहीं पुगेर वीरमाता उर्वशीलाई देखेर आनन्दित भई एक रात उसैसित बसे । तब उर्वशीले आफ्नो विरह-व्यथाले पीडित र दीन राजासित भनिन्– ॥४०-४१॥ 'हे राजन् ! यदि तिमीले गन्धर्वको स्तुति गरे यी मलाई तिम्रो जिम्मा लाउन सक्दछन् ।' हे राजा परीक्षित ! पुरूरवाको प्रार्थनाले प्रसन्न गन्धर्वहरूले थाँटा थाल दिए । ती राजा त्यसैलाई उर्वशी मानेर

---

उदाहरण ( स्त्रिया चरित्र )—कुनै बेला योटा पुरुष र स्त्रीमा यस कुराको विवाद चल्यो— स्त्री र पुरुषमा कुन चाहिँ बुद्धिमान र बाठा हुन्छन् । स्त्री आफ्नो जातको प्रशंसा गर्दथ्यो र पुरुष आफूलाई श्रेष्ठ भन्दथ्यो । अनि एक दिन स्त्री संचो भएन भनेर सुतिरही । त्यसको पतिले धेरै औषधि गऱ्यो तर केही लाभ भएन । चार-पाँच दिनपछि स्त्रीले भनी—'यदि तिमी आफ्नो आमाको कपाल खौराएर गदहामा चढाई मेरो सामुन्ने ल्याउँछौ भने मलाई निको हुन्छ !' पतिले बुझ्यो—यो मलाई मूर्ख तुल्याउन खोजिरहेकी छ । अतः उसले ससुराली गएर आफ्नी सासूलाई भन्यो—'तिम्री छोरी मरणासन्न छ । यदि कपाल मुडाएर गदहामा बसी त्यसको सामुन्ने हिंड अनिमात्र बाँच्न सक्छे । अरू कुनै उपाय छैन !' आमाहरू छोरी भनेपछि जे गर्न पनि तत्पर रहन्छन् । उसले कपाल मुडाएर गदहा चढी छोरीकहाँ पुगी । त्यस स्त्रीले उसलाई आफ्नी सासू ठानेर भनी—'देख्यौ स्त्रिया चरित्र !' लोग्नेले भन्यो—'देख्यौ पुरुषको चातुर्य ! आमा तिम्री हुन् कि मेरो !' यति सुन्नासाथ आफ्नी आमाको दुर्दशा देखेर त्यो साह्रै लज्जित भई ।

हृदयमा हाँ सेर वन-वनै डुलिरहन्थे। अब तिनलाई चेतना आयो, तब त्यो थाल वनमै छाडेर ती घर फर्केर आएर एक रात सदा झैं उर्वशीको ध्यान गर्दागर्दै त्रेतायुगको प्रारम्भमा उसको हृदयमा अकस्मात् वेदत्रयीको आविर्भाव भयो ॥ ४२ ॥ ४३ ॥ अनि थाल फालेको स्थानमा गएर उनले शमीको गर्भबाट उत्पन्न यौटा पीपलको वृक्ष देखे। त्यसको दुइटा अरणि अर्थात् मन्थन-काष्ठ बनाएर उनले उर्वशीलोकको इच्छावश तल्लो अणिलाई उर्वशी र माथिल्लो अरणिलाई पुरूरवा तथा माझको काठलाई पुत्र मानेर अग्नि प्रज्वलित पार्ने मन्त्रद्वारा मथे ॥ ४४ ॥ ४५ ॥ त्यसबाट जुन जातवेदा नामक अग्नि निस्के, त्यसलाई त्रयीविद्याको आहवनीय, गार्हपत्य र दक्षिणाग्नि यी तीन भागहरूमा विभक्त गरेर आफ्नू पुत्ररूपले स्वीकार गरिलिए ॥ ४६ ॥ अनि उर्वशीलोकको पाउने इच्छाले पुरूरवाले त्यो त्रिविध अग्निद्वारा सर्वदेवमय, अधोक्षज एवं यज्ञेश्वर भगवान् विष्णुको यजन गरे।।४७॥ हे राजन् ! यो भन्दा पहिले अर्थात् सत्ययुगमा केवल सर्ववाङ्मय ॐकार नै वेद थियो। एकमात्र नारायण नै देवता थिए–तीबाहेक अरु कुनै पनि देवता

त्रेतायां सम्प्रवृत्तायां मनसि त्रय्यवर्तत ॥४३॥ स्थालीस्थानं गतोऽश्वत्थं शमीगर्भं विलक्ष्य सः ॥ तेन द्वे अरणी कृत्वा उर्वशीलोककाम्यया ॥४४॥ उर्वशीं मन्त्रतो ध्यायन्नधरारणिमुत्तराम् ॥ आत्मानमुभयोर्मध्ये यत्तत्प्रजननं प्रभुः ॥ ४५ ॥ तस्य निर्मथनाज्जातो जातवेदा विभावसुः ॥ त्रय्या स विद्यया राज्ञा पुत्रत्वे कल्पितस्त्रिवृत् ॥४६॥ तेनायजत यज्ञेशं भगवन्तमधोक्षजम् ॥ उर्वशीलोकमन्विच्छन्सर्वदेवमयं हरिम् ॥ ४७ ॥ एक एव पुरा वेदः प्रणवः सर्वाङ्मयः ॥ देवो नारायणो नान्य एकोग्निर्वर्ण एव च ॥ ४८ ॥ पुरूरवस एवासीत्त्रयी त्रेतामुखे नृप ॥ अग्निना प्रजया राजा लोकं गन्धर्वमेयिवान् ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे ऐलोपाख्याने चतुर्दशोऽध्यायः ॥ १४ ॥

श्रीशुक उवाच ॥ ऐलस्य चोर्वशीगर्भात्षडासन्नात्मजा नृप॥ आयुः श्रुतायुः सत्यायू रयोऽथ विजयो जयः ॥१॥ श्रुतायोर्वसुमान्पुत्रः सत्यायोश्च श्रुतञ्जयः ॥ रयस्य सुत एकश्च जयस्तत्तनयोऽमितः ॥२॥ भीमस्तु विजयस्याथ कांचनो होत्रकस्ततः ॥ तस्य जन्हुः सुतो गङ्गां गण्डूषीकृत्य योऽपिबत् ॥ जह्नोस्तु पूरुस्तत्पुत्रो बलाकश्चात्मजोऽजकः ॥३॥ ततः कुशः कुशस्यापि कुशाम्बुस्तनयो वसुः ॥ कुशनाभश्च चत्वारो गाधिरासीत्कुशाम्बुजः॥४॥ तस्य सत्यवतीं कन्यामृचीकोऽयाचत द्विजः ॥ वरं विसदृशं मत्वा गाधिर्भार्गवमब्रवीत् ॥५। एकतः श्यामकर्णानां हयानां चन्द्रवर्चसाम्॥ सहस्रं दीयतां शुल्कं

थिएनन् र यौटा लौकिक अग्नि तथा हंस नामको केवल यौटै वर्ण थियो ॥ ४८ ॥ हे नृप ! त्रेतायुगको आरम्भमा पुरूरवाबाट नै अग्नि उत्पन्न भयो। पुत्ररूपमा परिणत त्यस अग्निद्वारा पुरूरवा गन्धर्वलोकमा पुगे ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषा-टीकायां चतुर्दशोऽध्यायः ॥ १४ ॥

( ऋचीक, जमदग्नि र परशुरामको चरित्र ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! उर्वशीको गर्भबाट पुरूरवा आयु, श्रुतायु, रय, विजय र जय—यी छ पुत्र उत्पन्न भए ॥ १ ॥ तिनमा श्रुतायुबाट वसुमान्, सत्यायुका श्रुतञ्जय, रयका एक र जयका अगणित पुत्र भए ॥ २ ॥ विजयका पुत्र भीम भए। तिनका काञ्चन, काञ्चनका होत्र र होत्रका जन्हु पुत्र जन्मे जसले गङ्गालाई अञ्जलीमा लिएका थिए। उनका पुरु, पुरुका बलाक, बलाकका अजक पुत्र भए ॥३॥ अजकका कुश, कुशका कुशाम्बु, तनय, वसु, कुशनाभ—चार पुत्र उत्पन्न

भए र कुशाम्बुका छोरा गाधि भए ॥४॥ हे राजन् ! गाधिसित महर्षि ऋचीकले तिनकी कन्या सत्यवती मागे । उनकी कन्याको योग्य वर नठानेर गाधिले भृगुवंशज ऋचीकसित भने–॥५। 'हे मुने ! हामी कुशिकवंशी हौं । अतः हाम्री कन्या पाउनु कठिन छ । ( यदि मान्नु हुन्न भने ) श्यामवर्णका कान हुने र चन्द्रमा समान सेता एक सहस्र घोडा हाम्री कन्याको शुल्करूपमा दिनुहवस्' ॥६॥ राजा गाधिले यस्तो भनेपछि मुनिवर ऋचीक उनको अभिप्राय बुझी तत्काल उनले वरुणकहाँबाट त्यस्तै घोडाहरू ल्याएर राजालाई दिए र ती सुमुखीसित विवाह गरे ॥ ७ ॥ एकपल्ट महर्षि ऋचीकसित उनकी पत्नी र सासुले पुत्र-प्राप्तिका लागि प्रार्थना गरे, तब ती दुबैका लागि भिन्न-भिन्न मन्त्रले चरुसिद्ध पारेर मुनि स्नान गर्न नदीमा गए ॥ ८ ॥ त्यसै बेला सत्यवतीकी आमाले—पत्नीमा विशेष प्रेम हुनाले छोरी सत्यवतीको चरु उत्तम होला, भन्ने ठानेर छोरीसँग चरु मागिन् । त्यसै अनुसार सत्यवतीले आफ्नू, चरु आमालाई दिएर स्वयं आमाको चरु खाइन् । जब मुनिले यो कुरा थाहा पाए तब उनले पत्नीसित भने— 'यो तिमीले ठूलो अनर्थ गरिदियौ । तिम्रो छोरो दुर्दण्ड एवं घोर प्रकृतिको हुनेछ र तिम्रो भाइ सबै ब्रह्मवेत्तामा श्रेष्ठ हुनेछ' ॥९॥१०॥ सत्यवतीले 'यस्तो नहुनु पर्ने हो'

कन्यायाः कुशिका वयम् ॥ ६ ॥ इत्युक्तस्तन्मतं ज्ञात्वा गतः स वरुणान्तिकम् ॥ आनीय दत्त्वा तानश्वानुपयेमे वराननाम् ॥ ७ ॥ स ऋषिः प्रार्थितः पत्न्या श्वश्र्वा चापत्यकाम्यया ॥ श्रपयित्वोभयैर्मन्त्रैश्चरुं स्नातुं गतो मुनिः ॥८॥ तावत्सत्यवती मात्रा स्वचरुं याचिता सती ॥ श्रेष्ठं मत्वा तयाऽयच्छन्मात्रे मातुरदत्स्वयम् ॥ ९ ॥ तद्विज्ञाय मुनिः प्राह पत्नीं कष्टमकारषीः ॥ घोरो दण्डधरः पुत्रो भ्राता ते ब्रह्मवित्तमः ॥१०॥ प्रसादितः सत्यवत्या मैवं भूदिति भार्गवः ॥ अथ तर्हि भवेत्पौत्रो जमदग्निस्ततोऽभवत् ॥ ११ ॥ सा चाभूत्सुमहापुण्या कौशिकी लोकपावनी ॥ रेणोः सुतां रेणुकां वै जमदग्निरुवाह याम् ॥ १२ ॥ तस्या वै भार्गवऋषेः सुता वसुमदादयः ॥ यवीयाञ्जज्ञ एतेषां राम इत्यभिविश्रुतः ॥ १३ ॥ यमाहुर्वासुदेवांशं हैहयानां कुलान्तकम् ॥ त्रिःसप्तकृत्वो य इमां चक्रे निःक्षत्रियां महीम् ॥ १४ ॥ दुष्टं क्षत्रं भुवो भारमब्रह्मण्यमनीनशत् ॥ रजस्तमोवृतमहन्फल्गुन्यपि कृतेंऽहसि ॥ १५ ॥ राजोवाच ॥ किं तदंहो भगवतो राजन्यैरजितात्मभिः ॥ कृतं येन कुलं नष्टं क्षत्रियाणामभीक्ष्णशः ॥ १६ ॥ श्रीशुक उवाच ॥

भनेर प्रार्थना गरेपछि ती भृगुनन्दन ऋचीकले प्रसन्न भएर भने—'हुन्छ, छोरो त त्यस्तो हुने छैन तर पौत्र त्यस्तै होला ।' अनि तिनैबाट महर्षि जमदग्नि जन्मे ॥ ११ ॥ त्यस-पछि सत्यवती सबै लोकलाई पवित्र पार्ने परम पुण्यवती कौशिकी नदीको रूपमा परिणत भइन् । महर्षि जमदग्निले रेणु ऋषिकी कन्या रेणुकासित विवाह गरे ॥ १२ ॥ तिनैबाट जमदग्निका वसुमान् आदि अनेक छोरा जन्मिए । तिनमा सबै भन्दा कान्छा 'राम' यस नामले विख्यात भए ॥१३॥ इनलाई सबै भगवान् वासुदेवका अंश भन्दछे । इनैले हैहयवंशको अन्त्य गरेर एकाइसपल्ट पृथिवीलाई क्षत्रिय-विहीन पारेका थिए ॥ १४ ॥ ती वीरले सानो अपराधमा पृथ्वीका भारभूत, अब्रह्मण्य, रजोगुण र तमोगुणमयी वृत्ति हुने दुष्ट क्षत्रियहरूको अन्त्य गरेका थिए ॥१५॥ राजा परीक्षितले सोधे–हे प्रभो ! ती अजितेन्द्रिय राजाहरूले भगवान् परशुरामको के हानि गरेका थिए, जसको निम्ति उनले बारम्बार क्षत्रिय कुलको संहार गरे ? श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! क्षत्रियहरूमा श्रेष्ठ हैहयराज अर्जुनले साक्षात् भगवान्का अंशावतार दत्तात्रयको अनेक प्रकारले सेवा गरेर चिरकालसम्म

आराधना गरेर उनकै कृपाले हजार हात र शत्रुबाट अपराजित, अव्याहत इन्द्रियबल, धन, तेज, यश, पुरुषार्थ एवं बल पाएका थिए ॥ १६ – १८ ॥ यस प्रकार जसमा अणिमादि सबै सिद्धिहरू विद्यमान थिए, त्यो योगेश्वररूपी ऐश्वर्य प्राप्त गरेर ती वायु समान अव्याहत गतिले सबै लोकमा डुल्नलागे ॥ १९ ॥ एकपल्ट घाँटीमा भैजयन्ती माला लगाई रमणी रत्नहरूले घेरिएर मदोन्मत्त सहस्रार्जुन नर्मदा नदीमा जल-विहार गरिरहेका थिए । त्यही बखत सहसा आफ्ना भुजाहरूले नदीको प्रवाह रोकिदिए ॥ २० ॥ त्यसले नदी उल्टो बग्न लाग्यो र त्यो बढ्दो जलले आफ्नो शिविर डुब्न लागेको देखेर आफूलाई असाधारण मान्ने रावणले तिनको पराक्रम सहन सकेन ॥ २१ ॥ तर स्त्रीहरूकै साम्नुन्ने आफ्नो अपमान गर्ने रावणलाई सहस्रार्जुनले समातेर माहिष्मती पुरीमा लगेर बानर झैं थुनिदिए र पछि पुलस्त्यले अनुनय-विनय गरेपछि छाडिदिए ॥ २२ ॥ एक दिन वनमा शिकार खेल्दै वीर सहस्रार्जुन जमदग्नि मुनिको आश्रममा पुगे ॥ २३ ॥ ती तपोधन

हैहयानामधिपतिरर्जुनः क्षत्रियर्षभः ॥ दत्तं नारायणस्यांशमाराध्य परिकर्मभिः ॥ १७ ॥ बाहून्दशशतं लेभे दुर्धर्षत्वमरातिषु ॥ अव्याहतेन्द्रियौजः श्रीतेजोवीर्ययशोबलम् ॥ १८ ॥ योगेश्वरत्वमैश्वर्यं गुणा यत्राणिमादयः ॥ चचाराव्याहतगतिर्लोकेषु पवनो यथा ॥१९॥ स्त्रीरत्नैरावृतः क्रीडन्रेवाम्भसि मदोत्कटः ॥ वैजयन्तीं स्रजं बिभ्रद्रुरोध सरितं भुजैः ॥ २० ॥ विप्लावितं स्वशिबिरं प्रतिस्रोतः सरिज्जलैः ॥ नामृष्यत्तस्य तद्वीर्यं वीरमानी दशाननः ॥ २१ ॥ गृहीतो लीलया स्त्रीणां समक्षं कृतकिल्बिषः ॥ माहिष्मत्यां सन्निरुद्धो मुक्तो येन कपिर्यथा ॥ २२ ॥ स एकदा तु मृगयां विचरन्विजने वने ॥ यदृच्छयाश्रमपदं जमदग्नेरुपाविशत् ॥ २३ ॥ तस्मै स नरदेवाय मुनिरर्हणमाहरत् ॥ ससैन्यामात्यवाहाय हविष्मत्या तपोधनः ॥ २४ ॥ स वीरस्तत्र तद्दृष्ट्वा आत्मैश्वर्यातिशायनम् ॥ तन्नाद्रियताग्निहोत्र्यां साभिलाषः स हैहयः ॥ २५ ॥ हविर्धानीमृषेर्दर्पान्नरान्हर्तुमचोदयत् ॥ ते च माहिष्मतीं निन्युः सवत्सां क्रन्दतीं बलात् ॥ २६ ॥ अथ राजनि निर्याते राम आश्रम आगतः ॥ श्रुत्वा तत्तस्य दौरात्म्यं चुक्रोधाहिरिवाहतः ॥ २७ ॥ घोरमादाय परशुं सतूणं चर्म कार्मुकम् ॥ अन्वधावत दुर्धर्षो मृगेन्द्र इव यूथपम् ॥ २८ ॥ तमापतन्तं भृगुवर्यमोजसा धनुर्धरं बाणपरश्वधायुधम् ॥ ऐणेयचर्माम्बरमर्कधामभिर्युतं जटाभिर्ददृशे पुरीं विशन् ॥ २९ ॥ अचोदयद्धस्तिरथाश्वपत्तिभिर्गदासिबाण

मुनिले आफ्नो कामधेनु द्वारा सेना, मन्त्रिमण्डल र हात्ती-घोडा आदि सहित राजाको राम्ररी आतिथ्य सत्कार गरे ॥ २४ ॥ अन्य हैहय क्षत्रियहरू समेत वीरवर सहस्रार्जुनले जब ती मुनिको ऐश्वर्य आफ्नो ऐश्वर्यभन्दा बढ्ता देखे तब आतिथ्य सत्कारको विचारै नराखी तिनको कामधेनुलाई लैजान खोजे ॥ २५ ॥ तत्काल उनले शेखी गरेर आफ्ना सेवकलाई जमदग्नि ऋषिको कामधेनु खोसिल्याउने आज्ञा दिए र सेनाले ती कराइरहेकी कामधेनुलाई बाछासहित माहिष्मती लगे ॥ २६ ॥ राजा आश्रमबाट निस्कनासाथ परशुराम आइपुगे । त्यसको दुष्टताको वृत्तान्त सुनेर ती थाइले रुपं झैं रिसाए ॥ २७ ॥ अनि डरलाग्दो परशु, बाण, ढाल र धनुष लिएर गजराजतिर दगुर्ने दुर्धर्ष सिंह झैं हिंडे ॥ २८ ॥ उता कार्तवीर्यले नगरमा प्रवेश गर्नलाग्दा नै देखे—हातमा धनुष बाण र परशु लिई कृष्ण मृगचर्म

841

लगाएका सूर्य समान तेजिला जटाजूट धारण गरेका भृगुश्रेष्ठ परशुराम आइरहेका छन् ॥ २९ ॥ उनलाई देखेर तिनले गदा, खड्ग, बाण, ऋष्टि, शतघ्नी र शक्ति आदि अस्त्रास्त्रयुक्त हात्ती, रथ र पैदल सेनाले सम्पन्न भयङ्कर सत्र अक्षौहिणी सेना पठाए, तर परशुरामले सारा सेना एक्लैले मारिदिए ॥ ३० ॥ मन तथा वायु समान वेगवान् एवं शत्रु-सेनाको संहार गर्ने परशुराम जता आफ्नो परशु फर्काउँथे, उता उसका सारथी र वाहन नष्ट भइसकेका थिए—त्यस्ता अनेक वीर भुजा, ऊरु र ग्रीवा आदि काटिनाले पृथ्वीमा सुत्तथे ॥ ३१ ॥ परशुरामको कुठार र वाणहरू द्वारा ढाल, ध्वजा, धनुष र शरीर छिन्न-भिन्न हुनाले गर्दा आफ्ना सेना युद्धस्थलमा रगतको हीलोमा मुछिएका देखेर हैहयराज अर्जुन रिसाए र स्वयं लडाईं गर्न युद्धस्थलमा पुगे ॥ ३२ ॥ तिनले आफ्ना हजारै भुजाले एकै साथ पाँच सय धनुषमा वाण राखेर सबै परशुराम-तर्फ छाडे, तर शस्त्रधारीहरूमा श्रेष्ठ परशुरामले ती सबै आफ्नो यौटै धनुषले छाडेका वाणहरुद्वारा काटिदिए ॥ ३३ ॥ त्यसपछि हातमा पर्वत र वृक्षादि लिएर

ष्टिशतघ्निशक्तिभिः ॥ अक्षौहिणीः सप्तदशातिभीषणास्ता राम एको भगवानसूदयत् ॥३०॥ यतो यतोऽसौ प्रहरत्परश्वधो मनोऽनिलौजाः परचक्रसूदनः ॥ ततस्ततश्छिन्नभुजोरुकन्धरा निपेतुरुर्व्यां हतसूतवाहनाः ॥ ३१ ॥ दृष्ट्वा स्वसैन्यं रुधिरौघकर्दमे रणाजिरे रामकुठारसायकैः ॥ विवृक्णचर्मध्वजचाप-विग्रहं निपातितं हैहय आपतद्रुषा ॥ ३२ ॥ अथार्जुनः पञ्चशतेषु बाहुभिर्धनुःषु बाणान्युगपत्स सन्दधे ॥ रामाय रामोऽस्त्रभृतां समग्रणीस्तान्येक-धन्वेषुभिराच्छिनत्समम् ॥ ३३ ॥ पुनः स्वहस्तैरचलान्मृधेऽङ्घ्रिपानुत्क्षिप्य वेगादभिधावतो युधि ॥ भुजान्कुठारेण कठोरनेमिना चिच्छेद रामः प्रसभं त्वहेरिव ॥ ३४ ॥ कृत्तबाहोः शिरस्तस्य गिरेः शृङ्गमिवाहरत् ॥ हते पितरि तत्पुत्रा अयुतं दुद्रुवुर्भयात् ॥ ३५ ॥ अग्निहोत्रमुपावर्त्य सवत्सां परवीरहा ॥ समुपेत्याश्रमं पित्रे परिक्लिष्टां समर्पयत् ॥३६॥ स्वकर्म तत्कृतं रामः पित्रे भ्रातृभ्य एव च ॥ वर्णयामास तच्छ्रुत्वाजमदग्निरभाषत ॥३७॥ राम राम महाबाहो भवान्पापमकारषीत् ॥ अवधीन्नरदेवं यत्सर्वदेवमयं वृथा ॥३८॥ वयं हि ब्राह्मणास्तात क्षमयाऽर्हणतां गताः ॥ यया लोकगुरुर्देवः पारमेष्ठ्यमगात्पदम् ॥ ३९ ॥ क्षमया रोचते लक्ष्मीर्ब्राह्मी सौरी यथा प्रभा ॥ क्षमिणामाशु भगवांस्तुष्यते हरिरीश्वरः ॥ ४० ॥ राज्ञो मूर्धाभिषिक्त-स्य वधो ब्रह्मवधाद्गुरुः ॥ तीर्थसंसेवया चांहो जह्यङ्गाच्युतचेतनः ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पञ्चदशोऽध्यायः ॥ १५ ॥

युद्धस्थलमा वेगले सामुन्ने आएका सहस्रार्जुनको सबै भुजाहरू परशुरामले आफ्ना तीखा बाण र परशुले रुखका हाँगा झैं एकेक गरेर छिमलिदिए ॥ ३४ ॥ यसरी भुजा काटिए-पछि उनले तिनको पर्वत-शिखर समान ठूलो शिर पनि काटिदिए ॥ ३५ ॥ यसरी आफ्ना पिता मारिएको सुनेर तिनका दस हजार छोराहरू डराई यता-उता भागे अनि शत्रुको दमन गर्ने परशुरामले अति दुःखित भएकी कामधेनुलाई बाछो समेत आफ्नू आश्रममा ल्याएर पितालाई अर्पण गरे ॥ ३६ ॥ अनि आफूले गरेका सारा कर्म पिता र दाजूहरूलाई सुनाए । त्यो सुनेर जमदग्नि भन्दछन्– ॥ ३७ ॥ हे राम ! तिमीले यो ठूलो पाप गर्‍यौ—शुन व्यर्थ तो सर्वदेवमय राजालाई मारिदियौ ॥ ३८ ॥ हे तात ! हामी ब्राह्मण हौं । क्षमाले गर्दा नै हामी पूजनीय मानिन्छौं । क्षमाको प्रभावले नै लोकगुरु ब्रह्माले ब्रह्मपद पाए ॥ ३९ ॥ क्षमाले नै उनको ब्रह्म सम्पत्ति सूर्यको

प्रभा झैं प्रकाशित भइरहन्छ र भगवान् क्षमाशीलसित नै चाँडै प्रसन्न हुन्छन् ॥ ४० ॥ हे तात ! कुनै सार्वभौम राजाको वध ब्राह्मण-वध भन्दा पनि ठूलो पाप हो। अतः तिमी पनि भगवानमा चित्त लगाए र तीर्थ-सेवनले यो पाप पखाल' ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायां पञ्चदशोऽध्यायः ॥ १५ ॥

( महर्षि जमदग्निको वध, परशुराम द्वारा क्षत्रियहरूको संहार र विश्वामित्रका सन्ततिको वर्णन ) श्री शुकदेव भन्नुहुन्छ–हे राजन् ! पिताले त्यसरी आज्ञा दिएपछि परशुरामले स्वीकार गरे र एक वर्षसम्म तीर्थयात्रा गरेर आश्रममा फर्किए ॥ १ ॥ एक दिन तिनकी आमा रेणुका जल ल्याउन गङ्गाजी गइन्। त्यहाँ तिनले कमलको माला धारण गरेका गन्धर्वराज चित्ररथलाई अप्सराहरूसित विहार गरेको देखिन् ॥ २ ॥ जल ल्याउन गएकी रेणुकालाई तिनको क्रीडा देखेर होमको समयको ध्यान रहेन र तिनको मन अलि-अलि चित्ररथतिर लाग्यो ॥ ३ ॥ उता हवनकाल बितेको जानेर ती जमदग्निको श्रापको आशङ्का गरी तुरुन्त फर्केर आइन् र जलपूर्ण कलश सामुन्ने राखी हात जोरेर उभिइन् ॥ ४ ॥ आफ्नो योगबलले पत्नीको मानसिक व्यभिचार सहजै जानेर जमदग्निले रिसाई भने—'हे पुत्र हो ! तिमी

श्रीशुक उवाच ॥ पित्रोपशिक्षितो रामस्तथेति कुरुनन्दन ॥ संवत्सरं तीर्थयात्रां चरित्वाऽऽश्रममाव्रजत् ॥ १ ॥ कदाचिद्रेणुका याता गङ्गायां पद्ममालिनम् ॥ गन्धर्वराजं क्रीडन्तमप्सरोभिरपश्यत ॥ २ ॥ विलोकयन्ती क्रीडन्तमुदकार्थं नदीं गता ॥ होमवेलां न सस्मार किञ्चिच्चित्ररथस्पृहा ॥ ३ ॥ कालात्ययं तं विलोक्य मुनेः शापविशङ्किता ॥ आगत्य कलशं तस्थौ पुरोधाय कृताञ्जलिः ॥ ४ ॥ व्यभिचारं मुनिर्ज्ञात्वा पत्न्याः प्रकुपितोऽब्रवीत् ॥ घ्नतैनां पुत्रकाः पापामित्युक्तास्ते न चक्रिरे ॥ ५ ॥ रामः सञ्चोदितः पित्रा भ्रातॄन्मात्रा सहावधीत् ॥ प्रभावज्ञो मुनेः सम्यक् समाधेस्तपसश्च सः ॥ ६ ॥ वरेण छन्दयामास प्रीतः सत्यवतीसुतः वव्रे हतानां रामोऽपि जीवितं चास्मृतिं वधे ॥ ७ ॥ उत्तस्थुस्ते कुशलिनो निद्रापाय इवाञ्जसा ॥ पितुर्विद्वांस्तपोवीर्यं रामश्चक्रे सुहृद्वधम् ॥ ८ ॥ येऽर्जुनस्य सुता राजन्स्मरन्तः स्वपितुर्वधम् ॥ रामवीर्यपराभूता लेभिरे शर्म न क्वचित् ॥ ९ ॥ एकदाऽऽश्रमतो रामे सभ्रातरि वनं गते ॥ वैरं सिसाधयिषवो लब्धच्छिद्रा उपागमन् ॥ १० ॥ दृष्ट्वाग्न्यगार

यस पापिनीलाई मारिदेओ ।' तर तिनले भन्दा पनि उनीहरूले मारेनन् ॥ ५ ॥ तर पिताको योग र तपको प्रभावबाट राम्ररी परिचित परशुरामले पिताले भन्नासाथ आमासमेत आफ्ना सबै दाजुलाई मारिदिए ॥ ६ ॥ तिनको त्यस कार्यले प्रसन्न भएर सत्यवती सुत जमदग्निले 'इच्छित वर माग' भने । अनि परशुरामले मरेकी आमा र दाजुहरू पुनः बाँचुन् र उनलाई आफ्नो मृत्युको स्मरण नहोस् भन्ने वर मागे ॥ ७ ॥ अनि ती सबै निद्राबाट उठेका मानिस झैं सहसा कुशलतापूर्वक उठेर बसे। यस प्रकार आफ्ना पिताको प्रभाव जानेर नै परशुरामले आमा र दाजुहरूलाई मारेका थिए ॥ ८ ॥ हे राजन् ! उता सहस्रार्जुनका जुन पुत्र परशुरामको पराक्रमले पराजित भई भागेका थिए, तिनलाई आफ्ना पिता मारिएको सम्झना रहिरहेको हुनाले कुनै वेला पनि शान्ति मिल्दैनथ्यो ॥ ९ ॥ एक दिन जब परशुराम दाजुहरू सहित वनमा गएका थिए, त्यहीं अवसर पाएर साटो फेर्न ती सबै वीरहरू आइपुगे ॥ १० ॥ त्यहाँ जमदग्नि मुनिलाई भगवान्मा मन लगाई अग्निशालामा बसेका देखेर तिनको वधरूपी पापको

निश्चय गरेर आएका राजपुत्रले उनलाई मारिदिए र ती क्षत्रियाधम—परशुरामकी आमा रेणुकाले अति दीनतापूर्वक प्रार्थना गरेर छेक्दा पनि हठात् तिनको शिर काटेर लगे ॥ ११ ॥ १२ ॥ तब दुःख तथा शोकले व्याकुल रेणुका छाती ठोक्दै 'हे राम ! छाडु आऊ' भन्दै बेसरी चिच्याउन लागिन् ॥ १३ ॥ परैबाट 'हा राम ! हे तात !' यस्तो करुण क्रन्दन सुनेर परशुराम तीव्रगतिले आश्रममा पुगे, त्यहाँ उनले पितालाई मृत पाए ॥ १४ ॥ तिनको वियोगले जायमान दुःख, क्रोध, असहनशीलता, दीनता तथा शोकले विक्षुब्ध भएर—'हा तात ! हा साधो ! हा धर्मिष्ठ ! हजुर हामी सबैलाई छाडेर स्वर्गलोक जानु भयो ?' यस प्रकार विलाप गर्न लागे । अनि आफ्ना पिताको शरीर

आसीनमावेशितधियं मुनिम् ॥ भगवत्युत्तमश्लोके जघ्नुस्ते पापनिश्चयाः ॥११॥ याच्यमानाः कृपणया राममात्राऽतिदारुणाः ॥ प्रसह्य शिर उत्कृत्य निन्युस्ते क्षत्रबन्धवः ॥ १२ ॥ रेणुका दुःखशोकार्ता निघ्नत्यात्मानमात्मना ॥ राम रामेहि तातेहि विचुक्रोशोच्चकैः सती ॥ १३ ॥ तदुपश्रुत्य दूरस्थो हा रामेत्यार्तवत्स्वनम् ॥ त्वरयाऽऽश्रममासाद्य ददृशे पितरं हतम् ॥ १४ ॥ तद्दुःखरोषामर्षार्तिशोकवेगविमोहितः ॥ हा तात साधो धर्मिष्ठ त्यक्त्वाऽस्मान्स्वर्गतो भवान् ॥ १५ ॥ विलप्यैवं पितुर्देहं निधाय भ्रातृषु स्वयम् ॥ प्रगृह्य परशुं रामः क्षत्रान्ताय मनो दधे ॥ १६ ॥ गत्वा माहिष्मतीं रामो ब्रह्मघ्नविहतश्रियम् ॥ तेषां स शीर्षभी राजन्मध्ये चक्रे महागिरिम् ॥ १७ ॥ तद्रक्तेन नदीं घोरामब्रह्मण्यभयावहाम् ॥ हेतुं कृत्वा पितृवधं क्षत्रेऽमङ्गलकारिणीम् ॥ १८ ॥ त्रिःसप्तकृत्वः पृथिवीं कृत्वा निःक्षत्रियां प्रभुः ॥ समन्तपञ्चके चक्रे शोणितोदान ह्रदान्नव ॥ १९ ॥

दाजूहरूलाई सुम्पिदिए र हातमा परशु लिएर उनले मनमनै क्षत्रियवंशको अन्त्य गरिदिने निश्चय गरिहाले ॥ १५ ॥ १६ ॥ त्यसपछि हे राजन् ! परशुरामले ती घातक *राजाहरूले गर्दा श्रीहीन माहिष्मतीपुरीमा गएर राजकुमारहरूका शिर काटेर यौटा ठूलो पर्वत पारिदिए र रक्तले ब्राह्मण-द्रोहीहरूलाई भय उत्पन्न पार्ने यौटी घोर नदी नै प्रवाहित पारिदिए । यस प्रकार क्षत्रियहरू अत्याचारी भएपछि महाप्रभु परशुरामले पिताको वधलाई निमित्त बनाएर एक्काइस पल्ट सम्पूर्ण पृथ्वीलाई क्षत्रियविहीन पारेर

---

* दृष्टान्त ( राजाहरूको कर्तव्य )—बालोऽहं जगदानन्द न मे बाला सरस्वती । अपूर्णे पञ्चमे वर्षे वर्णयामि जगत्त्रयम् । —हे जगत्का आनन्ददाता राजन् ! म बालक छु, तर मेरी वाणी बालिका छैनन् । अहिले मेरो पाँचौं वर्ष पूर्ण भएको छैन । तैपनि म समस्त संसारको वर्णन गर्दछु । शङ्कर मिश्र बाल्यकालदेखि नै प्रतिभाशाली थिए । एकपल्ट त्यस देशको राजा डुल्दै तिनको गाउँमा पुगे । गाउँमा त यदि कुनै साधारण अधिकार पनि पुग्यो भने बालकहरू झुम्मिन्छन् अनि राजाको त कुरै छैन ! बालकहरूको साथै शङ्कर मिश्र पनि थिए । तिनको उमेर पाँच वर्ष पनि नपुग्दै तिनको हास्ययुक्त अनुहारमा राजाको दृष्टि पर्‍यो । राजाले उनलाई नजीकै डाकेर सोधे—'वत्स ! कुनै कविता सुनाउँदछौ ?' शङ्कर मिश्रले भने—'कविता आफैले बनाएको सुनाउँ कि अर्काले बनाएको ?' राजाले भने—'तिमी कविता लेख्न पनि जान्दछौ ? ' उत्तरमा शङ्करले माथि उल्लिखित श्लोक सुनाइदिए । राजाले स्यावासी दिए । पछि अर्काले बनाएको कविता सुनाउने आग्रह गरे । तब शङ्कर मिश्रले 'सहस्रशीर्षा' यस सूक्तको अर्थ बताउँदै भने—'हे राजन् ! तिमी ईश्वरांश हौ, यसै निमित्त तिमीले ईश्वर समान नै प्रजाको पालन गर्नुपर्दछ ।' यो सुनेर राजा प्रसन्न भएर आफ्नो बहुमूल्य हार उनलाई लगाइदिए । त्यो लिएर शङ्कर मिश्र आफ्नो घर गए । तिनकी आमाले त्यो हार देखेर कोरीलाई उन्याई दाईलाई डाकेर भनिन्—'यस बालकको जन्म समयमा यसको प्रथम कमाई तिमीलाई दिन्छु भनेकी थिएँ, अतः यो तिमी लेऊ ।' दाईले भनी—'तर यस्तो ठूलो कमाई लिएर म के गर्नें ?' तर आमाको प्रबल आग्रहले दाईले हार लिई । तर उसले हारलाई आफ्नो काममा खर्च नगरेर त्यसको मूल्यले यौटा ठूलो पोखरी बनाउन लगाई । आज पनि त्यो दरभङ्गामा 'दाईको तलाऊ' भन्ने नामले प्रसिद्ध छ ।

स्यमन्तपञ्चक क्षेत्रमा रक्तरूपी जलले भरिएका नौ तलाऊ बनाए ॥ १७-१९ ॥ अनि आफ्ना मृत पिताको शिर ल्याएर उनको शरीरसित जोरेर अनेकौं यज्ञद्वारा सर्वदेवमय सर्वात्मा [illegible]को यजन गरे ॥२०॥ ती यज्ञमा उनले होतालाई पूर्व, ब्रह्मालाई दक्षिण, अध्वर्युलाई पश्चिम र उद्गातालाई उत्तर दिशा दक्षिणाको रूपमा दान गरिदिए ॥२१॥ यसै प्रकार अन्य ऋत्विजहरूलाई अग्निकोण आदि विदिशाहरू दक्षिणामा दिए कश्यपलाई मध्यभूमि दिए, उपद्रष्टालाई आर्यावर्त र सदस्यहरूलाई अन्यान्य देश दिए ॥२२॥ अनि ब्रह्मनदी सरस्वतीमा अवभृथ स्नानद्वारा सबै पापबाट मुक्त भएर ती मेघावरणहीन सूर्य झैं सुशोभित भए ॥ २३ ॥ त्यसपछि परशुरामद्वारा पूजित महर्षि जमदग्नि आफ्नो संकल्पमय शरीर धारण गरेर कश्यपादि ऋषिहरूको समूहमा सातौं ऋषिको रूपमा थित भए ॥ २४ ॥ हे राजन् ! ती जमदग्नितनय कमल-नयन भगवान् परशुराम आगामी मन्वन्तरमा वेदको प्रचार गर्नेछन् ॥२५॥ अझ पनि ती सबैप्रकारका दण्ड त्यागेर शान्तचित्तले महेन्द्र-पर्वतमा विराजमान छन्। त्यहाँ सिद्ध, गन्धर्व र चारणगण उनको चरित्रगान गर्दछन् ॥ २६ ॥ हे राजन् ! यस

पितुः कायेन सन्धाय शिर आदाय बर्हिषि ॥ सर्वदेवमयं देवमात्मानमयजन्मखैः ॥ २० ॥ ददौ प्राचीं दिशं होत्रे ब्रह्मणे दक्षिणां दिशम् ॥ अध्वर्यवे प्रतीचीं वै उद्गात्रे उत्तरां दिशम् ॥ २१ ॥ अन्येभ्योऽवान्तरदिशः कश्यपाय च मध्यतः ॥ आर्यावर्तमुपद्रष्ट्रे सदस्येभ्यस्ततः परम् ॥२२॥ ततश्चावभृथस्नानविधूताशेषकिल्बिषः ॥ सरस्वत्यां ब्रह्मनद्यां रेजे व्यभ्र इवांशुमान् ॥ २३ ॥ स्वदेहं जमदग्निस्तु लब्ध्वा संज्ञानलक्षणम् ॥ ऋषीणां मण्डले सोऽभूत्सप्तमो रामपूजितः ॥ २४ ॥ जामदग्न्योऽपि भगवान्रामः कमललोचनः ॥ आगामिन्यन्तरे राजन्वर्तयिष्यति वै बृहत् ॥ २५ ॥ आस्तेऽद्यापि महेन्द्राद्रौ न्यस्तदण्डः प्रशान्तधीः ॥ उपगीयमानचरितः सिद्धगन्धर्वचारणैः ॥ २६ ॥ एवं भृगुषु विश्वात्मा भगवान्हरिरीश्वरः ॥ अवतीर्य परं भारं भुवोऽहन्बहुशो नृपान् ॥ २७ ॥ गाधेरभून्महातेजाः समिद्ध इव पावकः ॥ तपसा क्षात्रमुत्सृज्य यो लेभे ब्रह्मवर्चसम् ॥ २८ ॥ विश्वामित्रस्य चैवासन्पुत्रा एकशतं नृप ॥ मध्यमस्तु मधुच्छन्दा मधुच्छन्दस एव ते ॥२९॥ पुत्रं कृत्वा शुनःशेपं देवरातं च भार्गवम् ॥ आजीगर्तं सुतानाह ज्येष्ठ एष प्रकल्प्यताम् ॥ ३० ॥ यो वै हरिश्चन्द्रमखे विक्रीतः पुरुषः पशुः ॥ स्तुत्वा देवान्प्रजेशादीन्मुमुचे पाशबंधनात् ॥३१॥ यो रातो देवयजने देवैर्गाधिषु तापसः ॥ देवरात इति ख्यातः शुनःशेपः स भार्गवः ॥ ३२ ॥ ये मधुच्छन्दसो ज्येष्ठाः कुशलं मेनिरे न तत् ॥ अशपत्तान्मुनिः

प्रकार ती विश्वात्मा र विश्वेश्वर भगवान् हरिले भृगुकुलमा अवतार लिएर पृथ्वीका भाररूप राजाहरूको अनेक पल्ट वध गरे ॥ २७ ॥ महाराज गाधिबाट प्रज्वलित अग्नि झैं प्रभावशाली विश्वामित्रको जन्म भयो। उनले तपस्या गरेर क्षत्रियत्व त्यागी ब्रह्मतेज प्राप्त गरेका थिए ॥ २८ ॥ हे राजन् ! ती विश्वामित्रका सय छोरा थिए। तिनमा महिला पुत्रको नाम मधुच्छन्दा थियो। यसै कारण विश्वामित्रका सबै छोरा मधुच्छन्दस् कहिन्थे ॥ २९ ॥ विश्वामित्रले भृगुकुलमा उत्पन्न आफ्ना भांजा अजीगर्तका छोरा शुनःशेपलाई, जुन देवरात नामले पनि विख्यात थिए, आफ्ना पुत्र मान्दै अन्य छोराहरूसित भने–तिमीहरू यसलाई दाजु मान ॥३०॥ यसैलाई राजा हरिश्चन्द्रले आफ्नू यज्ञका लागि पुरुष–पशुको रूपमा किनेका थिए र प्रजापति आदि देवताले स्तुति गरेर यसैलाई विश्वामित्रले बन्धनबाट, मृत्युको मुखबाट मुक्त पारेका थिए। यज्ञमा देवताहरूद्वारा दिइनाले गाधिकुलमा ती शुनःशेप 'देवरात'

नामले प्रसिद्ध भए ॥३१॥३२॥ तिनका छोरा मधुच्छन्दाहरूमा जेठा छोराहरूलाई विश्वामित्रको कुरा मनपरेन । त्यसैनिम्ति विश्वामित्र रिसाएर तिनलाई श्राप दिदै भने–हे दुष्ट हो ! तिमी सबै म्लेच्छ होइजाओ' ॥ ३३ ॥ त्यसमा आफूमन्दा कांछा पचास भाइहरूले भने–'हजुर हामीलाई जे आज्ञा दिनुहुन्छ, हामी मान्न तयार छौं' ॥ ३४ ॥ त्यसपछि 'हामी सबै तिम्रा अनुयायी छौं' यसो भन्दै तिनले ती मन्त्रद्रष्टा देवरातलाई आफ्नो दाजू माने । अनि विश्वामित्रले भने–'तिमी सबैले मेरो सम्मानको रक्षा गर्दै मलाई पुत्रवान् तुल्यायौ । अतः तिमीहरू पनि पुत्रवान् हुनेछौ ॥ ३५ ॥ हे कुशिक हो ! मेरो वीर छोरो देवरात पनि तिम्रै गोत्रमा सम्मिलित भएको छ । अतः तिमीहरू यसको अनुसरण गर ।' यी बाहेक विश्वामित्रका अष्टक, हारीत, जय र क्रतुमान् आदि अरु पनि छोरा थिए ॥३६॥ यस प्रकार विश्वामित्रका ती सन्तानले गर्दा कौशिक गोत्रमा अनेक शाखा भए र देवरातलाई जेठो मानेका हुनाले त्यस गोत्रको प्रवर अर्कै भयो ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायां षोडशोऽध्यायः ॥१६॥

क्रुद्धो म्लेच्छा भवत दुर्जनाः ॥ ३३ ॥ स होवाच मधुच्छन्दाः सार्धं पञ्चाशता ततः ॥ यन्नो भवान्संजानीते तस्मिंस्तिष्ठामहे वयम् ॥३४॥ ज्येष्ठं मन्त्रदृशं चक्रुस्त्वामन्वञ्चो वयं स्म हि ॥ विश्वामित्रः सुतानाह वीरवन्तो भविष्यथ ॥ ये मानं मेऽनुगृह्णन्तो वीरवन्तमकर्त माम् ॥३५॥ एष वः कुशिका वीरो देवरातस्तमन्वित ॥ अन्ये चाष्टकहारीतजयक्रतुमदादयः ॥ ३६ ॥ एवं कौशिकगोत्रं तु विश्वामित्रैः पृथग्विधम् ॥ प्रवरान्तरमापन्नं तद्धि चैवं प्रकल्पितम् ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे षोडशोऽध्यायः ॥ १६ ॥

श्रीशुक उवाच ॥ यः पुरूरवसः पुत्र आयुस्तस्याभवन्सुताः ॥ नहुषः क्षत्रवृद्धश्च रजी रम्भश्च वीर्यवान् ॥ १ ॥ अनेना इति राजेन्द्र शृणु क्षत्रवृधोऽन्वयम् ॥ क्षत्रवृद्धसुतस्यासन्सुहोत्रस्यात्मजास्त्रयः ॥२॥ काश्यः कुशो गृत्समद इति गृत्समदादभूत् ॥ शुनकः शौनको यस्य बह्वृचप्रवरो मुनिः ॥३॥ काश्यस्य काशिस्तत्पुत्रो राष्ट्रो दीर्घतमः पिता॥धन्वन्तरिर्दैर्घतम आयुर्वेदप्रवर्तकः ॥४॥ यज्ञभुग्वासुदेवांशः स्मृतामात्रर्तिनाशनः॥तत्पुत्रः केतुमानस्य जज्ञे भीमरथस्ततः ॥५॥ दिवोदासो द्युमांस्तस्मात्प्रतर्दन इति स्मृतः ॥ स एव शत्रुजिद्वत्स ऋतध्वज इतीरितः॥ तथा कुवलयाश्वेति प्रोक्तोऽलर्कादयस्ततः ॥६॥ षष्टिवर्षसहस्राणि षष्टिवर्षशतानि च ॥ नालर्कादपरो राजन्मेदिनीं बुभुजे युवा ॥ ७ ॥ अलर्कात्सन्ततिस्तस्मात्सुनीथोऽथ सुके·

( क्षत्रवृद्ध, रजि, रम्भ र अनेनाको वंश विस्तार )—श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! पुरूरवाको आयु नामक छोराबाट नहुष, क्षत्रवृद्ध, रजि, रम्भ र अनेना–पाँच पुत्र उत्पन्न भए । तिनमा क्षत्रवृद्धको वंश-वृत्तान्त सुन । क्षत्रवृद्धका छोरा सुहोत्र र सुहोत्रका काश्य, कुश र गृत्समद तीन पुत्र भए । गृत्समदका छोरा शुनक र तिनका ऋग्वेदीहरूमा श्रेष्ठ मुनिवर शौनक जन्मिए ॥ १-३ ॥ काश्यका छोरा काशि तिनका पुत्र दीर्घतमाका पिता राष्ट्र भए । दीर्घतमाका छोरा आयुर्वेदका प्रवर्तक धन्वन्तरी भए ॥४॥ ती यज्ञभागका भोक्ता, भगवान् वासुदेवका अंशज थिए र आफ्नो स्मरणमात्रले सबै रोग निको पारिदिन्थे । तिनका छोरा केतुमान्‌का भीमरथ, भीमरथका दिवोदास र दिवोदासका छोरा द्युमान् भए, जो 'प्रतर्दन' पनि कहिए । हे वत्स ! तिनै शत्रुजित, ऋतध्वज र कुवलयाश्व यी नामले पनि विख्यात थिए । द्युमान्‌का अलर्क आदि अनेक छोरा भए ॥५॥६॥ हे राजन् ! अलर्कका

अतिरिक्त अरु कुनै पनि राजाले छयसट्ठी हजार वर्षसम्म युवा रहेर पृथ्वीको राज्य भोग्न पाएका थिएनन् ॥७॥ अलर्कका सन्तति, सन्ततिका सुनीथ, सुनीथका सुकेतन, उनका धर्मकेतु र तिनका पुत्र सत्यकेतु भए ॥८॥ सत्यकेतुका धृष्ट केतु र धृष्टकेतुका पृथिवीपति सुकुमारको जन्मभयो ! सुकुमारको वीतिहोत्र, वीतिहोत्रका भर्ग र भर्गका राजा भार्गभूमि उत्पन्न भए ॥९॥ यी सबै क्षत्रवृद्धका वंशमा जन्मेका काशिबाट उत्पन्न राजा भए । यसै प्रकार रम्भका रभस, रभसका गम्भीर र उनका अक्रिय भए ॥१०॥ तिनकी स्त्रीबाट ब्राह्मण सन्तति जन्मे । अब अनेनाको वंश वृत्तान्त सुन—अनेनाका छोरा शुद्ध भए, तिनका शुचि, शुचिका त्रिककुद् र त्रिककुद्का धर्मसारथि नामका छोरा भए र धर्मसारथिका शान्तरय भए । ती कृतकृत्य र आत्मज्ञानी थिए । यस कारण तिनले कुनै सन्तान उत्पन्न गरेनन् । हे राजन् ! आयुका पुत्र रजि उनका ठूला तेजस्वी पाँच सय पुत्र उत्पन्न भएका थिए ॥११॥१२॥ ती रजिले देवताहरूको विनय सुनेर दैत्यहरू मारिदिए र इन्द्रलाई स्वर्गलोक दिए । तर प्रह्लाद आदि आपना शत्रुबाट भयभीत रहनाले गर्दा इन्द्रले त्यो स्वर्गको राज्य फेरि

तनः ॥ धर्मकेतुः सुतस्तस्मात्सत्यकेतुरजायत ॥ ८ ॥ धृष्टकेतुः सुतस्तस्मात्सुकुमारः क्षितीश्वरः ॥ वीतिहोत्रस्य भर्गोऽतो भार्गभूमिरभून्नृपः ॥ ९ ॥ इतीमे काशयो भूपाः क्षत्रवृद्धन्वयायिनः ॥ रम्भस्य रभसः पुत्रो गम्भीरश्चाक्रियस्ततः ॥ १० ॥ तस्य क्षेत्रे ब्रह्म जज्ञे शृणु वंशमनेनसः ॥ शुद्धस्ततः शुचिस्तस्मात्त्रिककुद्धर्मसारथिः ॥ ११ ॥ ततः शान्तरयो जज्ञे कृतकृत्यः स आत्मवान् ॥ रजेः पञ्चशतान्यासन्पुत्राणाममितौजसाम् ॥ १२ ॥ देवैरभ्यर्थितो दैत्यान्हत्वेन्द्रायाददाद्दिवम् ॥ इन्द्रस्तस्मै पुनर्दत्त्वा गृहीत्वा चरणौ रजेः ॥ १३ ॥ आत्मानमर्पयामास प्रह्लादाद्यरिशङ्कितः ॥ पितुर्युपरते पुत्रा याचमानाय नो ददुः ॥ १४ ॥ त्रिविष्टपं महेन्द्राय यज्ञभागान्समाददुः ॥ गुरुणा हूयमानेऽग्नौ बलिभित्तनयान्रजेः ॥ १५ ॥ अवधीद्भ्रंशितान्मार्गान्न कश्चिदवशेषितः ॥ कुशात्प्रतिः क्षात्रवृद्धात्सञ्जयस्तत्सुतो जयः ॥ १६ ॥ ततः कृतः कृतस्यापि जज्ञे हर्यबनो नृपः ॥ सहदेवस्ततो हीनो जयसेनस्तु तत्सुतः ॥ १७ ॥ संकृतिस्तस्य च जयः क्षत्रधर्मा महारथः ॥ क्षत्रवृद्धान्वया भूपाः शृणु वंशं च नाहुषात् ॥ १८ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे चन्द्रवंशानुवर्णने सप्तदशोऽध्यायः ॥ १७ ॥

श्रीशुक उवाच ॥ यतिर्ययातिः संयातिरायतिर्वियतिः कृतिः ॥ षडिमे नहुषस्यासन्निन्द्रियाणीव देहिनः ॥१॥ राज्यं नैच्छद्यतिः पित्रा दत्तं तत्परि·

रजिलाई नै फर्काएर तिनका चरण समाती आत्मसमर्पण गरिदिए । रजि मरेपछि तिनका छोराहरूले देवराज इन्द्रले मागे पनि स्वर्गलोक फर्काएनन् र ती स्वयं यज्ञका भाग पनि भोग्नलागे । अनि देवगुरु बृहस्पतिको अभिचारिकी क्रिया द्वारा अग्निमा आहुति दिएपछि धर्ममार्गबाट भ्रष्ट रजि-पुत्रहरूको इन्द्रले संहार गरिदिए । तिनमा कोही पनि बाँचेन । क्षत्रवृद्धको वंशमा जन्मेका कुशबाट प्रति, प्रतिबाट सञ्जय र सञ्जयबाट जयको जन्म भयो ॥१३-१६॥ जयका कृत, कृतका राजा हर्यबन, हर्यबनका सहदेव, सहदेवका हीन र हीनका जयसेन नामक पुत्र उत्पन्न भए ॥१७॥ जयसेनका संस्कृति, संस्कृतिका जय, जयका महारथी क्षत्रधर्मा उत्पन्न भए । यी सबै क्षत्रवृद्धका वंशज थिए । अब नहुषबाट उत्पन्न राजाहरूको वृत्तान्त सुन ॥१८॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां सप्तदशोऽध्यायः ॥ १७ ॥

( महाराज ययातिको चरित्र ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! जस्तै देहधारी जीवका सहायक इन्द्रिय हुन्छन्, त्यस्तै नै राजा नहुषका यति, ययाति, आयति, वियति तथा कृति नामका छ पुत्र थिए॥१॥जसमा गाडिएर मनुष्य आत्मतत्त्व बिर्सन्छ,त्यस राज्यको परिणामबाट अनभिज्ञ यतिले पिताद्वारा दिइएको राज्य खोजेनन् ॥२॥ यसनिम्ति इन्द्राणिसित भोग गर्नका इच्छुक हुनाले ब्राह्मणद्वारा पिता नहुष स्थानभ्रष्ट गरिनाले र तिनी अजिगर योनिमा गएपछि ययाति राजा भए॥३॥तिनले आफ्ना चारैजना कांछाभाइहरूलाई चार दिशामा नियुक्त गरिदिए र शुक्राचार्य एवं वृषपर्वाकी कन्याहरूलाई पत्नी तुल्याएर पृथिवीको रक्षा गर्नलागे ॥४॥ राजा परीक्षितले सोधे—हे भगवन् ! शुक्राचार्य ब्राह्मण थिए र ययाति क्षत्रिय थिए। अनि क्षत्रिय वर एवं ब्राह्मण-कन्याको विधिको विपरीत कसरी विवाह भयो ? ॥ ५ ॥ श्रीशुकदेव भन्नुहुन्छ—एक दिन गुरुपत्नी देवयानी र दानवराज वृषपर्वाकी मानिनी कन्या शर्मिष्ठा आफ्ना हजारौं सखीहरू साथमा लिएर फले-फुलेका वृक्षहरूले परिपूर्ण नगरोद्यानमा भ्रमराहरूको गुञ्जारयुक्त कमल पुष्पले भरिएको जलाशयको सुरम्य तटमा

णामवित् ॥ यत्र प्रविष्टः पुरुष आत्मनं नावबुध्यते ॥२॥ पितरि भ्रंशिते स्थानानिन्द्राण्या धर्षणाद्द्विजैः ॥ प्रापितेऽजगरत्वं वै ययातिरभवन्नृपः ॥३॥ चतसृष्वादिशद्दिक्षु भ्रातृन्भ्राता यवीयसः ॥ कृतदारो जुगोपोर्वीं काव्यस्य वृषपर्वणः ॥ ४ ॥ राजोवाच ॥ ब्रह्मर्षिर्भगवान्काव्यः क्षत्रबन्धुश्च नाहुषः ॥ राजन्यविप्रयोःकस्माद्विवाहःप्रतिलोमकः॥५॥ श्रीशुक उवाच ॥ एकदा दानवेन्द्रस्य शर्मिष्ठा नाम कन्यका॥ सखीसहस्रसंयुक्तागुरुपुत्र्या च मानिनी॥६॥ देवयान्या पुरोद्याने पुष्पितद्रुमसंकुले ॥ व्यचरत्कलगीतालिनलिनीपुलिनेऽबला ॥ ७ ॥ ता जलाशयमासाद्य कन्याः कमललोचनाः ॥ तीरे न्यस्य दुकूलानि विजह्रुः सिंचतीर्मिथः॥८॥ वीक्ष्य व्रजन्तं गिरिशं सह देव्या वृषस्थितम् ॥ सहसोत्तीर्य वासांसि पर्यधुर्व्रीडिताः स्त्रियः ॥९॥ शर्मिष्ठाऽजानती वासो गुरुपुत्र्याः समव्ययत् ॥ स्वीयं मत्वा प्रकुपिता देवयानीदमब्रवीत् ॥१०॥ अहो निरीक्ष्यतामस्या दास्याः कर्म ह्यसांप्रतम् ॥ अस्मद्धार्यं धृतवती सुनीव हविरध्वरे ॥ ११ ॥ यैरिदं तपसा सृष्टं मुखं पुंसः परस्य ये ॥ धार्यते यैरिह ज्योतिः शिवः पन्थाश्च दर्शितः ॥ १२ ॥ यान् वन्दन्त्युपतिष्ठन्ते लोकनाथाः सुरेश्वराः ॥ भगवानपि विश्वात्मा पावनः श्रीनिकेतनः ॥ १३ ॥ वयं तत्रापि भृगवः शिष्योऽस्य नः पिताऽसुरः ॥ अस्मद्धार्यं

यता-उता डुलिरहेकी थिइन् ॥ ६ ॥ ७ ॥ ती सबै कमल-नयनी कन्या त्यो जलाशयको नजीक पुगेर किनारमा आफ्ना लुगा राखी परस्पर पाँटीले अर्कोमाथि जल उफार्दै जल-विहार गर्न लागे ॥ ८ ॥ त्यसै बखत पार्वतीसित श्रीमहादेव साँढेमा चढेर त्यतैबाट जान लागेका देखी ती अबलाहरू लाज मानी तत्काल सरोवरबाट निस्की आफाफ्ना लुगा लगाए ॥ ९ ॥ शर्मिष्ठाले थाहा नपाएर गुरुपुत्रीका लुगा लगाएकी थिइन्। अतः देवयानी रिसाएर भनिन्—॥१०॥ 'अहो ! यस दासीको यो अनुचित व्यवहार हेर त ! जस्तै कुकुरनीले यज्ञको हवि खाइदेओस्, त्यस्तै नै यसले मैले लगाउने योग्य लुगा स्वयं लगाएकी छ ॥११॥ जसले आफ्नो तपोबल द्वारा सम्पूर्ण जगत्लाई उत्पन्न गरेका छन्, जो परमपुरुष परमात्माका मुख छन्, जो आफ्नो हृदयमा ज्योतिस्वरूप परब्रह्मलाई धारण गरिरहन्छन् र जसले जगत्लाई कल्याणमय बाटो देखाएको छ ॥१२॥ लोकपाल, देवेश्वरगण पनि जसको पूजा-वन्दना गर्छन्, यति मात्र हो र सर्वात्मा लक्ष्मीपति नारायण पनि जसको स्तुति गर्दछन् ॥ १३ ॥ ती ब्राह्मणमा पनि श्रेष्ठ हामी भृगुवंशी हौं र यसको असुर जातीय

पिता हाम्रो शिष्य हो। शूद्रले वेद पढ्न लागे जस्तै यस दुष्टाले मेरो वस्त्र आफूले लगाएकी छ' ॥ १४ ॥ यस्ता दुर्वचन बोल्दै गुरु-पुत्रीको प्रति नागिनी जस्तै श्वास छाड्दै शर्मिष्ठा आफ्ना ओठ दाँतले थिचेर भन्न लागिन्—॥ १५ ॥ 'ए भिक्षुकी ! तँ आफ्नो भिक्षा माग्ने वृत्ति नजानेर नै यति बढेर कुरा गरिरहेकी छस् ! बलिभोगी कुकुर तथा कागहरूको जस्तै के तँ हाम्रो घरतिर हेरिरहथस् ?' ॥ १६ ॥ यसै प्रकारका अरु पनि कटु वाक्यहरूले ती साध्वी गुरुपुत्रीको तिरस्कार गरेर शर्मिष्ठाले अत्यन्त क्रोध गरी आफ्ना लुगा खोसेर उनलाई कुवामा धुचेटी दिइन् ॥ १७ ॥ शर्मिष्ठा घर गइसकेपछि राजा ययाति शिकार खेल्दै दैवयोगले पानी पिउनको निम्ति त्यहीं इनारमा आए र त्यसमा देवयानीलाई देखे ॥१८॥ तत्काल दयालु राजाले ती नाङ्गी कन्यालाई आफ्नो ओढ्ने दिए र आफ्नो हातले तिनको हात समाती कुवाबाट झिकिदिए ॥१९॥ अनि शुक्र-पुत्री देवयानीले ययातिप्रति प्रेमपूर्ण वचन भनिन्–'हे शत्रुहरूका नगर विजय गर्ने राजन् ! तिमीले मेरो हात समातेका छौ ॥२०॥ अतः अब यस्तो गर–तिमीद्वारा पाणिगृहीता भएपछि अब कुनै अन्य पुरुषले मेरो

धृतवती शूद्रो वेदमिवासती ॥१४॥ एवं शपन्तीं शर्मिष्ठा गुरुपुत्रीमभाषत ॥ रुषा श्वसन्त्युरङ्गीव धर्षिता दष्टदच्छदा ॥ १५ ॥ आत्मवृत्तमविज्ञाय कत्थसे बहु भिक्षुकि ॥ किं न प्रतीक्षसेऽस्माकं गृहान्बलिभुजो यथा ॥१६॥ एवंविधैः सुपरुषैः क्षिप्त्वाऽऽचार्यसुतां सतीम् ॥ शर्मिष्ठा प्राक्षिपत्कूपे वास आदाय मन्युना ॥ १७ ॥ तस्यां गतायां स्वगृहं ययातिर्मृगयां चरन् ॥ प्राप्तो यदृच्छया कूपे जलार्थी तां ददर्श ह ॥ १८ ॥ दत्त्वा स्वमुत्तरं वासस्तस्यै राजा विवाससे ॥ गृहीत्वा पाणिना पाणिमुज्जहार दयापरः ॥ १९ ॥ तं वीरमाहौशनसी प्रेमनिर्भरया गिरा ॥ राजंस्त्वया गृहीतो मे पाणिः परपुरञ्जय ॥ २० ॥ हस्तग्राहो परो माभूद्गृहीतायास्त्वया हि मे ॥ एष ईशकृतो वीर सम्बन्धो नौ न पौरुषः ॥ यदिदं कूपलग्नाया भवतो दर्शनं मम ॥ २१ ॥ न ब्राह्मणो मे भविता हस्तग्राहो महाभुज ॥ कचस्य बार्हस्पत्यस्य शापाद्यमशपम्पुरा ॥ २२ ॥ ययातिरनभिप्रेतं दैवोपहृतमात्मनः ॥ मनस्तु तद्गतं बुद्ध्वा प्रतिजग्राह तद्वचः ॥ २३ ॥ गते राजनि सा वीरे तत्र स्म रुदती पितुः ॥ न्यवेदयत्ततः सर्वमुक्तं शर्मिष्ठया कृतम् ॥ २४ ॥ दुर्मना भगवान्काव्यः पौरोहित्यं विगर्हयन् ॥ स्तुवन् वृत्तिं च कापोतीं दुहित्रा स ययौ पुरात् ॥२५॥ वृषपर्वा तमाज्ञाय

हात समाउन नपाओस् ! हे वीर ! यस बखत जब कि म कुआमा परेकी थिएँ, तब जो मलाई हजुरको अकस्मात् दर्शन भएको छ, यो हामी दुवैको सम्बन्ध मनुष्य-कृत होइन, यो ईश्वर-कृत हो ॥२१॥ हे महाबाहो ! पूर्वकालमा जसलाई मैले श्राप दिएकी थिएँ, ती बृहस्पतितनय कचको श्रापले मसित विवाह गर्ने पुरुष ब्राह्मण नभएर अरु नै कोही हुनेछ ॥२२॥ राजा ययातिले अनिच्छित किन्तु दैववश प्राप्त देवयानीका वचन सुनेर र मनलाई उनैतिर ढल्केको जानेर देवयानीका कुरा स्वीकार गरे ॥२३॥ त्यसपछि जब वीरवर राजा ययाति गए, तब रुँदै देवयानीले आफ्ना पिताको समीप गएर त्यो सबै वृत्तान्त सुनाइन्, जस्तो कि शर्मिष्ठाले भनेकी र गरेकी थिइन् ॥ २४ ॥ छोरीका कुरा सुनेर शुक्राचार्यजी मनमनै दुःखी

---

कथान्तर—देवगुरु बृहस्पतिका छोरा कच शुक्राचार्यसित मृतसंजीवनी विद्या पढिरहेका थिए। अध्ययन समाप्त गरेपछि जब कच घर जानलागे तब देवयानीले उनलाई आफ्नो पति बनाउने इच्छा गरिन्, परन्तु गुरुपुत्रीसित विवाह अनुचित ठानेर कचले त्यो कुरा स्वीकार गरेनन्। अनि देवयानीले उनलाई श्राप दिइन्—'तिमीले पढेको विद्या निष्फल हुनेछ।' कचले पनि श्राप दिए—'तिमीले पनि ब्राह्मण पति पाउने छैनौ।'

भएर मौरोहित्य वृत्तिको निन्दा र शिलोञ्छ वृत्तिको प्रशंसा गर्दै आफ्नी छोरी सहित त्यस नगरबाट हिंडिदिए ॥२५॥ वृषपर्वाले यो कुरा जानेर–आचार्य हाम्रा शत्रुहरूलाई विजय दिलाउन खोज्दैछन्—बाटोमा गएर गुरूका चरणमा मस्तक राखी उनलाई प्रसन्न तुल्याए ॥२६॥ भगवान् शुक्राचार्यको रिस त एक क्षणमै शान्त भयो। अनि उनले आफ्ना शिष्यसित भने–'हे राजन् ! म पुत्री देवयानीलाई छाड्न सक्तिन। अतः यसले जे भन्दछे, त्यो गर' ॥ २७ ॥ अनि 'तथास्तु' भनेर उभिएका वृषपर्वासित देवयानीले आफ्नो अभिप्राय बुझाउँदै भनिन्–'म 'पिताद्वारा कन्यादान दिएर जहाँ जानेछु, त्यहीं शर्मिष्ठा आफ्ना एक हजार सखीहरू सहित मेरी दासी बनेर सेवाको निम्ति जाओस्' ॥ २८ ॥ आफ्ना सबै सम्बन्धीहरूमा सङ्कट आउने सम्भावना देखेर र उनका कामको गुरुता बुझेर शर्मिष्ठा आफ्ना एक हजार सखीहरू सहित देवयानीकी दासी बनेर सेवा गर्न लागिन्

प्रत्यनीकविवक्षितम् ॥ गुरुं प्रसादयन्मूर्ध्ना पादयोः पतितः पथि ॥ २६ ॥ क्षणार्धमन्युर्भगवान् शिष्यं व्याचष्ट भार्गवः ॥ कामोऽस्याः क्रियतां राजन्नैनां त्यक्तुमिहोत्सहे ॥ २७ ॥ तथेत्यवस्थिते प्राह देवयानी मनोगतम् ॥ पित्रा दत्ता यतो यास्ये सानुगा यातु मामनु ॥ २८ ॥ स्वानां तत्सङ्कटं वीक्ष्य तदर्थस्य च गौरवम् ॥ देवयानीं पर्यचरत्स्त्रीसहस्रेण दासिवत् ॥२९॥ नाहुषाय सुतां दत्त्वा सह शर्मिष्ठयोशना ॥ तमाह राजञ्छर्मिष्ठामाधास्तल्पे न कर्हिचित् ॥ ३० ॥ विलोक्यौशनसीं राजञ्छर्मिष्ठा सुप्रजां क्वचित् ॥ तमेव वव्रे रहसि सख्याः पतिमृतौ सती ॥३१॥ राजपुत्र्यार्थितोऽपत्ये धर्मं चावेक्ष्य धर्मवित् ॥ स्मरञ्छुक्रवचः काले दिष्टमेवाभ्यपद्यत ॥ ३२ ॥ यदुं च तुर्वसुं चैव देवयानी व्यजायत ॥ द्रुह्युं चानुं च शर्मिष्ठा वार्षपर्वणी ॥ ३३ ॥ गर्भसम्भवमासुर्या भर्तुर्विज्ञाय मानिनी ॥ देवयानी पितुर्गेहं ययौ क्रोधविमूर्च्छिता ॥ ३४ ॥ प्रियामनुगतः कामी वचोभिरुपमन्त्रयन् ॥

॥२९॥ त्यसपछि शुक्राचार्यले राजा ययातिलाई शर्मिष्ठाका साथै आफ्नी छोरी दिएर भने–'हे राजन् ! तिमी आफ्नू शय्यामा शर्मिष्ठालाई कहिल्यै आउन नदिए ॥३०॥ केही दिनपछि एकपल्ट ऋतुमती भएपछि शर्मिष्ठाले शुक्रसुता देवयानीलाई पुत्रवती देखेर आफ्नी सखीका पति राजा ययातिसित एकान्तमा संभोगको निम्ति प्रार्थना गरिन् ॥३१॥ यस प्रकार यौटी राजपुत्रीद्वारा सन्तानको निम्ति प्रार्थित भएर धर्मज्ञ ययातिले आफ्नो धर्म जानेर दैत्यगुरु शुक्रार्यको वचन सम्झिरहे पनि दैवको नै अनुसरण गरे। यस प्रकार देवयानीका यदु र तुर्वसु तथा वृषपर्वातनया शर्मिष्ठाका द्रुह्यु, अनु र पुरु नामका तीन छोरा भए ॥ ३३ ॥ ती *मानिनी देवयानीलाई जब यो कुरा थाहा भयो कि मेरै पतिद्वारा शर्मिष्ठालाई गर्भ

* उदाहरण—( स्वास्नीले लोग्नेलाई कुटी )—संसारमा अनेक विदुषी नारीलाई कठोर पति र अनेक विद्वान् पुरुषलाई कर्कशा नारी प्राप्त हुन्छन्। तैपनि विचारशील स्त्री-पुरुष आफ्नो विवेकले घर स्वर्ग तुल्याउँछन्। महान् सन्त तुकारामकी पत्नी कर्कशा स्त्री थिइन्। तुकारामको काम सन्त सेवा, समाज-सेवा र न्यायपूर्ण जीवन बिताउनु थियो तर तिनकी स्त्रीलाई यो कुरा मनपर्दैनथ्यो, किनकि ती स्वार्थी र बसौटी थइन्। एक दिन तुकाराम खेतबाट उखुको भारी बोकेर घर आइरहेका थिए। बाटोमा निर्धन व्यक्ति र तिनका बालक उभिएका देखिए। तुकारामलाई तीमाथि दया लागेर आयो र उखु बाँड्न लागे। बाँड्दा-बाँड्दै यौटा उखु बाँकी रह्यो। त्यो लिएर गई पत्नीलाई दिए। पत्नीले बाटोमै उखु बाँडेको कुरा जानिसकेकी थिइन्। अतः रिसाएर बसेकी थिइन्। उखु हातमा पर्नासाथ तुकारामको ढाडमा बजारिन्, यसले उखु दुइ टुक्रा भयो। तुकारामले हाँसेर भने–'वाह ! तिमी कति बुद्धिमती छौ, तिम्रो ममाथि कत्तो प्रेम छ ! उखु जस्तो वस्तु पनि तिमीलाई एक्लै खान मन लागेन। यसै कारण तिमीले यसको दुइ टुक्रा पारिदियौ।'

रहेको छ–रिसाएर ती आफ्ना पिताको घर गइन् ॥३४॥ कामी राजा ययाति पनि पछि-पछि गए तर खुट्टा छोएर पनि राजाले उनलाई फर्काएर ल्याउन सकेनन् ॥३५॥ देवयानीबाट सबै कुरा सुनेर रिसाएका शुक्राचार्यले भने–'ए स्त्रीकामी, मन्दमति र झूठो पुरुष ! तँलाई मनुष्यलाई कुरूप पारिदिने वृद्धावस्था तत्काल प्राप्त होओस् ॥ ३६ ॥ अनि राजा ययातिले भने—हे ब्रह्मन् ! अझ हजुरकी छोरीसित विषय भोग गरेर तृप्त भएको छैन ।' शुक्राचार्यले भने–'उसो भए यदि कोही स्वेच्छाले आफ्नो यौवन दिन्छ भने तिमी उसलाई वृद्धावस्था दिएर साट्न सक्दछौ ॥३७॥ शुक्राचार्य द्वारा यस्तो व्यवस्था पाएर ययाति आफ्नो जेठो छोरो यदुसित भन्दछन्–हे वत्स ! तिमी आफ्ना हजुर बाबाले दिएको वृद्धावस्था लिएर मलाई आफ्नो यौवन दिनसक्दछौ ? किनकि म अझ सांसारिक विषयबाट तृप्त भएको छैन । तिम्रो यौवन पाएर केही वर्ष अझ विहार गर्दछु' ॥३८॥३९॥ यदुले भने–'हे पिता ! म बेला नपुग्दै प्राप्त हजुरको वृद्धावस्था लिएर बाँच्न चाहन्न, किनकि विषय-सुखको अनुभव नगर्दै मनुष्य त्यतातिरबाट विरक्त हुन सक्दैन ॥ ४० ॥

न प्रसादयितुं शेके पादसंवाहनादिभिः ॥३५॥ शुक्रस्तमाह कुपितः स्त्रीकामानृतपूरुष ॥ त्वां जरा विशतां मंद विरूपकरणी नृणाम् ॥३६॥ ययातिरुवाच ॥ अतृप्तोऽस्म्यद्य कामानां ब्रह्मन्दुहितरि स्म ते ॥ व्यत्यस्यतां यथाकामं वयसा योऽभिधास्यति ॥३७॥ इति लब्धव्यवस्थानः पुत्रं ज्येष्ठमवोचत ॥ यदो तात प्रतीच्छेमां जरां देहि निजं वयः ॥३८॥ मातामहकृतां वत्स न तृप्तो विषयेष्वहम् ॥ वयसा भवदीयेन रंस्ये कतिपयाः समाः ॥३९॥ यदुरुवाच ॥ नोत्सहे जरसा स्थातुमन्तरा प्राप्तया तव ॥ अविदित्वा सुखं ग्राम्यं वैतृष्ण्यं नैति पूरुषः ॥४०॥ तुर्वसुश्चोदितः पित्रा द्रुह्युश्चानुश्च भारत ॥ प्रत्याचख्युरधर्मज्ञा ह्यनित्ये नित्यबुद्धयः ॥४१॥ अपृच्छत्तनयं पूरुं वयसोनं गुणाधिकम् ॥ न त्वमग्रजवद्वत्स मां प्रत्याख्यातुमर्हसि ॥४२॥ पूरुरुवाच॥को नु लोके मनुष्येन्द्र पितुरात्मकृतः पुमान् ॥ प्रतिकर्तुं क्षमो यस्य प्रसादाद्विन्दते परम् ॥४३॥ उत्तमश्चिन्तितं कुर्यात्प्रोक्तकारी तु मध्यमः ॥ अधमोऽश्रद्धया कुर्यादकर्तोच्चरितं पितुः ॥४४॥ इति प्रमुदितः पूरुः प्रत्यगृह्णाज्जरां पितुः ॥ सोऽपि तद्वयसा कामान् यथावज्जुजुषे नृपः ॥४५॥ सप्तद्वीपपतिः सम्यक् पितृवत्पालयन्प्रजाः ॥ यथोपजोषं विषयाञ्जुजुषेऽव्याहतेन्द्रियः ॥ ४६ ॥ देवयान्यप्यनुदिनं मनोवाग्देहवस्तुभिः ॥ प्रेयसः परमां प्रीतिमुवाह

हे राजन् ! त्यसै गरी तुर्वसु र द्रुह्यु, अनुले पनि पिताको प्रार्थना सुनेनन्, किनकि ती धर्म जान्दैनथे र देहादि अनित्य वस्तुलाई नै नित्य ठान्दथे ॥४१॥ अनि राजा ययातिले अवस्थामा सबैभन्दा सानो र गुणमा सबभन्दा बर्ता आफ्नो पूरु नामक छोरोसित भने–'बाबु ! यी आफ्ना दाजूहरू झैं तिमीले त मेरो कुरा अस्वीकार गर्न छैनौ ॥ ४२ ॥ पूरुले भने- 'हे नरेन्द्र ! जुन पिताको कृपाले मनुष्य परमपदसम्म पाउँदछ, आफ्नो शरीरलाई उत्पन्न गर्ने त्यस पिताको ऋण यस लोकमा कसले तिर्न सक्ला ? ॥४३॥ जुन पुत्र पिताले विचार मात्र गरेका काम सम्पन्न पार्दछ, त्यो उत्तम हो । जो भनेर गर्दछ, त्यो मध्यम हो र जो अश्रद्धाले गर्दछ, त्यो अधम पुत्र हुन्छ । जो भनेपछि पनि गर्दैन, त्यो माता-पिताको (छोरो नभएर) मल-मूत्र एवं विष्ठा नै हो ॥४४॥ हे राजन् ! यति भनेर पूरुले खुशीसाथ पिताको वृद्धावस्था स्वीकार गरे र राजा ययाति उसको यौवन पाएर मनपर्दो काइदाले विषय सेवन गर्नलागे ॥४५॥ उनले सातै द्वीपको प्रभुता पाएर आफ्ना पिता जस्तै प्रजाको राम्ररी पालन गरे र आफ्ना इन्द्रिय हरूका शक्तिलाई अक्षुण्ण राख्दै यथेच्छ विषयहरूलाई

भोगे ॥४६॥ तिनकी प्रेयसी देवयानी पनि एकान्तमा मन, वाणी, देह र अन्य सबै वस्तुले आफ्ना प्रियतमलाई सर्वदा प्रसन्न राख्न लागिन् ॥ ४७ ॥ आफ्नो राज्यकालमा ययातिले सबै वेदका आधार सर्वदेवमय यज्ञपुरुषको अनेक ठूला-ठूला दक्षिणा दिइने यज्ञ द्वारा यजन गरे ॥४८॥ जसमा आकाशस्थ मेघमाला झैं रचित यो जगत् स्वप्न, माया तथा मनोरथजनित पदार्थका झैं कहिले विविधरूपले भासमान् र कहिले भासमान हुँदैन पनि, उनैं सर्व भूतान्तर्यामी सूक्ष्मातिसूक्ष्म श्रीनारायणलाई आफ्नो हृदयमा ध्यान गर्दै उनले निष्काम भावले भगवान्को उपासना गरे ॥४९॥५०॥ यस प्रकार जसमा मन छँदै छ, तो आफ्ना उच्छृङ्खल इन्द्रियहरू द्वारा एक हजार वर्षसम्म मनपर्दो आनन्द-दायक भोग अहर्निशि भोगेर पनि तो चक्रवर्ती राजा तृप्त हुन सकेनन् ॥५१॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायामष्टादशोऽध्यायः ॥१८॥

( राजा ययातिको गृहत्याग ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यसरी स्त्रीको वशवर्ती भएर सबै भोगहरू भोग्दै राजा ययातिले जब आफ्नो आत्माको डरलाग्दो पतन जाने

प्रेयसी रहः ॥ ४७ ॥ अयजद्यज्ञपुरुषं क्रतुभिर्भूरिदक्षिणैः ॥ सर्ववेदमयं देवं सर्ववेदमयं हरिम् ॥ ४८ ॥ यस्मिन्निदं विरचितं व्योम्नीव जलदावलिः ॥ नानेन भाति नाभाति स्वप्नमायामनोरथः ॥ ४९ ॥ तमेव हृदि विन्यस्य वासुदेवं गुहाशयम् ॥ नारायणमणीयांसं निराशीरयजत्प्रभुम् ॥५०॥ एवं वर्षसहस्राणि मनःषष्ठैर्मनःसुखम् ॥ विदधानोऽपि नातृप्यत्सार्वभौमः कदिन्द्रियः ॥ ५१ ॥ इति श्रीमद्भागवते नवमस्कन्धेऽष्टादशोऽध्यायः ॥ १८ ॥

श्रीशुक उवाच ॥ स इत्थमाचरन्कामान्स्त्रैणोऽपह्नवमात्मनः ॥ बुद्ध्वा प्रियायै निर्विण्णो गाथामेतामगायत ॥ १ ॥ शृणु भार्गव्यमूं गाथां मद्विधाचरितां भुवि ॥ धीरा यस्यानुशोचन्ति वने ग्रामनिवासिनः ॥ २ ॥ बस्त एको वने कश्चिद्विचिन्वन्प्रियमात्मनः ॥ ददर्श कूपे पतितां स्वकर्मवशगामजाम् ॥ ३ ॥ तस्य उद्धरणोपायं बस्तः कामी विचिन्तयन् ॥ व्यधत्त तीर्थमुद्धृत्य विषाणाग्रेण रोधसी ॥ ४ ॥ सोत्तीर्य कूपात्सुश्रोण तमेव चकमे किल ॥ तया वृतं समुद्वीक्ष्य बह्व्योऽजाः कान्तकामिनीः ॥ ५ ॥ पीवानं श्मश्रुलं प्रेष्ठं मीढ्वांसं याभकोविदम् ॥ स एकोऽजवृषस्तासां बह्वीनां रतिवर्धनः ॥ रेमे कामग्रहग्रस्त आत्मानं नावबुध्यत ॥ ६ ॥ तमेव प्रेष्ठतमया रममाणमजाऽन्यया ॥ विलोक्य

विषयबाट एकदम विरक्त भएर एक दिन आफ्नी प्रियासित भने—॥१॥ 'हे शुक्रपुत्री ! यस पृथ्वीतलमा जसको विषयमा सबै वनवासी र जितेन्द्रिय पुरुष—'हरे ! यसको उद्धार कसरी होला ?' यस्तो शोक गर्छन्, यस्तै म झैं यौटा ग्राम-निवासीद्वारा आचारित यो गाथा सुन—॥२॥ एक समय यौटा बोकाले वनमा आफूलाई मनपर्ने भोगहरू खोज्दा-खोज्दै निजकर्मवश कुवामा परेकी यौटी बाख्री देख्यो ॥३॥ त्यो कामी बोकाले त्यसलाई बाहिर झिक्ने यत्न विचारेर आफ्ना सीङले कुवको नजीकैको भूमि खनेर बाटो बनायो॥४॥कुवबाट बाहिर निस्केर त्यो बाख्रीले उसैलाई पति तुल्याई । त्यसद्वारा वरण गरिएको त्यो बोकाको पुष्ट शरीर, लामो दाह्री, रति-सुखदायक र मैथुन-कर्ममा कुशल देखेर पतिको इच्छा भएका अरु पनि अनेक बाख्रीहरूले उसैलाई वरण गरे । यस प्रकार यौटै बोको कामरूपी पिशाचको फेला परेर अनेक बाख्रीहरूको रतिसुख बढाउँदै तिनीहरूसित रमण गर्न लाग्यो र आफ्नो सुद्धि-बुद्धिसमेत बिर्सिदियो ॥ ५ ॥ ६ ॥ त्यसले अन्य बाख्रीसित रमण गरेको देखेर त्यसकी पहिली पत्नी, जसलाई उसले कुवाबाट बाहिर झिकेको

थियो, त्यसले त्यो कर्म सहन सकिन र त्यो रिसले अत्यन्त दुःखी भएर त्यो इन्द्रियलोलुप, क्षणिक प्रीति हुने सुहृद्रूपी शत्रु पतिलाई त्यागेर आफ्नो अघिको स्वामी अर्थात् पालनेकहाँ फर्केर गई ॥ ७॥८ ॥ यस्तो स्थितिमा स्त्रीलोलुप बोको उनलाई फकाउन पछि-पछि दगुर्‍यो, तर बाटोमा त्यसले उसलाई बुझाएर फकाउन सकेन ॥९॥ त्यसै बखत बाख्रीका ब्राह्मण स्वामीले बोकाको झुण्डिएका अण्डकोश काटिदिए । फेरि आफ्नो बाख्रीको स्वार्थ साध्नका लागि त्यसलाई जस्ताको तस्तै पार्न जान्ने ती ब्राह्मणले पहिले जस्तै पारिदिए ॥१०॥ हे भद्रे ! अण्डकोश जोरिएपछि बोको कुवामा भेटिएकी बाख्रीसित धेरै दिनसम्म अनेक थरिका भोग भोगेर पनि तृप्ति पाउन सकेन ॥११॥ हे सुभ्रु ! त्यो जस्तै म पनि तिम्रो प्रेम-पाशमा बाँधिएर अत्यन्त दीन-हीन र तिम्रो मायाले मोहित भई स्वयं आफूलाई एकदम बिर्सिदिएको छु ॥१२॥ हे प्रिये ! संसारमा जति पनि धन-धान्य, पशु, नारीहरू छन्, ती सबै मिलेर पनि कुनै पाँटा विषयी पुरुषको असन्तुष्ट चित्तलाई सन्तुष्ट पार्नमा समर्थ हुन सक्तैनन् ॥१३॥

कोपमंविग्ना नाऽऽप्यद्वस्तकर्म तत् ॥ ७ ॥ तं दुर्हृदं सुहृद्रूपं कामिनं क्षणसौहृदम् ॥ इन्द्रियाराममुत्सृज्य स्वामिनं दुःखिता ययौ ॥ ८ ॥ सोऽपि चानुगतः स्त्रैणः कृपणस्तां प्रसादितुम् ॥ कुर्वन्निडविडाकारं नाशक्नोत्पथि संधितुम् ॥९॥ तस्यास्तत्र द्विजः कश्चिदजास्वाम्यच्छिनद्रुषा ॥ लम्बन्तं वृषणं भूयः सन्दधेऽर्थाय योगवित् ॥ १० ॥ सम्बद्धवृषणः सोऽपि ह्यजया कूपलब्धया ॥ कालं बहुतिथं भद्रे कामैर्नाद्यापि तुष्यति ॥ ११ ॥ तथाऽहं कृपणः सुभ्रु भवत्याः प्रेमयन्त्रितः ॥ आत्मानं नाभिजानामि मोहितस्तव मायया ॥१२॥ यत्पृथिव्यां व्रीहियवं हिरण्यं पशवः स्त्रिय ॥ न दुह्यन्ति मनःप्रीति पुंसः कामहतस्य ते ॥ १३ ॥ न जातु कामः कामानामुपभोगेन शाम्यति ॥ हविषा कृष्णवर्त्मेव भूय एवाभिवर्धते ॥ १४ ॥ यदा न कुरुते भावं सर्वभूतेष्वमङ्गलम् ॥ समदृष्टेस्तदा पुंसः सर्वाः सुखमया दिशः ॥ १५ ॥ या दुस्त्यजा दुर्मतिभिर्जीर्यतो या न जीर्यते ॥ तां तृष्णां दुःखनिवहां शर्मकामी द्रुतं त्यजेत् ॥ १६ ॥ मात्रा स्वस्रा दुहित्रा वा न विविक्तासनो भवेत् ॥ बलवानिन्द्रियग्रामो विद्वांसमपि कर्षति ॥ १७ ॥ पूर्णं वर्षसहस्रं मे विषयान्सेवतोऽसकृत् ॥ तथापि चानुसवनं तृष्णा तेषूपजायते ॥१८॥ तस्मादेतामहं त्यक्त्वा ब्रह्मण्याधाय मानम् ॥ निर्द्वन्द्वो निरहंकारश्चरिष्यामि मृगैः सह ॥ १९ ॥ दृष्टं श्रुतमसद्बुध्वा नानुध्यायेन्न संविशेत् ॥ संसृतिं चात्मनाशं च तत्र विद्वान्स

विषयलाई सधैं भोग्नाले वासना कहिल्यै शान्त हुँदैन । त्यो त घिउको आहुति पाउने अग्नि झैं झन्-झन् बढ्दै जान्छ ॥१४॥ जो मनुष्य सबै प्राणीमा अमङ्गलको भाव राख्दैन, त्यो समदर्शीका लागि सबै दिशा आनन्ददायिनी हुन्छन् ॥१५॥ जुन कुबुद्धि पुरुषका लागि त्यागिनसक्नु छ र जो शरीर बूढो भएर पनि जीर्ण हुँदैन, त्यो दुःखबहुल तृष्णा सुख खोज्ने व्यक्ति तत्काल छाडोस् ॥ १६ ॥ प्रत्येक व्यक्तिले चरन्क हो–आफ्नी आमा, बहिनी र छोरीसित पनि एकान्तमा नबसोस्, किनकि इन्द्रियहरू धेरै बलिया हुन्छन्, त्यो विचारशील व्यक्तिलाई पनि विचलित पारिदिन्छन् ॥ १७ ॥ हेर न, मैले विषय-सेवन गरेको एक हजार वर्ष वितिसक्यो, तथापि तिनमा मेरो मनको लालसा बढ्दै नै गइरहेछ ॥ १८ ॥ अतः अब म विषयको आशा त्यागेर आफ्नो मन परब्रह्ममा लगाई निर्द्वन्द्व र अहङ्कार शून्य भई वनमा मृगहरूसित विचरण गर्दछु ॥ १९ ॥

852

जुन व्यक्ति देखे-सुनेका पदार्थलाई असत्य जानी—तिनको आसक्तिबाट जन्म-मरणरूपी संसारको प्राप्ति र आत्मनाश हुन्छ—यो जानेर ती तिनको चिन्तन र भोग गर्दैन त्यही आत्मज्ञानी हुन्छ' ॥ २० ॥ हे राजन् ! आफ्नी पत्नी देवयानीसित यति भनेर राजा ययाति विषयबाट विरक्त भई पूरुको युवावस्था फर्काई आफ्नो वृद्धावस्था लिए ॥२१॥ त्यसपछि दक्षिण-पूर्व दिशामा द्रुह्युलाई, पश्चिममा तुर्वसुलाई, दक्षिणमा यदु र उत्तरमा अनुलाई मण्डलेश्वर तुल्याई संसारको सबै सम्पत्ति पाउने योग्य पात्र पूरुलाई समस्त भूमण्डलको राज्यमा अभिषिक्त पारी, दाजुहरूलाई उसकै अधीन तुल्याई आफू वनमा गए। जस्तै प्वाँख निस्केपछि चराले गुँड छाड्दछन्, त्यस्तै राजा ययातिले शब्दादि सबै विषय अनेक वर्षसम्म भोगेका इन्द्रिय सुख एक क्षण मै त्यागिदिए ॥ २३ ॥ २४ ॥ लोक-विख्यात राजा ययातिले वनमा बसेर संगतिबाट छुटेर आत्मानुभव द्वारा त्रिगुणमय लिङ्ग-देहबाट मुक्त भएर सबै दोषबाट रहित वासुदेव परब्रह्मको तादात्म्यरूपिणी गति पाए ॥ २५ ॥ देवयानीले यो कथा सुनेर आफ्नो निम्ति उपालम्भ, हेलाँ ठानिन्। उनले बुझिन्—

आत्मदृक् ॥ २० ॥ इत्युक्त्वा नाहुषो जायां तदीयं पूरवे वयः ॥ दत्त्वा स्वां जरसं तस्मादाददे विगतस्पृहः ॥ २१ ॥ दिशि दक्षिणपूर्वस्यां द्रुह्युं दक्षिणतो यदुम् ॥ प्रतीच्यां तुर्वसुं चक्र उदीच्यामनुमीश्वरम् ॥ २२ ॥ भूमण्डलस्य सर्वस्य पूरुमर्हत्तमं विशाम् ॥ अभिषिच्याग्रजाँस्तस्य वशे स्थाप्य वनं ययौ ॥२३॥ आसेवितं वर्षपूगान्षड्वर्गं विषयेषु सः ॥ क्षणेन मुमुचे नीडं जातपक्ष इव द्विजः ॥२४॥ स तत्र निर्मुक्तसमस्तसंग आत्मानुभूत्या विधुतत्रिलिङ्गः ॥ परेऽमले ब्रह्मणि वासुदेवे लेभे गतिं भागवतीं प्रतीतः ॥ २५ ॥ श्रुत्वा गाथां देवयानी मेने प्रस्तोभमात्मनः ॥ स्त्रीपुंसोः स्नेहवैक्लव्यात्परिहासमिवेरितम् ॥ २६ ॥ सा संनिवासं सुहृदां प्रपायामिव गच्छताम् ॥ विज्ञायेश्वरतन्त्राणां मायाविरचितं प्रभोः ॥ २७ ॥ सर्वत्र सङ्गमुत्सृज्य स्वप्नौपम्येन भार्गवी ॥ कृष्णे मनः समावेश्य व्यधुनोल्लिङ्गमात्मनः ॥ २८ ॥ नमस्तुभ्यं भगवते वासुदेवाय वेधसे ॥ सर्वभूताधिवासाय शान्ताय बृहते नमः ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे एकोनविंशोऽध्यायः ॥ १९ ॥

श्रीशुक उवाच पूरोर्वंशं प्रवक्ष्यामि यत्र जातोऽसि भारत ॥ यत्र राजर्षयो वंश्या ब्रह्मवंश्याश्च जज्ञिरे ॥१॥ जनमेजयो ह्यभूत्पूरोः प्रचिन्वांस्तत्सुतस्ततः ॥ प्रवीरोऽथ नमस्युर्वै तस्माच्चारुपदोऽभवत् ॥२॥ तस्य सुद्युरभूत्पुत्रस्तस्माद्बहुगवस्ततः ॥ संयातिस्तस्याहंयाती रौद्राश्वस्तत्सुतः स्मृतः ॥३॥

स्त्री-पुरुषको स्नेहको असारताले गर्दा नै यस्तो भनेर मेरो परिहास गरिएको हो। यसै निम्ति देवयानीले ईश्वराधीन सुहृद्को सहवासलाई पाटीमा एकत्रित व्यक्तिको सहवास झैं क्षणिक, भगवानको मायाले निर्मित र सबै संसारलाई स्वप्न झैं मिथ्या ठानेर तिनले शरीर त्यागिदिइन् ॥२६-२८॥ देह त्याग्दा उनले भनिन्—'सम्पूर्ण जगतका रचयिता, सबै प्राणीहरूका आश्रय, शान्त स्वरूप र सर्वव्यापक वासुदेव भगवानलाई प्रणाम छ' ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायामेकोनविंशोऽध्यायः ॥ १९ ॥

(पुरुवंशको चरित्र र राजा दुष्यन्त, भरतको वृत्तान्त)—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! अब जसमा तिम्रो जन्म भएको छ र जसका वंशधर अनेक राजर्षि तथा ब्रह्मर्षि भइसकेका छन्, त्यस पुरुवंशको वर्णन सुन ॥१॥ पुरुबाट जन्मेजय, तिनका प्रचिन्वान, उनका प्रवीर, प्रवीरबाट नमस्यु र नमस्युबाट चारुपदको जन्म भयो ॥२॥ चारुपदका सुद्यु, उनका

भद्राश्व, भद्राश्वका संयाति, संयातिबाट अहंयाति र अहंयातिका छोरा रौद्राश्व भए॥ ३॥ हे जन् ! जसरी मुख्य प्राणबाट दश इन्द्रिय उत्पन्न हुन्छन्, त्यस्तै नै रौद्राश्वका घृताची अप्सराबाट ऋतेयु, कुक्षेयु, स्थण्डिलेयु, कृतेयु, जलेयु, सन्ततेयु, धर्मेयु, सत्येयु व्रतेयु र सबभन्दा कान्छा वनेयु–यी दश पुत्र जन्मिए ॥ ४॥५ ॥ हे नृप: तिनमा ऋतेयुका रन्तिभार उत्पन्न भए । उनका सुमति, ध्रुव र अप्रतिरथ नामका तीन छोरा भए। तीमध्ये अप्रतिरथका छोरा कण्व जन्मिए ॥ ६ ॥ उनका मेधातिथि थिए, जसको द्वारा प्रस्कण्व आदि ब्राह्मण उत्पन्न भए । सुमतिका छोरा रैभ्य र रैभ्यका दुष्यन्त नामले प्रसिद्ध भए ॥ ७ ॥ एक समय केही सैनिक लिई राजा दुष्यन्त शिकार खेल्न वनमा गए कण्व मुनिको आश्रममा पुगे । त्यहाँ लक्ष्मी समान आफ्नो कान्तिले त्यस आश्रमलाई सुशोभित पार्ने पौंठी देवमाया जस्ती मनोहारिणी कन्या बसेकी देखेर राजा तत्काल मोहित भए र ती सुन्दरीसित कुरा गर्नलागे । त्यसको दर्शनले आनन्दित भएर थकाई मारिसकेपछि ती कामसन्तप्त राजाले हाँस्तै मीठो स्वरमा भने ॥ ८-१० ॥ हे कमल-नयनी ! तिमी को हौ ? हे कल्याणि !

ऋतेयुस्तस्य कुक्षेयुः स्थण्डिलेयुः कृतेयुकः ॥ जलेयुः सन्ततेयुश्च धर्मसत्यव्रतेयवः ॥४॥ दशैतेऽप्सरसः पुत्रा वनेयुश्चावमः स्मृतः ॥ घृताच्यामिन्द्रियाणीव मुख्यस्य जगदात्मनः ॥५॥ ऋतेयो रन्तिभारोऽभूत्त्रयस्तस्यात्मजा नृप ॥ सुमतिर्ध्रुवोऽप्रतिरथः कण्वोऽप्रतिरथात्मजः ॥६॥ तस्य मेधातिथिस्तस्मात्प्रस्कण्वाद्या द्विजातयः ॥ पुत्रोऽभूत्सुमते रेभ्यो दुष्यन्तस्तत्सुतो मतः ॥७॥ दुष्यन्तो मृगयां यातः कण्वाश्रमपदं गतः ॥ तत्रासीनां स्वप्रभया मण्डयन्तीं रमामिव ॥८॥ विलोक्य सद्यो मुमुहे देवमायामिव स्त्रियम् ॥ बभाषे तां वरारोहां भटैः कतिपयैर्वृतः ॥९॥ तद्दर्शनप्रमुदितः संनिवृत्तपरिश्रमः ॥ पप्रच्छ कामसन्तप्तः प्रहसञ्श्लक्ष्णया गिरा ॥१०॥ का त्वं कमलपत्राक्षि कस्यासि हृदयङ्गमे ॥ किं वा चिकीर्षितं त्वत्र भवत्या निर्जने वने ॥११॥ व्यक्तं राजन्यतनयां वेद्म्यहं त्वां सुमध्यमे ॥ न हि चेतः पौरवाणामधर्मे रमते क्वचित् ॥ १२ ॥ शकुन्तलोवाच ॥ विश्वामित्रात्मजैवाहं त्यक्ता मेनकया वने ॥ वेदैतद्भगवान्कण्वो वीर किं करवाम ते ॥१३॥ आस्यतां ह्यरविन्दाक्ष गृह्यतामर्हणं च नः ॥ भुज्यतां सन्ति नीवारा उष्यतां यदि रोचते ॥ १४ ॥ दुष्यन्त उवाच ॥ उपपन्नमिदं सुभ्रु जातायाः कुशिकान्वये ॥ स्वयं हि वृणते राज्ञां कन्यकाः सदृशं वरम् ॥ १५ ॥ ओमित्युक्ते यथाधर्ममुपयेमे शकुन्तलाम् ॥ गान्धर्वविधिना राजा देशकालविधानवित् ॥१६॥ अमोघवीर्यो राजर्षिर्महिष्यां वीर्यमादधे ॥ श्वोभूते स्वपुरं यातः कालेनासूत सा

तिमी कसकी छोरी हौ ? हे मनोरमे ! यस निर्जन वनमा तिमी किन बस्दैछौ ! ॥ ११ ॥ हे सुमध्यमे ! तिमी क्षत्रिय-कन्या हौ भन्ने म स्पष्ट देखिरहेको छु, किनकि पुरुवंशीको चित्त कहिल्यै अधर्ममा प्रवृत्त हुँदैन' ॥ १२ ॥ शकुन्तला बोलिन्–म मेनका अप्सराबाट उत्पन्न महर्षि विश्वामित्रकी छोरी हुँ । मलाई मेनका यहीं वनमा छाडेर गएकी थिइन् । यो कुरा भगवान कण्व जान्दछन् । हे वीर ! म हजुरको के सेवा गरौं ? ॥१३॥ हे महाराज ! यहाँ बसेर हामीले अर्पित आसनादि स्वीकार गर्नोस् । यहाँ जे जति छ, खान-पान गरेर आज रातभरि यहीं आश्रममै विश्राम गर्नुहवस् ॥ १४ ॥ दुष्यन्तले भने—हे सुभ्रु ! कुलिक वंशमा उत्पन्न भएको नाताले तिम्रो भनाई अनुचित छैन, किनकि राजकन्याहरू आफ्नो अनुरूप वर स्वयं रोज्दछन् ॥ १५ ॥ यसपछि शकुन्तलाले 'हुन्छ' भनेपछि देश, काल र विधिका ज्ञाता राजा दुष्यन्तले सुन्दरी शकुन्तलासित धर्मानुसार

गन्धर्व विहाह गरे ॥१६॥ अनि अमोघवीर्य ती राजाले शकुन्तलामा गर्भाधान गरे र भोलिपल्ट बिहानै आफ्नो नगरमा फर्केर गए। त्यसपछि शकुन्तलाले यथा समय यौटा पुत्ररत्नलाई जन्मदिइन् ॥ १७ ॥ महर्षि कण्वले वनमा नै बालकको जातकर्मादि सबै संस्कारहरू सम्पन्न गरे। त्यो वीर बालक बलपूर्वक सिंहलाई बाँधेर त्योसित खेल्ने गर्दथ्यो ॥ १८ ॥ केही समयपछि स्त्रीहरूमा श्रेष्ठ शकुन्तला श्रीहरिको अंशले उत्पन्न ती अपरिमित शक्तिशाली बालक लिएर आफ्ना पति राजा दुष्यन्तकहाँ गइन् ॥ १९ ॥ तर जब राजाले ती निर्दोष पत्नी र पुत्रलाई अस्वीकार गरे तब सबै प्राणीहरूलाई सुनाउँदै आकाशबाट अशरीरिणी (आकाश) वाणी भयो—॥२०॥ 'आमा त छालाको खलाँती जस्तै हुन्छन्। वस्तुतः पुत्र पिताको नै हुन्छ, किनकि त्यो जसद्वारा उत्पन्न हुन्छ, त्यसैको स्वरूप भइजान्छ। अतः हे राजा दुष्यन्त! तिमी यस पुत्रको पालन गर–शकुन्तलाको अपमान हुन नपाओस् ॥२१॥ हे नरदेव! वीर्यसेचन द्वारा जायमान एवं वंश-वृद्धि गर्ने छोराले आफ्ना पितालाई नरक जानबाट बचाउँछ। शकुन्तलाको भनाई सत्य हो। यस गर्भका

सुतम् ॥ १७ ॥ कण्वः कुमारस्य वने चक्रे समुचिताः क्रियाः ॥ बद्ध्वा मृगेन्द्रांस्तरसा क्रीडति स्म स बालकः ॥ १८ ॥ तं दुरत्ययविक्रान्तमादाय प्रमदोत्तमा ॥ हरेरंशांसम्भूतं भर्तुरन्तिकमागमत् ॥ १९ ॥ यदा न जगृहे राजा भार्यापुत्रावनिन्दितौ ॥ शृण्वतां सर्वभूतानां खे वागाहाशरीरिणी ॥२०॥ माता भस्त्रा पितुः पुत्रो येन जातः स एव सः ॥ भरस्व पुत्रं दुष्यन्त मावमंस्थाः शकुन्तलाम् ॥ २१ ॥ रेतोधाः पुत्रो नयति नरदेव यमक्षतात् ॥ त्वं चास्य धाता गर्भस्य सत्यमाह शकुन्तला ॥२२॥ पितर्युपरते सोऽपि चक्रवर्ती महायशाः ॥ महिमा गीयते तस्य हरेरंशभुवो भुवि ॥२३॥ चक्रं दक्षिणहस्तेऽस्य पद्मकोशोऽस्य पादयोः ॥ ईजे महाभिषेकेण सोऽभिषिक्तोऽधिराड् विभुः ॥ २४ ॥ पञ्चपञ्चशता मेध्यैर्गङ्गायामनु वाजिभिः ॥ मामतेयं पुरोधाय यमुनायामनु प्रभुः ॥ २५ ॥ अष्टसप्ततिमेध्याश्वान्बबन्ध प्रददद्वसु ॥ भरतस्य हि दौष्यन्तेरग्निः साचीगुणे चितः ॥ सहस्रं बद्वशो यस्मिन्ब्राह्मणा गा विभेजिरे ॥ २६ ॥ त्रयस्त्रिंशच्छतं ह्यश्वान्बद्ध्वा विस्मापयन्नृपान् ॥ दौष्यन्तिरत्यगान्मायां देवानां गुरुमाययौ ॥ २७ ॥ मृगाण्छुक्लदतः कृष्णान्हिरण्येन परीवृतान् ॥ अदात्कर्मणि मष्णारे नियुतानि चतुर्दश ॥ २८ ॥ भरतस्य महत्कर्म न पूर्वे

स्थापक तिमी नै हौ' ॥ २२ ॥ हे राजन्! उसका पिता दुष्यन्तले देह त्यागेपछि बालक भरत महायशस्वी र चक्रवर्ती राजा भए। ती भगवदंशले उत्पन्न बालकको महिमा सम्पूर्ण पृथ्वीतलमा अहर्निश गान गरिन्छ ॥ २३ ॥ त्यसका दाहिने हातमा चक्र र पद्मकोशको चिन्ह विद्यमान थियो। ती परम समर्थ भरतले महाभिषेकविधि अनुसार राजाधिराज-पदमा अभिषिक्त भएर ममताका छोरा दीर्घतमा ऋषिलाई पुरोहित तुल्याई गङ्गातटमा लगातार पचपन्न पवित्र अश्वमेध यज्ञ गरे र अठार पवित्र अश्व यमुनातटमा बाँधे र धेरै धन दान दिए। ती भरतको यज्ञाग्निको उत्तम स्थानमा चयन गरिएको थियो। त्यस अग्निचयनको स्थानमा हजार ब्राह्मणमा प्रत्येक ब्राह्मणले एकेका बद्व अर्थात् १३०८४ गाईहरू परस्पर बाँडेर पाएका थिए ॥ २८-२६ ॥ राजा भरतले यज्ञमा ३३ सय घोडा बाँधेर सबै राजाहरूलाई चकित पारिदिए र देवताको ऐश्वर्यलाई पनि नाघी देखाएर परम पूजनीय श्रीहरिलाई प्राप्त गरेका थिए ॥ २७ ॥ उनले यज्ञको मष्णार नामक कर्ममा सुवर्णले विभूषित, सेता दाँत र काला रंगका चौधलाख हात्ती ब्राह्मणहरूलाई दिए ॥२८।

जस्तै कोई आफ्ना हातले आकाश छुन सक्तैन, त्यस्तै राजा भरतको महान् यज्ञलाई न उनका पूर्ववर्ती राजाहरूले प्राप्त गर्नसके, न पछि हुनेले नै प्राप्त गर्न सक्नेछन् । दिग्विजयकोअवसरमा उनले किरात, हूण, यवन, आन्ध्र, कङ्क, खश र शक आदि सबै विद्रोही राजाको वध गरिदिएका थिए । पूर्वसमयमा जुन बलवान् दैत्यले देवताहरूलाई जितेर रसातलमा गएर बस्न लागे, तिनले जुन देवाङ्गनाहरूलाई समातेर रसातल लगेकाथिए, तिनलाई राजा भरतले मुक्त पारेर ल्याएका थिए ॥२९-३१॥ उनको राज्यमा पृथ्वी तथा आकाश प्रजाका सबै कामनाहरू पूर्ण पार्दथे । यसरी सत्ताइस हजार वर्षसम्म उनले दसै दिशाको शासन गरे ॥३२॥ अन्त्यमा सम्राट् भरत सबै लोकपालका क्षमहल आदिको ऐश्वर्य, सार्वभौम सम्पति, अटल अनुशासन तथा प्रिय प्राण–यी सबै मिथ्या हुन्–यो विचार गरेर सबै भोगबाट उपरत भए ॥३३॥ हे राजन् ! विदर्भराजका तीन कन्याहरू राजा भरतका मनपरेका पत्नीहरू

नापरे नृपाः ॥ नैवापुर्नैव प्राप्स्यन्ति बाहुभ्यां त्रिदिवं यथा ॥ २९ ॥ किरातहूणान् यवनानान्ध्रान्कङ्कान्खशाञ्छकान् ॥ अब्रह्मण्यान्नृपांश्चाहन्म्लेच्छान्दिग्विजयेऽखिलान् ॥ ३० ॥ जित्वा पुरा सुरा देवान् ये रसौकांसि भेजिरे ॥ देवस्त्रियो रसां नीताः प्राणिभिः पुनराहरत् ॥ ३१ ॥ सर्वकामान्दुदुहतुः प्रजानां तस्य रोदसी ॥ समास्त्रिणवसाहस्रीर्दिक्षु चक्रमवर्तयत् ॥ ३२ ॥ स सम्राट् लोकपालाख्यमैश्वर्यमधिराट् श्रियम् ॥ चक्रं चास्खलितं प्राणान्मृषेत्युपरराम ह ॥ ३३ ॥ तस्यासन्नृप वैदर्भ्यः पत्न्यस्तिस्रः सुसम्मताः ॥ जघ्नुस्त्यागभयात्पुत्रान्नानुरूपा इतीरिते ॥ ३४ ॥ तस्यैवं वितथे वंशे तदर्थं यजतः सुतम् ॥ मरुत्स्तोमेन मरुतो भरद्वाजमुपाददुः ॥ ३५ ॥ अन्तर्वत्न्यां भ्रातृपत्न्यां मैथुनाय बृहस्पतिः ॥ प्रवृत्तो वारितो गर्भं शप्त्वा वीर्यमवासृजत् ॥ ३६ ॥ तां त्यक्तुकामां ममतां भर्तृत्यागविशङ्किताम् ॥ नामनिर्वचनं तस्य श्लोकमेनं सुरा जगुः ॥ ३७ ॥

थिए । तिनले आफ्ना छोराहरूलाई मेरो अनुरूप अर्थात् मेरा छोरा कहिने योग्य छैनन् भनेर त्यागिदिन्छन् भन्ने ठानी, राजाको डरले तिनीहरूलाई–छोराहरूलाई–मारिदिए ॥३४॥ यसरी वंश वितथ अर्थात् व्यर्थ भएपछि उनले सन्तानको निम्ति मरुत्स्तोम नामको यज्ञ गरे । अनि मरुद्गणले 'भरद्वाज' नामका पुत्र ल्याएर दिए ॥३५॥ उनको उत्पत्तिको कथा यस प्रकार छ–एक दिन बृहस्पति आफ्नो भाइ (उतथ्य) की गर्भिणी पत्नीसित मैथुन गर्न उद्यत भए । अनि गर्भस्थ बालक ( दीर्घतमा ) ले रोकेपछि उनले त्यसलाई अन्धो हुने श्राप दिए र वीर्य-पात गरिदिए ॥३६॥ अब 'पतिले मलाई त्यागिदिन्छन्' भन्ने डरले बृहस्पतिको वीर्यबाट उत्पन्न बालकलाई त्याग्न इच्छुक ममतासित देवताहरूले उसको नामको निर्णय गर्ने

---

क्ष दृष्टान्त ( धर्मशाला वा महल )–थोरा टूला विरक्त साधु थिए । ती डुल्दै कुनै नगरमा पुगे । थोरा टूलो घरलाई धर्मशाला ठानेर ती त्यहीं गएर बसे । त्यसै बखत सिपाही आइपुगे र साधुलाई हप्काएर भने–'यो राजमहलमा किन पसेको ?' साधुले भने–'मैले यसलाई धर्मशाला ठानेको थिएँ ।' त्यति भनेर सिपाही रिसायो र के मनमा आयो त्यो जाती नजतिसुनायो । यस्ता पापपछि मनुष्य यस्तो अहङ्कारी हुन्छ भन्ने कुरा सर्वविदित छ । सूर्यका किरण जति तातो हुँदैनन्, त्यो भन्दा यस्तो बालुवा तातो हुन्छ । सिपाही जब गाली गरिरहेको थियो, राजा पनि संयोगले त्यहीं आइपुगे । राजाले साधुतिर हेरेर भने –महाराज ! तपाईं चिनिरहनु भएको छ धर्मशाला पल्लोतिर छ । यो त राजमहल हो ।' साधुले भने—'राजन ! यी सबै घर धर्मशाला नै हुन् र यसमा बस्ने जति सबै यात्री हुन् यहाँ कोही पनि अमर छैन । म त यसलाई पनि धर्मशाला नै ठान्दछु, किनकि तिम्रा पूर्वज यस महलमा यात्री झैं बसेर गए । अब तिमी छौ तिमीपछि तिम्रा छोरा बस्नेछन्, साधुका कुरा सुनेर राजा प्रसन्न भयो र क्षमा माग्न लाग्यो ।

यो श्लोक भन्यो—॥३७॥ 'हे मूर्खा ! यो द्वाज अर्थात् हामी दुवैद्वारा उत्पन्न भएको छ । अतः तँ नै बृहस्पतिको पुत्र भरद्वाजलाई पालन-पोषण गर ।' यति भनेर उसका माता-पिता हिँडीदिए । यसरी त्यो बालक भरद्वाज कहियो ॥३८॥ देवताहरूले त्यसरी भन्दा पनि त्यस बालकलाई व्यभिचारजनित हुनाले वितथ अर्थात् अन्यायपूर्ण जानेर ममताले त्यागिदिइन् । अनि मरुद्गणले त्यसलाई पाले र भरतवंश उच्छिन्न हुन लागेको देखेर राजा भरतलाई दिए ॥३९॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपालीभाषाटीकायां विंशोऽध्यायः॥२०॥

(भरत वंशको विस्तार र राजा रन्तिदेवको वृत्तान्त)—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! वितथका पुत्र मन्यु भए । उनका बृहत्क्षत्र, जय, महावीर्य, नर तथा गर्ग नामका पाँच छोरा उत्पन्न भए । तीमध्ये नरका पुत्र संस्कृति थिए ॥१॥ हे पाण्डुनन्दन ! संस्कृतिबाट गुरु त"। रन्तिदेवको जन्म भयो । जसमा रन्तिदेवको यश यस लोक र परलोक दुवैमा आज पनि गान गरिन्छ ॥२॥ निरुद्योगी, प्रारब्धको अधीन भएर बस्ने, प्राप्त पदार्थको दान गरेर दिने भएका, वर्ता भोका, अकिञ्चन, धैर्यशाली र अत्यन्त दुःखी कुटुम्ब हुने रन्तिदेवलाई

मूढे भर द्वाजमिमं भरद्वाजं बृहस्पतेः ॥ यातौ यदुक्त्वा पितरौ भरद्वाजस्ततस्त्वयम् ॥ ३८ ॥ चोद्यमाना सुरैरेवं मत्वा वितथमात्मजम् ॥ व्यसृजन्मरुतोऽबिभ्रन्दत्तोऽयं वितथेऽन्वये ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे विंशोऽध्यायः ॥ २० ॥

श्रीशुक उवाच ॥ वितथस्य सुतो मन्युर्बृहत्क्षत्रो जयस्ततः ॥ महावीर्यो नरो गर्गः संकृतिस्तु नरात्मजः ॥१॥ गुरुश्च रन्तिदेवश्च संकृतेः पाण्डुनन्दन ॥ रन्तिदेवस्य हि यश इहामुत्र च गीयते ॥२॥ वियद्वित्तस्य ददतो लब्धं लब्धं बुभुक्षतः ॥ निष्किञ्चनस्य धीरस्य सकुटुम्बस्य सीदतः ॥ ३ ॥ व्यतीयुरष्टचत्वारिंशदहान्यपिबतः किल ॥ घृतपायससंयावं तोयं प्रातरुपस्थितम् ॥४॥ कृच्छ्रप्राप्तकुटुम्बस्य क्षुत्तृड्भ्यां जातवेपथोः ॥ अतिथिर्ब्राह्मणः काले भोक्तुकामस्य चागमत् ॥५॥ तस्मै संव्यभजत्सोऽन्नमादृत्य श्रद्धयाऽन्वितः ॥ हरिं सर्वत्र सम्पश्यन्स भुक्त्वा प्रययौ द्विजः ॥ ६ ॥ अथान्यो भोक्ष्यमाणस्य विभक्तस्य महीपते ॥ विभक्तं व्यभजत्तस्मै वृषलाय हरिं स्मरन् ॥७॥ याते शूद्रे तमन्योऽगादतिथिः श्वभिरावृतः ॥ राजन्मे दीयतामन्नं सगणाय बुभुक्षते ॥ ८ ॥ स आदृत्यावशिष्टं यद्बहुमानपुरस्कृतम् ॥ तच्च दत्त्वा नमश्चक्रे श्वभ्यः श्वपतये विभुः ॥ ९ ॥ पानीयमात्रमुच्छेषं

एक्फस्ट पानी पनि नपिएर अठचालीस दिन बिते । उनञ्चासौं दिन बिहानै कतैबाट अलिकति घिउ, खीर र लप्सी तथा जल प्राप्त भयो ॥ ३ ॥ ४ ॥ यस प्रकार अत्यन्त संकटग्रस्त कुटुम्ब भएका र भोक-प्यासले कामिरहेका थिए, ती राजा रन्तिदेव जसै भोजन गर्न तयार परे, अकस्मात् यौटा पाहुना ब्राह्मण आइपुगे ॥ ५ ॥ अनि सर्वत्र भगवान्लाई विराजमान ठानेर उनले निकै आदर र श्रद्धापूर्वक त्यस अन्नबाट अलिकति उनलाई दिए । त्यो खाएर ब्राह्मण आफ्नो बाटो लागे ॥६॥ हे महीपते ! ती हिँडिसकेपछि शेष अन्न जब ती परस्पर बाँडेर खान बसे, तब यौटा शूद्र अतिथि आइपुग्यो । अनि उनले भगवान्को स्मरण गर्दै त्यो अवशिष्ट अन्नबाट केही भाग त्यस शूद्रलाई पनि दिए ॥७॥ शूद्र हिँडेपछि कुकुरहरू सहित यौटा अर्को पाहुना आयो र भन्न लाग्यो—'हे राजन् ! म सार्है भोको छु, कृपया हजुर मेरा गणसहित मलाई पनि अन्न प्रदान गर्नुहवस्' ॥ ८ ॥ अनि राजा रन्तिदेवले ठूलो आदर र सम्मानसहित शेष अन्न पनि उनलाई दिएर कुकुर तथा उनका स्वामीलाई पनि प्रणाम गरे ॥९॥ अन्त्यमा केवल जलमात्र बाँकी रह्यो

र त्यो पनि एक प्राणीलाई मात्र तृप्त पार्ने जति थियो, अनि त्यही बाँडेर पिउन तयार भएर उही बखत मोटा चाण्डाल आइपुग्यो र भन्नलाग्यो—'यो जल म नीचलाई पिलाइदिनोस्' ॥१०॥ त्यसको चर्काइपूर्ण दीन वचन सुनेर राजाले करुणावश अतिशय सन्तप्त भएर अमृतमा मुछिए झैं वचन बोले–॥११॥ म भगवान्को अष्टैश्वर्ययुक्त परमगति माग्दिन र मलाई मोक्ष पनि चाहिन्न । म त सबै देहधारीहरूको हृदयमा बसेर तिनको कष्ट स्वयं सहन चाहन्छु, जसले तिनको कष्ट निवारण होस् ॥१२॥ अहो ! यसरी बाँच्ने इच्छा भएका दीन प्राणीलाई जीवनरूपी जल दिएपछि मेरो भोक, प्यास, श्रम, देहको शिथिलता, दीनता, ग्लानि, शोक, विषाद र मोह निवृत्त भएका छन्'॥१३॥ हे राजन् ! यति भनेर स्वयं पानीको इच्छा भए पनि स्वभावतः कारुणिक र धैर्यशाली राजा रन्तिदेवले त्यो जल चाण्डाललाई खानदिए ॥ १४ ॥ महाराज रन्तिदेवको धैर्यको परीक्षा लिइसकेपछि भगवान्को मायाले ब्राह्मण तथा शूद्रादिको रूप लुकाएर फलका इच्छुकहरूलाई सबै थरिका फलदाता त्रिलोकेश्वर ब्रह्मा, विष्णु तथा महादेवले उनलाई प्रत्यक्ष दर्शन दिए ॥१५॥ किन्तु ती निःसङ्ग

तच्चैकपरितर्पणम् ॥ पास्यतः पुल्कसोऽभ्यागादपो देह्यशुभस्यमे ॥ १० ॥ तस्य तां करुणां वाचं निशम्य विपुलश्रमाम् ॥ कृपया भृशसन्तप्त इदमाहामृतं वचः ॥ ११ ॥ न कामयेऽहं गतिमीश्वरात्परामष्टर्द्धियुक्तामपुनर्भवं वा ॥ आर्तिं प्रपद्येऽखिलदेहभाजामन्तःस्थितो येन भवन्त्यदुःखाः ॥१२॥ क्षुत्तृट्श्रमो गात्रपरिश्रमश्च दैन्यं क्लमः शोकविषादमोहाः ॥ सर्वे निवृत्ताः कृपणस्य जन्तोर्जिजीविषोर्जीवजलार्पणान्मे ॥ १३ ॥ इति प्रभाष्य पानीयं म्रियमाणः पिपासया ॥ पुल्कसायाददाद्धीरो निसर्गकरुणो नृपः ॥ १४ ॥ तस्य त्रिभुवनाधीशाः फलदाः फलमिच्छताम् ॥ आत्मानं दर्शयाञ्चक्रुर्माया विष्णुविनिर्मिताः ॥ १५ ॥ स वै तेभ्यो नमस्कृत्य निःसङ्गो विगतस्पृहः ॥ वासुदेवे भगवति भक्त्या चक्रे मनः परम् ॥ १६ ॥ ईश्वरालम्बनं चित्तं कुर्वतोऽनन्यराधसः ॥ माया गुणमयी राजन्स्वप्नवत्प्रत्यलीयत ॥ १७ ॥ तत्प्रसङ्गानुभावेन रन्तिदेवानुवर्तिनः ॥ अभवन् योगिनः सर्वे नारायणपरायणाः ॥ १८ ॥ गर्गाच्छिनिस्ततो गार्ग्यः क्षत्राद्ब्रह्म ह्यवर्तत ॥ दुरितक्षयो महावीर्यात्तस्य त्रय्यारुणिः कविः ॥ १९ ॥ पुष्करारुणिरित्यत्र ये ब्राह्मणगतिं गताः ॥ बृहत्क्षत्रस्य पुत्रोऽभूद्धस्ती यद्धस्तिनापुरम् ॥ २० ॥ अजमीढो द्विमीढश्च पुरुमीढश्च हस्तिनः ॥ अजमीढस्य वंश्याः स्युः प्रियमेधादयो द्विजाः ॥ २१ ॥ अजमीढाद्बृहदिषुस्तस्य पुत्रो बृहद्धनुः ॥ बृहत्कायस्ततस्तस्य पुत्र आसीज्जयद्रथः

एव निरीह राजा रन्तिदेवले उनलाई नमस्कार गरेर भगवान् वासुदेवमा बलियो भक्तिले आफ्नो मन लगाए—उनीसित केही पनि मागेनन् ॥१६॥ हे राजन् ! यसरी ईश्वर बाहेक कुनै अन्य फलको इच्छा नगरेर चित्तलाई अनन्यभावले उनैमा लगाइदिनाले राजा रन्तिदेवको त्रिगुणमयी माया स्वप्नजस्तै विलीन भयो र ती जीवनमुक्त भए ॥ ७॥ यसले राजा रन्तिदेवका सबै अनुयायी पनि तिनको संगतिको प्रभावले योगी एवं नारायण-परायण भए ॥१८॥ मन्युका छोरा गर्गबाट शिनिको जन्म भयो । तीबाट गार्ग्य उत्पन्न भए, जो क्षत्रिय भएर पनि उनीद्वारा ब्राह्मणहरूको उत्पत्ति भएको थियो । महावीर्यबाट दुरितक्षय नामक पुत्र जन्मिए । तिनका त्रय्यारुणि, कवि र पुष्करारुणि—यी तीन छोरा उत्पन्न भएर ब्राह्मण बने । बृहत्क्षत्रका छोरा हस्ती भए, जसबाट हस्तिनापुरी बसेको थियो ॥१९॥२०॥ हस्तीका पुत्र अजमीढ, द्विमीढ र पुरुमीढ भए । तीमध्ये अजमीढका वंशज प्रियमेधादि ब्राह्मण भए

॥२१॥ ती अजमीढबाट नै बृहदिषु उत्पन्न भए। तिनका छोरा बृहद्धनु, बृहद्धनुबाट बृहत्काय र उनका जयद्रथ भए ॥ २२ ॥ उनका पुत्र विशद र विशदका छोरा सेनजित् भए। रुचिराश्व, दृढहनु, काश्य तथा वत्स–यी सेनजित्का छोरा थिए ॥२३॥ तीमध्ये रुचिराश्वका पुत्र पार र तिनका छोरा पृथुसेन भए। पारका अर्का छोरा नीप थिए, नीपका सय पुत्र भए ॥२४॥ ती नीपद्वारा नै *शुकदेवकी कृत्वी नामकी कन्याबाट ब्रह्मदत्त उत्पन्न भए। ब्रह्मदत्त योगीश्वर थिए। उनले आफ्नी पत्नी सरस्वतीका गर्भबाट विष्वक्सेन नामका पुत्र उत्पन्न तिनैले महर्षि जैगीषव्यका उपदेशले योगशास्त्रको रचना गरे। उनका पुत्र उदक्स्वन भए र तीबाट भल्लादको जन्म भयो। ये सबै बृहदिषुका वंशज कहिएका छन् ॥२६॥ द्विमीढका छोरा यवीनर र यवीनरका कृतिमान् कहिए। उनका सत्य धृति तथा सत्यधृतिका छोरा दृढनेमि भए, जसले सुपार्श्वलाई उत्पन्न गरे ॥ २७ ॥ सुपार्श्वबाट सुमति भए। उनका

॥२२॥ तत्सुतो विशदस्तस्य सेनजित्समजायत ॥ रुचिराश्वो दृढहनुः काश्यो वत्सश्च तत्सुताः ॥२३॥ रुचिराश्वसुतः पारः पृथुसेनस्तदात्मजः ॥ पारस्य तनयो नीपस्तस्य पुत्रशतं त्वभूत् ॥२४॥ स कृत्व्यां शुककन्यायां ब्रह्मदत्तमजीजनत् ॥ स योगी गवि भार्यायां विष्वक्सेनमधात्सुतम् ॥२५॥ जैगीषव्योपदेशेन योगतन्त्रं चकार ह ॥ उदक्स्वनस्ततस्तस्माद्भल्लादो बार्हदीषवः ॥ २६ ॥ यवीनरो द्विमीढस्य कृतिमांस्तत्सुतः स्मृतः ॥ नाम्ना सत्यधृतिर्यस्य दृढनेमिः सुपार्श्वकृत् ॥ २७ ॥ सुपार्श्वात्सुमतिस्तस्य पुत्रः सन्नतिमांस्ततः ॥ कृतिर्हिरण्यनाभाद्यो योगं प्राप्य जगौ स्म षट् ॥ २८ ॥ संहिताः प्राच्यसाम्नां वै नीपो ह्युग्रायुधस्ततः ॥ तस्य क्षेम्यः सुवीरोऽथ सुवीरस्य रिपुञ्जयः ॥ २९ ॥ ततो बहुरथो नाम पुरुमीढोऽप्रजोऽभवत् ॥ नलिन्यामजमीढस्य नीलः शान्तिः सुतस्ततः ॥ ३० ॥ शान्तेः सुशान्तिस्तत्पुत्रः पुरुजोऽर्कस्ततोऽभवत् ॥ भर्म्याश्वस्तनयस्तस्य पञ्चासन्मुद्गलादयः ॥ ३१ ॥ यवीनरो बृहदिषुः काम्पिल्यः संजयः सुताः ॥ भर्म्याश्वः प्राह पुत्रा मे पञ्चानां रक्षणाय हि ॥ ३२ ॥ विषयाणामलमिमे इति पञ्चालसंज्ञिताः ॥ मुद्गलाद्ब्रह्म निर्वृत्तं गोत्रं मौद्गल्यसंज्ञितम् ॥३३॥ मिथुनं मुद्गलाद्भार्म्याद्दिवोदासः पुमानभूत् ॥ अहल्या कन्यका यस्यां शतानन्दस्तु

छोरा सन्नतिमान् थिए। तीबाट कृतिको जन्म भयो। उनले हिरण्यनाभसित योगविद्या प्राप्त गरेर प्राच्य साम ऋचाहरूका छ संहिताहरू रचे। उनका पुत्र नीपका उग्रायुध, तीबाट क्षेम्य, क्षेम्यका सुवीर र सुवीरका रिपुञ्जय पुत्र जन्मे ॥२८-२९॥ रिपुञ्जयबाट बहुरथ नामक पुत्र जन्मे। द्विमीढका भाइ पुरुमीढ निःसन्तान थिए। अजमीढकी पत्नी नलिनीबाट नील र नीलबाट शान्ति नामक छोरा भयो ॥३०॥ शान्तिबाट सुशान्ति, उनीबाट पुरुज, पुरुजका अर्क, अर्कका भर्म्याश्व तथा भर्म्याश्वका मुद्गल आदि पाँच पुत्र जन्मे ॥३१॥ ती पाँचको नाम मुद्गल, यवीनर, बृहदिषु काम्पिल्य र सञ्जय थियो। भर्म्याश्वले भने–'मेरा यी पाँच पुत्र पाँच देशको शासन गर्न समर्थ छन्। पहिले तिनको नाम पाञ्चाल पनि छ।' तीमध्ये मुद्गलद्वारा मौद्गल्य नामका ब्राह्मण गोत्रको उत्पत्ति भयो ॥ ३२-३३ ॥ भर्म्याश्वका छोरा मुद्गलबाट दिवोदास नामका पुत्र र अहिल्या नामकी

* कथान्तर—श्री शुकदेव त जन्मदेखि नै अवधूत थिए, तापनि उनले वन जाने बेलामा आफ्ना पिता व्यासजीलाई विरहाकुल भएको देखेर आफ्नो प्रतिच्छवि छाडेका थिए। ती छाया शुकले नै सबै गृहस्थोचित व्यवहार सम्पन्न गरेका थिए र आफ्नी छोरी कृत्वीलाई उत्पन्न गरेका थिए।

कन्या—यी जम्ल्याहा सन्तान भए। तीमध्ये अहिल्याबाट गौतमद्वारा शतानन्द जन्मे ॥३४॥ उनका पुत्र सत्यधृति धनुर्विद्यामा निपुण थिए। तीबाट शरद्वान् जन्मिए, यस्तो भनिन्छ—एकपल्ट उर्वशीलाई देखेर कुशको झाडीमा शरद्वानको वीर्यपात भयो। त्यसबाट यौटा शुभ लक्षणले युक्त पुत्र-पुत्री उत्पन्न भए। तिनलाई देखेर शिकार खेल्न वनमा गएका राजा शन्तनुले कृपा गरेर घर ल्याए र छोराको नाम कृपाचार्य, छोरीको कृपि भयो जो द्रोणकी पत्नी थिइन् ॥३५-३६॥ इति श्रीमद्भागवते नवमस्कन्धे भाषाटीकायामेकविंशोऽध्यायः ॥२१॥

( पाञ्चाल, कौरव र मगधवंशीय राजाहरूको वृत्तान्त ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! दिवोदासका छोरा मित्रेयु भए। तिनका च्यवन, सुदास, सहदेव र जन्तुका पिता सोमक उत्पन्न भए। सोमकका सय पुत्र थिए। तिनमा जन्तु सबभन्दा जेठा थिए र पृषत् सबैमा कान्छा। पृषत्‌का छोरा द्रुपद भए। तीबाट द्रौपदी नामकी कन्या र धृष्टद्युम्न आदि अनेक छोरा जन्मिए ॥ १। २ ॥ धृष्टद्युम्नका धृष्टकेतु जन्मे। भर्म्याश्वका वंशज सबै राजा 'पाञ्चाल' कहिन्थे। अजमीढका ऋक्षनामका अर्का छोराबाट संवरण उत्पन्न

गौतमात् ॥३४॥ तस्य सत्यधृतिः पुत्रो धनुर्वेदविशारदः ॥ शरद्वाँस्तत्सुतो यस्मादुर्वशीदर्शनात्किल ॥३५॥ शरस्तम्बेऽपतद्रेतो मिथुनं तदभूच्छुभम्॥ तद्दृष्ट्वा कृपयाऽगृह्णाच्छन्तनुर्मृगयां चरन् ॥ कृपः कुमारः कन्या च द्रोणपत्न्य भवत्कृपी॥३६॥ इति श्रीमद्भागवते नवमस्कन्धे एकविंशोऽध्यायः ॥२१॥

श्रीशुक उवाच ॥ मित्रेयुश्च दिवोदासाच्च्यवनस्तत्सुतो नृप ॥ सुदासः सहदेवोऽथ सोमको जन्तुजन्मकृत् ॥ १ ॥ तस्य पुत्रशतं तेषां यवीयान्पृषतः सुतः ॥ द्रुपदो द्रौपदी तस्य धृष्टद्युम्नादयः सुताः ॥ २ ॥ धृष्टद्युम्नाद्धृष्टकेतुर्भार्म्याः पाञ्चालका इमे ॥ योऽजमीढसुतो ह्यस्य ऋक्षः संवरणस्ततः ॥ ३ ॥ तपत्यां सूर्यकन्यायां कुरुक्षेत्रपतिः कुरुः ॥ परीक्षित्सुधनुर्जह्नुनिषधाश्वः कुरोः सुताः ॥ ४ ॥ सुहोत्रोऽभूत्सुधनुषश्च्यवनोऽथ ततः कृती ॥ वसुस्तस्योपरिचरो बृहद्रथमुखास्ततः ॥ ५ ॥ कुशाम्बमत्स्यप्रत्यग्रचेदिपाद्याश्च चेदिपाः ॥ बृहद्रथात्कुशाग्रोऽभूदृषभस्तस्य तत्सुतः ॥ ६ ॥ जज्ञे सत्यहितोऽपत्यं पुष्पवांस्तत्सुतो जहुः ॥ अन्यस्यां चापि भार्यायां शकले द्वे बृहद्रथात् ॥ ७ ॥ ते मात्रा बहिरुत्सृष्टे जरया चाभिसन्धिते ॥ जीव जीवेति क्रीडन्त्या जरासन्धोऽभवत्सुतः ॥ ८ ॥ ततश्च सहदेवोऽभूत्सोमापिर्यच्छ्रुतश्रवाः ॥ परीक्षिदनपत्योऽभूत्सुरथो नाम जाह्नवः ॥ ९ ॥ ततो विदूरथस्तस्मात्सार्वभौमस्ततोऽभवत् ॥ जयसेनस्तत्तनयो राधिकोऽतोऽ-

भए ॥३॥ उनीद्वारा सूर्यकी कन्या तपतीको गर्भबाट कुरुक्षेत्रका अधिपति कुरुको जन्म भयो। कुरुका परीक्षित, जन्हु र निषधाश्व नामका तीन पुत्र जन्मिए ॥ ४ ॥ तिनमा सुधनुका सुहोत्र उनका च्यवन, च्यवनका कृति, कृतिका वसु, वसुका उपरिचर र बृहद्रथ आदि छोरा जन्मे ॥५॥ यी चेदिनरेश बृहद्रथ, कुशाम्ब, मत्स्य, प्रत्यग्र र चेदिय नामले प्रख्यात भए। तिनमा बृहद्रथबाट कुशाग्र, तिनका ऋषभ, ऋषभका सत्यहित, सत्यहितका पुष्पवान्, पुष्पवानका जन्हु भए। बृहद्रथकी अर्की पत्नीबाट उत्पन्न बालकको शरीर दुई टुक्रा भएको थियो ॥ ६-७ ॥ तिनलाई आमाले बाहिर फ्याँकिदिएकी थिइन् अनि जरा नामकी राक्षसीले ती दुवै टुक्रालाई 'जीवित होओ' भन्नाभन्दै ख्याल-ख्यालमै जोरिदिई। अनि ती जरासन्ध नामका बालक भए ॥ ८ ॥ जरासन्धका छोरा सहदेव भए। सहदेवका सोमापि र सोमापिका श्रुतश्रवा उत्पन्न भए। कुरुका निःसन्तान छोरा परीक्षित् थिए। जन्हुबाट

सुरथ नामक पुत्र भए ॥९॥ तीबाट विदूरथ, विदूरथका सार्वभौम र सार्वभौमबाट जयसेनको जन्म भयो । जयसेनका छोरा राधिक र राधिकका पुत्र अयुत भए ॥१०॥ अयुतका क्रोधन, क्रोधनका देवातिथि, देवातिथिका ऋष्य, ऋष्यका दिलीप र दिलीपका प्रतीप पुत्र जन्मिए । प्रतीपका देवापि, शान्तनु र बाह्लीक नामका तीन पुत्र उत्पन्न भए । तिनमा देवापि पिताको राज्य त्यागेर वनमा गए ॥११॥१२॥ अतएव तिनका भाइ शन्तनु राजा भए । पहिले तिनको नाम महाभिष थियो । तिनले जुनसुकै व्यक्तिलाई पनि हातले छोइ-दिनासाथ, त्यो बूढो भए पनि फेरि यौवन प्राप्त गर्दथ्यो ॥१३॥ यस्तो गर्नाले उनलाई ठूलो आनन्द प्राप्त हुन्थ्यो । यसै कर्मले नै ती 'शन्तनु' कहिएका थिए । एकपटक जब पूरा बाह्र वर्षसम्म तिनको राज्यमा पानी परेन, तब ब्राह्मणहरूले शन्तनुसित भने—'आफूभन्दा जेठो दाजुको राज्य भोग्ने राजा * परिवेत्ता हुन्छ । यसैनिम्ति तिमी आफ्नो नगर र राष्ट्र हितको निम्ति यो राज्य आफ्ना दाजुलाई फर्काई देऊ' ॥१४॥१५॥ ती ब्राह्मणहरूले त्यस्तो भनेपछि शन्तनुले आफ्ना दाजुलाई राज्य स्वीकार गर्ने आग्रह गरे, तर

यतो ह्यभूत् ॥ १० ॥ ततश्च क्रोधनस्तस्माद्देवातिथिरमुष्य च ॥ ऋष्यस्तस्य दिलीपोऽभूत्प्रतीपस्तस्य चात्मजः ॥११॥ देवापिः शन्तनुस्तस्य बाह्लीक इति चात्मजः ॥ पितृराज्यं परित्यज्य देवापिस्तु वनं गतः ॥ १२ ॥ अभवच्छन्तनू राजा प्राङ्महाभिषसंज्ञितः ॥ यं यं कराभ्यां स्पृशति जीर्णं यौवनमेति सः ॥१३॥ शान्तिमाप्नोति चैवाग्र्यां कर्मणा तेन शन्तनुः ॥ समा द्वादश तद्राज्ये न ववर्ष यदा विभुः ॥१४॥ शन्तनुर्ब्राह्मणैरुक्तः परिवेत्ताऽयमग्रभुक् ॥ राज्यं देह्यग्रजायाशु पुरराष्ट्रविवृद्धये ॥ १५ ॥ एवमुक्तो द्विजैर्ज्येष्ठं छन्दयामास सोऽब्रवीत् ॥ तन्मन्त्रिप्रहितैर्विप्रैर्वेदाद्विभ्रंशितो गिरा ॥ १६ ॥ वेदवादातिवादान्वै तदा देवो ववर्ष ह ॥ देवापिर्योगमास्थाय कलापग्राममाश्रितः ॥ १७ ॥ सोमवंशे कलौ नष्टे कृतादौ स्थापयिष्यति ॥ बाह्लिकात्सोमदत्तोऽभूद्भूरिर्भूरिश्रवास्ततः ॥ १८ ॥ शलश्च शन्तनोरासीद्गङ्गायां भीष्म आत्मवान् ॥ सर्वधर्मविदां श्रेष्ठो महाभागवतः कविः॥१९॥ वीरयूथाग्रणीर्येन रामोऽपि युधि तोषितः ॥ शन्तनोर्दाशकन्यायां जज्ञे चित्राङ्गदः सुतः ॥ २० ॥ विचित्रवीर्यश्चावरजो नाम्ना चित्राङ्गदो हतः ॥

देवापिलाई शन्तनुद्वारा पठाइएका ब्राह्मणहरूले वेदविदूषक वेदमार्गबाट भ्रष्ट पारिसकेका थिए । अतः उसले वेदको निन्दासूचक वचन भने । यस प्रकार वेदविरोधी हुनाले देवापिलाई राज्यको अधिकार नहुनाले पानी पर्नलाग्यो । आज पनि देवापि योगसाधनमा लागेर कलाप ग्राममा छन् ॥१६॥१७॥ कलियुगमा जब चन्द्रवंशको अन्त्य हुनेछ, तब ती सत्ययुगको आरम्भमा त्यसलाई फेरि स्थापित गर्ने छन् । कान्छोभाइ शन्तनुका बाह्लीक, उनका सोमदत्त जन्मिए । तिनका भूरि, भूरिश्रवा र शल नामका तीन छोरा उत्पन्न भए । शन्तनुको गङ्गा नामकी पत्नीबाट परम आत्मवान् भीष्मको जन्म भयो । जो सबै धर्मवानहरूमा श्रेष्ठ, असाधारण भगवद्भक्त, आत्मज्ञ एवं वीरसमूहका अगुवा, नाइके थिए । उनले युद्धमा आफ्ना गुरु श्रीपरशुरामलाई पनि प्रसन्न पारेका थिए । राजा शन्तनुको दाशकी छोरीबाट चित्राङ्गद नामक पुत्र उत्पन्न भए ॥ १८-२० ॥ तिनका भाइको नाम

* टिप्पणी—दाराग्निहोत्रसंयोगं कुरुते योऽग्रजे स्थिते । परिवेत्ता स विज्ञेयः परिवित्तिस्तु पूर्वजः ॥ जो पुरुष आफ्ना जेठा दाजु छँदाछँदै पनि पहिले आफ्नो विवाह गरेर अग्निहोत्र ग्रहण गर्दछ, उसलाई 'परिवेत्ता' र जेठा दाजु 'परिवित्ति' कहिन्छ ।

विचित्रवीर्य थिए । युद्धमा चित्राङ्गदको चित्राङ्गद नामकै गाँठा गन्धर्वद्वारा वध भयो । दाश-कन्या सत्यवतीबाट साक्षात् श्रीहरिको अंशस्वरूप र वेदहरूका रक्षक महर्षि कृष्ण-द्वैपायन व्यासले अवतार लिए । जोसित मैले श्रीमद्भागवत अध्ययन गरें । ती भगवान् बादरायणले यो परम गुह्य संहिता आफ्ना पैल आदि शिष्यहरूलाई नपढाएर म शान्त-स्वभाव पुत्रलाई नै पढाएका थिए । विचित्रवीर्यले स्वयंवरमा बलपूर्वक हरेर ल्याइएकी काशिराजकी अम्बिका र अम्बालिका नामका दुइ कन्यासित विवाह गरेका थिए। तिनमा बढ्ता आसक्त रहनाले क्षयरोग लागेर मरे ॥२१-२४॥ त्यसपछि माता सत्यवतीको वचनानुसार महर्षि बादरायण व्यासले आफ्ना सन्तानहीन भाइका स्त्रीबाट धृतराष्ट्र, पाण्डु र विदुर नामका तीन छोरा जन्माए ॥२५॥ हे राजन् ! धृतराष्ट्रद्वारा आफ्नी पत्नी गान्धारीको गर्भबाट सय पुत्र जन्मिए । ती सबैमा जेठा दुर्योधन थिए । योबाहेक धृतराष्ट्रकी दुःशला नामकी यौटी छोरी पनि थिइन । पाण्डु पूर्वकालमा शापवश मैथुनधर्मबाट रोकिएका थिए । अतः उनकी पत्नी कुन्तीबाट धर्म, वायु र इन्द्रद्वारा क्रमशः युधिष्ठिर, अर्जुन र

यस्यां पराशरात्साक्षादवतीर्णो हरेः कला ॥ २१ ॥ वेदगुप्तो मुनिः कृष्णो यतोऽहमिदमध्यगाम् ॥ हित्वा स्वशिष्यान्पैलादीन्भगवान्बादरायणः ॥ २२ ॥ मह्यं पुत्राय शान्ताय परं गुह्यमिदं जगौ ॥ विचित्रवीर्योऽथोवाह काशिराजसुते बलात् ॥ २३ ॥ स्वयंवरादुपानीते अम्बिकाऽम्बालिके उभे ॥ तयोरासक्तहृदयो गृहीतो यक्ष्मणा मृतः ॥ २४ ॥ क्षेत्रेऽप्रजस्य वै भ्रातुर्मात्रोक्तो बादरायणः ॥ धृतराष्ट्रं च पाण्डुं च विदुरं चाप्यजीजनत् ॥ २५ ॥ गान्धार्यां धृतराष्ट्रस्य जज्ञे पुत्रशतं नृप ॥ तत्र दुर्योधनो ज्येष्ठो दुःशला चापि कन्यका ॥ २६ ॥ शापान्मैथुनरुद्धस्य पाण्डोः कुन्त्यां महारथाः ॥ जाता धर्मानिलेन्द्रेभ्यो युधिष्ठिरमुखास्त्रयः ॥ २७ ॥ नकुलः सहदेवश्च माद्र्यां नासत्यदस्रयोः ॥ द्रौपद्यां पञ्च पञ्चभ्यः पुत्रास्ते पितरोऽभवन् ॥ २८ ॥ युधिष्ठिरात्प्रतिविन्ध्यः श्रुतसेनो वृकोदरात् ॥ अर्जुनाच्छ्रुतकीर्तिस्तु शतानीकस्तु नाकुलिः ॥ २९ ॥ सहदेवसुतो राजञ्छ्रुतकर्मा तथापरे ॥ युधिष्ठिरात्तु पौरव्यां देवकोऽथ घटोत्कचः ॥ ३० ॥ भीमसेनाद्धिडिम्बायां काल्यां सर्वगतस्ततः ॥ सहदेवात्सुहोत्रं तु विजयाऽसूत पार्वती ॥ ३१ ॥ करेणुमत्यां नकुलो निरमित्रं तथार्जुनः ॥ इरावन्तमुलूप्यां वै सुतायां बभ्रुवाहनम् ॥ मणिपूरपतेः सोऽपि तत्पुत्रः पुत्रिकासुतः ॥ ३२ ॥ तव तातः सुभद्रायामभिमन्युरजायत ॥ सर्वातिरथजिद्वीर उत्तरायां ततो भवान् ॥ ३३ ॥ परिक्षीणेषु कुरुषु द्रौणेर्ब्रह्मा-

भीम तीन महारथी छोरा जन्मिए ॥२६॥२७॥ माद्रीबाट दुवै अश्विनीकुमारद्वारा नकुल र सहदेव जन्मे । ती पाँचद्वारा द्रौपदीका तिम्रा पितृव्य पाँच पुत्र जन्मे ॥२८॥ हे राजन् ! युधिष्ठिरका प्रतिविन्ध्य, भीमसेनका श्रुतसेन, अर्जुनका श्रुतकीर्ति, नकुलका शतानीक र सहदेवका श्रुतकर्मा नामक पुत्र जन्मिए । यो बाहेक युधिष्ठिरकी पौरवी नामकी स्त्रीबाट देवक, भीमसेनका हिडिम्बाबाट घटोत्कच र कालीबाट सर्वगत, सहदेवकी स्त्री विजयाबाट सुहोत्र, नकुलकी रेणुमतिबाट निरमित्र र अर्जुनकी नागकन्या उलूपीबाट इरावन र पुत्रिका धर्मले विवाह गरिएकी मणिपुर नरेशकी कन्याबाट बभ्रुवाहन नामका पुत्र भए, जो अर्जुनका छोरा भएर पनि मातामहका छोरा कहिए ॥२९-३२॥ अर्जुनकी सुभद्रा पत्नीबाट तिम्रा पिता अभिमन्यु जन्मिए, जो सबै महारथीहरूका विजेता वीर थिए । अभिमन्यु द्वारा उत्तराको गर्भबाट तिमी जन्मियौ ॥ ३३ ॥ हे राजन् ! कौरवहरू नष्ट भइसकेपछि अब

तिमी अश्वत्थामाको ब्रह्मास्त्रजनित तेजले डढ्न लागेका थियौ , तब भगवान् कृष्णको प्रभावले मृत्युबाट जोगियौ ।।३४।। हे तात ! यी पराक्रमी जनमेजय, श्रुतसेन भीमसेन र उग्रसेन तिम्रा छोरा हुन् ।।३५।। तिम्रो पुत्र जनमेजय तिमीलाई तक्षकले टोकेर मरेका भन्ने सुनेर साह्रै रिसाई अनेक सर्पलाई सर्पयज्ञको अग्निमा हवन गरिदिनेछन् ।। ३६ ।। यी बालक अश्वमेध यज्ञ गर्नेछन् र कावषेय गोत्रमा उत्पन्न तुर नामक ऋषिलाई पुरोहित बनाई तथा पृथ्वीलाई सबैतिरबाट जितेर यज्ञद्वारा नारायणको पूजन गर्नेछन् । जनमेजयको छोरा शतानीक याज्ञवल्क्य ऋषिसित वेदत्रयी र कर्मकाण्ड पढेर कृपाचार्यसित अस्त्र विद्या सिक्ने छन् र शौनकजीकहाँ गएर आत्मज्ञान प्राप्त गर्नेछन् । शतानीकका छोरा सहस्रानीक, तिनका अश्वमेधज, उनका असीमकृष्ण, असीमकृष्णको छोरा नेमिचक्र हुनन् ।।३७-३९।। हस्तिनापुर गङ्गामा प्रवाहित भएपछि ती कौशाम्बी नगरीमा गएर सुखपूर्वक बस्नेछन् । तिनका छोरा चित्ररथ र चित्ररथका कविरथ हुनन् ।।४०।। तीबाट वृष्टिमानका पृथ्वीपति र, पृथ्वीपतिका सुषेण, उनका सुनीथ, सुनीथका नृचक्षु र उनका छोरा सुखीनल हुनन् । सुखी-

स्त्रतेजसा ।। त्वं च कृष्णानुभावेन सजीवो मोचितोऽन्तकात् ।। ३४ ।। तवेमे तनयास्तात जनमेजयपूर्वकाः ।। श्रुतसेनो भीमसेन उग्रसेनश्च वीर्यवान् ।। ३५ ।। जनमेजयस्त्वां विदित्वा तक्षकान्निधनं गतम् ।। सर्पान्वै सर्पयागाग्नौ स होष्यति रुषान्वितः ।। ३६ ।। कावषेयं पुरोधाय तुरं तुरगमेधयाट् ।। समन्तात्पृथिवीं सर्वां जित्वा यक्ष्यति चाध्वरैः ।। ३७ ।। तस्य पुत्रः शतानीको याज्ञवल्क्यात्त्रयीं पठन् ।। अस्त्रज्ञानं क्रियाज्ञानं शौनकात्परमेष्यति ।।३८।। सहस्रानीकस्तत्पुत्रस्ततश्चैवाश्वमेधजः ।। असीमकृष्णस्तस्यापि नेमिचक्रस्तु तत्सुतः ।। ३९ ।। गजाह्वये हृते नद्यां कौशाम्ब्यां साधु वत्स्यति ।। उक्तस्ततश्चित्ररथस्तस्मात्कविरथः सुतः ।।४०।। तस्माच्च वृष्टिमांस्तस्य सुषेणोऽथ महीपतिः ।। सुनीथस्तस्य भविता नृचक्षुर्यत्सुखीनलः ।।४१।। परिप्लवः सुतस्तस्मान्मेधावी सुनयात्मजः ।। नृपञ्जयस्ततो दूर्वस्तिमिस्तस्माज्जनिष्यति ।। ४२ ।। तिमेर्बृहद्रथस्तस्माच्छतानीकः सुदासजः ।। शतानीकाद्दुर्दमनस्तस्यापत्यं वहीनरः ।। ४३ ।। दण्डपाणिर्निमिस्तस्य क्षेमको भविता नृपः ।। ब्रह्मक्षत्रस्य वै प्रोक्तो वंशो देवर्षिसत्कृतः ।।४४।। क्षेमकं प्राप्य राजानं संस्थां प्राप्स्यति वै कलौ ।। अथ मागधराजानो भवितारो वदामि ते ।। ४५ ।। भविता सहदेवस्य मार्जारिर्यच्छ्रुतश्रवाः ।। ततो युतायुस्तस्यापि नरमित्रोऽथ तत्सुतः ।। ४६ ।। सुनक्षत्रः सुनक्षत्राद्बृहत्सेनोऽथ नर्मजित् ।। ततः सृतञ्जयाद्विप्रः शुचिस्तस्य भविष्यति ।।४७।।

नलका छोरा परिप्लव, उनका सुनय, तिनका मेधाव मेधावीका नपञ्जय, तिनका दूर्व, दूर्वका छोरा तिमी हुनन् ।।४१-४२।। तिमीका बृहद्रथ, उनका सुदास, सुदासका शतानीक, शतानीकका दुर्दमन, तिनका वहीनर पुत्र उत्पन्न हुनन् ।। ४३ ।। वहीनरका दण्डपाणी, दण्डपाणीका निमि, निमिका छोरा राजा क्षेमक हुनन् । यस प्रकार मैले तिमीलाई देवता र ऋषिहरूबाट सत्कृत बृहत्क्षत्रको वंश सुनाएँ ।। ४४ ।। यो वंश राजा क्षेमक भएपछि कलियुगमा समाप्त हुनेछ । अब भविष्यमा हुने मगधवंशी राजाहरूको नाम म सुनाउँछु ।। ४५ ।। जरासन्धको छोरो सहदेवबाट मार्जारि उनका श्रुतश्रवा, श्रुतश्रवाका युतायु, युतायुका नरमित्र नामका छोरा जन्मनन् ।। ४६ ।। नरमित्रका सुनक्षत्र, सुनक्षत्रका बृहत्सेन, बृहत्सेनका कर्मजित्, कर्मजित्का सृतञ्जय, सृतञ्जयका विप्र र विप्रका शुचि नामका छोरा हुनन् । शुचिका क्षेम, क्षेमका सुव्रत, सुव्रतका शम, शमका द्युमत्सेन

द्युमत्सेनका सुमति र सुमतिका सुबल पुत्र हुनेछन् ॥ ४७-४८ ॥ सुबलका छोरा सुनीथ, सुनीथका सत्यजित्, सत्यजित्का विश्वजित् एवं विश्वजित्का रिपुञ्जय नामक पुत्र होलान् । यी बृहद्रथ वंशका सबै राजा एक हजार वर्षको भित्र उत्पन्न हुनेछन् ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे 'वासिष्ठी' भाषाटीकायां द्वाविंशोऽध्यायः ॥ २२ ॥

( अनु, द्रुह्यु, तुर्वसु र यदुको वंश वृत्तान्त ) श्रीशुकदेव भन्नु हुन्छ—हे राजन् ! राजा ययातिका छोरा अनुका सभानर, चक्षु र परोक्ष तीन पुत्र उत्पन्न भए । सभानरका कालनर, कालनरका सृञ्जय पुत्र भए । सृञ्जयका जनमेजय, उनका महाशक्ति, महाशक्तिका महामना र महामनाका उशीनर एवं तितिक्षु नामका दुइ पुत्र जन्मिए ॥ १-२ ॥ शिबि, वन, शमी, तथा दक्ष—यी चार उशीनरका छोरा थिए । इनका शिबिका वृषादर्भ, वृषादर्भका सुवीर, मद्र तथा कैकय नामक चार पुत्र जन्मे । उशीनरका भ्राता तितिक्षुका रुशद्रथक नामका पुत्र उत्पन्न भए । तिनका हेम, हेमका सुतपा र सुतपाका बलि नामका छोरा जन्मिए ॥ ३-४ ॥ हे राजन ! दैत्यराज बलिकी स्त्रीको गर्भबाट दीर्घतमा नामका मुनिको वीर्यले

क्षेमोऽथ सुव्रतस्तस्माद्धर्मसूत्रः शमस्ततः ॥ द्युमत्सेनोऽथ सुमतिः सुबलो जनिता ततः ॥ ४८ ॥ सुनीथः सत्यजिदथ विश्वजिद्यद्रिपुञ्जयः ॥ बार्हद्रथाश्च भूपाला भाव्याः साहस्रवत्सरम् ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे द्वाविंशोऽध्यायः ॥२२॥

श्रीशुक उवाच ॥ अनोः सभानरश्चक्षुः परोक्षश्च त्रयः सुताः ॥ सभानरात्कालनरः सृञ्जयस्तत्सुतस्ततः ॥ १ ॥ जनमेजयस्तस्य पुत्रो महाशीलो महामनः ॥ उशीनरस्तितिक्षुश्च ममामनस आत्मजौ ॥ २ ॥ शिबिर्वनः शमिर्दक्षश्चत्वारोशीनरात्मजाः ॥ वृषादर्भः सुवीरश्च मद्रः कैकय आत्मजः ॥ ३ ॥ शिबेश्चत्वार एवासंस्तितिक्षोश्च रुशद्रथः ॥ ततो हेमोऽथ सुतपा बलिः सुतपसोऽभवत् ॥ ४ ॥ अङ्गवङ्गकलिङ्गाद्याः सुह्मपुण्ड्रान्ध्रसंज्ञिताः ॥ जज्ञिरे दीर्घतमसो बलेः क्षेत्रे महीक्षितः ॥ ५ ॥ चक्रुः स्वनाम्नाविषयान्षडिमान्प्राच्यकांश्चते ॥ खनपानोऽङ्गतोजज्ञे तस्माद्दिविरथस्ततः ॥६॥ सुतो धर्मरथो यस्य जज्ञे चित्ररथोऽप्रजः ॥ रोमपाद इति ख्यातस्तस्मै दशरथः सखा ॥ ७ ॥ शान्ता स्वकन्या प्रायच्छदृष्यशृङ्ग उवाह ताम् ॥ देवेऽवर्षति यं रामा आनिन्युर्हरिणीसुतम् ॥ ८ ॥ नाट्यसङ्गीतवादित्रैर्विभ्रमालिङ्गनार्हणैः ॥ स तु राज्ञोऽनपत्यस्य निरूप्येष्टिं मरुत्वतः ॥ ९ ॥ प्रजामदाद्दशरथो येन लेभेऽप्रजः प्रजाः ॥ चतुरङ्गो रोमपादात्पृथुलाक्षस्तु तत्सुतः ॥ १० ॥ बृहद्रथो बृहत्कर्मा बृहद्भानुश्च तत्सुताः ॥ आद्याद्बृहन्म-

अङ्ग, वङ्ग, कलिङ्ग, सुह्म, पुण्ड्र तथा अन्ध्र नामका छोरा जन्मिए ॥५॥ तिनीहरूले छ दिशाहरूमा आफ्नो नै नामहरूका छ देश बसाले । अङ्गबाट खनपान र तिनीबाट दिविरथको जन्म भयो ॥ ६ ॥ दिविरथका छोरा धर्मरथ थिए । तिनका रोमपाद यस नामले विख्यात चित्ररथ नामका छोरा जन्मिए । चित्ररथका छोरा थिएनन् । यसै निम्ति तिनलाई तिनका मित्र राजा दशरथले शान्ता नामकी आफ्नी कन्या प्रदान गरे, जसलाई ऋष्यशृङ्गले विवाह गरेका थिए,जो हरिणीका छोरा थिए र जसलाई रोमपादको राज्यमा वर्षा नहुनाले गणिकाहरू नृत्य, गान, वाद्य, हाउ-भाउ, आलिङ्गन र विविध प्रकारका उपचारद्वारा मोहित पारी अयोध्या ल्याएका थिए । तिनले नै पुत्रहीन राजा दशरथलाई यज्ञ गराई वर प्रदान गराएर उनैले यज्ञ गरेपछि ती पुत्रहीन राजा दशरथले राम आदि चार पुत्र पाए । रोमपादका चतुरङ्ग र उनका पुत्र पृथुलाक्ष भए ॥७-१०॥ पृथुलाक्षका बृहद्रथ बृहत्कर्मा एवं बृहद्भानु

नामका तीन पुत्र जन्मे । तिनमा बृहद्रथबाट बृहन्मनाका जयद्रथ जन्मिए ॥११॥ जयद्रथकी सम्भूति नामकी भार्याबाट विजय जन्मे । विजयका धृति, धृतिका धृतव्रत, धृतव्रतका सत्यकर्मा र सत्यकर्माबाट अधिरथ नामका छोरा जन्मिए ॥ १२ ॥ अधिरथ पुत्रहीन थिए । उनले एकपल्ट गङ्गाको तटमा क्रीडा गर्दा कुन्तीको कन्यावस्थामा उत्पन्न बालक कर्णलाई, जसलाई उनले बाकसमा हालेर बगाएकी थिइन्, पाएर आफ्नै पुत्ररूपमा पाले ॥१३॥ हे राजन् ! ती राजा कर्णका पुत्र वृषसेन भए । ययातिका छोरा द्रुह्युउनका छोरा बभ्रु भए । तिनका छोरा सेतु र सेतुबाट आरब्ध जन्मे । आरब्धका गान्धार, गान्धारका धर्म, धर्मका धृत, धृतका दुर्मना, उनका प्रचेता र प्रचेताका सय छोरा जन्मे ॥ १४-१५ ॥ यी सबै उत्तर दिशामा गएर बसे र म्लेच्छहरूका राजा बने । ययाति तनय तुर्वसुका छोरा वह्नि, उनका भर्ग र भर्ग र भर्गबाट भानुमान् उत्पन्न भए ॥ १६ ॥ तिनका पुत्र त्रिभानु, त्रिभानुका उदारबुद्धि र करन्धमका मरुत् नामका छोरा उत्पन्न भए । मरुत् पुत्रहीन थिए । अतः उनले पूरुवंशी दुष्यन्तलाई आफ्नो पुत्र माने । तर दुष्यन्त राज्यको लोभले फेरि आफ्नै

नास्तस्माज्जयद्रथ उदाहृतः ॥११॥ विजयस्तस्य सम्भूत्यां ततो धृतिरजायत ॥ ततो धृतव्रतस्तस्य सत्यकर्माधिरथस्ततः ॥ १२ ॥ यो सौ गङ्गातटे क्रीडन्मञ्जूषान्तर्गतं शिशुम् ॥ कुन्त्याऽपविद्धं कानीनमनपत्योऽकरोत्सुतम् ॥ १३ ॥ वृषसेनः सुतस्तस्य कर्णस्य जगतीपतेः ॥ द्रुह्योश्च तनयो बभ्रुः सेतुस्तस्यात्मजस्ततः ॥१४॥ आरब्धस्तस्य गान्धारस्तस्य धर्मसुतो धृतः ॥ धृतस्य दुर्मनास्तस्मात्प्रचेताः प्राचेतसं शतम् ॥ १५ ॥ म्लेच्छाधिपतयोऽभूवन्नुदीचीं दिशमाश्रिताः ॥ तुर्वसोश्च सुतो वह्निर्वह्नेर्भर्गोऽथ भानुमान् ॥ १६ ॥ त्रिभानुस्तत्सुतोऽस्यापि करंधम उदारधीः ॥ मरुतस्तत्सुतोऽपुत्रः पुत्रं पौरवमन्वभूत् ॥ १७ ॥ दुष्यन्तः स पुनर्भेजे स्वं वंशं राज्यकामुकः ॥ ययातेर्ज्येष्ठपुत्रस्य यदोर्वंशं नरर्षभः ॥ १८ ॥ वर्णयामि महापुण्यं सर्वपापहरं नृणाम् ॥ यदोर्वंशं नरः श्रुत्वा सर्वपापैः प्रमुच्यते ॥ १९ ॥ यत्रावतीर्णो भगवान्परमात्मा नराकृतिः ॥ यदोः सहस्रजित्क्रोष्टा नलो रिपुरिति श्रुताः ॥ २० ॥ चत्वारः सूनवस्तत्र शतजित्प्रथमात्मजः ॥ महाहयो वेणुहयो हैहयश्चेति तत्सुताः ॥ २१ ॥ धर्मस्तु हैहयसुतो नेत्रः कुन्तेः पिता ततः ॥ सोहञ्जिरभवत्कुन्तेर्महिष्मान्भद्रसेनकः ॥ २२ ॥ दुर्मदो भद्रसेनस्य धनकः कृतवीर्यसूः ॥ कृताग्निः कृतवर्मा च कृतौजा धनकात्मजाः ॥२३॥ अर्जुनः कृतवीर्यस्य सप्तद्वीपेश्वरोऽभवत् ॥ दत्तात्रेयाद्धरेरंशात्प्राप्तयोगो महागुणः ॥ २४ ॥ न नूनं कार्तवीर्यस्य गतिं यास्यन्ति पार्थिवाः ॥ यज्ञदान-

वंशमा फर्के । हे राजन् ! अब म राजा ययातिका जेठा छोरा यदुको पवित्र एवं मनुष्यका सबै पापहरू नष्ट पारिदिने वंशको वृत्तान्त भन्छु, किनकि यदुवंशको गाथा सुनेर प्राणी सबै पापबाट छुट्छ ॥ १७-१८ ॥ यही पवित्र वंशमा परमात्मा विष्णु भगवान्ले जन्म लिएका थिए । यदुका सहस्रजित्, क्रोष्टा, नल र रिपु नामका चार छोरा जन्माए । तिनमा प्रथम सहस्रजित्बाट शतजित् नामका पुत्र जन्मे । तिनका महाहय, वेणुहय र हैहय नामका तीन पुत्र भए ॥ २०-२१ ॥ तीमध्ये हैहयका छोरा धर्मबाट कुन्तीका पिता नेत्रको जन्म भयो । कुन्तीका पुत्र सोहञ्जि, तिनका महिष्मान् र महिष्मान्का भद्रसेन नामका पुत्र भए ॥ २२ ॥ भद्रसेनका दुर्मद र कृतवीर्यका पिता धनक—यी पुत्र जन्मे कृताग्नि कृतवर्मा तथा कृतौजा—यी तीन धनकका छोरा थिए ॥ २३ ॥ कृतवीर्यका छोरा सप्तद्वीपका अधिपति अर्जुन भए, जसले भगवान्का अंशावतार दत्तात्रेय-

मित योग विद्या सिके र अणिमादि अष्टसिद्धि प्राप्त गरे ॥ २४ ॥ यज्ञ, दान, तप, योग, विद्या, वीर्य तथा जय आदि गुणहरूमा कृतवीर्यतनय सहस्रार्जुनको समान संसारका राजा गर्न सक्तैनन् ॥२५॥ उनले प्रजाको हजार वर्षसम्म आफ्नो शारीरिक बल अव्याहत राखेर, आफ्नो धन नाशको ध्यान नगरी छ इन्द्रियका अविनाशी भोग भोगेका थिए ॥२६॥ तिनका एक हजार छोरा मध्ये केवल जयध्वज, शूरसेन वृषभ, मधु र ऊर्जित-यी पाँच मात्र परशुरामजिको युद्धमा बाँचेका थिए ॥ २७ ॥ तिनमा जयध्वजका तालजङ्घ उत्पन्न भए। तालजङ्घका सय छोरा थिए, जसबाट उत्पन्न तालजङ्घ नामका क्षत्रियहरूलाई राजा सगरले महर्षि और्वको प्रभावले मारेका थिए। उपर्युक्त सय छोरामा जेठो वीतिहोत्र थिए। ती वीतिहोत्रका छोरा मधु र मधुका छोरा वृष्णि भए। मधुका सय छोरामा सबभन्दा जेठा वृष्णि थिए। यी मधु, वृष्णि र यदुको कारण यो वंश माधव, वार्ष्णेय र यादव यी नामले विख्यात भयो। यदुका छोरा क्रोष्टुका वृजिनवान् नामक पुत्र थिए। उनका श्वाहि, श्वाहिका रुशेकु, उनका चित्ररथ र चित्ररथका महायोगी तथा परम ऐश्वर्यवान्

तपोयोगश्रुतवीर्यजयादिभिः ॥ २५ ॥ पञ्चाशीतिसहस्राणि ह्यव्याहतबलः समाः ॥ अनष्टवित्तस्मरणो बुभुजेऽक्षय्यषड्वसु ॥ २६ ॥ तस्य पुत्रसहस्रेषु पञ्चैवोर्वरिता मृधे ॥ जयध्वजः शूरसेनो वृषभो मधुरूर्जितः ॥ २७ ॥ जयध्वजात्तालजङ्घस्तस्य पुत्रशतं त्वभूत् ॥ क्षत्रं यत्तालजङ्घाख्यं और्वतेजोपसंहृतम् ॥ २८ ॥ तेषां ज्येष्ठो वीतिहोत्रो वृष्णिः पुत्रो मधोः स्मृतः ॥ तस्य पुत्रशतं त्वासीद्वृष्णिज्येष्ठं यतः कुलम् ॥ २९ ॥ माधवा वृष्णयो राजन्यादवश्चेति संज्ञिताः ॥ यदुपुत्रस्य च क्रोष्टोः पुत्रो वृजिनवांस्ततः ॥ ३० ॥ श्वाहिस्ततो रुशेकुर्वै तस्य चित्ररथस्ततः ॥ शशबिन्दुर्महायोगी महाभोगो महानभूत् ॥ ३१ ॥ चतुर्दशमहारत्नश्चक्रवर्त्यपराजितः ॥ तस्य पत्नीसहस्राणां दशानां सुमहायशाः ॥ ३२ ॥ दशलक्षसहस्राणि पुत्राणां तास्वजीजनत् ॥ तेषां तु षट्प्रधानानां पृथुश्रवस आत्मजः ॥ ३३ ॥ धर्मो नामोशना तस्य हयमेधशतस्य याट् ॥ तत्सुतो रुचकस्तस्य पञ्चासन्नात्मजाः शृणु ॥ ३४ ॥ पुरुजिद्रुक्मरुक्मेषुपृथुज्यामघसंज्ञिताः ॥ ज्यामघस्त्वप्रजोऽप्यन्यां भार्यां शैब्यापतिर्भयात् ॥३५॥ नाविन्दच्छत्रुभवनाद्भोज्यां कन्यामहारषीत् ॥ रथस्थां तां निरीक्ष्याह शैब्या पतिममर्षिता ॥ ३६ ॥ केयं कुहक मत्स्थानं रथमारोपितेति वै ॥ स्नुषा तवेत्यभिहिते स्मयन्ती पतिमब्रवीत् ॥ ३७ ॥ अहं वन्ध्याऽसपत्नी च स्नुषा मे युज्यते कथम् ॥ जनयिष्यसि यं राज्ञि तस्येयमुपयुज्यते ॥ ३८ ॥ अन्वमोदन्त

शशबिन्दु उत्पन्न भए ॥२९-३१॥ ती चौध महारत्नका अधिपति, चक्रवर्ती र युद्धमा अजेय थिए र ( हात्ती, रथ, स्त्री, बाण, ढुकुटी, माला, वृक्ष, शक्ति, पाश, मणि, वस्त्र, छत्र र विमान-यी चौध महारत्न हुन् ) तिनका दस हजार पत्नीबाट दस लाख हजार अर्थात् एक अरब यशस्वी छोरा जन्मिए। तिनमा छ जना प्रधान पुत्रमध्ये पृथुश्रवाका धर्म नामक पुत्र जन्मे। उनका सय अश्वमेध यज्ञ गर्ने उशनाका छोरा रुचक थिए तिनका पाँच पुत्र भए। अब तिनको नाम सुन-॥३२-३४॥ तिनको नाम थियो-पुरुजित् रुक्म, रुक्मेषु पृथु र ज्यामघ। शैब्याका पति ज्यामघ निस्सन्तान थिए, तर उनले आफ्नी भार्याको डरले अर्को विवाह गरेनन्। एकपल्ट तिनले आफ्ना शत्रुको घरबाट भोज्या नाम की कन्या हरेर ल्याए। कन्यालाई रथमा बसेको देखेर शैब्याले रिसाइ आफ्ना पतिलाई भनिन्—॥ ३५-३६ ॥ 'हे कपटी ! मैले बस्ने स्थानमा आज तिमीले रथमा कसलाई बसालि राखेका छौ ?'

राजाले भने–'यो तिम्री बुहारी हुन् ।' अनि तिनले भनिन्– ३७।। 'म त बाँझी छु र मेरा कुनै सौता पनि छैनन्, अनि यो मेरी बुहारी कसरी हुन्छे ?' राजाले भने–'भविष्यमा तिमी बाट पुत्र उत्पन्न गर्नेछौ, यो उसैकी स्त्री हुनेछ' ।।३८।। विश्वेदेव र पितृगणले राजाका वचनको समर्थन गरे । अतः वेलामा शैब्या गर्भवती भइन् र तिनले थोटा सुन्दर बालकलाई जन्म दिइन् । त्यो छोरा विदर्भ कहियो र उसले शैब्याकी सती बुहारीसित विवाह गरे ।।३९।। इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे 'वाग्मिश्री' टीकायां त्रयोविंशोऽध्याय, ।।२३।।

( विदर्भवंशको वर्णन ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! राजा विदर्भले त्यस भोज्याबाट कुश, क्रथ र विदर्भकुल-नन्दन रोमपाद–तीन पुत्र उत्पन्न गरे ।।१।। रोमपादका छोरा बभ्रु भए । बभ्रुका कृति, उनका छोरा उशिक र उशिकबाट चेदि भए, जसबाट चैद्य आदि राजा उत्पन्न भए ।। २ ।। क्रथका छोरा कुन्ति, उनका धृष्टि, धृष्टिका निर्वृति, निर्वृतिका दशार्ह र दशार्हका छोरा व्योम भए ।। ३ ।। व्योमका छोरा जीमूत, जीमूतका विकृति, विकृतिका भीमरथ, भीमरथका नवरथ र नवरथका छोरा दशरथ भए ।।४४।।

तद्विश्वेदेवाः पितर एव च ।। शैब्या गर्भमधात्काले कुमारं सुषुवे शुभम् ।। स विदर्भ इति प्रोक्त उपयेमे स्नुषां सतीम् ।। ३९ ।। इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे यदुवंशानुवर्णने त्रयोविंशोऽध्यायः ।। २३ ।।

श्रीशुक उवाच ।। तस्यां विदर्भोऽजनयत्पुत्रौ नाम्ना कुशक्रथौ ।। तृतीयं रोमपादं च विदर्भकुलनन्दम् ।।१।। रोमपादसुतो बभ्रुर्बभ्रोः कृतिरजायत ।। उशिकस्तत्सुतस्तस्माच्चेदिश्चैद्यादयोनृपाः ।।२।। क्रथस्य कुन्तिः पुत्रोऽभूद्धृष्टिस्तस्याथ निर्वृतिः।। ततो दशार्हो नाम्नाऽभूत्तस्त व्योमः सुतस्ततः ।।३।। जीमूतो विकृतिस्तस्य यस्य भीमरथः सुतः ।। ततो नवरथः पुत्रो जातो दशरथस्ततः ।।४।। करम्भिः शकुनेः पुत्रो देवरातस्तदात्मजः ।। देवक्षत्रस्ततस्तस्य मधुः कुरुवशादनुः ।।५।। पुरुहोत्रस्त्वनोः पुत्रस्तस्यायुः सात्वतस्ततः ।। भजमानो भजिर्दिव्यो वृष्णिर्देवावृधोन्धकः ।। सात्वतस्य सुताः सप्त महाभोजश्च मारिष ।। भजमानस्य निम्लोचिः किङ्किणो धृष्टिरेव च ।।७।। एकस्यामात्मजः पत्न्यामन्यस्यां च त्रयः सुताः।। शताजिच्च सहस्राजिदयुताजिदिति प्रभो ।।८।। बभ्रुर्देवावृधसुतस्तस्यो:श्लोकौ पठयन्त्यम् ।। यथैव शृणुमो दूरात्सम्पश्यामस्तथाऽन्तिकात् ।।९।। बभ्रुः श्रेष्ठो मनुष्याणां देवैर्देवावृधः समः ।। पुरुषाःपञ्चषष्टिश्च षट् सहस्राणि चाष्ट च ।।१०।। तेऽमृतत्वमनुप्राप्ता बभ्रोर्देवावृधादपि ।। महाभोजोऽपि धर्मात्मा भोजा आसंस्तदन्वये ।।११।।

दशरथका शकुनि, शकुनिका करम्भि र तिनका छोरा देवरात भए । देवरातका देवक्षत्र, देवक्षत्रका मधु, मधुका कुरुवंश र कुरुवंशका छोरा अनु भए ।।५।। अनुका छोरा पुरुहोत्र, तिनका आयु र आयुका छोरा सात्वत भए । हे आर्य ! सात्वतका भजमान, भजि, दिव्य, वृष्णि, देवावृध, अन्धक र महाभोज नामका सात छोरा जन्मे । हे राजन् ! तिनमा भजमानकी थोटी स्त्रीबाट निम्लोचि, किङ्किण र धृष्टि नामका तीन छोरा जन्मिए । उनकी अर्की पत्नीबाट शताजित् सहस्राजित् र अयुताजित् नामका तीन पुत्र भए ।।६-८।। देवावृधका छोरा बभ्रु भए । ती दुवै बाबु-छोराको विषयमा यो दुइ-श्लोक कहिन्छन्–'हामीले पर्खाट सुनेको अनुसार नजिकैबाट पनि देखियो ।। ९ ।। बभ्रु सबै मनुष्यमा श्रेष्ठ छन् र देवावृध देवता समान छन्, जिनकि बभ्रु र देवावृधबाट उपदेश पाएर चौध हजार पैंसट्ठी मनुष्यले अमरपद प्राप्त गरिसकेका छन् ।।१०।। सात्वत-तनय महाभोज पनि

ठूला धर्मात्मा थिए, तिनका सन्तानमा भोजवंशी यादव जन्मिए ॥११॥ हे शत्रुसूदन ! वृष्णिका सुमित्र र युधाजित् दुइ छोरा भए । तिनमा युधाजित्का शिनि र अनमित्र उत्पन्न भए । अनमित्रका निम्न नामका छोरा भए ॥१२॥ सत्राजित र प्रसेन यी दुवै पनि निम्नका छोरा थिए । अनमित्रका शिनि नामका छोराका छोरा सत्यक भए ॥१३॥ ती सत्यकका छोरा युयुधान अर्थात् सात्यकि थिए । तिनका जय, जयका कुणि र कुणिका युगन्धर नामका छोरा जन्मिए । अनमित्रका अर्को छोरा वृष्णि थिए, उसका श्वफल्क तथा चित्ररथ दुइ पुत्र जन्मे । तिनमा श्वफल्कद्वारा गान्दिनीको गर्भबाट आसंग आदि बाह्र र अक्रूरसमेत तेह्र पुत्र जन्मिए ॥१४॥१५॥ तिनका नाम थिए —आसङ्ग, सारमेय, मृदुर, मृदुवित्, गिरि, धर्मवृद्ध, सुधर्मा, क्षेत्रोपेक्ष, अरिमर्दन, शत्रुघ्न, गन्धमाद, प्रतिबाहु र अक्रूर । तिनकी सुचिरा नामकी अर्की बहिनी पनि थिइन् । अक्रूरका छोरा देववान्, उपदेव, तथा श्वफल्कका भाइ चित्ररथका छोरा पृथु र विदूरथ आदि अनेक वृष्णिवंशी यादव उत्पन्न भए ॥१६-१८॥ सात्वत-पुत्र अन्धकका कुकुर, भोजमान, शुचि र कम्बलबर्हि

वृष्णेः सुमित्रः पुत्रोऽभूद्युधाजिच्च परंतप ॥ शिनिस्तस्यानमित्रश्च निम्नोऽभूदनमित्रतः ॥१२॥ सत्राजितः प्रसेनश्च निम्नस्याप्यासतुः सुतौ ॥ अनमित्रसुतो योऽन्यः शिनिस्तस्याथ सत्यकः ॥१३॥ युयुधानः सात्यकिर्वै जयस्तस्य कुणिस्ततः ॥ युगन्धरोऽनमित्रस्य वृष्णिः पुत्रोऽपरस्ततः॥१४॥ श्वफल्कश्चित्ररथश्च गान्दिन्यां च श्वफल्कतः ॥ अक्रूरप्रमुखा आसन्पुत्रा द्वादश विश्रुताः॥१५॥ आसङ्गः सारमेयश्च मृदुरो मृदुविद्गिरिः ॥ धर्मवृद्धः सुधर्मा च क्षेत्रोपेक्षोऽरिमर्दनः ॥१६॥ शत्रुघ्नो गन्धमादश्च प्रतिबाहुश्च द्वादश ॥ तेषां स्वसा सुचीराख्या द्वावक्रूरसुतावपि ॥१७॥ देववानुपदेवश्च तथा चित्ररथात्मजाः ॥ पृथुर्विदूरथाद्याश्च बहवो वृष्णिनन्दनाः ॥१८॥ कुकुरो भजमानश्च शुचिः कम्बलबर्हिषः ॥ कुकुरस्य सुतो वह्निर्विलोमा तनयस्ततः ॥१९॥ कपोतरोमा तस्यानुः सखा यस्य च तुम्बुरुः ॥ अन्धको दुन्दुभिस्तस्मादरिद्योतः पुनर्वसुः ॥ २० ॥ तस्याहुकश्चाहुकी च कन्या चैवाहुकात्मजौ ॥ देवकश्चोग्रसेनश्च चत्वारो देवकात्मजाः ॥ २१ ॥ देववानुपदेवश्च सुदेवो देववर्धनः ॥ तेषां स्वसारः सप्तासन्धृतदेवादयो नृप ॥ २२ ॥ शान्तिदेवोपदेवा च श्रीदेवा देवरक्षिता ॥ सहदेवा देवकी च वसुदेव उवाह ताः ॥ २३ ॥ कंसः सुनामा न्यग्रोधः कङ्कः शंकुः सुहूस्तथा ॥ राष्ट्रपालोऽथ सृष्टिश्च तुष्टिमानौग्रसेनयः ॥ २४ ॥ कंसा कंसवती कङ्का शूरभू राष्ट्रपालिका ॥ उग्रसेनदुहितरो वसुदेवानुजस्त्रियः ॥ २५ ॥ शूरो विदूरथादामी-

नामका चार पुत्र जन्मिए । तिनमा कुकुरका छोरा वह्नि, उनका विलोमा ॥ १९ ॥ विलोमाका कपोतरोमा र कपोतरोमाका अनु भए । उसका सखा तुम्बुरु नामका गन्धर्व थिए । तिनका अन्धक र अन्धकका दुन्दुभि, उनका अरिद्योत र अरिद्योतका पुनर्वसु नामका बालक उत्पन्न भए ॥२०॥ पुनर्वसुका आहुक नामका छोरा र आहुकी नामकी अर्की कन्या जन्मी । आहुकका छोरा देवक र उग्रसेन भए । तिनमा देवकका देववान्, उपदेव, सुदेव र देववर्धन चार पुत्र भए । उनकी धृतदेवा आदि सात बहिनी थिए ॥ २१॥२२ ॥ तिनका नाम थिए—धृतदेवा, शान्तिदेवा, उपदेवा, श्रीदेवा, देवरक्षिता, सहदेवा र देवकी । ती सबैको विवाह वसुदेवसित भएको थियो ॥२३॥ कंस, सुनामा,न्यग्रोध, कङ्क, शंकु, सुहू, राष्ट्रपाल, सृष्टि र तुष्टिमान्—यी उग्रसेनका छोरा थिए ॥ २४ ॥ कंसा, कंसवती, कङ्का, शूरभू र राष्ट्रपालिका—यी उग्रसेनकी छोरीहरू वसुदेवका भाइहरूकी पत्नी थिए ॥२५॥ विदूरथका

बालक विदूरथबाट शूर नामका पुत्र जन्मे । शूरका भजमान, तिनका शिनि, शिनिका स्वयंभोज र स्वयम्भोजका हृदीक नामका छोरा जन्मिए ॥२६॥ हृदीकका छोरा देवबाहु, शतधनु र कृतवर्मा थिए । देवमीढका छोरा शूरकी पत्नीको नाम मारिषा थियो ॥२७॥ तिनैद्वारा उनले—वसुदेव, देवभाग, देवश्रवा, आनक, सृञ्जय, श्यामक, कङ्क, शमीक, वत्सक र वृक—यी दस पुण्यात्मा बालक जन्माए । ती बालक जन्मदा देवताहरूको दुन्दुभि तथा आनक ( वाद्यविशेष ) आदि बाजा बजेका थिए । अतः श्रीहरिको जन्मस्थानरूप ती वसुदेवलाई आनक दुन्दुभि पनि भन्दछन् । शूरसेनकी पृथा, श्रुतदेवा, श्रुतश्रवा र राजाधिदेवी—यी पाँच कन्याहरू यी वसुदेव आदिकी बहिनी थिए । पिता शूरसेनले आफ्ना सन्तानहीन सखा कुन्तिभोजलाई आफ्नी छोरी पृथा दिए ॥ २८-३१ ॥ पृथाले आफूप्रति प्रसन्न दुर्वासा ऋषिसित देवताहरूलाई डाक्ने विद्या प्राप्त गरेकी थिइन् । त्यस विद्याको प्रभावलाई जान्नको निम्ति उनले सर्वप्रथम सूर्यलाई आवाहन गरिन् ॥ ३२ ॥ सूर्य भगवान्लाई तत्काल उपस्थित देखेर उनले भनिन्—'भगवन् ! क्षमा गर्नुहवस् मैले केवल परीक्षाको निम्ति यस विद्याको

द्भजमानः सुतस्ततः ॥ शिनिस्तस्मात्स्वयम्भोजो हृदीकस्तत्सुतो मतः ॥ २६॥ देवबाहुः शतधनुः कृतवर्मेति तत्सुताः ॥ देवमीढस्य शूरस्यमारिषा नाम पत्न्यभूत् ॥ २७ ॥ तस्यां स जनयामास दश पुत्रानकल्मषान् ॥ वसुदेवं देवभागं देवश्रवसमानकम् ॥ २८ ॥ सृञ्जयं श्यामकं कङ्कं शमीकं वत्सकं वृकम् ॥ देवदुन्दुभयो नेदुरानका यस्य जन्मनि ॥ २९ ॥ वसुदेवं हरेः स्थानं वदन्त्यानकदुन्दुभिम् ॥ पृथा च श्रुतदेवा च श्रुतकीर्तिः श्रुतश्रवाः ॥३० ॥ राजाधिदेवी चैतेषां भगिन्यः पञ्च कन्यकाः ॥ कुन्तेः सख्युः पिता शूरो ह्यपुत्रस्य पृथामदात् ॥ ३१ ॥ साऽऽप दुर्वाससो विद्यां देवहूतीं प्रतोषितात् ॥ तस्य वीर्यपरीक्षार्थमाजुहाव रविं शुचिम् ॥ ३२ ॥ तदैवोपागतं देवं वीक्ष्य विस्मितमानसा ॥ प्रत्ययार्थं प्रयुक्ता मे याहि देव क्षमस्व मे ॥३३ ॥ अमोघं दर्शनं देवि आधत्से त्वयि चात्मजम् ॥ योनिर्यथा न दुष्येत कर्ताऽहं ते सुमध्यमे ॥ ३४ ॥ इति तस्यां स आधाय गर्भं सूर्यो दिवं गतः ॥ सद्यः कुमारः संजज्ञे द्वितीय इव भास्करः ॥ ३५ ॥ तं साऽत्यजन्नदीतोये कृच्छ्राल्लोकस्य बिभ्यती ॥ प्रपितामहस्तामुवाह पाण्डुर्वै सत्यविक्रमः ॥ ३६ ॥ श्रुतदेवां तु कारूषो वृद्धशर्मा समग्रहीत् ॥ यस्यामभूद्दन्तवक्त्र ऋषिशप्तो दितेः सुतः ॥ ३७ ॥ कैकेयो धृष्टकेतुश्च श्रुतकीर्तिमविन्दत ॥ सन्तर्दनादयस्तस्य पञ्चासन्कैकयाः सुताः ॥ ३८ ॥ राजाधिदेव्यामावन्त्यो जयसेनोऽजनिष्ट ह ॥ दमघोषश्चेदिराजः श्रुतश्रवसमग्रहीत्

प्रयोग गरेकी हुँ, अब हजुर जानोस्' ॥३३॥ सूर्यले भने—'हे देवि ! मेरो दर्शन व्यर्थ जाँदैन । अतः हे सुन्दरी ! म तिम्रो गर्भमा यसरी पुत्र स्थपित गर्नेछु कि तिम्रो योनि दूषित हुनेछैन' ॥ ३४ ॥ यति भनेर गर्भस्थापित गरी सूर्यदेव फर्किए । त्यस गर्भबाट अर्को सूर्य समान तेजस्वी पुत्र तत्काल उत्पन्न भए ॥ ३५ ॥ लोक-निन्दाको डरले भयभीत भएर तिनले दुःख मान्दै त्यस बालकलाई नदीको जलमा बगाइदिइन् । हे राजन् ! तिम्रा हजूरबा शूरवीर महाराज पाण्डुसित पृथाको विवाह भएको थियो ॥ ३६ ॥ हे राजन् ! पृथाकी कान्छी बहिनी श्रुतदेवालाई करूषदेशका नरेश वृद्धशर्माले रोजे । उनबाट दन्तवक्त्र नामका पुत्र जन्मिए । जुन कि पूर्वजन्ममा सनकादि मुनिहरूको श्रापले दितिको पुत्र हिरण्याक्ष भएको थियो ॥ ३७ ॥ केकयदेशका नरेश धृष्टकेतुले श्रुतकीर्तिसित विवाह गरे । तीबाट सन्तर्दन आदि पाँच कैकयराजकुमार उत्पन्न भए ॥ ३८ ॥ राजधिदेवीबाट राजा जयसेनले विन्द

र अनुविन्द नामका दुइ अवन्ति नरेश उत्पन्न गरे । श्रुतश्रवाको चेदिराज दमघोषसित विवाह भयो ॥ ३९ ॥ तिनका पुत्र शिशुपाल थिए । इनका जीवनको वृत्तान्त पहिले नै बताइसकेको छु । वसुदेवका कान्छा भाई देवभागद्वारा कंसाका गर्भबाट चित्रकेतु र बृहद्बल नामका दुइ पुत्र जन्मिए । देवाकी स्त्री कंसवतीका सुवीर तथा इषुमान उत्पन्न भए र आनक-को वीर्यबाट कङ्काका सत्यजित् तथा पुरुजित् नामका दुइ पुत्र जन्मिए ॥ ४० ॥ सृञ्जयकी पत्नी राष्ट्रपालिकाबाट वृष र दुर्मर्षणादिको जन्म भयो । श्यामकले शूरभूमिको गर्भबाट हरिकेश र हिरण्याक्ष नामका दुइ पुत्र जन्माए ॥ ४२ । वत्सकले मिश्रकेशी नामकी अप्सराबाट वृकादि र वृकले दूर्वाक्षी द्वारा तक्ष, पुष्कर एवं शाल आदि अनेक छोरा जन्माए । शमीकको वीर्यबाट त्यसकी भार्या सुदामिनीले सुमित्र र अर्जुनपाल आदि एवं बालक र कङ्कले कर्णिकाबाट ऋतधाम र जयलाई जन्माए ॥४३-४४॥ वसुदेवकी पौरवी, रोहिणी, भद्रा, मदिरा, रोचना, इला र देवकी आदि अनेक पत्नी थिए ॥४५॥ तीमध्ये वसुदेवले रोहिणीको गर्भबाट बल, गद, सारण, दुर्मद, विपुल, ध्रुव तथा कृत आदि छोरालाई जन्म दिए

॥ ३९ ॥ शिशुपालः सुतस्तस्याः कथितस्तस्य सम्भवः ॥ देवभागस्य कंसायां चित्रकेतुबृहद्बलौ ॥४०॥ कंसवत्यां देवश्रवसः सुवीर इषुमांस्तथा ॥ कङ्कायामानकाज्जातः सत्यजित्पुरुजित्तथा ॥ ४१ ॥ सृञ्जयो राष्ट्रपाल्यां च वृषदुर्मर्षणादिकान् ॥ हरिकेशहिरण्याक्षौ शूरभूम्यां च श्यामकः ॥४२॥ मिश्रकेश्यामप्सरसि वृकादीन्वत्सकस्तथा ॥ तक्षपुष्करशालादीन्दुर्वाक्ष्यां वृक आदधे ॥ ४३ ॥ सुमित्रार्जुनपालादीञ्छमीकात्तु सुदामिनी ॥ कङ्कश्च कर्णिकायां वै ऋतधामजयावपि ॥ ४४ ॥ पौरवी रोहिणी भद्रा मदिरा रोचना इला ॥ देवकीप्रमुखा आसन्पत्न्य आनकदुन्दुभेः ॥४५॥ बलं गदं सारणं च दुर्मदं विपुलं ध्रुवम् ॥ वसुदेवस्तु रोहिण्यां कृतादीनुदपादयत् ॥ ४६ ॥ सुभद्रो भद्रबाहुश्च दुर्मदो भद्र एव च ॥ पौरव्यास्तनया ह्येते भूताद्या द्वादशाभवन् ॥ ४७ ॥ नन्दोपनन्दकृतकशूराद्या मदिरात्मजाः ॥ कौसल्या केशिनं त्वेकमसूत कुलनन्दनम् ॥ ४८ ॥ रोचनायामतो जाता हस्तहेमाङ्गदादयः ॥ इलाया मुरुवल्कादीन्यदुमुख्यानजीजनत् ॥ ४९ ॥ विपृष्ठो धृतदेवायामेक आनकदुन्दुभेः ॥ शान्तिदेवात्मजा राजन् श्रमप्रतिश्रुतादयः ॥ ५० ॥ राजानः कल्पवर्षाद्या उपदेवासुता दश ॥ वसुहंससुवंशाद्याः श्रीदेवायास्तु षट् सुताः ॥ ५१ ॥ देवरक्षितया लब्धा नव चात्र गदादयः ॥ वसुदेवः सुतानष्टावादधे सहदेवया ॥ ५२ ॥ पुरुविश्रुतमुख्यांस्तु साक्षाद्धर्मो वसूनिव ॥ वसुदेवस्तु देवक्यामष्ट पुत्रानजी·

॥ ४६ ॥ ती वसुदेवले नै पौरवीबाट सुभद्र, भद्रबाहु, दुर्मद, भद्र र भूत आदि सुप्रसिद्ध बाह्र पुत्र उत्पन्न गरे ॥ ४७॥ नन्द, उपनन्द, कृतक तथा शूर आदि मदिरा छोरा र कौसल्याले केशी नामको यौटै कुलदीपक छोरो जन्माइन् ॥ ४८ ॥ रोचना द्वारा ती ( वसुदेव ) का हस्त तथा हेमाङ्गदादि छोरा जन्मिए र इलाबाट उनले पुरु र वल्क आदि यदुश्रेष्ठहरूलाई जन्म दिए ॥ ४९ ॥ हे राजन् ! तिनकी पत्नी धृतदेवाका गर्भबाट आनकदुन्दुभि द्वारा विपृष्ठ नामका यौटा छोरा जन्मिए र शान्तिदेवाका छोरा श्रम, प्रतिश्रुत आदि जन्मिए । ॥५० ॥ उपदेवाका छोरा कल्प वर्ष आदि दश राजा भए र श्रीदेवाका वसु, हंस र सुवंश आदि छ पुत्र जन्मिए ॥५१॥ देवरक्षिताबाट उनका गद आदि नौ पुत्र भए । जस्तै-साक्षात धर्मराजले आठ वसुहरूलाई उत्पन्न गरेका थिए, त्यसैगरी सहदेवाबाट उनले पुरु, विश्रुतादि आठ पुत्र हरूलाई जन्म दिए । त्यसैगरी देवकीबाट [illegible] आठ छोरा भए । जसमा सात

कीर्तिमान, सुषेण, उदारधी, भद्रसेन, सम्मर्दन, भद्र तथा शेषावतार श्री संकर्षण भए ॥५२-५४॥ तिनमा आठौं पुत्र साक्षात् भगवान् श्रीहरि थिए। हे राजन्! तिम्री हजुरामा महाभागा सुभद्रा पनि देवकीकी नै छोरी थिइन् ॥५५॥ संसारमा जब-जब धर्मको नाश र अधर्मको अभ्युदय हुन्छ, तब-तब सर्वेश्वर भगवान् श्रीहरि अवतार लिने गर्दछन् ॥५६॥ हे महीपते! सबै जगतीतलका नियन्ता, साक्षी र अन्तरात्मा स्वरूप ती असंग परमात्माको जन्म एवं कर्मकी सँगिनी आफ्नी माया बाहेक अरु कोही पनि रहन्न ॥५७॥ जसको माया-विलासमात्र जीवको उत्पत्ति, स्थिति र मृत्युको कारण हुन्छ र जसको अनुग्रह नै जन्म-मरणादिको निवृत्ति र आत्मस्वरूप प्राप्त गर्ने हेतु रहन्छ ॥५८॥ तौ हे राजन्! कति नै अक्षौहिणी सेनाको अतिरिक्त राजवेषधारी असुरहरुद्वारा जब पृथ्वीलाई भारी भयो, तब त्यसको भार उतार्न भगवान् मधुसूदन—श्रीसङ्कर्षणका साथै धरातलमा आएर यस्ता अनेकौं कार्य गरे, जसको देवेश्वरगण पनि आफ्नू मनले अनुमान गर्न सक्तैनन् ॥५९॥ उनले भक्तजनमा कृपा गर्नका लागि कलिमा उत्पन्न सबै जीवको कष्ट,

जनत् ॥५३॥ कीर्तिमन्तं सुषेणं च भद्रसेनमुदारधीः ॥ ऋजुं सम्मर्दनं भद्रं संकर्षणमहीश्वरम् ॥ ५४ ॥ अष्टमस्तु तयोरासीत्स्वयमेव हरिः किल ॥ सुभद्रा च महाभागा तव राजन्पितामही ॥ ५५ ॥ यदा यदेह धर्मस्य क्षयो वृद्धिश्च पाप्मनः ॥ तदा तु भगवानीश आत्मानं सृजते हरिः ॥५६॥ न ह्यस्य जन्मनो हेतुः कर्मणो वा महीपते ॥ आत्ममायां विनेशस्य परस्य द्रष्टुरात्मनः ॥ ५७ ॥ यन्मायाचेष्टितं पुंसः स्थित्युत्पत्त्यप्ययाय हि ॥ अनुग्रहस्तन्निवृत्तेरात्मलाभाय चेष्यते ॥ ५८ ॥ अक्षौहिणीनां पतिभिरसुरैर्नृपलाञ्छनैः ॥ भुव आक्रम्यमाणाया अभाराय कृतोद्यमः ॥ ५६ ॥ कर्माण्यपरिमेयानि मनसापि सुरेश्वरैः ॥ सहसंकर्षणश्चक्रे भगवान्मधुसूदनः ॥ ६० ॥ कलौ जनिष्यमाणानां दुःखशोकतमोनुदम् ॥ अनुग्रहाय भक्तानां सुपुण्यं व्यतनोद्यशः ॥६१॥ यस्मिन्सत्कर्णपीयूषे यशस्तीर्थवरे सकृत् ॥ श्रोत्राञ्जलिभिरुपस्पृश्य धुनुते कर्मवासनाम् ॥६२॥ भोजवृष्ण्यन्धकमधुशूरसेनदशार्हकैः ॥ श्लाघनीयेहितः शश्वत्कुरुसृञ्जयपाण्डुभिः ॥ ६३ ॥ स्निग्धस्मितेक्षितोदारैर्वाक्यैर्विक्रमलीलया ॥ नृलोकं रमयामास मूर्त्या सर्वाङ्गरम्यया ॥ ६४ ॥ तस्याननं मकरकुण्डलचारुकर्णभ्राजत्कपोलसुभगं सविलासहासम् ॥ नित्योत्सवं न ततृपुर्दृशिभिः पिबन्त्यो नार्यो नराश्च मुदिताः कुपिता निमेश्च ॥ ६५ ॥ जातो गतः पितृगृहाद्व्रजमेधितार्थो हत्वा रिपून्सुतशतानि कृतोरुदारः ॥ उत्पाद्य तेषु पुरुषः क्रतुभिः

शोक र अज्ञान निवृत्त गर्न आफ्नू पवित्र यश संसारमा विस्तृत पारे ॥६१॥ जसको यशरूपी पवित्र तीर्थ साधुजनका कानको निम्ति अमृत समान सुखदायक छ। जसमा श्रोत्ररूपी अंजलीले जो व्यक्ति एकपल्ट पनि आचमन गर्दछ, त्यो मोक्षको प्रतिबन्धस्वरूप कर्म वासनालाई तत्काल त्यागिदिन्छ ॥६२॥ हे राजन्! जसका मनोहारिणी लीलाहरू भोज, वृष्णि, अन्धक, मधु, शूरसेन, दशार्ह, कुरु, सृञ्जय र पाण्डुवंशी वीरले सदा प्रशंसित हुँदै रहन्थिन, ती श्रीहरि भगवान् आफ्नो स्नेहयुक्त मन्दहास्यको हेराई, अमृतझैं मीठा वचन, विक्रममयी लीला र सर्वाङ्ग सुन्दर स्वरूपले मानव-समाजलाई सुखी पारे ॥६३॥६४॥ जो मकराकृति कुण्डलले अलंकृत कमनीय कर्ण तथा कान्तिमय कपोलले अत्यन्त सुशोभित भइरहेका थियो, तिनका त्यो विलासमय हास्यपूर्ण नित्य प्रफुल्लित रहिरहने मुखारविन्दलाई नयन युगलले आनन्दसाथ पिउँदै समस्त नर-नारी कहिल्यै पनि अघाउँथे, बरू

निमिमाथि यस निम्ति रिसाउँथे कि तिनका परेका बारम्बार खुल्दै र बन्द हुँदै गर्दथे ॥६५॥ जन्म लिएपछि ती आफ्ना पिताको घर व्रज गए, त्यहाँ पालन-पोषण गरिएर उनले आफ्ना शत्रुको संहार गरे र अनेक कन्याहरूसित विवाह गरेर अनेक पुत्र उत्पन्न गरे अनि संसारमा वेदको मर्यादा स्थापित गर्नका लागि अनेक यज्ञादिद्वारा भगवान् स्वयं आफ्नो यजन

समीजे आत्मानमात्मनिगमं प्रथयञ्जनेषु ॥ ६६ ॥ पृथ्व्याः स वै गुरुभरं क्षपयन्कुरूणामन्तःसमुत्थकलिना युधि भूपचम्वः ॥ दृष्ट्या विधूय विजये जयमुद्विघोष्य प्रोच्योद्धवाय च परं समगात्स्वधाम ॥ ६७ ॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां नवमस्कन्धे श्रीसूर्यसोमवंशानुकीर्तने यदुवंशानुकीर्तनं नाम चतुर्विंशोऽध्यायः ॥ २४ ॥

गरे ॥६६॥ त्यसपछि पृथ्वीको अतिशय बढेको भार उतार्नको निम्ति कौरव तथा पाण्डवहरूमा उत्पन्न कलहले महाभारतको रणभूमिमा आफ्नु दृष्टिमात्रले राजाहरूका सम्पूर्ण सेनाको विध्वंस पार्न लगाएर अर्जुनको विजयघोष गराए र उद्धवलाई आत्मज्ञानको उपदेश दिई आफ्नु धाममा गए ॥६७॥

इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपालीभाषाटीकायां चतुर्विंशोऽध्यायः ॥२४॥

❀ समाप्तोऽयं नवमः स्कन्धः ❀

( श्रीकृष्णार्पणमस्तु )

**

873

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते नवमः स्कन्धः समाप्तः ।

874

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते दशमः स्कन्धः 'पूर्वार्द्धम्'।

875

ॐ नमो भगवते वासुदेवाय ॥ वंशी विभूषितकरान्नवनीरदाभात्पीताम्बरादरुणबिम्बफलाधरोष्ठात् ॥ पूर्णेन्दुसुन्दरमुखादरविन्दनेत्रात्कृष्णात्परं किमपि तत्त्वमहं न जाने ॥ १ ॥ वाङ्मये विग्रहेऽन्वस्मिन् राजते यो रसात्मना ॥ तमानन्दमयं वन्दे नन्दनन्दनमीश्वरम् ॥२॥ राधा भक्तिर्हरिर्ध्यानं ताभ्यां या च समन्वितम् ॥ ता श्रीभागवतीगाथां वन्दे युगलरूपिणीम् ॥ ॥ यो लीला ल स्य संलग्नो गतोऽलोलोऽपि लोलताम् ॥ तं लीलावपुषं बालं वन्दे लीलार्थसिद्धये ।४॥ यस्यदीक्षिलवेनैव देवता देवतांगताः॥ तं वन्दे देवदेवेशं सर्वदेवमयं हरिम्॥५॥

( पृथिवीलाई आश्वासन, वसुदेव-देवकीको विवाह र कंसद्वारा देवकीका छ पुत्रको वध )–राजा परीक्षित् भन्दछन्–हे मुने ! हजुरले चन्द्रवंश र सूर्यवंशको विस्तारले वर्णन गर्नुभयो र ती दुवै वंशमा उत्पन्न राजाहरूको चरित्र भन्नुभयो ॥ १ ॥ धर्मपरायण राजा यदुको पनि वंश वर्णन गर्नुभयो । अब त्यही वंशमा आफ्नू अंशले उत्पन्न भगवान् विष्णुको चरित्र भन्नुहवस् ॥ २ ॥ जीवहरूका पालनकर्ता ईश्वरले यदुवंशमा अवतार लिएर जुन-जुन लीलाहरू गरे त्यो विस्तारपूर्वक भन्नुहवस् ॥ ३ ॥ किनकि उनका गुणहरू निस्पृह महात्मा पनि

ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच ॥ कथितो वंशविस्तारो भवता सोमसूर्ययोः ॥ राज्ञां चोभयवंश्यानां चरितं परमाद्भुतम् ॥ १ ॥ यदोश्च धर्मशीलस्य नितरां मुनिसत्तम ॥ तत्रांशेनावतीर्णस्य विष्णोर्वीर्याणि शंस नः ॥२॥ अवतीर्य यदोर्वंशे भगवान्भूतभावनः ॥ कृतवान् यानि विश्वात्मा तानि नो वद विस्तरात् ॥ ३ ॥ निवृत्ततर्षैरुपगीयमानाद्भवौषधाच्छ्रोत्रमनोऽभिरामात् ॥ क उत्तमश्लोकगुणानुवादात् पुमान्विरज्येत विना पशुघ्नात् ॥ ४ ॥ पितामहो मे समरेऽमरञ्जयैर्देवव्रताद्यातिरथैस्तिमिङ्गिलैः ॥ दुरत्ययं कौरवसैन्यसागरं कृत्वाऽतरन्वत्सपदं स्म यत्प्लवाः ॥ ५ ॥ द्रौण्यस्त्रविप्लुष्टमिदं मदङ्गं सन्तानबीजं कुरुपाण्डवानाम् ॥ जुगोप कुक्षिं गत आत्तचक्रो मातुश्च मे यः शरणं गतायाः ॥ ६ ॥ वीर्याणि तस्याखिलदेहभाजामन्तर्बहिःपूरुषकालरूपैः ॥ प्रयच्छतो मृत्युमुतामृतं च मायामनुष्यस्य वदस्व विद्वन् ॥ ७ ॥ रोहिण्यास्तनयः प्रोक्तो रामः सङ्कर्षणस्त्वया ॥ देवक्या गर्भसम्बन्धः कुतो देहान्तरं विना ॥ ८ ॥ कस्मान्मुकुन्दो भगवान्पितुर्गेहाद्व्रजं गतः ॥ क्व वासं ज्ञातिभिः सार्धं कृतवान्सात्वतां पतिः ॥ ९ ॥ व्रजे वसन्किमकरोन्मधुपुर्यां च केशवः ॥ भ्रातरं चावधीत्कंसं मातुरद्धाऽतदर्हणम् ॥ १० ॥ देहं मानुषमाश्रित्य कति वर्षाणि वृष्णिभिः ॥

गान गर्दछन् । जो मुमुक्षुजनका लागि संसाररूपी रोगको एकमात्र औषधि छन्, जो विषयी जनको पनि मनलाई अत्यन्त प्रिय छन्, ती भगवान् उत्तमश्लोकका गुणानुवाद सुन्नाले आत्मघाती, पशु-हिंसक व्यक्ति बाहेक अरु कुन प्राणी विमुख होला ? ॥ ४ ॥ कौरव सैन्यरूपी विशाल समुद्र तिमिङ्गिल अर्थात् सिन्धुमा बस्ने महामत्स्यरूपी भीष्मादि देवविजयी महारथी छँदै दुस्तर थियो, त्यसलाई श्रीकृष्णरूपी डुङ्गाको आश्रय पाएर हाम्रा पितामहहरूले गोपद झैं सहजै पारी तरे ॥ ५ ॥ जुन वेला द्रोण-सुत अश्वत्थामाको ब्रह्मास्त्रले कौरव पाण्डवंशका बीजस्वरूप मेरो शरीर दग्ध भइरहेको थियो, तब मेरी शरणागत माताको गर्भमा प्रविष्ट भएर जसले आफ्नू सुदर्शन चक्र द्वारा मम शरीरको रक्षा गरेका थिए ॥ ६ ॥ जो समस्त देहधारीहरूको भित्र र बाहिर कालरूपले स्थित रहेर उनलाई जीवन र मृत्यु दिन्छन् । हे विद्वन् ! ती मानवरूपधारी नारायण का लीलाहरूको वर्णन गर्नोस् ॥७॥ हे भगवन् ! हजुरले बलरामलाई रोहिणीका छोरा भन्नुभयो र देवकीका आठ पुत्रमा तिनको गणना गर्नुभयो । के अर्को जन्म नलिएर नै उनको

देवकीको गर्भबाट कसरी उत्पन्न भयो ? ॥८॥ भगवान कृष्ण पिताको घर छाडेर व्रजमा किन गए र ती यादवेशले आफ्ना ज्ञातका व्यक्तिहरूसित कहाँ-कहाँ निवास गरे ? ॥ ९ ॥ ती भगवानले व्रज तथा मथुरापुरीमा निवास गर्दा के-के गरे ? आफ्नी आमाको दाजु कंसलाई किन मारे ? उनका हातबाट मामाको मृत्यु हुनु त उचित थिएन ॥ १० ॥ मानव देह धारण गरेर भगवान् यादवहरूसित कति वर्ष द्वारकामा बसे र तिनका कति पत्नीहरू थिए ? ॥ ११ ॥ हे मुने ! हे सर्वज्ञ ! श्रीकृष्णको चरित्र सुन्ने प्रबल इच्छा छ। अतः ती र तिनको बाहेक अरू पनि जो लीलाहरू छन्, ती विस्तारले भन्नोस् ॥१२॥ यद्यपि मैले पानी पनि त्यागिदिएको छु, हजुरका मुखबाट निस्कने हरिकथारूपी अमृत पिउँदै रहनाले भोक-प्यासको कष्ट छैन ॥ १३ ॥ सूतजी भन्दछन्—हे शौनक ! राजा परीक्षित्का यस्ता राम्रा प्रश्न सुनेर भगवान्का भक्त शुकदेवजीले तिनको सहनी गरे र भगवान् श्रीकृष्णका कलिमलनाशक चरित्रहरू वर्णन गर्नथाले ॥१४॥ शुकदेवजी भन्दछन्—हे राजन् ! तिम्रो बुद्धि राम्रो स्थानमा लागेको छ, त्यसै हुनाले श्रीकृष्णका कथाहरूमा यस्तो अनुराग

यदुपुर्यां सहात्मीयैत्पत्न्यः कत्यभवन्प्रभोः ॥ ११ ॥ एतदन्यच्च सर्वं मे मुने कृष्णविचेष्टितम् ॥ वक्तुमर्हसि सर्वज्ञ श्रद्धधानाय विस्तृतम् ॥ १२ ॥ नैषाऽतिदुःसहा क्षुन्मां त्यक्तोदमपि बाधते ॥ पिबन्तं त्वन्मुखाम्भोजच्युतं हरिकथामृतम् ॥ १३ ॥ सूत उवाच ॥ एवं निशम्य भृगुनन्दन साधुवादं वैयासकिः स भगवानथ विष्णुरातम् ॥ प्रत्यर्च्य कृष्णचरितं कलिकल्मषघ्नं व्याहर्तुमारभत भागवतप्रधानः ॥ १४ ॥ श्रीशुक उवाच ॥ सम्यग्व्यवसिता बुद्धिस्तव राजर्षिसत्तम ॥ वासुदेवकथायां ते यज्जाता नैष्ठिकी रतिः ॥ १५॥ वासुदेवकथाप्रश्नः पुरुषाँस्त्रीन्पुनाति हि ॥ वक्तारं पृच्छकं श्रोतॄँ स्तत्पादसलिलं यथा ॥ १६ ॥ भूमिर्दृप्तनृपव्याजदैत्यानीकशतायुतैः ॥ आक्रान्ता भूरिभारेण ब्रह्माणं शरणं ययौ ॥ १७ ॥ गौर्भूत्वाऽश्रुमुखी खिन्ना क्रन्दन्ती करुणं विभोः ॥ उपस्थिताऽन्तिके तस्मै व्यसनं स्वमवोचत ॥१८॥ ब्रह्मा तदुपधार्याथ सह देवैस्तया सह ॥ जगाम सत्रिनयनस्तीरं क्षीरपयोनिधेः ॥ १९ ॥ तत्र गत्वा जगन्नाथं देवदेवं वृषाकपिम् ॥ पुरुषं पुरुषसूक्तेन उपतस्थे समाहितः ॥ २० ॥ गिरं समाधौ गगने समीरितां निशम्य वेधास्त्रिदशानुवाच ह ॥ गां पौरुषीं मे शृणुतामराः पुनर्विधीयतामाशु तथैव मा चिरम् ॥ २१ ॥ पुरैव पुंसाऽवधृतो धराज्वरो भवद्भिरं-

उत्पन्न भएको छ ॥१५॥ भगवान्का चरणबाट निस्केको गङ्गाजल झैं पवित्र उनका कथासित सम्बन्ध राख्ने प्रश्न श्रोता, वक्ता र प्रश्नकर्ता यी तीनै व्यक्तिलाई पवित्र पारिदिन्छ ॥१६॥ अब तिनका प्रश्नको उत्तर दिन्छन्—जब उन्मत्त राजाहरूको रूपमा असंख्य दैत्य पृथ्वीमा मनपरि अत्यार गर्नलागे, अनि तिनको भारले पीडित पृथ्वी गोरूप धारण गरेर मन खिन्न, आँखामा आँसु र दीन स्वरले विलाप गर्दै ब्रह्माको शरणमा गइन् र उनलाई कष्ट सुनाइन् ॥१७॥१८॥ तिनको व्यथापूर्ण कथा सुनेर ब्रह्माजी पृथ्वीसित महादेव तथा देवगण सहित क्षीरसमुद्रको तटमा गए ॥१९॥ त्यहाँ पुगेर तिनले एकाग्रचित्तले देवाधिदेव, जगत्पति, परमपुरुष, भगवान्को पुरुषसूक्तले स्तुति गरे ॥२०॥ अनि समाधि अवस्थामा तिनलाई आकाशवाणी सुनियो। त्यो सुनेर ब्रह्माजीले देवताहरूसित भने—हे देवता हो ! मैले जुन ईश्वरीय वाणी सुनें, त्यो सुन र त्यसै अनुसार काम गर ॥ २१ ॥ पृथ्वीको कष्ट भगवान्लाई पहिलेदेखि नै थाहा छ। अतः जबसम्म ती आफ्नो कालशक्तिले भूमिको भार हलुको पार्दै भूलोकमा बस्छन्, तबसम्म तिमीहरू आफाफना अंशले यदुकुलमा

उत्पन्न भएर त्यहीं बस ॥२२॥ साक्षात् परमपुरुष परमात्माको वसुदेवकहाँ जन्म हुनेछ । उनलाई प्रसन्न राख्नको निम्ति देवाङ्गना पनि मृत्युलोकमा जन्म लिनेछन् ॥ २३ ॥ भगवान् वासुदेवका कलास्वरूप स्वयं प्रकाशशील सहस्रवदन शेष पनि श्रीहरिको प्रिय गर्न उनीभन्दा पहिल्यै अवतीर्ण हुनन् ॥२४॥ जसले सम्पूर्ण जगत्लाई मोहित पारिराखेकी छन्,ती भगवती विष्णुमाया पनि प्रभुकै आज्ञाले उनको कार्य गर्न अंशरूपले अवतीर्ण हुनेछन् ॥२५॥ शुकदेव भन्नुहुन्छ–प्रजापतिहरूमा श्रेष्ठ ब्रह्माजी देवगणलाई यस्तो आज्ञा दिएर पृथ्वीलाई धैर्य दिई आफ्नो धाममा पाल्नुभयो ॥२६॥ अब मूल विषयमा आउँछन्–पूर्वकालमा राजा शूरसेन मथुरापुरीमा बसेर माथुर र शूरसेन देशको शासन गर्दथे ॥२७॥ त्यसःबखत मथुरापुरी नै यदुवंशीको राजधानी थियो, जहाँ भगवान् सदैव विराजमान रहन्छन् ॥२८॥ एक पल्ट त्यही नगरीमा शूरसेन-नन्दन वसुदेव देवकीसित विवाह गरेर आफ्नो घर फर्कनको निम्ति

शैर्यदुष्वपजन्यताम् ॥ स यावदुर्व्या भरमीश्वरेश्वरः स्वकालशक्त्या क्षपयँश्चरेद्भुवि ॥ २२ ॥ वसुदेवगृहे साक्षाद्भगवान्पुरुषः परः ॥ जनिष्यते तत्प्रि–यार्थं सम्भवन्तु सुरस्त्रियः ॥ २३ ॥ वासुदेवकलानन्तः सहस्रवदनः स्वराट् ॥ अग्रतो भविता देवो हरेः प्रियचिकीर्षया ॥ २४ ॥ विष्णोर्माया भग–वती यया सम्मोहितं जगत् ॥ आदिष्टा प्रभुणांशेन कार्यार्थे सम्भविष्यति ॥ २५ ॥ श्रीशुक उवाच ॥ इत्यादिश्यामरगणान्प्रजापतिपतिर्विभुः ॥ आश्वास्य च महीं गीर्भिः स्वधाम परमं ययौ ॥ २६ ॥ शूरसेनो यदुपतिर्मथुरामावसत्पुरीम् ॥ माथुराञ्छूरसेनांश्च विषयान्बुभुजे पुरा ॥ २७ ॥ राजधानी ततः साऽभूत्सर्वयादवभूभुजाम् ॥ मथुरा भगवान् यत्र नित्यं संनिहितो हरिः ॥२८॥ तस्यां तु कर्हिचिच्छौरिर्वसुदेवः कृतोद्वहः ॥ देवक्या भार्यया सार्धं प्रयाणे रथमारुहत् ॥ २९ ॥ उग्रसेनसुतः कंसः स्वसुः प्रियचिकीर्षया ॥ रश्मीन्हयानां जग्राह रौक्मै रथशतैर्वृतः ॥ ३० ॥ चतुःशतं पारिबर्हं गजानां हेममालिनाम् ॥ अश्वानामयुतं सार्धं रथानां च त्रिषट्शतम् ॥ ३१ ॥ दासीनां सुकुमारीणां द्वे शते समलंकृते ॥ दुहित्रे देवकः प्रादाद्याने दुहितृवत्सलः ॥ ३२ ॥ शङ्खतूर्यमृदङ्गाश्च नेदुर्दुन्दुभयः समम् ॥ प्रयाणप्रक्रमे तावद्वरवध्वोः सुमङ्गलम् ॥ ३३ ॥ पथि प्रग्रहिणं कंसमा–भाष्याहाशरीरवाक् अस्यास्त्वामष्टमो गर्भो हन्ता यां वहसेऽबुध ॥ ३४ ॥ इत्युक्तः स खलः पापो भोजानां कुलपांसनः ॥ भगिनीं हन्तुमारब्धः खड्गपाणिः कचेऽग्रहीत् ॥ ३५ ॥ तं जुगुप्सितकर्माणं नृशंसं निरपत्रपम् ॥ वसुदेवो महाभाग उवाच परिसान्त्वयन् ॥ ३६ ॥ श्लाघनीयगुणः शूर–

आफ्नी वधूसित रथमा चढे ॥२९॥ त्यस बखत राजा उग्रसेनको छोरो कंस उनलाई तीन सय सुवर्णमय रथका साथ पुऱ्याउन हिंड्यो र आफ्नी बहिनीको प्रसन्नताका लागि घोडाको राम स्वयं पक्र्यो ॥३०॥ महाराज देवकले आफ्नी प्रिय कन्यालाई विदा गर्दा सुवर्णमालाले आभूषित चार सय हात्ती, दस हजार घोडा, अठार सय रथ, अनेक वस्त्रा-भूषणले भूषित दुइ सय सुकुमारी दासी दाइजो दिए ॥३१॥३२॥ वर-वधू विदा हुने बेलामा शङ्ख, तूर्य, मृदङ्ग र दुन्दुभी आदि अनेक मङ्गल बाजा संगसंगै बज्नलागे ॥३३॥ जुन बेला मार्गमा कंस रथ हाँकिरहेको थियो, उसै बेला यो आकाशवाणी सुनियो—हे मूर्ख ! यही देवकीको आठौं बालकले तँलाई मार्नेछ । यो आकाशवाणी सुनेर महापापी भोज-कुलकलङ्क र दुष्ट कंस तरवार खँचेर देवकीलाई मार्न तयार भयो र उनको चुल्टो समायो ॥ ३४ ॥ ३५ ॥ निर्लज्ज र क्रूर कंसलाई त्यस्तो निन्द्य कर्म गर्नलागेको देखेर

वसुदेवले त्यसलाई बुझाउँदै भने—॥३६॥ वसुदेवजी भन्दछन्—हे कंस ! तिमीले भोजवंशको यश बढाएका छौ र सबै शूरवीर तिम्रा गुणको प्रशंसा गर्दछन् । यस्ता वीर भएर तिमी विवाहोत्सवको बेला आफ्नी बहिनीलाई मार्न किन तयार भयौ ? ॥३७॥ हे वीर ! मृत्यु त जन्म लिने सबै जीवहरूका साथै उत्पन्न हुन्छ । आज अथवा सय वर्षपछि प्राणीको मृत्यु निश्चित नै रहन्छ ॥३८॥ शरीर नष्ट भएपछि जीवले आफ्नो कर्मानुसार विवश भएर अन्य देह ग्रहण गरेर पहिलो शरीर त्यागिदिन पर्दछ ॥३९॥ जस्तै हिड्दा मानिस यौटा खुट्टा राम्ररी टेकेपछि मात्र अर्को खुट्टा उचाल्छन् अथवा तृण जलूका नामक एक प्रकारको कीरा जस्तै—जीव आफ्नो कर्मानुसार यौटा देहबाट अर्को देहमा जान्छ ॥४०॥ जस्तै—मनुष्य देखे-सुनेका पदार्थको संस्कारयुक्त मनले चिन्तन गरर स्वप्नामा उस्तै कुनै देह देख्दछ भने त्यसैमा सङ्कल्पद्वारा आत्मभाव प्राप्त हुनाले जाग्रत्कालीन शरीर

भवान्भोजशशकरः ॥ स कथं भगिनीं हन्यात्स्त्रियमुद्वाहपर्वणि ॥ ३७ ॥ मृत्युर्जन्मवतां वीर देहेन सह जायते ॥ अद्य वाऽब्दशतान्ते वा मृत्युर्वै प्राणिनां ध्रुवः ॥ ३८ ॥ देहे पञ्चत्वमापन्ने देही कर्मानुगोऽवशः ॥ देहान्तरमनुप्राप्य प्राक्तनं त्यजते वपुः ॥ ३९ ॥ व्रजँस्तिष्ठन्पदैकेन यथैवैकेन गच्छति ॥ यथा तृणजलूकैवं देही कर्मगतिं गतः ॥ ४० ॥ स्वप्ने यथा पश्यति देहमीदृशं मनोरथेनाभिनिविष्टचेतनः ॥ दृष्टश्रुताभ्यां मनसाऽनुचिन्तयन् प्रपद्यते तत्किमपि ह्यपस्मृतिः ॥ ४१ ॥ यतो धावति दैवचोदितं मनो विकारात्मकमाप पञ्चसु ॥ गुणेषु मायारचितेषु देह्यसौ प्रपद्यमानः सह तेन जायते ॥ ४२ ॥ ज्योतिर्यथैवोदकपार्थिवेष्वदः समीरवेगानुगतं विभाव्यते ॥ एवं स्वमायारचितेष्वसौ पुमान् गुणेषु रागानुगतो विमुह्यति ॥ ४३ ॥ तस्मान्न कस्यचिद्द्रोहमाचरेत्स तथाविधः ॥ आत्मनः क्षेममन्विच्छन्द्रोग्धुर्वै परतो भयम् ॥ ४४ ॥ एषा तवानुजा बाला कृपणा पुत्रिकोपमा ॥

बिर्सन्छ । त्यसै गरी विविध कामनाहरूमा चित्त गाडिनाले देहान्तर प्राप्त हुन्छ । जीव त्यसैमा दृढ अभिमान गर्दछ र आफ्ना पूर्वकर्महरूलाई बिर्सिदिन्छ ॥४१॥ जब अन्त्य समय आएर उपस्थित हुन्छ तब नाना विकारयुक्त मन आफ्ना प्रारब्ध कर्मको प्रेरणाले मायाद्वारा विविध देहरूपले रचिएका पञ्चभूतमा जुन-जुनतिर दगुर्दछ र तिनमा जस-जसलाई उपलब्ध गर्दछ, उसै-उसैमा आत्मभावना प्राणी उसैसित जन्मलिन्छ ॥ ४२ ॥ जस्तै—सूर्य-चन्द्रादि ज्योतिर्मय पदार्थ जलपूर्ण घडा आदिमा प्रतिबिम्बित भएर वायुको वेगले चञ्चल प्रतीत हुन्छन्, त्यस्तै जीव मायाद्वारा रचित विषयमा आसक्त भएर मोहित हुन्छ ॥४३॥ अतएव आफ्नो कल्याण गर्न खोज्ने व्यक्ति कहिल्यै पनि कसैसित द्रोह नगरून् किनकि द्वेषी जनलाई नै अर्कासित भय भइरहन्छ ॥४४॥ अत, यी हजुरकी बहिनी त अहिले सानी छ । यो अत्यन्त दीन र हजुरकी छोरीसमान छ । हजुरदीन जनमा दया गर्द आउनुभएको

उपदेश ( गृहस्थका लागि राम्रा शिक्षा )—१. यो घर प्रभुको हो र तिमी प्रभुका दास हौ, यो कहिल्यै नबिर्स । २. प्रभुसित डराऊ, उनलाई कदापि नबिर्स । ३. पवित्रता धारण गर, जीवन सरल सादा राख । ४. उच्च विचारलाई हृदयङ्गम गर । ५. घरमा शान्ति राख । केवल सेवाभाव मनमा राख्यौ भने आफैं शान्ति रहन्छ । ६. विभिन्न प्रकारका सत् चर्चाहरू मर्यादामा रहेर गर । ७. सत्यका साथै मीठो बोली गर । ८. वाद विवाद नै कलहको मूल हो, यसबाट जोगिय । ९. नयाँ आगन्तुक जीव आफ्नो प्रारब्ध अनुकूलित लिएर आउँछ, यो हरिइच्छा । १०. अतिथिको उसको योग्यतानुसार अवश्य स्वागत गर । ११. प्रत्येक वस्तु योग्य र ठीकठाउँको स्थानमा राख । १२. काम नलाग्ने वस्तुहरू नथुपार । १३. बालक र सेवकहरूसित नम्रताले बोल, दयाभाव राख । १४. भोलिको विषयमा आजै विचार गरिराख । १५. आजको काम भोलिलाई नराख, आजै पूर्ण पार । १६. सबै काम धैर्य र शान्तिले गर । १७. शत्रुलाई प्रेमले जित । १८. सुखको विस्तार गर्नमा कृपण नबन । १९. गृहस्थको राम्रो गहना नम्रता हो । २०. सबै दुःखको मूल कारण असन्तोषलाई पर फालिदेऊ ।

छ, त्यसैले यी कल्याणी बालिकालाई मार्नु उचित छैन ॥४५॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यसरी वसुदेवले साम, दाम र भेदनीतिले कंसलाई बुझाए, तर राक्षसी वृत्तिको अनुसरण गर्ने कंस त्यो दुःसाहसबाट विमुख भएन ॥४६॥ त्यसको हठ देखेर मौका टार्ने विचार गर्दै वसुदेवले मनमनै सोचे—॥४७॥ 'बुद्धिमान् मनुष्य जहाँसम्म उसको बुद्धि र बलले काम दिन्छ, त्यहाँसम्म मृत्युलाई टार्ने प्रयत्न गर्दै रहोस् । त्यति गर्दा पनि टर्दैन भने त्यसमा मनुष्यको कुनै अपराध छैन' ॥ ४८ ॥ अतः म यस मृ पुरुषधारी कंसलाई देवकीका छोराहरू दिने प्रतिज्ञा गरेर अबलाको प्राण बचाउँछु । यदि मेरा पुत्र हुनन् र तबसम्म कंस मरेन भने पनि यसको विचारमा परिवर्तन हुन सक्तैन ? विधाताको गति दुर्गम

हन्तुं नार्हसि कल्याणीमिमां त्वं दीनवत्सलः ॥ ४५ ॥ श्रीशुक उवाच ॥ एवं स सामभिर्भेदैर्बोध्यमानोऽपि दारुणः ॥ न न्यवर्तत कौरव्य पुरुषादाननुव्रतः ॥ ४६ ॥ निर्बन्धं तस्य तं ज्ञात्वा विचिन्त्यानकदुन्दुभिः ॥ प्राप्तं कालं प्रतिव्योढुमिदं तत्रान्वपद्यत ॥ ४७ ॥ मृत्युर्बुद्धिमताऽपोह्यो यावद्बुद्धिबलोदयम् ॥ यद्यसौ न निवर्तेत नापराधोऽस्ति देहिनः ॥ ४८ ॥ प्रदाय मृत्यवे पुत्रान्मोचये कृपणामिमाम् ॥ सुता मे यदि जायेरन्मृत्युर्वा न म्रियेत चेत् ॥ ४९ ॥ विपर्ययो वा किं न स्याद्गतिर्धातुर्दुरत्यया ॥ उपस्थितो निवर्तेत निवृत्तः पुनरापतेत् ॥५०॥ अग्नेर्यथा दारुवियोगयोगयोरदृष्टतोऽन्यन्न निमित्तमस्ति ॥ एवं हि जन्तोरपि दुर्विभाव्यः शरीरसंयोगवियोगहेतुः ॥ ५१ ॥ एवं विमृश्य तं पापं यावदात्मनिदर्शनम् ॥ पूजयामास वै शौरिर्बहुमानपुरःसरम् ॥ ५२ ॥ प्रसन्नवदनाम्भोजो नृशंसं निरपत्रपम् ॥ मनसा दूयमानेन विहसन्निदमब्रवीत् ॥ ५३ ॥ वसुदेव उवाच ॥ न ह्यस्यास्ते भयं सौम्य यद्वै साहाशरीरवाक् ॥ पुत्रान्समर्पयिष्येऽस्या यतस्ते भयमुत्थितम् ॥ ५४ ॥ श्रीशुक उवाच ॥ स्वसुर्वधान्निववृते कंसस्तद्वा·

छ । कहिले काहीं उपस्थित मृत्यु टर्दछ र टरिसकेको मृत्यु फेरि आएर उपस्थित हुन्छ* ॥४९॥५०॥ जसरी आगोसित काठको संयोग हुन र नहुनमा अदृष्ट बाहेक अरु कुनै कारण हुन सक्तैन । त्यस्तै नै जीवसित शरीरको वियोगको हेतु पनि अचिन्तनीय नै हुन्छ' ॥५१॥ आफ्नू बुद्धिअनुसार यस्तो निश्चय गरेर शूरनन्दन वसुदेवले निकै नम्र र सम्मान देखाउँदै त्यस पापीको प्रशंसा गरे ॥५२॥ फेरि भित्रैबाट दुःखी हुँदै र माथिबाट प्रसन्न अनुहारले हाँस्तै त्यो निर्लज्ज र नृशंस कंससित बोले ॥५३॥ वसुदेवले भने—हे सौम्य ! आकाशवाणीको कथनानुसार हजुरलाई देवकीबाट कुनै भय छैन । जसको हजुरलाई डर छ, तो इनका सबै छोरा म हजुरलाई दिनेछु ॥५४॥ श्रीशुकदेव भन्नुहुन्छ—वसुदेवजीको भनाई उचित जानेर

* दृष्टान्त ( असम्भव पनि सम्भव हुन सक्छ )—यौटा बूढो किसान घरको एक्लो थियो । वृद्धावस्थामा मनमा विचार आयो—तीर्थयात्रा गरेर आफ्नू परलोक सपार्नें । अस्तु, घरमा अरू अति सामान थियो, त्यो घरमै छुनिदियो । केवल यौटा घोडा शेष थियो । त्यो यौटा साहूकारकहाँ—हजुर यसलाई राख्नुहवस् र योचित काम पनि लिनुस् । जब म तीर्थयात्राबाट फर्कन्छु अनि मेरो घोडा मलाई फर्काइदिनु होला—भन्ने कबोलमा छाडिदियो र आफू तीर्थयात्रामा हिंड्यो । केही दिन बितेपछि साहूले घोडा बेचिदियो र रुपियाँ लियो । छ-सात महीनापछि जब त्यो किसान तीर्थयात्राबाट फर्केर आयो, तब उसले साहूसित घोडा माग्यो । साहूले भन्यो—'तिमी गएपछि नै घोडा मर्‍यो !' किसान चुप लाग्यो । दुइ-चार दिनपछि किसानले गाउँलेहरूसित सुन्यो—घोडा मरेको हैइन, यसले बेचेर खायो । अनि किसान फेरि साहूकहाँ गयो र भन्यो—'साहूजी ! मेरो मरेको घोडा कहाँ फालिएको थियो ?' उसले किसानलाई साथै लगेर जंगलमा गयो र त्यहाँ यौटा गोरुको कंकाल पर्याँकिएको थियो, त्यही देखाएर भन्नलाग्यो—'हेर यही तिम्रो घोडा थियो ।' किसानले सोध्यो—'घोडाको सीङ हुँदैन, यसको छ र घोडाका दाँत तल-माथि दुवैतिर हुन्छन्, तर यसको एकातिर मात्र छ ।' साहूले रून्ने मुख बनाएर भन्यो—'हेर भाइ ! यही रोग त भएको थियो—यो घोडाबाट गोरु बनेको थियो !'

कंसले बहिनीलाई मार्ने विचार त्यागिदियो र वसुदेवजी त्यसको प्रशंसा गर्दै हर्षपूर्वक आफ्नो घर गए ॥ ५५ ॥ कालक्रमले सर्वदेवतामयी देवकीको गर्भबाट प्रतिवर्ष एक-एक गरेर आठ पुत्र भए र यौटी कन्या जन्मिइन् ॥ ५६ ॥ वसुदेवजीले आफ्नो मनमा दुःखी भएर पनि कीर्तिमान नामक पहिलो छोरो कंसलाई दिए, किनकि ती झूटोदेखि सार्है डराउँथे ॥ ५७ ॥ यो कथन उचित हो—साधुजनलाई के असह्य हुन्छ ? ज्ञानी जन के कुरा को अपेक्षा राख्दछन् ? नीच व्यक्ति कुन कुकर्म गर्न सक्तैनन् ? जितेन्द्रिय पुरुष के त्याग्न सक्तैनन् ? ॥ ५८ ॥ हे राजन् ! वसुदेवको त्यस्तो समता र सत्य-तत्परता देखेर कंस सन्तुष्ट भयो र उसले हाँस्तै भन्यो—॥५९॥ तपाईं यस बालकलाई लैजानुस्, यसबाट मलाई कुनै भय छैन । मेरो मृत्यु त देवकीको आठौं पुत्रद्वारा हुने भएको छ ॥६०॥ 'असल हो' भनी वसुदेव बालक लिएर घर फर्किए, तर उनलाई कंसका कुराको

क्यसारवित् ॥ वसुदेवोऽपि तं प्रीतः प्रशस्य प्राविशद्गृहम् ॥ ५५ ॥ अथ काल उपावृत्ते देवकी सर्वदेवता ॥ पुत्रान्प्रसुषुवे चाष्टौ कन्यां चैवानुवत्सरम् ॥ ५६ ॥ कीर्तिमन्तं प्रथमजं कंसायानकदुन्दुभिः ॥ अर्पयामास कृच्छ्रेण सोऽनृतादतिविह्वलः ॥ ५७ ॥ किं दुःसहं नु साधूनां विदुषां किमपेक्षितम् ॥ किमकार्यं कदर्याणां दुस्त्यजं किं धृतात्मनाम् ॥ ५८ ॥ दृष्ट्वा समत्वं तच्छौरेः सत्ये चैव व्यवस्थितम् ॥ कंसस्तुष्टमना राजन्प्रहसन्निदमब्रवीत् ॥ ५९ ॥ प्रतियातु कुमारोऽयं न ह्यस्मादस्ति मे भयम् ॥ अष्टमाद्युवयोर्गर्भान्मृत्युर्मे विहितः किल ॥ ६० ॥ तथेति सुतमादाय ययावानकदुन्दुभिः ॥ नाभ्यनन्दत तद्वाक्यमसतोऽविजितात्मनः ॥ ६१ ॥ नन्दाद्या ये व्रजे गोपा याश्चामीषां च योषितः ॥ वृष्णयो वसुदेवाद्या देवक्याद्या यदुस्त्रियः ॥ ६२ ॥ सर्वे वै देवताप्राया उभयोरपि भारत ॥ ज्ञातयो बन्धुसुहृदो ये च कंसमनुव्रताः ॥ ६३ ॥ एतत्कंसाय भगवाञ्छशंसाभ्येत्य नारदः ॥ भूमेर्भारायमाणानां दैत्यानां च वधोद्यमम् ॥ ६४ ॥ ऋषेर्विनिर्गमे कंसो यदून्मत्वा सुरानिति ॥ देवक्या गर्भसम्भूतं विष्णुं च स्ववधं प्रति ॥ ६५ ॥ देवकीं वसुदेवं च निगृह्य निगडैर्गृहे ॥ जातं जातमहन्पुत्रं तयोरजनशङ्कया ॥ ६६ ॥ मातरं पितरं भ्रातॄन्सर्वांश्च सुहृदस्तथा ॥ घ्नन्ति ह्यसुतृपो लुब्धा राजानः प्रायशो भुवि ॥ ६७ ॥ आत्मानमिह सञ्जातं जानन्प्राग्विष्णुना हतम् ॥ महासुरं कालनेमिं यदुभिः स व्यरुध्यत ॥ ६८ ॥ उग्रसेनं च पितरं यदुभोजान्धकाधिपम् ॥ स्वयं निगृह्य बुभुजे शूर·

विश्वास भएन, किनकि कंस दुष्ट छ र उसको मन पनि वशमा छैन भन्ने कुरा उनी जान्दथे ॥ ६१ ॥ उसै बखत देवर्षि नारदले कंसकहाँ गएर भने—हे राजन् ! व्रजमा बस्ने नन्दादि गोप, तिनका स्त्रीहरू, वसुदेवादि वृष्णिवंशी यादव, देवकी आदि यदुकुलका स्त्रीहरू, यी दुवैका जाति बन्धु र मित्र, जो देख्दा तिम्रो चाकरी गर्दछन्—तर यी सबै देवता हुन् । पृथ्वीका भाररूप दैत्यहरूको संहार गर्नका लागि नै देवताहरूले यो उद्योग गरेका हुन् ॥६२-६४॥ यति भनेर देवर्षि नारद गएपछि कंसले यादवहरूलाई देवता र देवकीका छोराहरूलाई आफ्नो वध गर्नका लागि प्रकट भएका विष्णु जानेर वसुदेव-देवकीलाई पक्राउ गरी नेल ठोकेर झ्यालखानमा थुन्न लगायो र देवकीको गर्भबाट उत्पन्न प्रत्येक बालकलाई विष्णुको आशंकाले मार्न लाग्यो ॥६५॥६६॥ आफ्नै प्राणको पालन गर्नेलोभी राजा माता-पिता, भाइ र मित्रको समेत हत्या गर्दछन् ॥ ६७ ॥ कंसलाई थाहा थियो

कि म पूर्वजन्ममा कालनेमि नामक महादैत्य थिएँ र त्यस बेला विष्णुको हातबाट मरेर यहाँ उत्पन्न भएको छु। यसै निम्ति उसले यादवहरूसित शत्रुता राख्दथ्यो ॥६८॥ त्यो महाबली दैत्यले यदु, भोज र अन्धकवंशी यादवहरूका नायक आफ्ना पिता उग्रसेनलाई पनि झ्यालखानमा थुनायो र शूरसेन देशको राज्य गर्नलाग्यो, किनकि त्यसको विरोध गर्नसक्ने कोही थिएन ॥६९॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे श्रीकृष्णावतारोपक्रमे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां प्रथमोऽध्यायः ॥१॥

( भगवान्‌को गर्भ-प्रवेश ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! महाबली कंस मगधराज जरासन्धको मद्तले प्रलम्बासुर, बकासुर, चाणूर, तृणावर्त, अघासुर, मुष्टिक, अरिष्टासुर, द्विविद, पूतना, केशी, धेनुक, बाणासुर र भौमासुर आदि अन्य दैत्य-राजाहरूसित मिलेर यादवहरूलाई दुःख दिन लाग्यो ॥१॥२॥ कंसद्वारा पीडित भएर सबै यादव, कुरु, पांचाल, केकय, शाल्व, विदर्भ, विदेह र कोसलादि देशमा गएर बसोबास गरे ॥३॥ अलिकति यादवगण कंसको चित्तवृत्तिको अनुसरण गर्दै त्यहीं बसेर कंसको चाकरी गर्दै रहे। अब

सेनान्महाबलः ॥ ६९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे श्रीकृष्णावतारोपक्रमे प्रथमोऽध्यायः ॥ १ ॥

श्रीशुक उवाच ॥ प्रलम्बबकचाणूरतृणावर्तमहाशनैः ॥ मुष्टिकारिष्टद्विविदपूतनाकेशिधेनुकैः ॥१॥ अन्यैश्चासुरभूपालैर्बाणभौमादिभिर्युतः ॥ यदूनां कदनं चक्रे बली मागधसंश्रयः ॥२॥ ते पीडिता निविविशुः कुरुपाञ्चालकेकयान् ॥ शाल्वान्विदर्भान्निषधान्विदेहान्कोसलानपि ॥३॥ एके तमनुरुन्धाना ज्ञातयः पर्युपासते ॥ हतेषु षट्सु बालेषु देवक्या औग्रसेनिना ॥ ४ ॥ सप्तमो वैष्णवं धाम यमनन्तं प्रचक्षते ॥ गर्भो बभूव देवक्या हर्षशोकविवर्धनः ॥५॥ भगवानपि विश्वात्मा विदित्वा कंसजं भयम् ॥ यदूनां निजनाथानां योगमायां समादिशत् ॥६॥ गच्छ देवि व्रजं भद्रे गोपगोभिरलंकृतम् ॥ रोहिणी वसुदेवस्य भार्याऽऽस्ते नन्दगोकुले ॥ अन्याश्च कंससंविग्ना विवरेषु वसन्ति हि ॥ ७ ॥ देवक्या जठरे गर्भं शेषाख्यं धाम मामकम् ॥ तत्संनिकृष्य रोहिण्या उदरे सन्निवेशय ॥ ८ ॥ अथाहमंशभागेन देवक्याः पुत्रतां शुभे ॥ प्राप्स्यामि त्वं यशोदायां नन्दपत्न्यां भविष्यसि ॥९॥ अर्चिष्यन्ति मनुष्यास्त्वां सर्वकामवरेश्वरीम् ॥ धूपोपहारबलिभिः सर्वकामवरप्रदाम् ॥ १० ॥ नामधेयानि कुर्वन्ति स्थानानि च नरा भुवि ॥ दुर्गेति भद्रकालीति विजया वैष्णवीति च ॥ ११ ॥ कुमुदा चण्डिका कृष्णा माधवी कन्यकेति च ॥ माया नारायणीशानी शारदेत्यम्बिकेति च ॥१२॥

कंसले देवकीका क्रमशः छजना छोरा मारिदियो तब जसलाई 'अनन्त' भन्दछन्, ती भगवान् विष्णुका अंश शेषजी माता देवकीको हर्ष र शोकको वृद्धि गर्न सातौं गर्भमा भए ॥४॥५॥ अब विश्वात्मा भगवान् वासुदेवले आफ्नै आश्रित यादवहरूलाई कंसबाट भयभीत देख्नुभयो तब आफ्नी योगमायालाई भन्नुभयो—॥६॥ हे देवि ! हे भद्रे ! तिमी गाई र गोपगणले अलंकृत व्रजमा जाउ। हिजो-आज वसुदेवकी पत्नी रोहिणी गोकुलमा नन्दकहाँ छन्। तिनकी अन्य स्त्री पनि कंससित भयभीत भएर गुप्त स्थानमा बसेका छन् ॥७॥ मेरो शेष नामक तेजोमय अंश अहिले देवकीको गर्भमा छ, तिनलाई झिकेर रोहिणीको गर्भमा प्रविष्ट गराउ ॥८॥ हे शुभे ! अनि म आफ्ना अंशसहित पूर्णरूपले अवतार लिएर देवकीको पुत्र हुनेछु र तिमी नन्द-पत्नी यशोदाको गर्भबाट जन्म लेउ ॥९॥ तिमी सबै कामना र वर दिने देवी हुनेछौ। सबै तिमीलाई कामना र वरकी देवी ईश्वरी मानेर धूप-दीप र अनेक थरिका सामग्रीले तिम्रो पूजा गर्नेछन् ॥१०॥ संसारका मनुष्य तिम्रा अनेक नाम राख्नेछन् र अनेक मन्दिर बनाउने छन्। तिम्रा दुर्गा, भद्रकाली, विजया, वैष्णवी, कुमुदा, चण्डिका,

कृष्णा, माधवी, कन्यका, माया, नारायणी, ईशानी, शारदा र अम्बिका नाम लिनेछन् ॥११॥१२॥ गर्भको आकर्षण गर्नाले ती बालक संसारमा 'सङ्कर्षण' यस नामले प्रख्यात हुनन् । लोकरञ्जन गर्नाले उनी 'राम' र सबै बलवान्हरूमा प्रबल हुनाले 'बलभद्र' कहिने छन् ॥१३॥ यस प्रकार भगवान्ले आज्ञा दिएपछि भगवती योगमायाले 'जो आज्ञा' भनेर स्वीकार गरिन् र प्रभुको परिक्रमा गरी भूलोकमा आएर त्यस्तै गरिन् ॥१४॥ योगमायाले जब देवकीको गर्भ रोहिणीको उदरमा स्थित गरिदिइन् तब सबै पुरवासी 'हरे ! देवकीको गर्भपात भएछ' यसरी चारैतिर चर्चा गर्नलागे ॥ १५ ॥ त्यसपछि भक्तभयहारी विश्वात्मा भूतभावन भगवान्ले आफ्ना सम्पूर्ण कलाहरूसित वसुदेवको अन्तःकरणमा प्रवेश गरे ॥१६॥ भगवान्को दिव्य तेज धारण गर्नाले वसुदेव स्वयं हीं तेजिला देखिए र समस्त प्राणीका लागि असह्य र अदम्य भए ॥१७॥ अनि अखिल जगत्का मङ्गलकारी आत्मास्वरूप सर्वात्मा श्रीअच्युतको दिव्य तेज वसुदेवद्वारा आधान ( स्थापित ) गरिएपछि देवकीले पनि विशुद्ध मनले उसै गरी गर्भ धारण गरिन्

गर्भसंकर्षणात्तं वै प्राहुः संकर्षणं भुवि ॥ रामेति लोकरमणाद्बलं बलवदुच्छ्रयात् ॥ १३ ॥ सन्दिष्टैवं भगवता तत्रेत्योमिति तद्वचः ॥ प्रतिगृह्य परिक्रम्य गां गता तत्तथाऽकरोत् ॥ १४ ॥ गर्भे प्रणीते देवक्या रोहिणीं योगनिद्रया ॥ अहो विस्रंसितो गर्भ इति पौरा विचुक्रुशुः ॥ १५ ॥ भगवानपि विश्वात्मा भक्तानामभयंकरः ॥ आविवेशांशभागेन मन आनकदुन्दुभेः ॥ १६ ॥ स बिभ्रत्पौरुषं धाम भ्राजमानो यथा रविः ॥ दुरासदोऽतिदुर्धर्षो भूतानां सम्बभूव ह ॥ १७ ॥ ततो जगन्मङ्गलमच्युतांशं समाहितं शूरसुतेन देवी ॥ दधार सर्वात्मकमात्मभूतं काष्ठा यथानन्दकरं मनस्तः ॥ १८ ॥ सा देवकी सर्वजगन्निवासनिवासभूता नितरां न रेजे ॥ भोजेन्द्रगेहेऽग्निशिखेव रुद्धा सरस्वती ज्ञानखले यथा सती ॥ १९ ॥ तां वीक्ष्य कंसः प्रभया जितान्तरां विरोचयन्तीं भवनं शुचिस्मिताम् ॥ आहैष मे प्राणहरो हरिर्गुहां ध्रुवं श्रितो यन्न पुरेयमीदृशी ॥२०॥ किमद्य तस्मिन्करणीयमाशु मे यदर्थतन्त्रो न विहन्ति विक्रमम् ॥ स्त्रियाः स्वसुर्गुरुमत्या वधोऽयं यतः श्रियं हन्त्यनुकालमायुः ॥२१॥ स एष जीवन्खलु सम्परेतो वर्तेत योऽत्यन्तनृशंसितेन ॥ देहे मृते तं मनुजाः शपन्ति गन्ता तमोऽन्धं तनुमानिनो ध्रुवम् ॥ २२ ॥ इति घोरतमाद्भावात्सन्निवृत्तः

जसरी पूर्वदिशा पूर्ण चन्द्रमालाई धारण गर्दछ ॥१८॥ तर जगत्का आश्रयस्वरूप भगवान्को आश्रित भएर पनि पूर्ण शोभित भइनन्, किनकि घटादिमा थुनिएको बत्ती वा ज्ञानवञ्चकका अन्तःकरणमा रहने सद्विद्याको समान ती कंसको थुमामा थिइन् ॥१९॥ अजेय भगवान् जसको गर्भमा थिए, ती मन्द-हास्य हुने देवकीले आफ्नो दिव्य तेजले कारागारलाई उज्यालो पारेको देखेर कंसले मनमनै भन्यो–यसपल्ट अवश्य यसको गर्भमा मेरो प्राण लिने विष्णुले प्रवेश गरेको छ, किनकी यी पहिले यस्ती तेजवती थिइनन् ॥२०॥ अब म श्रीहरिको नाशको छट्ट के उपाय गरूँ ? वीर पुरुष आफ्नो स्वार्थवश पराक्रम दूषित पार्दैनन् । यिनको वध गर्नाले स्त्रीवध, भगिनीवध र गर्भिणीवधको पाप लाग्नेछ, जुन तत्काल यश, श्री र आयु नष्ट पार्दछ ॥२१॥ जुन पुरुष धेरै हिंसापरायण हुन्छ, त्यो बाँचेर पनि मरेकै समान रहन्छ । त्यो मरेपछि सबै जन त्यसको निन्दा गर्दै भन्दछन् कि यो अवश्य देहाभिमानीहरूको योग्य तमोमय लोकमा प्राप्त हुनेछ ॥२२॥ यस्तो विचार गरेर समर्थ भएर पनि स्वयं देवकीको वधरूपी विचारबाट निवृत्त भयो र भगवान्प्रति

अनुभाव राखेर उनको जन्म हुने प्रतीक्षा गर्नलाग्यो ॥२३॥ त्यो उठ्दा बस्ता, खाँदा-पिउँदा र पृथ्वीमा हिंड्दा-डुल्दा हरबखत भगवान्कै चिन्तामा लीन रहन लाग्यो । कतिसम्म भने कंसलाई जगतै विष्णुमय देखिनलाग्यो ॥ २४ ॥ हे राजन् ! त्यसै बेला नारदादि मुनि र देवगणका साथै ब्रह्मा र शिवजी देवकीको निवासस्थानमा आएर मधुर वाणीले भगवान्को स्तुति गर्नलागे–॥ २५ ॥ हे प्रभो ! हजुर सत्यव्रत हुनुहुन्छ, सत्य नै हजुरलाई प्राप्त गर्ने साधन छ र हजुर तीनै कालमा सत्य हुनुहुन्छ । हजुर सत्यका आदिकारण, सत्यमा नै स्थित र सत्यका पनि सत्य हुनुहुन्छ । ऋतसत्य (राम्रो वाणी र समदर्शन) नै हजुरका नेत्र ( नयन ) हुन् । हे सत्यस्वरूप ! हामी हजुरका शरणमा छौं ॥२६॥ यस संसाररूपी सनातन वृक्षको यौटी मात्र प्रकृति आश्रय छन्, सुख-दुःख दुइ फल र जरा तीन गुण छन् । धर्म, अर्थ, काम र मोक्षरूपी चार रस छन् । पाँच ज्ञानेन्द्रिय जानिलिने साधन छन् । शोक, मोह, जरा, मृत्यु, भोक र प्यास–यी छ स्वभाव छन् । सात (धातु) त्वचा छन् । पंचभूतर मन, बुद्धि, अहङ्कार–यी आठ हाँगा र आँखा-नाकादि नौ छिद्र छन्। दस

स्वयं प्रभुः ॥ आस्ते प्रतीक्षंस्तज्जन्म हरेर्वैरानुबन्धकृत् ॥ २३ ॥ आसीनः संविशंस्तिष्ठन्भुञ्जानः पर्यटन्महीम् ॥ चिन्तयानो हृषीकेशमपश्यत्तन्मयं जगत् ॥ २४ ॥ ब्रह्मा भवश्च तत्रैत्य मुनिभिर्नारदादिभिः ॥ देवैः सानुचरैः साकं गीर्भिर्वृषणमैडयन् ॥ २५ ॥ सत्यव्रतं सत्यपरं त्रिसत्यं सत्यस्य योनिं निहितं च सत्ये ॥ सत्यस्य सत्यमृतसत्यनेत्रं सत्यात्मकं त्वां शरणं प्रपन्नाः ॥२६॥ एकायनोऽसौ द्विफलस्त्रिमूलश्चतूरसः पञ्चविधः षडात्मा ॥ सप्तत्वगष्टविटपो विदितो नवाक्षो दशच्छदो द्विखगो ह्यादिवृक्षः ॥ २७ ॥ त्वमेक एवास्य सतः प्रसूतिस्त्वं सन्निधानं त्वमनुग्रहश्च ॥ त्वन्मायया संवृतचेतसस्त्वां पश्यन्ति नाना न विपश्चितो ये ॥ २८ ॥ बिभर्षि रूपाण्यवबोध आत्मा क्षेमाय लोकस्य चराचरस्य ॥ सत्त्वोपपन्नानि सुखावहानि सतामभद्राणि मुहुः खलानाम् ॥ २९ ॥ त्वय्यम्बुजाक्षाखिलसत्त्वधाम्नि समाधिनावेशितचेतसैके ॥ त्वत्पादपोतेन महत्कृतेन कुर्वन्ति गोवत्सपदं भवाब्धिम् ॥ ३० ॥ स्वयं समुत्तीर्य सुदुस्तरं द्युमन् भवार्णवं भीममदभ्रसौहृदाः ॥ भवत्पदाम्भोरुहनावमत्र ते निधाय याताः सदनुग्रहो भवान् ॥ ३१ ॥ येऽन्येऽरविन्दाक्ष विमुक्तमानिनस्त्वय्यस्तभावादविशुद्धबुद्धयः ॥ आरुह्य कृच्छ्रेण परं पदं ततः पतन्त्यधोऽनादृतयुष्मदङ्घ्रयः

छन् र यसमा जीवात्मा र परमात्मारूपी दुइ पक्षी बस्तछन् ॥२७॥ यस संसार-वृक्षका हजुर नै उत्पत्तिस्थान हुनुहुन्छ । हजुरनै अधिष्ठाता, पालक हुनुहुन्छ । हजुरकी मायाले ढाकिएका व्यक्ति हजुरलाई अनेक रूपमा देख्दछन् ॥२८॥ हजुर ज्ञानस्वरूप भए पनि चराचर जगत्को कल्याणका लागि नै अनेक विशुद्ध सत्वमय रूप धारण गर्नु हुन्छ । हजुरको त्यो रूप साधु जनका निम्ति सुखदिने र दुर्जनको अमङ्गल गर्ने हुन्छ ॥२९॥ हे कमलनयन ! हजुर निखिल सत्वस्वरूपमा समाधियोगद्वारा चित्त लगाएर महापुरुषहरू द्वारा सेवित हजुरका चरणकमल रूपी डुङ्गाको आश्रय लिएर यस संसार-समुद्रलाई गोपद झैं पारी तर्दछन् ॥ ३० ॥ हे कान्तिमय ! हजुर सत्पुरुषमा कृपा गर्नुहुन्छ, हजुरका प्रेमी भक्तजन त स्वयं यस महाभयङ्कर र दुस्तर संसार-समुद्र तर्छन् र अरुको रक्षार्थ हजुरका चरण-कमलरूपी डुङ्गालाई यहीं छाडेर जान्छन् अर्थात् भक्तिमार्ग प्रवृत्त पारेर जाने गर्दछन ॥ ३१ ॥ हे कमल लोचन ! हजुरका भक्तगणको अतिरिक्त अन्य पुरुष हुने व्यर्थ अभिमान गर्दछन् । हजुरको भक्तिभावले रहित हुनाको कारण उनको चित्त शुद्ध छैन, ती परिश्रमले स्वर्गादि उत्तम लोकमा जान्छन्

तापनि हजुरका चरणको आराधनाबाट विमुख हुनाले ती स्थानबाट तल झर्दछन् ॥ ३२ ॥ हे माधव ! जो हजुरमै बलियो प्रेम राख्ने भक्तजन छन्, ती ज्ञानाभिमानीहरूको जस्तै कहिल्यै सन्मार्गबाट भ्रष्ट हुँदैनन् । हे प्रभो ! हजुरद्वारा सुरक्षित भएर ती विघ्नका नाइकेको टाउकोमा खुट्टा राख्दै निर्भय विचरण गर्दछन् ॥३३॥ हे भगवन् ! हजुर संसारको स्थितिका निम्ति विशुद्ध सत्त्वको आश्रय लिएर देहधारीहरूको कल्याणसाधनस्वरूप दिव्यदेह धारण गर्दछन्, जसले व्यक्ति त्यस रूपद्वारा हजुरको वेद (ज्ञान), क्रिया, योग, तप र समाधि आदिले पूजन गर्दछन् ॥३४॥ हे विधाता ! यदि हजुर यो विशुद्ध सत्त्वमय स्वरूप धारण गर्नुहुन्न भने अज्ञान र भेदभाव नष्ट पार्ने हजुरको अपरोक्ष ज्ञान हुन सक्ने थिएन, किनकि जसका यी गुण छन् र जसले सबै प्रकाशित हुन्छन्, ती सर्वाधिष्ठान र सर्वसाक्षी नै परमात्मा हुन । यसरी गुणका प्रकाशले नै हजुरको अनुमान हुन्छ ॥३५॥ हे देव ! मन र वेद-वाणी द्वारा जसका स्वभावको केवल अनुमान गरिन्छ, यस्ता हजुर साक्षीको नाम र रूपको गुण, कर्म र जन्मादिद्वारा वर्णन गर्न सकिन्न, तथापि हजुरका भक्तजन उपासना

॥ ३२ ॥ तथा न ते माधव तावकाः क्वचिद्भ्रश्यन्ति मार्गात्त्वयि बद्धसौहृदाः ॥ त्वयाऽभिगुप्ता विचरन्ति निर्भया विनायकानीकपमूर्धसु प्रभो ॥ ३३ ॥ सत्त्वं विशुद्धं श्रयते भवान्स्थितौ शरीरिणां श्रेय उपायनं वपुः ॥ वेदक्रियायोगतपःसमाधिभिस्तवार्हणं येन जनः समीहते ॥ ३४ ॥ सत्त्वं न चेद्धातरिदं निजं भवेद्विज्ञानमज्ञानभिदापमार्जनम् ॥ गुणप्रकाशैरनुमीयते भवान् प्रकाशते यस्य च येन वा गुणः ॥३५॥ न नामरूपे गुणजन्मकर्मभिर्निरूपितव्ये तव तस्य साक्षिणः ॥ मनोवचोभ्यामनुमेयवर्त्मनो देव क्रियायां प्रतियन्त्यथापि हि ॥ ३६ ॥ शृण्वन्गृणन्संस्मरयंश्च चिन्तयन्नामानि रूपाणि च मङ्गलानि ते ॥ क्रियासु यस्त्वच्चरणारविन्दयोराविष्टचेता न भवाय कल्पते ॥ ३७ ॥ दिष्ट्या हरेऽस्या भवतः पदो भुवो भारोऽपनीतस्तव जन्मनेशितुः ॥ ... विना विनोदं बत तर्कयामहे ॥ भवो निरोधः स्थितिरप्यविद्यया कृता यतस्त्वय्यभयाश्रयात्मनि ॥ ३९ ॥ मत्स्याश्वकच्छपनृसिंहवराहहंसराजन्यविप्रविबुधेषु कृतावतारः ॥ त्वं पासि नस्त्रिभुवनं च यथाऽधुनेश भारं भुवो हर यदूत्तम वन्दनं ते ॥ ४० ॥ दिष्ट्याम्ब ते कुक्षिगतः परः पुमानंशेन

आदि क्रियाहरूले हजुरको साक्षात्कार गर्दछन् ॥३६॥ जो प्राणी हजुरका चरणमा चित्त लगाएर लौकिक-वैदिक कर्म गर्दा हजुरको मङ्गलमय नाम र रूपको श्रवण, कीर्तन, स्मरण र ध्यान गर्दछन्, ती फेरि संसारमा आउन्न ॥३७॥ अब हजुर सर्वसमर्थ श्रीहरि अवतीर्ण भएपछि पृथ्वीको भार हलुका हुनेछ । हामी भाग्यमानी रहेछौं, जो यस पृथ्वीतलमा हजुरका राम्रा चरण-चिह्नले अङ्कित र स्वर्गलाई हजुरको कृपाले कृतार्थ देख्नेछौं ॥३८॥ हे ईश ! वास्तवमा हजुर अजन्मा हुनुहुन्छ, हामीलाई हजुरका जन्मको कारण विनोदबाहेक अरु केही पनि थाहा पाइन्न । त्यति मात्र होइन, संसारको उत्पत्ति, स्थिति र निरोध पनि हजुर निर्भय अधिष्ठानरूपी सर्वात्मामा अविद्याकृत नै छन् ॥ ३९ ॥ जसरी हजुर पूर्वकालमा मत्स्य, अश्व अर्थात् हयग्रीव, कच्छप, नृसिंह, वराह, हंस, क्षत्रिय, ब्राह्मण र देवताहरूको अवतार लिएर हाम्रा र त्रिलोकको रक्षा गर्दै आउनु भएको छ, त्यसै गरी अब पनि पृथ्वीको भार हर्नोस् । हामी हजुरको वन्दना गर्दछौं ॥४०॥ हे माता देवकी ! तिम्रो ठूलो भाग्य रहेछ, जुन तिम्रो गर्भमा हामी सबैको अभ्युदय गर्नको निम्ति, साक्षात् परमपुरुष परमात्मा आफ्नू पूर्ण

बलाहरूसहित आउनभएकोछ अब तिमी मरणासन्न कंसको डर नमान। तिम्रो छोरो यदुकुलको रक्षक हुनेछ ॥ ४१ ॥ श्रीशुकदेव भन्नुहुन्छ —हे राजन्! जसको रूप यो दृश्य प्रपञ्च बाट भिन्न थियो, ती सर्वसमर्थ प्रभुको यसरी स्तुति गरेर देवगण स्वर्गलोक फर्किए ॥ ४२ ॥ इति श्रीमद्भागवते दशमस्कधे 'वाशिष्ठी' भाषाटीकायां द्वितीयोऽध्यायः ॥ २ ॥

श्रीशुकदेव भन्नुहुन्छ— हे महाराज ! जुन बेला परम सुन्दर र सर्वगुणसम्पन्न समय आयो, रोहिणी नक्षत्रको उदय भयो, अश्विन्यादि सबै नक्षत्र ग्रह र तारागण शान्त भए ॥१॥ सबै दिशाहरू निर्मल भए र आकाशमा कान्तियुक्त तारागण टल्कन लागे। पुर, ग्राम, गोष्ठ र रत्नादिका खानीसहित पृथ्वी मङ्गलमय भइन् ॥२ ॥ नदीहरूको जल निर्मल भयो, फक्रेका कमलले सरोवरहरूको शोभा बढ्यो, वनश्रेणी पक्षिहरू र भ्रमरका गुञ्जायमान र फूलका गुच्छाले शोभित भए ॥ ३ ॥ परम सुखदायक सुगन्धयुक्त

साक्षाद्भगवान्भवाय नः ॥ माऽभूद्भयं भोजपतेर्मुमूर्षोर्गोप्ता यदूनां भविता तवात्मजः ॥४१॥ श्रीशुक उवाच ॥ इत्यभिष्टूय पुरुषं यद्रूपमनिदं यथा ॥ ब्रह्मेशानौ पुरोधाय देवाः प्रतिययुर्दिवम् ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे गर्भगतविष्णोर्ब्रह्मादिकृतस्तुतिर्नाम द्वितीयोऽध्यायः ॥२॥

श्रीशुक उवाच ॥ अथ सर्वगुणोपेतः कालः परमशोभनः ॥ यर्ह्येवाजनजन्मर्क्षं शान्तर्क्षग्रहतारकम् ॥ १ ॥ दिशः प्रसेदुर्गगनं निर्मलोडुगणोदयम् ॥ मही मङ्गलभूयिष्ठा पुरग्रामव्रजाकरा ॥ २ ॥ नद्यः प्रसन्नसलिला ह्रदा जलरुहश्रियः ॥ द्विजालिकुलसन्नादस्तबका वनराजयः ॥ ३ ॥ ववौ वायुः सुखस्पर्शः पुण्यगन्धवहः शुचिः ॥ अग्नयश्च द्विजातीनां शान्तास्तत्र समिन्धतः ॥ ४ ॥ मनांस्यासन्प्रसन्नानि साधूनामसुरद्रुहाम् ॥ जायमानेऽजने तस्मिन्नेदुर्दुन्दुभयो दिवि ॥ ५ ॥ जगुः किन्नरगन्धर्वास्तुष्टुवुः सिद्धचारणाः ॥ विद्याधर्यश्च ननृतुरप्सरोभिः समं तदा ॥ ६ ॥ मुमुचुर्मुनयो देवाः सुमनांसि मुदान्विताः ॥ मन्दं मन्दं जलधरा जगर्जुरनुसागरम् ॥७॥ निशीथे तम उद्भूते जायमाने जनार्दने ॥ देवक्यां देवरूपिण्यां विष्णुः सर्वगुहाशयः ॥ आविरासीद्यथा प्राच्यां दिशीन्दुरिव पुष्कलः ॥ ८ ॥ तमद्भुतं बालकमम्बुजेक्षणं चतुर्भुजं शङ्खगदाद्युदायुधम् ॥ श्रीवत्सलक्ष्मं

स्वच्छ वायु बग्न लाग्यो र अग्निहोत्र–गृहमा ब्राह्मणका संचित होमानल शान्त भएर फेरि स्वयं प्रज्वलित भयो ॥ ४ ॥ देवतागण र साधुजनको चित्त प्रसन्न भयो। अजन्मा भगवानको आविर्भाव हुने बेलामा आकाशमा देव–दुन्दुभी बज्नलागे ॥ ५ ॥ किन्नर र गन्धर्व गान गर्नलागे, सिद्ध–चारणादिले स्तुति आरम्भ गरे र अप्सरागण तथा विद्याधरीहरू नाच्नथाले ॥ ६ ॥ देवता र मुनिगण आनन्दले पुष्प-वर्षा गर्नलागे। त्यो अन्धकारमयी अर्धरात्रीमा श्रीजनार्दन प्रकट हुने बेलामा समुद्र तथा मेघगण मन्द स्वरले गर्जन लागे। जस्तै पूर्व दिशामा पूर्णचन्द्रको प्रादुर्भाव हुन्छ, त्यस्तै गरी देवीरूपीणी देवकीको गर्भबाट सर्वान्तर्यामी श्रीहरि प्रकट भए ॥ ७ ॥ ती अद्भुत बालकको—

* सर्वसमर्थ—सक्छन् पार्न सुमेरु चूर्ण कि पुलो, लाई सुमेरु गर्छन्। पार्छन् भूपतिलाई भिक्षु, नृपती, नै रङ्क पारी दिछन् ॥
हात्ती बाँधि समुद्र तार्न सकिला, को पाउमा सक्छ जो। त्यो सक्तैन उतार्न पारि भवको ? भक्ती दुखी भक्तको ॥

जसका नेत्र कमल झैं राम्रा थिए, जसमा चारै हातमा शङ्ख, चक्र, गदापद्म आदि आयुध, वक्षस्थलमा श्रीवत्स–चिह्न, घाँटीमा कौस्तुभ मणि शोभित थियो। जो पीताम्बर धारण गरेका थिए र जसको वर्ण सजल मेघ झैं श्याम थियो, उनलाई श्रीवसुदेवले देखे ॥ ९ ॥ उनका छरिएका र औंठी झैं बेरिएका अलकावली, बहुमूल्य रत्नमय किरीट र कुण्डलका कान्तिले झलमल्ल थियो। उनको सुन्दर श्याम देह देदीप्यमान मेखला, भुजबन्द एवं कङ्कणादिले विभूषित थियो ॥ १० ॥ भगवानलाई पुत्ररूपमा अवतीर्ण देखेर वसुदेवका नेत्र विस्मय र आनन्दले विभोर भए । उनले तुरुन्त कृष्णावतारको महोत्सव मनाउने अत्याहटमा आनन्दमग्न भएर ब्राह्मणहरूलाई दस हजार गाई दिने संकल्प गरे ॥११॥ हे परीक्षित् ! आफ्नो तेजले सूतिका गृहलाई आलोकित पार्दै ती बालकलाई साक्षात् नारायण जाने उनको प्रभाव जान्नेर वसुदेवजीको भय हराएर गयो र ती नतमस्तक भई हात जोरेर यस प्रकार स्तुति गर्न लागे ॥ १२ ॥ वसुदेवजी भन्दछन्–! म हजुरलाई जान्दछु। हजुर प्रकृतिदेखि पर साक्षात् परम पुरुष हुनुहुन्छ । हजुर विशुद्ध

गलशोभिकौस्तुभं पीताम्बरं सान्द्रपयोदसौभगम् ॥ ९ ॥ महार्हवैदूर्यकिरीटकुण्डलत्विषा परिष्वक्तसहस्रकुन्तलम् ॥ उद्दामकाञ्च्यङ्गदकङ्कणादिभिः विरोचमानं वसुदेव ऐक्षत ॥ १० ॥ स विस्मयोत्फुल्लविलोचनो हरिं सुतं विलोक्यानकदुन्दुभिस्तदा ॥ कृष्णावतारोत्सवसम्भ्रमोऽस्पृशन्मुदा द्विजेभ्योऽयुतमाप्लुतो गवाम् ॥ ११ ॥ अथैनमस्तौदवधार्य पूरुषं परं नताङ्गः कृतधीः कृताञ्जलिः ॥ स्वरोचिषा भारत सूतिकागृहं विरोचयन्तं गत भीः प्रभाववित् ॥ १२ ॥ वसुदेव उवाच ॥ विदितोऽसि भवान्साक्षात्पुरुषः प्रकृतेः परः ॥ केवलानुभवानन्दस्वरूपः सर्वबुद्धिदृक् ॥ १३ ॥ स एव स्वप्रकृत्येदं सृष्ट्वाग्रे त्रिगुणात्मकम् ॥ तदनु त्वं ह्यप्रविष्टः प्रविष्ट इव भाव्यसे ॥ १४ ॥ यथेमेऽविकृता भावास्तथा ते विकृतैः सह ॥ नानावीर्याः पृथग्भूता विराजं जनयन्ति हि ॥ १५ ॥ सन्निपत्य समुत्पाद्य दृश्यन्तेऽनुगता इव ॥ प्रागेव विद्यमानत्वान्न तेषामिह सम्भवः ॥ १६ ॥ एवं भवान्बुद्ध्यनुमेयलक्षणैर्ग्राह्यैर्गुणैः सन्नपि तद्गुणाग्रहः ॥ अनावृतत्वाद्बहिरन्तरं न ते सर्वस्य सर्वात्मन आत्मवस्तुनः ॥ १७ ॥ य आत्मनो दृश्यगुणेषु सन्निति व्यवस्यते स्वव्यतिरेकतोऽबुधः ॥ विनानुवादं न च तन्मनीषितं सम्यग्यतस्त्यक्तमुपाददत्पुमान् ॥ १८ ॥ त्वत्तोऽस्य जन्मस्थितिसंयमा–

ज्ञानान्दस्वरूप र सबैका बुद्धिद्रष्टा हुनुहुन्छ ॥ १३ ॥ पहिले हजुर नै आफ्नो मायाले यो त्रिगुणात्मक संसार रच्नुहुन्छ र त्यसमा प्रविष्ट नभए पनि प्रविष्ट जस्तै देखिनु हुन्छ ॥ १४ ॥ जस्तै महत्तत्वादि कारण भिन्न-भिन्न रहेसम्म भिन्न-भिन्न सामर्थ्य भएका रहनु हुन्छ, जसले कुनै विशेष कार्य गर्न सक्तैनन्, किनकि इन्द्रियादि सोह विकाररहित मिलिएर नै हजुर यस ब्रह्माण्डको रचना र यसलाई उत्पन्न गरेर यसैमा अनुप्रविष्ट जस्तै देखिनु हुन्छ , वास्तवमा हजुरको जन्म हुँदैन, किनकि हजुर कारणरूपले सदा विद्यमान रहनु हुन्छ ॥१५॥ ॥ १६ ॥ यसै प्रकार केवल बुद्धिद्वारा जसका लक्षणहरूको अनुमान गरिन्छ र जो इन्द्रियहरूद्वारा ग्रहण गरिन्छन्, ती गुणहरूमा व्याप्त रहेर पनि हजुरको ग्रहण हुँदैन, किनकि ती गुणले आवृत्त नहुनाले सर्वस्वरूप, सर्वान्तर्यामी एवं परमार्थ आत्मस्वरूप हजुरमा बाहिरी–भित्री कल्पना नै छैन ॥ १७ ॥ व्यक्ति आत्माको दृश्य देहादिलाई आफू भन्दा पृथक् र सत्य मान्दछ, त्यो अज्ञानी र विचारपूर्वक जुन विचारको बाध्य भएको छ, त्यसलाई सत्य मान्नाले त्यो मूढ हो ॥ १८ ॥ हे ! प्रभो ! यस्ता भन्दछन् कि हजुर निष्क्रिय,

निर्गुण र निर्विकारबाट सृष्टिको उत्पत्ति-स्थिति हुन्छ, त्यो उचित हो किनकि हजुर सर्वसमर्थ र ब्रह्म अर्थात् सर्वाधिष्ठान हुनुहुन्छ। सत्वादि तीनै गुण हजुरको आश्रित रहन्छन्। उनको कार्यस्वरूप उत्पत्ति आदिको हजुरमा आरोप गरिन्छ ॥ १९ ॥ आफनी मायाद्वारा हजुर नै त्रैलोक्यको रक्षार्थ सात्विक शुक्लवर्ण, रजः प्रधान रक्तवर्ण र संहारार्थ तमोमय कृष्णवर्ण धारण गर्नुहुन्छ ॥ २० ॥ अहिले यस लोकको रक्षार्थ हजुरले मकहाँ अवतार लिनुभयो। हे अखिलेश्वर! हजुर यस रूपले राजा-नामधारी करोडौं असुर-सेना-पतिहरूद्वारा संचालित असंख्य सेनाको संहार गर्नु हुनेछ ॥ २१ ॥ हे सुरेश! यहाँ हजुरले अवतार लिएको सूचना पाएर दुष्ट कंसले हजुरका दाजुहरूलाई मारिदियो। अब पनि दूतद्वारा हजुर प्रकट भएको समचार सुन्नासाथ शस्त्र लिएर आइपुग्छ ॥ २२ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! आफना पुत्रमा नारायणका लक्षण देखेर मुसुमुसु हाँस्तै देवकी आनन्दित भएर पनि कंसको डर मान्दै स्तुति गर्न लागिन्—॥ २३॥ हे प्रभो! जुन परमार्थतत्त्वलाई वेदमा आदिकारण भनिएको छ, जसलाई अव्यक्त, ब्रह्म (बृहत्), ज्योतिर्मय,

न्विभो वदन्त्यनीहादगुणादविक्रियात् ॥ त्वयीश्वरे ब्रह्मणि नो विरुध्यते त्वदाश्रयात्वादुपचर्यते गुणैः ॥ १९ ॥ स त्वं त्रिलोकस्थितये स्वमायया बिभर्षि शुक्लं खलु वर्णमात्मनः ॥ सर्गाय रक्तं रजसोपबृंहितं कृष्णं च वर्णं तमसा जनात्यये ॥२०॥ त्वमस्य लोकस्य विभो रिरक्षिषुर्गृहेऽवतीर्णोऽसि ममाखिलेश्वर ॥ राजन्यसंज्ञासुरकोटियूथपैर्निर्व्यूह्यमाना निहनिष्यसे चमूः ॥२१॥ अयं त्वसभ्यस्तव जन्म नौ गृहे श्रुत्वाऽग्रजाँस्ते न्यवधीत्सुरेश्वर ॥ स तेऽवतारं पुरुषैः समर्पितं श्रुत्वाऽधुनैवाभिसरत्युदायुधः ॥ २२ ॥ श्रीशुक उवाच ॥ अथैनमात्मजं वीक्ष्य महापुरुषलक्षणम् ॥ देवकी तमुपाधावत्कंसाद्भीता शुचिस्मिता ॥ २३ ॥ देवक्युवाच ॥ रूपं यत्तत्प्राहुरव्यक्तमाद्यं ब्रह्म ज्योतिर्निर्गुणं निर्विकारम् ॥ सत्तामात्रं निर्विशेषं निरीहं स त्वं साक्षाद्विष्णुरध्यात्मदीपः ॥ २४ ॥ नष्टे लोके द्विपरार्धावसाने महाभूतेष्वादिभूतं गतेषु ॥ व्यक्तेऽव्यक्तं कालवेगेन याते भवानेकः शिष्यते शेषसंज्ञः ॥ २५ ॥ योऽयं कालस्तस्य तेऽव्यक्तबन्धो चेष्टामाहुश्चेष्टते येन विश्वम् ॥ निमेषादिर्वत्सरान्तो महीयाँस्तं त्वेशानं क्षेमधाम प्रपद्ये ॥ २६ ॥ मर्त्यो मृत्युव्यालभीतः पलायन् लोकान्सर्वान्निर्भयं नाध्यगच्छत् ॥ त्वत्पादाब्जं प्राप्य यदृच्छयाऽद्य स्वस्थः शेते मृत्युरस्मादपैति ॥ २७ ॥ स त्वं घोरादुग्रसेनात्मजान्नस्त्राहि त्रस्तान्भृत्यवित्रासहाऽसि ॥ रूपं चेदं पौरुषं ध्यानधिष्ण्यं मा प्रत्यक्षं मांसदृशां कृषीष्ठाः ॥ २८ ॥ जन्म ते मय्यसौ पापो मा

निर्गुण सत्तामात्र निर्विशेष र निरीह भनेर वर्णन गरिएको छ, ती बुद्धि आदिका प्रकाशक साक्षात् विष्णु भगवान् हजुर नै हुनुहुन्छ ॥ २४ ॥ जब प्रजापति ब्रह्माको परमायुको द्विपरार्ध समाप्त भएर कालको वेगले संसार नष्ट भएर जान्छ र सबै तत्व आफ्ना कारणस्वरूप अहङ्कारमा लीन हुन्छन् तथा अहङ्कार महत्तत्त्वमा र महत्तत्त्व प्रकृतिमा लीन हुन्छ, तब हजुर नै शेषरूपमा रहनु हुन्छ ॥२५॥ हे प्रभो! जसको चेष्टाले सारा विश्व चेष्टा गरिरहेको छ, यो एक निमेषदेखि प्रलयपर्यन्तको महाकाल पनि हजुरकै लीला कहिन्छ। हजुर जगत्का ईश्वर र अभयस्थान हुनुहुन्छ, म हजुरको शरणमा छु ॥ २६ ॥ हे प्रभो! यो मरणधर्मा जीव मृत्युरूपी सर्पबाट डराएर सबै लोकमा डुल्दै कहीं कुनै निर्भय स्थान पाउन सकेन। आज त्यो हजुरको शरण पाएर सुखपूर्वक सुतिरहेछ, किनकि अब मृत्यु यसबाट पर गएको छ ॥ २७ ॥ हे नाथ! हजुर भक्त-भयहारी हुनाले यस दुष्ट कंसको भयबाट हाम्रो

रक्षा गर्नुहवस् । किनकि हामी त्योसित साह्रै भयभीत छौं । यो पनि प्रार्थना छ—हजुर यो ध्यानगम्यरूप चर्मचक्षु हुने व्यक्तिका सामु प्रकट नगर्नोस् ॥२८॥ हे मधुसूदन ! मेरो गर्भबाट हजुर भएको वृत्तान्त त्यस पापी कंसले थाहा नपाओस् । म साह्रै अधीर छु । अतः हजुरको निम्ति पनि मलाई कंसको डर लागिरहेछ ॥२९॥ हे विश्वात्मन् ! शङ्ख, चक्र गदा र पद्मको शोभाले युक्त आफ्नो यो अलौकिक चतुर्भुज स्वरूप गुप्त पार्नुहवस् ॥३०॥ प्रलयको वेला जो सम्पूर्ण विश्वलाई आफ्नो देहमा यथावकाश धारण गर्दछन् उनै पुरुष हजुर मेरो गर्भबाट प्रकट हुनुभयो ! यो हजुरको अद्भुत लीला हो ॥३१॥ भगवान् भन्नुहुन्छ—हे देवि ! पूर्वजन्ममा स्वायम्भुव मन्वन्तरको वेला तिमी पृश्नि थियौ र त्यस वेला यी वसुदेव सुतपा नामक प्रजापति थिए ॥३२॥ जब ब्रह्माले तिमी दुवैलाई प्रजा उत्पन्न गर्न आज्ञा दिए, तब तिमी इन्द्रिय दमन गरेर तपस्यामा लाग्यौ ॥ ३३ ॥ तिमी दुवैले वर्षा, वायु, शीत, ताप आदि कालका गुणहरू सहेर कठोर तपस्या गर्‍यौ र प्राणायामले तिम्रा मनको मैलो पखालियो ॥३४॥ तब तिमी दुवै सुकेका पात वायु पिएर मसित अभिलषित वरदान प्राप्त गर्ने इच्छा राखी

विद्यान्मधुसूदन ॥ समुद्विजे भवद्धेतोः कंसादहमधीरधीः ॥ २९ ॥ उपसंहर विश्वात्मन्नदो रूपमलौकिकम् ॥ शङ्खचक्रगदापद्मश्रिया जुष्टं चतुर्भुजम् ॥३०॥ विश्वं यदेतत्स्वतनौ निशान्ते यथावकाशं पुरुषः परो भवान् ॥ विभर्ति सोऽयं मम गर्भगोऽभूदहो नृलोकस्य विडम्बनं हि तत् ॥ ३१ ॥ श्रीभगवानुवाच ॥ त्वमेव पूर्वसर्गेऽभूः पृश्निःस्वायम्भुवे सति ॥ तदाऽयं सुतपा नाम प्रजापतिरकल्मषः ॥ ३२ ॥ युवां वै ब्रह्मणाऽऽदिष्टौ प्रजासर्गे यदा ततः । सन्नियम्येन्द्रियग्रामं तेपाथे परमं तपः ॥ ३३ ॥ वर्षवातातपहिमघर्मकालगुणाननु ॥ सहमानौ श्वासरोधविनिर्धूतमनोमलौ ॥ ३४ ॥ शीर्णपर्णानिलाहारावुपशान्तेन चेतसा ॥ मत्तः कामानभीप्सन्तौ मदाराधनमीहतुः ॥ ३५ ॥ एवं वां तप्यतोस्तीव्रं तपः परमदुष्करम् ॥ दिव्यवर्ष-सहस्राणि द्वादशेयुर्मदात्मनोः ॥ ३६ ॥ तदा वां परितुष्टोऽहममुना वपुषाऽनघे ॥ तपसा श्रद्धया नित्यं भक्त्या च हृदि भावितः ॥३७॥ प्रादुरासं वरदराड् युवयोः कामदित्सया ॥ व्रियतां वर इत्युक्ते मादृशो वां वृतः सुतः ॥३८॥ अजुष्टग्राम्यविषयावनपत्यौ च दम्पती ॥ न वव्राथेऽपवर्गं मे मोहितौ देवमायया ॥ ३९ ॥ गते मयि युवां लब्ध्वा वरं मत्सदृशं सुतम् ॥ ग्राम्यान्भोगानभुञ्जाथां युवां प्राप्तमनोरथौ ॥ ४० ॥ अदृष्ट्वाऽन्यतमं लोके शीलौदार्यगुणैः समम् ॥ अहं सुतो वामभवं पृश्निगर्भ इति श्रुतः ॥ ४१ ॥ तयोर्वां पुनरेवाहमदित्यामास कश्यपात् ॥ उपेन्द्र इति विख्यातो

शान्त-चित्तले मेरो आराधना गर्नलाग्यौ ॥ ३५ ॥ यसरी अति दुष्कर र घोर तप गर्दै मभा नै चित्त लगाएर दिव्य बाह्र हजार वर्ष बिते ॥ ३६ ॥ हे अनघे ! जब तिमी दुवैले यसरी तप, श्रद्धा र भक्तिपूर्वक आफ्नू हृदयमा मेरो निरन्तर चिन्तन गर्‍यौ अनि म प्रसन्न भएर तिमी दुवैलाई इच्छित वर दिने इच्छाले यही रूपमा प्रकट भएँ र जब मैले भनें—'वरदान माग' तब तिमीले मजस्तै पुत्र माग्यौ ॥३७-३८॥ त्यस वेलासम्म तिमीहरू विषय-भोगबाट रहित थियौ र तिम्रा सन्तान थिएनन् । अतः मेरी मायाले मोहित भएर तिमीले मोक्ष माग्न सकीनौ ॥३९॥ म गएपछि तिमी दुवैले म जस्तै पुत्र हुने वर पाएर सफल-मनोरथ भई विषय-भोगमा लाग्यौ ॥४०॥ मलाई यस लोकमा शील उदारता आदि गुणहरूमा अरू समान कोही अरु देखिएन । यसै निम्ति म स्वयं तिम्रो पुत्र भएर 'पृश्निगर्भ' नामले विख्यात भएँ ॥ ४१ ॥ अर्को जन्ममा जब तिमी दुवै कश्यप र अदिति भयौ, तब मैले तिमीहरू

'उपेन्द्र' नामले जन्म लिएँ, त्यस बखत मेरो देह सानो हुनाले 'वामन' कहिएँ ॥ ४२ ॥ हे सती ! अब तेस्रो जन्ममा म फेरि उही रूपले तिमीकहाँ उत्पन्न भएको छु । यसरी पूर्व-कालमा मैले तिमीलाई जुन वचन दिएको थिएँ, त्यो सत्य भयो ॥४३॥ यस बेला मैले आफ्नू यो रूप देखाउने कारण हो–तिमी मेरा पूर्व अवतारको पनि स्मरण गर, किनकि केवल मनुष्य शरीरले मेरो जन्मको ज्ञान हुन सक्तैन ॥ ४४ ॥ अब तिमी पुत्रभाव र ब्रह्मभावले मेरो चिन्तन गर्दै ममा प्रीति बढाउने छौ र अन्त्यमा अलभ्य परमपद प्राप्त गर्ने छौ ॥४५॥ यदि तिमीलाई कंसको डर छ भने मलाई गोकुल लिएर हिंड, त्यहाँ यशोदाको गर्भबाट उत्पन्न मेरी योगमायालाई लिएर फर्क ॥ ४६ ॥ श्रीशुकदेव भन्नुहुन्छ–यति भनेर भगवान्‌ले वसुदेवले हेर्दाहेर्दै आफ्नी मायाले साधारण बालक बनिदिए ॥ ४७ ॥ जुन बेला वसुदेव, भगवान्‌को आज्ञाले विष्णुरूपधारी श्रीहरिलाई लिएर सूतिका गृहबाट बाहिर निस्के, उसै बेला नन्दरानी यशोदाको गर्भबाट भगवान्‌की अजन्मा योगमाया जन्मिन् ॥ ४८ ॥ उनै योगमाया द्वारा समस्त इन्द्रिय वृत्तिहरूको ज्ञान

वामनत्वाच्च वामनः ॥ ४२ ॥ तृतीयेऽस्मिन्भवेऽहं वै तेनैव वपुषाऽथ वाम् ॥ जातो भूयस्तयोरेव सत्यं मे व्याहृतं सति ॥ ४३ ॥ एतद्वां दर्शितं रूपं प्राग्जन्मस्मरणाय मे ॥ नान्यथा मद्भवं ज्ञानं मर्त्यलिङ्गेन जायते ॥ ४४ ॥ युवां मां पुत्रभावेन ब्रह्मभावेन चासकृत् ॥ चिन्तयन्तौ कृतस्नेहौ यास्येथे मद्गतिं पराम् ॥ ४५ ॥ यदि कंसाद्बिभेषि त्वं तर्हि मां गोकुलं नय ॥ मन्मायामानयाशु त्वं यशोदागर्भसम्भवाम् ॥ ४६ ॥ श्रीशुक उवाच ॥ इत्युक्त्वासीद्धरिस्तूष्णीं भगवानात्ममायया ॥ पित्रोः सम्पश्यतोः सद्यो बभूव प्राकृतः शिशुः ॥ ४७ ॥ ततश्च शौरिर्भगवत्प्रचोदितः सुतं समादाय स सूतिकागृहात् ॥ यदा बहिर्गन्तुमियेष तर्ह्यजा या योगमायाऽजनि नन्दजायया ॥४८॥ तया हृतप्रत्ययसर्ववृत्तिषु द्वाःस्थेषु पौरेष्वपि शायतेष्वथ ॥ द्वारस्तु सर्वाः पिहिता दुरत्यया बृहत्कपाटायसकीलशृङ्खलैः ॥ ४९ ॥ ताः कृष्णवाहे वसुदेव आगते स्वयं व्यवर्यन्त यथा तमो रवेः ॥ ववर्ष पर्जन्य उपांशुगर्जितः शेषोऽन्वगाद्वारि निवारयन्फणैः ॥ ५० ॥ मघोनि वर्षत्यसकृद्यमानुजा गम्भीरतोयौघजवोर्मिफेनिला ॥ भयानकावर्तशताकुला नदी मार्गं ददौ सिन्धुरिव श्रियः पतेः ॥ ५१ ॥ नन्दव्रजं शौरिरुपेत्य तत्र तान् गोपान्प्रसुप्तानुपलभ्य निद्रया ॥ सुतं यशोदाशयने निधाय तत्सुतामुपादाय पुनर्गृहानगात् ॥ ५२ ॥ देवक्याः शयने न्यस्य वसुदेवोऽथ दारिकाम् ॥ प्रतिमुच्य पदोर्लोहमास्ते पूर्ववदावृतः ॥५३॥ यशोदा नन्दपत्नी च

हरण गरिनाले कंसका द्वारपाल र पुरवासी सबै अचेत भएर निदाए । झ्यालखानका ढोका बन्द थिए, तिनमा फलामका सिक्री र ताल्चा लागेका थिए, । अतः कोही बाहिर निस्कन सक्तैनथ्यो ॥४९॥ तर वसुदेवले श्रीकृष्णचन्द्रलाई लिएर निस्कन खोज्नासाथ ती सबै ढोकाहरू आफैं खुले, जस्तै सूर्योदय भएपछि अन्धकार नष्ट भएर जान्छ त्यस्तैभयो । त्यस बेला मन्द-मन्द गर्जेर मेघ पानी पारिरहेका थिए र शेषजी आफ्ना फणाको छायाले जल निवारण गर्दै तिनको पछि-पछि हिंडिरहेका थिए ॥ ५० ॥ लगातार पानी परिरहनाले यमुनाको प्रवाह तीव्र र डरलाग्दो भएको थियो, तिनका तरंगहरूले जलमा फीँज उठिरहेको थियो र अनेक भयंकर भुमरी परिरहेका थिए, तर समुद्रले जसरी रामचन्द्रलाई बाटो दिएको थियो, त्यस्तै यमुनाजीले पनि वसुदेवलाई पारी जान बाटो छाडि दिइन् ॥५१॥ नन्दजीको घर पुगेर वसुदेवजीले देखे–समस्त गोपगण निद्राले अचेत भएका

थिए। अतः ती तुरुन्त बालक कृष्णलाई यशोदाको नजीकै सुताएर उनकी भरखर जन्मिएकी योगमायारूपिणी बालिकालाई लिएर कारागारमा फर्किए ॥ ५२ ॥ यहाँ आएर उनले कन्यालाई देवकीका नजीकै सुताइदिए र आफ्ना खुट्टामा स्वयं सिक्री लगाएर पहिले जस्तै थुनामा थुनिए ॥ ५३ ॥ उता यशोदाले यति मात्र जानिन्–मलाई कुनै सन्तान भएको छ, तर श्रम र निद्राले छोरो हो कि छोरी जान्न सकिनन् ॥५४॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायां तृतीयोऽध्यायः ॥३॥

( योगमायाको भविष्यवाणी र कंसको पश्चात्ताप ) श्रीशुकदेव भन्दछन्–हे राजन् ! नन्दकहाँबाट फर्केपछि सबै झ्याल-ढोकाहरू पहिले जस्तै बन्द भएका थिए। एकै छिनपछि शिशु रोएको सुनेर सबै द्वारपाल उठे ॥१॥ तिनले तुरुन्त राजा कंसकहाँ गएर देवकीको सन्तान जन्मेको कुरा सुनाए, जसको निम्ति कंस उद्विग्न भएर प्रतीक्षा गर्दै थियो ॥ २ ॥ यति सुन्नासाथ त्यो शय्या त्यागेर जुरुक्क उठ्यो र नाङ्गो शिर तथा कपाल फुकेको र लरबरिदै झ्यालखानमा पुग्यो। 'यो मेरो मृत्यु हो' यस भावडाले आकुल-व्याकुल भइरहेथ्यो ॥३॥

जातं परमबुध्यत ॥ न तल्लिङ्गं परिश्रान्ता निद्रयाऽपगतस्मृतिः॥५४॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे कृष्णजन्मनि तृतीयोऽध्यायः॥३॥

श्रीशुक उवाच ॥ बहिरन्तपुरद्वारः सर्वाः पूर्ववदावृताः ॥ ततो बालध्वनिं श्रुत्वा गृहपालाः समुत्थिताः ॥ १ ॥ ते तु तूर्णमुपव्रज्य देवक्या गर्भजन्म तत् ॥ आचख्युर्भोजराजाय यदुद्विग्नः प्रतीक्षते ॥ २ ॥ स तल्पात्तूर्णमुत्थाय कालोऽयमिति विह्वलः ॥ सूतीगृहमगात्तूर्णं प्रस्खलन्मुक्तमूर्धजः ॥ ३ ॥ तमाह भ्रातरं देवी कृपणा करुणं सती ॥ स्नुषेयं तव कल्याणी स्त्रियं मा हन्तुमर्हसि ॥ ४ ॥ बहवो हिंसिता भ्रातः शिशवः पावकोपमाः ॥ त्वया दैवनिसृष्टेन पुत्रिकैका प्रदीयताम् ॥ ५ ॥ नन्वहं ते ह्यवरजा दीना हतसुता प्रभो ॥ दातुमर्हसि मन्दाया अङ्गेमां चरमां प्रजाम् ॥ ६ ॥ श्रीशुक उवाच ॥ उपगुह्यात्मजामेवं रुदत्या दीनदीनवत् ॥ याचितस्तां विनिर्भर्त्स्य हस्तादाचिच्छिदे खलः ॥ ७ ॥ तां गृहीत्वा चरणयोर्जातमात्रां स्वसुः सुताम् ॥ अपोथयच्छिलापृष्ठे स्वार्थोन्मूलितसौहृदः ॥ ८ ॥ सा तद्धस्तात्समुत्पत्य सद्यो देव्यम्बरं गता ॥ अदृश्यतानुजा विष्णोः सायुधाऽष्टमहाभुजा ॥ ९ ॥ दिव्यस्रगम्बरालेपरत्नाभरणभूषिता ॥ धनुःशूलेषुचर्मासिशङ्खचक्रगदाधरा ॥ १० ॥

सासुन्ने आएको दाजु कंससित देवकीले सार्‍है दुःखी भएर दीन वाणीमा भनिन्–हे भद्र ! यो त हजुरकी बुहारी हो, हजुर यस कन्याको वध नगर्नुस् ॥४॥ दाजु ! दैववश तिमीले मेरा अग्निसमान तेजस्वी अनेक बालक मारिदिनुभयो, अब यो यौटी कन्या मैं मलाई दिनोस् ॥५॥ हे प्रभो ! म तिम्री बहिनी हुँ, आफ्ना बालकहरू मारिनाले म सार्‍है दीन भएकी छु। हे तात ! म अभागिनीलाई यो अन्तिम सन्तान छाडिदेऊ ॥६॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यति भनेर कन्यालाई काखमा लुकाई देवकीले दीन भावले रोएर धेरै अनुनय-विनय गरिन् तर दुष्ट कंसले उनको हातबाट कन्या खोस्यो ॥७॥ भर्खर जन्मेकी आफ्नी भान्जीको खुट्टा समातेर त्यसले यौटा शिलामा पछारिदियो, किनकि स्वार्थले उसको सौहार्द नष्ट पारिदिएको थियो ॥८॥ तर ती उसको हातबाट फुस्केर देवीरूप भई आकाशमा गइन्। त्यहाँबाट भगवान् विष्णुकी बहिनी योगमाया आयुध सहित अष्टभुजाका रूपमा देखिइन् ॥९॥ ती दिव्य माला, वस्त्र, चन्दन र मणिमय गहनाले आभूषित थिइन् र हातमा धनुष, त्रिशूल, बाण, ढाल, खड्ग, शङ्ख, चक्र र गदा लिएकी थिइन्। तिनका

891

चारैतिर सिद्ध, चारण, गन्धर्व, अप्सरा, किन्नर र नागगण अनेक रत्न समर्पण गरेर स्तुति गर्दै थिए। ती देवीले कंसलाई भनिन्—॥१०-११॥ 'हे मूर्ख ! मलाई मारेर तँलाई के प्राप्त हुन्छ ? तेरो पूर्वशत्रु र तँलाई मार्ने त अन्तै कहीँ उत्पन्न भइसकेको छ। अब तँ व्यर्थ निर्दोष बालकको हत्या नगर* ॥१२॥ उसलाई त्यति भनेर देवी योगमाया अन्तर्धान भइन र उनै पृथ्वीका अनेक स्थानमा भिन्न-भिन्न नामले प्रख्यात भइन् । १३ ॥ देवीको वचन सुनेर कंसलाई ठूलो विस्मय भयो। त्यसले तुरुन्त वसुदेव-देवकीलाई बन्धन-मुक्त पारेर विनयपूर्वक भन्यो—॥ १४ ॥ 'हे भगिनी ! हे भागिनेय ! राक्षस जस्तै म पापीले तिम्रा धेरै सन्तान मारिदिएँ ॥ १५ ॥ करुणा, जाति र सुहृद् जनहरूको स्नेह छाड्ने म मरेर कुन

सिद्धचारणगंधर्वैरप्सरः किन्नरोरगैः ॥ उपाहृतोरुबलिभिः स्तूयमानेदमब्रवीत् ॥ ११ ॥ किं मया हतया मन्द जातः खलु तवान्तकृत् ॥ यत्र क्व वा पूर्वशत्रुर्मा हिंसीः कृपणान्वृथा ॥ १२ ॥ इति प्रभाष्य तं देवी माया भगवती भुवि ॥ बहुनामनिकेतेषु बहुनामा बभूव ह ॥ १३ ॥ तयाऽभिहितमाकर्ण्य कंसः परमविस्मितः ॥ देवकीं वसुदेवं च विमुच्य प्रश्रितोऽब्रवीत् ॥ १४ ॥ अहो भगिन्यहो भाम मया वां बत पाप्मना ॥ पुरुषाद इवापत्यं बहवो हिंसिताः सुताः ॥ १५ ॥ स त्वहं त्यक्तकारुण्यस्त्यक्तज्ञातिसुहृत्खलः ॥ काँल्लोकान्वै गमिष्यामि ब्रह्महेव मृतः श्वसन् ॥ १६ ॥ दैवमप्यनृतं वक्ति न मर्त्या एव केवलम् ॥ यद्विश्रम्भादहं पापः स्वसुर्निहतवाञ्छिशून् ॥ १७ ॥ मा शोचतं महाभागावात्मजान्स्वकृतम्भुजः ॥ जन्तवो न सदैकत्र दैवाधीनास्तदासते ॥ १८ ॥ भुवि भौमानि भूतानि यथा यान्त्यपयान्ति च ॥ नायमात्मा तथैतेषु विपर्येति यथैव भूः ॥ १९ ॥ यथानेवंविदो भेदो यत आत्मविपर्ययः ॥ देहयोगवियोगौ च संसृतिर्न निवर्तते ॥ २० ॥ तस्मा-

लोकमा जाउँला ? अहिले म ब्रह्मघाती समान सास फेरेर पनि मरे जस्तै छु ॥ १६ ॥ अब थाहा पाएँ—मनुष्य मात्र होइन कि देवता पनि मिथ्या बोल्दा रहेछन् । त्यसैको भ्रममा परेर म पापीले आफ्नी बहिनीका बालक मारेको हुँ ॥१७॥ हे महाभागा ! तिमी आफ्ना पुत्रको शोक नगर। तिनको प्रारब्धमा यस्तै भोग तोकिएको थियो । सबै जीव दैवाधीन रहन्छन् । ती सधैँ यौटै स्थानमा टिक्तैनन् ॥ १८ ॥ जस्तै माटोले बनेका पदार्थ बन्दै र बिग्रँदै रहन्छन्, तर माटोमा कुनै परिवर्तन आउन्न । त्यस्तै गरी प्राणीमात्रका देहादिको उत्पत्ति र नाश हुँदै रहन्छ । यसले आत्मामा कुनै प्रकारको विकार आउन्न ॥ १९ ॥ जो यो तत्त्व जान्दैनन्, तिनकै देहादि अनात्म पदार्थमा आत्मबुद्धि हुन्छ । देहादिमा

* दृष्टान्त ( बिर्ता फर्काउन सकिन )—गुजरातका सुलतान जफर शाहको शासनकालमा यौटा नपुंसक अफिसरले यौटा मलिकको जमीन्दारको बिर्ता खोसेर उसको सर्वस्व गरी धन ल्याएर बादशाहको अर्पित गरिदियो । बादशाहले सोध्यो—'यो कसको धन हो ?' अफिसरले भन्यो— हजुरको हो किनकि हजुरका पूर्वजहरूको बेलामा यो बिर्ता धार्मिक व्यक्तिहरूलाई इनाममा दिइएको थियो । अब बिर्ताको आमदानी बढ्दै गएको छ । तेरो लोभीले थाहा भएको छ—ती जमीन्दारमध्ये धेरै मलिकके । अतः ती बिर्ताको आमदानी खम्मा पारेर ल्याएको हुँ ।' बादशाहले हप्काएर भने—'हे मूर्ख ! यदि तँ पुरुष भए नामर्द र स्त्री भए कुलटा भ ने थिइस् तर तँ त पुरुष स्त्री, दुवैका अवगुण सँगा छन् । यो जमीन्दार मलिकके तिनका छोरा हुनन् र दुवै समाए नुदुम्बी त अरबस होलान्, एकपल्ट जुन वस्तु दिइयो, त्यो फर्की लोभन सकिन्छ ? तैँले यो सार्है नराम्रो काम गरिस् । यस-जसको यो धन लिएको हो, उनलाई फर्काइदे र ती मलिकका हृदयसित क्षमा माग !' पछि बादशाहले भयालो दिइयो—उन अफिसर यस्तो काम गर्यो, उसले कठोर दण्ड पाउने छ ।

आत्मबुद्धि हुनाले भेदज्ञान हुन्छ र भेदज्ञानले नै शरीरका संयोग-वियोग हुन्छन् । यसैले तिनको सुख-दुःखरूपी संसारबाट निवृत्ति हुँदैन ॥ २० ॥ अतएव हे भद्रे ! तिम्रा ती पुत्र म द्वारा मारिए, तिनको तिमी शोक नगर किनकि सबै जीव आफ्ना कर्मको फल भोग्दछन् ॥ २१ ॥ जबसम्म जीव स्वयंप्रकाश भएर पनि आफूलाई 'म मारिन्छु वा मार्दछु' यस्तो मान्दछ, तबसम्म देहको उत्पत्ति र उसको नाशको अभिमान गर्नाले त्यो अज्ञानवश बाध्य-बाधक भावमा प्राप्त हुँदै रहन्छ । तिमी दुवै साधु-स्वभाव र दीन-रक्षक छौ । अतः तिमी मेरो यस कुटिलतालाई क्षमा गरिदेओ ।' यति भनेर कंसले आँखाबाट आँसु बगाई आफ्नी बहिनी र ज्वाइँको पाऊ समात्यो ॥ २२-२३ ॥ कन्यारूपिणी योगमायाको कथनमा विश्वास गरेर स्नेह देखाउँदै उसले दुवै जनालाई बन्धन-मुक्त गरिदियो ॥ २४ ॥ आफ्नू दाजूले यसरी पछुतो गरेको देखेर देवकीको रिस शान्त भयो र दाजूको अपराध बिर्सिइन् । वसुदेवले पनि हाँस्तै भने—॥ २५ ॥ 'हे महाभाग ! हजुरले भनेको सत्य हो । देहधारीहरूलाई अज्ञानले नै अहं-बुद्धि प्राप्त हुन्छ, त्यसैले आफ्नू-बिरानोको भेद प्रतीत

द्भद्रे स्वतनयान्मया व्यापदितानपि ॥ माऽनुशोच्च यतः सर्वः स्वकृतं विन्दतेऽवशः ॥ २१ ॥ यावद्धतोऽस्मि हन्ताऽस्मीत्यात्मानं मन्यते स्वदृक् ॥ तावत्तदभिमान्यज्ञो बाध्यबाधकतामियात् ॥२२॥ क्षमध्वं मम दौरात्म्यं साधवो दीनवत्सलाः ॥ इत्युक्त्वाऽश्रुमुखः पादौ श्यालः स्वस्रोरथाग्रहीत् ॥ २३ ॥ मोचयामास निगडाद्विश्रब्धः कन्यकागिरा ॥ देवकीं वसुदेवं च दर्शयन्नात्मसौहृदयम् ॥२४॥ भ्रातुः समनुतप्तस्य क्षान्तरोषा च देवकी ॥ व्यसृजद्वसुदेवश्च प्रहस्य तमुवाच ह ॥ २५ ॥ एवमेतन्महाभाग यथा वदसि देहिनाम् ॥ अज्ञानप्रभवाहंधीः स्वपरेति भिदा यतः ॥ २६ ॥ शोक-हर्षभयद्वेषलोभमोहमदान्विताः ॥ मिथो घ्नन्तं न पश्यन्ति भावैर्भावं पृथग्दृशः ॥२७॥ श्रीशुक उवाच ॥ कंस एवं प्रसन्नाभ्यां विशुद्धं प्रतिभाषितः ॥ देवकीवसुदेवाभ्यामनुज्ञातोऽविशद्गृहम् ॥ २८ ॥ तस्यां रात्र्यां व्यतीतायां कंस आहूय मन्त्रिणः ॥ तेभ्य आचष्ट तत्सर्वं यदुक्तं योगनिद्रया ॥२९॥ आकर्ण्य भर्तुर्गदितं तमूचुर्देवशत्रवः ॥ देवान्प्रति कृतामर्षा दैतेया नातिकोविदाः ॥३०॥ एवं चेत्तर्हि भोजेन्द्र पुरग्रामव्रजादिषु ॥ अनिर्दशान्निर्दशाँश्च हनिष्यामोऽद्य वै शिशून् ॥ ३१ ॥ किमुद्यमैः करिष्यन्ति देवाः समरभीरवः ॥ नित्यमुद्विग्नमनसो ज्याघोषैर्धनुषस्तव ॥ ३२ ॥ अस्यतस्ते शरव्रातैर्हन्यमानाः समन्ततः ॥ जिजीविषव उत्सृज्य पलायनपरा ययुः ॥ ३३ ॥ केचित्प्राञ्जलयो दीना न्यस्तशस्त्रा दिवौकसः ॥ मुक्त-

हुन थाल्दछ ॥ २६ ॥ ती भेददर्शी व्यक्ति कहिल्यैहर्ष, शोक, भय, द्वेष, लोभ-मोह र मदले अन्धा भएर परस्पर यौटाले अर्कोको नाश गराउने सबैका प्रेरक परमात्मालाई देख्दैनन्' ॥ २७ ॥ श्रीशुकदेव भन्नुहुन्छ—वसुदेव-देवकीले प्रसन्न भएर कुरा गरेपछि तिनको आज्ञा लिएर कंस महलमा फर्कियो ॥ २८ ॥ भोलिपल्ट बिहानै उसले आफ्ना मन्त्रीहरूलाई डाकेर ती सबै कुरा सुनायो, जुन योगमायाले भनेकी थिइन् ॥ २९ ॥ स्वामीको कथन सुनेर देवद्रोही र मन्दमति दैत्य देवतामाथि रिसाएर भन्नलागे— ॥ ३० ॥ 'हे भजराज ! यदि यस्तो कुरा हो भने हामी आजै सम्पूर्ण पुर, ग्राम र व्रजमा उत्पन्न दस दिन भित्रका सबै बालकहरूलाई मारिदिन्छौँ ॥ ३१ ॥ ती रणभीरु देवता उद्योग गरेर पनि हाम्रो के बिगार्न सक्छन् ? ती त हजुरको प्रत्यञ्चाको शब्दमात्र सुनेर नै आत्तिन्छन्, भाग्दछन् ॥ ३२ ॥ पूर्वकालमा युद्ध गर्दाखेरि देवता हजुरका बाण द्वार

सबैतिरबाट मारिन आँटेरहि तीमध्ये जो बाँच्न चाहन्थे ती युद्धभूमि छोडेर भागे ॥ ३३ ॥ कति देवता आफ्ना शस्त्र फ्याँकेर हजुरका साम्नु हात जोर्नलागे र कति कपाल र ढेका फुकाएर शरण पर्न आई भन्नलागे—म भयभीत छु, मेरो रक्षा गर्नोस् ॥ ३४ ॥ अनि युद्धनीति अनुसार तीमध्ये शस्त्र छाड्ने र जो रथहीन, भयभीत, अन्यमनस्क वा युद्धबाट विमुख भएका थिए अथवा जसका धनुष भाँचिइसकेका थिए ती युद्ध नगर्ने शत्रुहरूलाई हजुरले कहिल्यै मार्नुभएन ॥ ३५ ॥ यी देवगण जहाँ भय रहन्न त्यहीं वीर बन्दछन् र युद्ध छाडेर अन्यत्र नै ठूला-ठूला कुरा गर्छन् । अनि त्यस्तासित हामीलाई के डर छ ? यिनमा विष्णु एकान्तसेवी र महादेव वनवासी छन् । इन्द्रको पराक्रम सान्है अल्प छ र ब्रह्मा केवल तपस्वी छ ॥ ३६ ॥ तथापि देवता हाम्रा शत्रु हुन्, अतः हामीले तिनको उपेक्षा गर्नु हुँदैन । अब तिनको जरो उखेल्नका लागि हजुर हामी सेवकहरूलाई नियुक्त गर्नोस् ॥ ३७ ॥ जस्तै मनुष्यले उपेक्षा गर्दा शरीरमा बढेको रोग असाध्य हुनजान्छ, जस्तै इन्द्रियको उपेक्षा गर्नाले ती अगम्य हुन्छन् । त्यसै गरी शत्रुको उपेक्षा गर्नाले जब उसको बल बढ्दछ, तब

कच्छशिखाः केचिद्भीताः स्म इति वादिनः ॥ ३४ ॥ न त्वंविस्मृतशस्त्रास्त्रान्विरथान्भयसंवृतान् ॥ हंस्यन्यासक्तविमुखान्भग्नचापानयुध्यत ॥३५॥ किं क्षेमशूरैर्विबुधैरसंयुगविकत्थनैः ॥ रहोजुषा किं हरिणा शम्भुना वा वनौकसा ॥ किमिन्द्रेणाल्पवीर्येण ब्रह्मणा वा तपस्यता ॥ ३६ ॥ तथापि देवाः सापत्न्यान्नोपेक्ष्या इति मन्महे ॥ ततस्तन्मूलखनने नियुंक्ष्वास्माननुव्रतान् ॥ ३७ ॥ यथाऽऽमयोऽङ्गे समुपेक्षितो नृभिर्न शक्यते रूढपदश्चिकित्सितुम् ॥ यथेन्द्रियग्राम उपेक्षितस्तथा रिपुर्महान्बद्धबलो न चाल्यते ॥ ३८ ॥ मूलं हि विष्णुर्देवानां यत्र धर्मः सनातनः ॥ तस्य च ब्रह्मगोविप्रास्तपोयज्ञाः सदक्षिणाः ॥ ३९ ॥ तस्मात्सर्वात्मना राजन्ब्राह्मणान्ब्रह्मवादिनः ॥ तपस्विनो यज्ञशीलान्गाश्च हन्मो हविर्दुघाः ॥ ४० ॥ विप्रा गावश्च वेदाश्च तपः सत्यं दमः शमः ॥ श्रद्धा दया तितिक्षा च क्रतवश्च हरेस्तनूः ॥ ४१ ॥ स हि सर्वसुराध्यक्षो ह्यसुरद्विड्गुहाशयः ॥ तन्मूला देवताः सर्वाः सेश्वराः सचतुर्मुखाः ॥ अयं वै तद्वधोपायो यदृषीणां विहिंसनम् ॥ ४२ ॥ श्रीशुक उवाच ॥ एवं दुर्मन्त्रिभिः कंसः सह सम्मन्त्र्य दुर्मतिः ॥ ब्रह्महिंसां हितं मेने कालपाशावृतोऽसुरः ॥ ४३ ॥ सन्दिश्य साधुलोकस्य कदने कदनप्रियान् ॥ कामरूपधरान्दिक्षु दानवान्गृहमाविशत् ॥ ४४ ॥ ते वै रजःप्रकृतयस्तमसा मूढचेतसः ॥ सतां विद्वेषमाचेरुरारादागतमृत्यवः ॥ ४५ ॥ आयुः श्रियं यशो धर्मं लोकाना-

उसलाई विचलित पार्न सकिन्न ॥ ३८ ॥ देवताको जरो विष्णु हो र जहाँ सनातनधर्म छ, त्यहीं त्यो पुग्दछ । सनातनधर्मका मूल वेद, गाई, ब्राह्मण तपस्या र दक्षिणा सहितका यज्ञ हुन् ॥ ३९ ॥ अतः हे राजन् ! वेदवेत्ता, तपस्वी, यज्ञपरायण ब्राह्मणहरू र हव्य दिने गाईको हामी सबै प्रकारले संहार गर्नेछौं ॥ ४० ॥ ब्राह्मण, गाई, वेद, तप, सत्य, दम, शम, दया, तितिक्षा र यज्ञ यी सबै विष्णुका शरीर हुन् ॥ ४१ ॥ त्यो दैत्यको द्रोही र सबैको अन्तर्यामी विष्णु नै सबै देवताका रक्षक छ । महादेव र ब्रह्मा सहित सबै देवता उनका आश्रित रहन्छन् र तिनको नाश हुने यौटा उपाय छ—ऋषिहरूको वध गर्नु ॥ ४२ ॥ श्रीशुकदेव भन्नुहुन्छ—आफ्ना दुष्ट मन्त्रीगणको यस्तो सल्लाह पाएर काल-पाशमा परेको दुर्मति कंसले ब्रह्महत्यामै आफ्नो कल्याण ठान्यो । अनि इच्छानुसार रूप लिने र हिंसाप्रिय दानवहरूलाई साधुजनको संहार गर्न आज्ञा दिएर आफ्नू अन्तःपुरमा गय

॥४३-४४॥ ती दुष्टको प्रकृति रजोगुणले ढाकिएको थियो र उनको चित्त विवेकशून्य थियो। तिनको मृत्यु नगीचै आइसकेको थियो । अतः ती साधुजनसित द्वेष गर्नलागे ॥ ४५ ॥ हे राजन् ! महापुरुषको अनादरले व्यक्तिको आयु, यश, श्री, धर्म, स्वर्गादि लोक र कल्याण नष्ट गरिदिन्छ ॥४६॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥

( गोकुलमा कृष्ण-जन्मोत्सव ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! पुत्रको जन्म भएपछि नन्दजीलाई ठूलो आनन्द प्राप्त भयो। उनले ज्योतिषी र ब्राह्मणहरू डाकेर स्नान गरी पवित्र वस्त्र र आभूषण धारण गरे ॥१॥ अनि ब्राह्मणद्वारा स्वस्तिवाचन गराई विधिपूर्वक पुत्रको जातकर्म-संस्कार गरेर देवताहरू र पितृगणको पूजा गरे ॥ २॥ उनले राम्ररी सुसज्जित दुइ लाख गाई, रत्नसमूह र उत्तम वस्त्रले ढाकिएका सात तिलपर्वत ब्राह्मणलाई दान दिए। तिलको त्यो थुप्रो—जसको दुइतिर उभिएका दुइ मानिस यौटाले अर्कोलाई देख्न नसकेन्–त्यो 'तिलपर्वत' कहिन्छ ॥ ३ ॥ सबै द्रव्यको शुद्धि क्रमशः काल, स्नान, शौच, संस्कार, तप, यज्ञ, दान र सन्तोषले हुन्छ, अनि आत्माको शुद्धि आत्मज्ञानले हुन्छ

शिष एव च ॥ हन्ति श्रेयांसि सर्वाणि पुंसो महदतिक्रमः ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे चतुर्थोऽध्यायः ॥ ४ ॥

श्रीशुक उवाच ॥ नन्दस्त्वात्मज उत्पन्ने जाताह्लादो महामनाः ॥ आहूय विप्रान्वेदज्ञान्स्नातः शुचिरलंकृतः ॥ १ ॥ वाचयित्वा स्वस्त्ययनं जातकर्मात्मजस्य वै ॥ कारयामास विधिवत्पितृदेवार्चनं तथा ॥ २ ॥ धेनूनां नियुते प्रादाद्विप्रेभ्यः समलंकृते ॥ तिलाद्रीन्सप्त रत्नौघशातकौम्भाम्बरावृतान् ॥३॥ कालेन स्नानशौचाभ्यां संस्कारैस्तपसेज्यया ॥ शुद्ध्यन्ति दानैः सन्तुष्ट्या द्रव्याण्यात्मात्मविद्यया ॥ ४ ॥ सौमङ्गल्यगिरो विप्राः सूतमागधवन्दिनः ॥ गायकाश्च जगुर्नेदुर्भेर्यो दुन्दुभयो मुहुः ॥ ५ ॥ व्रजः सम्मृष्टसंसिक्तद्वाराजिरगृहान्तरः ॥ चित्रध्वजपताकास्रक्चैलपल्लवतोरणैः ॥ ६ । गावो वृषा वत्सतरा हरिद्रातैलरूषिताः ॥ विचित्रधातुबर्हस्रग्वस्त्रकाञ्चनमालिनः ॥ ७ ॥ महार्हवस्त्राभरणकञ्चुकोष्णीषभूषिता ॥ गोपाः समाययू राजन्नानोपायनपाणयः ॥ ८ ॥ गोप्यश्चाकर्ण्य मुदिता यशोदायाः सुतोद्भवम् ॥ आत्मानं भूषयाञ्चक्रुर्वस्त्राकल्पाञ्जनादिभिः ॥ ९ ॥ नवकुङ्कुमकिञ्जल्कमुखपङ्कजभूतयः ॥ बलिभिस्त्वरितं जग्मुः पृथुश्रोण्यश्चलत्कुचाः ॥ १० ॥ गोप्यः सुमृष्टमणिकुण्डलनिष्ककण्ठ्यश्चित्राम्बराः पथि शिखा·

॥ ४ ॥ उसै वेला ब्राह्मण आशीर्वाद दिनलागे। सूत, मागध र वन्दीजन स्तुति गान गर्नलागे, गवैया गाउन थाले। भेरी दुन्दुभी आदि बाजा बज्नलागे ॥ ५ ॥ त्यस दिन व्रजमा सबै घरका द्वार, आँगन र भित्री भाग बढारी तिनमा सुगन्धित जल छर्कियो र तिनलाई चित्र-विचित्र ध्वजा, पताका, माला र रङ्ग-बिरङ्गका वस्त्र र फूल-मालाले सजाइए ॥ ६ ॥ गाई गोरु र बाछालाई बेसार, गेरू तथा तेलले सिंगारेर मयुर-पङ्ख, माला वस्त्र र सुनका सिक्री गहना लगाइदिए ॥ ७ ॥ अनि सबै गोप बहुमूल्य वस्त्र, गहना दौरा पगरीले विभूषित भई हातमा उपहारका सामग्री लिई नन्दकहाँ आउन लागे ॥ ८ ॥ यशोदाकहाँ पुत्रको उत्पत्ति सुनेर गोपीहरूलाई ठूलो आनन्द भयो र ती राम्रा वस्त्राभूषण र आँजनादिले शृङ्गार गर्नलागे ॥ ९ ॥ उनको मुख-कमल केसरले सुशोभित थियो। ती उपहार लिएर छिटो-छिटो यशोदाको घर हिंडे। छिटो-छिटो हिड्नाले गर्दा ती स्थूल नितम्ब हुने व्रजाङ्गनाहरूका पीन पयोधर हल्लिरहेका थिए ॥ १० ॥ त्यहाँ आउने गोपीहरूका कानमा मणिमय कुण्डल र घाँटीमा अनेक प्रकारका मणि, रत्न आदि जडिएका उत्तम हारले

सुशोभित थिए । तिनले चित्र-विचित्र वस्त्र पहिरेका थिए । बाटोमा हिंड्दा तिनका केशपाशबाट फूलको वर्षा हुँदै जान्थ्यो । तिनका हातमा जडाऊ बाला थिए र हिंड्दा तिनका कुण्डल, स्तन र हार हल्लिन्थे । यसरी नन्दभवनतिर जानलागेका ती गोपाङ्गनाको अपूर्व शोभा भइरहेथ्यो ॥११॥ नन्दको घर पुगेर तिनले 'बालक चिरञ्जीव होउन्' यस्तो भनेर आशीर्वाद दिए र तेल-बेसार मिसाएको जल यता-उता छर्दै उच्चस्वरले गान गर्नलागे ॥१२॥ जब अखिल विश्वका स्वामी अनन्तनामा श्रीकृष्णचन्द्र नन्दजीको व्रजमा अवतरित भए त्यस बेला उनको आगमन-महोत्सवमा अनेक थरिका मङ्गलमय बाजा बज्नलागे ॥१३॥ ब्रजका गोप हर्षले आपसमै दही-दूध, घिउ र जल छर्कन्दै थोटाले अर्कोको मुखमा नौनी घसिदिदै खेल्नलागे ॥१४॥ उदार नन्दजीले तिनलाई वस्त्र, गहना र गाईहरू दिए । सूत, मागध, वन्दीजन र नृत्य-वाद्य आदि विद्याले नै आजीविका कमाउने अन्यान्य गुणीजनहरूलाई प्रसन्नतापूर्वक मागेका वस्तु दिएर उनले भगवान्को प्रसन्नता र छोराको अभ्युदयको निमित्त यथोचित सत्कार गरे ॥१५॥१६॥ नन्दगोप द्वारा सत्कृत रोहिणी

च्युतमाल्यवर्षाः ॥ नन्दालयं सवलया व्रजतीर्विरेजुर्व्यालोलकुण्डलपयोधरहारशोभाः ॥ ११ ॥ ता आशिषः प्रयुञ्जानाश्चिरं पाहीति बालके ॥ हरिद्राचूर्णतैलाद्भिः सिञ्चन्त्यो जनमुज्जगुः ॥१२॥ अवाद्यन्त विचित्राणि वादित्राणि महोत्सवे ॥ कृष्णे विश्वेश्वरेऽनन्ते नन्दस्य व्रजमागते ॥१३॥गोपाः परस्परं हृष्टा दधिक्षीरघृताम्बुभिः ॥ आसिञ्चन्तो विलिम्पन्तोनवनीतैश्च चिक्षिपुः ॥१४॥ नन्दो महामनास्तेभ्यो वासोऽलङ्कारगोधनम्॥सूतमागधवंदिभ्यो येऽन्ये विद्योपजीविनः ॥१५॥ तैस्तैः कामैरदीनात्मा यथोचितमपूजयत् ॥ विष्णोराराधनार्थाय स्वपुत्रस्योदयाय च ॥१६॥ रोहिणी च महाभागा नन्दगोपाभिनन्दिता ॥ व्यचरद्दिव्यवासःस्रक्कण्ठाभरणभूषिता ॥१७॥ तत आरभ्य नन्दस्य व्रजः सर्वसमृद्धिमान् ॥ हरेर्निवासात्मगुणै रमाक्रीडमभून्नृप ॥१८॥ गोपान्गोकुलरक्षायां निरूप्य मथुरां गतः ॥ नन्दः कंसस्य वार्षिक्यं करं दातुं कुरुद्वह ॥१९॥ वसुदेव उपश्रुत्य भ्रातरं नन्दमागतम् ॥ ज्ञात्वा दत्तकरं राज्ञे ययौ तदवमोचनम् ॥२०॥ तं दृष्ट्वा सहसोत्थाय देहः प्राणमिवागतम् ॥ प्रीतः प्रियतमं दोर्भ्यां सस्वजे प्रेमविह्वलः॥२१॥ पूजितःसुखमासीनः पृष्ट्वाऽनामयमादृतः ॥ प्रसक्तधीः स्वात्मजयोरिदमाह विशांपते ॥२२॥ दिष्ट्या भ्रातः प्रवयस इदानीमप्रजस्य ते ॥ प्रजाशाया निवृत्तस्य प्रजा यत्समपद्यत ॥ २३ ॥ दिष्ट्या संसारचक्रेऽस्मिन्वर्तमानः पुनर्भवः ॥ उपलब्धो भवानद्य दुर्लभं प्रियदर्शनम् ॥ २४ ॥ नैकत्र प्रियसंवासः सुहृदां चित्र·

दिव्य वस्त्र, माला र घाँटीका गहनाहरूले विभूषित भएर डुलिरहेकी थिइन् ॥ १७ ॥ हे राजन् ! उसै बेलादेखि व्रजभूमि सबै सम्पत्तिहरूले परिपूर्ण भयो । श्रीहरिको निवास र आफ्ना स्वाभाविक गुणले गर्दा त्यो लक्ष्मीको क्रीडास्थल बन्यो ॥१८॥ हे कुरुपुङ्गव ! एक दिन गोकुलको रक्षाको भार गोपहरूलाई सुम्पेर नन्दजी वार्षिक कर बुझाउन मथुरा गए ॥१९॥ जब वसुदेवले सुने–भाई नन्द आएका छन् र राजालाई वार्षिक कर बुझाइसके–तब उनको डेरामा भेट्न गए ॥२०॥ वसुदेवजीलाई देख्नासाथ नन्दजी यसरी जुरुक्क उठे, जस्तै प्राण फर्केर आउनाले प्राणहीन देह उठेको होस । ती प्रेम-विह्वल भएर आफ्ना सखा वसुदेवसित प्रसन्नतापूर्वक दुवै हात फिंजाएर अंकमाल गरे ॥२१॥ पाद्यार्घ्य गरेर नन्दले उनको पूजा गरे । हे राजन् ! वसुदेवजी सुखपूर्वक आसनमा बसेर बालकहरूमै चित्त लागिरहेको हुनाले नन्दजीसित भन्न लागे– ॥ २२ ॥ हे

भाई ! तिमी बूढो भइरहेका थियौ, तिम्रा सन्तान थिएनन् र हुने आशा पनि थिएन । तर यो आनन्दको कुरा छ कि अहिले तिमीलाई पुत्र प्राप्त भयो । यो पनि सौभाग्यको कुरा हो–यस संसार-चक्रमा हामी दुवैको समागम भयो । । मित्रको दर्शन दुर्लभ हुन्छ । आज मेरो र तिम्रो पुनर्जन्म भयो ॥२४॥२४॥ जसरी नदीको प्रबल प्रवाहमा बग्ने काठ-पातको सर्वदा एकत्र रहनु असम्भव छ, त्यसै गरी भिन्न भिन्न प्रारब्ध हुने प्रियजन पनि संगै बस्नु सम्भव हुँदैन ॥ २५ ॥ यस बखत जुन विशाल वनमा तिमी आफ्ना बन्धु-बान्धवका साथ बस्तछौ, त्यसमा घाँस, पानी र लता-पत्रको बहुलता होला । त्यो वन तिम्रा पशु आदिको लागि हितकर र रोग रहित छ कि छैन ? हे भाई ! हाम्रो यौटा छोरो आफ्नी आमासित तिम्रो व्रजमा बस्तछ, त्यसलाई संचै छ ? त्यो त तिमीलाई आफ्ना पिता मान्दो होला, किनकि यशोदा र तिमीले नै त्यसको लालन-पालन गरेका छौ ॥२७॥ पुरुषका निम्ति त्यही त्रिवर्ग (धर्म, अर्थ र काम) शास्त्रविहित छ, जसले उसका आत्मीयजनलाई पनि सुख मिलोस् । जसले आफ्ना बन्धुजनलाई कष्ट हुन्छ, त्यो त्रिवर्गले लाभ हुन्न

कर्मणाम् ॥ ओघेन व्यूह्यमानानां प्लवानां स्रोतसो यथा ॥२५॥ कच्चित्पशव्यं निरुजं भूर्यम्बुतृणवीरुधम् ॥ बृहद्वनं तदधुना यत्रास्से त्वं सुहृद्वृतः ॥२६॥ भ्रातर्मम सुतः कच्चिन्मात्रा सह भवद्व्रजे ॥ तातं भवन्तं मन्वानो भवद्भ्यामुपलालितः ॥ २७ ॥ पुंसस्त्रिवर्गो विहितः सुहृदो ह्यनुभावितः ॥ न तेषु क्लिश्यमानेषु त्रिवर्गोऽर्थाय कल्पते ॥२८॥ नन्द उवाच ॥ अहो ते देवकीपुत्राः कंसेन बहवो हताः ॥ एकावशिष्टाऽवरजा कन्यासापि दिवंगता॥२९॥ नूनं ह्यदृष्टनिष्ठोऽयमदृष्टपरमो जनः ॥ अदृष्टमात्मनस्तत्त्वं यो वेद न स मुह्यति ॥३०॥ वसुदेव उवाच ॥ करो वै वार्षिको दत्तो राज्ञेदृष्टावयं च वः ॥ नेह स्थेयं बहुतिथं सन्त्युत्पाताश्च गोकुले ॥३१॥ श्रीशुक उवाच ॥ इति नन्दादयो गोपा प्रोक्तास्ते शौरिणा ययुः ॥ अहोभिरनडुद्युक्तैस्तमनुज्ञाप्य गोकुलम् ॥ ३२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे नंदवसुदेवसङ्गमो नाम पञ्चमोऽध्यायः ॥ ५ ॥

श्रीशुक उवाच ॥ नंदः पथि वचः शौरेर्न मृषेति विचिंतयन् ॥ हरिं जगाम शरणमुत्पातागमशङ्कितः ॥ १ ॥ कंसेन प्रहिता घोरा पूतना बालघातिनी ॥ शिशूंश्चचार निघ्नन्ती पुरग्रामव्रजादिषु ॥ २ ॥ न यत्र श्रवणादीनि रक्षोघ्नानि स्वकर्मसु ॥ कुर्वन्ति सात्वतां

॥२८॥ नन्दजी भन्दछन्–हरे शिव ! देवकीका गर्भबाट उत्पन्न तिम्रा पुत्रहरू पापी कंसले मारिदियो । अन्त्यमा यौटी छोरी भएकी थिई, त्यो पनि स्वर्गलोक गई ॥२९॥ सर्व मनुष्यका सुख-दुःख भाग्यमा नै अवलम्बित रहन्छ र भाग्यनै उसको एकमात्र आश्रय छ । जुन व्यक्ति भाग्यलाई नै आफ्नो सुख-दुःखको कारण ठान्दछ, त्यो ती कष्ट प्राप्त भएर पनि मोहग्रस्त हुँदैन ॥३०॥ वसुदेवजी भन्दछन्–हे मित्र ! तिमीले राजालाई कर दिइसक्यौ र मसित पनि भेट भइसक्यो, अब यहाँ अबेर नगर, किनकि हिजो-आज गोकुलमा अनेक उत्पात भइरहेका छन् ॥३१॥ श्रीशुकदेव भन्दछन्—वसुदेवले त्यति भनेपछि नन्दादि गोप उनीसित आज्ञा लिई गाडामा चढेर गोकुल गएकिए ॥३२॥ इति पञ्चमोऽध्यायः ॥५॥

( पूतनावध ) श्रीशुकदेव भन्दछन्–हे राजन् ! बाटोमा नन्दजीले विचार गरे–वसुदेवको कथन झूठो हुन सक्तैन । उत्पातको आशङ्काले ती मनमनै नारायणका शरणमा गए ॥१॥ यता कंसले पठाएकी भयङ्कर राक्षसी र बाल-घातिनी पूतना घुमेर पुर, ग्राम र व्रज आदिमा अनेक बालकहरूलाई मार्दै डुलिरहेकी थिई ॥२॥ हे राजन् ! जहाँका मानिस

नित्यकर्ममा भक्तरक्षक र राक्षसादिको भय निवारण गर्ने भगवान्‌को स्मरण गर्दैनन्, त्यहाँ राक्षसी तथा उनका पुरुषहरूको बल बढ्दछ ॥ ३ ॥ एक दिन त्यो आकाशचारिणी र इच्छानुसार डुल्ने पूतना नन्दको गोकुलमा पुगी र मायाले राम्रो रूप बनाएर गोकुल भित्र पसी ॥ ४ ॥ त्यस सुन्दरीको जुरोमा फूलको माला बाँधिएको थियो, त्यसको कम्मर पातलो थियो, शरीरमा राम्रा वस्त्र थिए र उसको मनोहर मुख कानमा हल्लने कुण्डलका कान्ति र झल्कने अलकावलीले सुशोभित भइरहेथ्यो ॥ ५ ॥ मनोहर हाँसो र कटाक्षपूर्ण हेराइले व्रजवासीहरूको मन हरण गर्दै त्यो रूपवती स्त्रीलाई हातमा कमल लिएर आउन लागेकी देखी गोपिनीले ठाने स्वयं लक्ष्मी आफ्नो पतिको दर्शन गर्न आएकी हुन् ॥६॥ बालकका निम्ति ग्रहस्वरूपा पूतना बालकलाई खोज्दै स्वेच्छाले नन्दजीका घरमा पसी। *त्यहाँ उसले शय्यामा सुतेका बालक कृष्णलाई देखी, जो दुष्टका

भर्तुर्यातुधान्यश्च तत्र हि ॥ ३ ॥ सा खेचर्येकदोपेत्य पूतना नन्दगोकुलम् ॥ योषित्वा माययाऽऽत्मानं प्राविशत्कामचारिणी ॥ ४ ॥ तां केशबन्धव्यतिषक्तमल्लिकां बृहन्नितम्बस्तनकृच्छ्रमध्यमाम् ॥ सुवाससं कम्पितकर्णभूषणत्विषोल्लसत्कुन्तलमण्डिताननाम् ॥ ५ ॥ वल्गुस्मितापाङ्गविसर्गवीक्षितैर्मनो हरन्तीं वनितां व्रजौकसाम् ॥ अमंसताम्भोजकरेण रूपिणीं गोप्यः श्रियं द्रष्टुमिवागतां पतिम् ॥ ६ ॥ बालग्रहस्तत्र विचिन्वती शिशून् यदृच्छया नन्दगृहेऽसदन्तकम् ॥ बालं प्रतिच्छन्ननिजोरुतेजसं ददर्श तल्पेऽग्निमिवाहितं भसि ॥ ७ ॥ विबुध्य तां बालकमारिकाग्रहं चराचरात्मा स निमीलितेक्षणः ॥ अनन्तमारोपयदङ्कमन्तकं यथोरगं सुप्तमबुद्धिरज्जुधीः ॥ ८ ॥ तां तीक्ष्णचित्तामतिवामचेष्टितां वीक्ष्यान्तराकोशपरिच्छदासिवत् ॥ वरस्त्रियं तत्प्रभया च धर्षिते निरीक्ष्यमाणे जननी ह्यतिष्ठताम् ॥ ९ ॥ तस्मिन्स्तनं दुर्जरवीर्यमुल्बणं घोराङ्कमादाय शिशोर्ददावथ ॥ गाढं कराभ्यां भगवान्प्रपीड्य तत्प्राणैः समं रोषसमन्वितोऽपिबत् ॥ १० ॥ सा मुञ्च मुञ्चालमिति प्रभाषिणी निष्पीड्य-

निम्ति काल समान थिए, उनले खरानीमा लुकेको आगो झैं आफ्नो प्रचण्ड तेज लुकाइराखेका थिए ॥ ७ ॥ त्यसलाई बालघातिनी ग्रह जानेर चराचरका आत्मा कृष्णले आंखा चिम्ले उसले आफ्ना कालरूप अनन्त भगवान्‌लाई यस प्रकार काखमा उचाली, जसरी भ्रममा डोरी ठानेर सुतेको सर्पलाई उठाओस् ॥ ८ ॥ राम्रो उध्याएको धारिलो तरवारको समान पूतनाको हृदय साह्रै कुटिल थियो, बाहिरबाट उसको व्यवहार निकै राम्रो थियो। त्यो कुनै भद्र महिला जस्ती ज्ञात हुन्थी। अतः त्यसको तेजले प्रभावित भएर माता यशोदा र रोहिणीले पनि कुनै रोक-छेक गरेनन्—ती चुपचाप उभिइरहे ॥ ९ ॥ त्यसै बखत घोरस्वभाव पूतनाले बालक कृष्णलाई काखमा लिई र उनको मुखमा कालकूट विषयुक्त स्तन हालिदिई र भगवान क्रोधपूर्वक दुवै हातले थिचेर त्यसको प्राणको साथसाथै दूध पिउनलागे ॥ १० ॥ त्यसले पूतनाको मर्मस्थानमा पीडा हुन लाग्यो र त्यो 'छोड-छोड, अब भयो,

* यो प्रसाद समान दिव्य घरमा आनन्द मानीकन। हेर्दिन कुल भई गद्दार जसरी हर्षित् गराई मन।
यी बेला घरमा अनिन्द्य सुन्दरी मुग्धी भई पूतना। देखी यो घनतर्क नै धरि भरी राखेर दुर्भावना॥
आएकी प्रभुलाई मार्ने तिमि यो पूतना तैपनि। पाई आदर नाम्था घनमी, कसी बनी मानिनी॥
स्वस्तीलाई पर्ना दिने शुभ गती त्रैलोक्यका ईश्वर। गर्दैन भाव कुभो कृपा यदुपती, तद्भक्तको आदर।

छाड' यसरी कराउँदै बारम्बार हात-खुट्टा फालेर रुन लागी । त्यसका आँखा मास्तिर फर्किए, शरीर पानी-पानी भयो ॥ ११ ॥ त्यसको चर्को शब्दले पर्वतहरू सहित भूमि र ग्रह सहित आकाश हल्लन लाग्यो । सप्त-पाताल र दिशाहरू गुम्म भए र अनेक व्यक्ति वज्रपातको आशङ्काले पृथ्वीमा लडे ॥ १२ ॥ हे राजन् ! यसरी स्तनमा अत्यन्त पीडा हुनाले त्यो राक्षसी आफ्नू रूपमा प्रकट भई र प्राण त्यागेर, मुख बाई, कपाल फिंजाई, हात-खुट्टा फैलाई गोठमा यसरी पछारिई—जसरी इन्द्रको वज्रले वृत्रासुर पछारिएको थियो ॥ १३ ॥ हे राजेन्द्र ! पूतनाको शरीरले पछारिंदा पनि तीन गव्यूति अर्थात् छ कोसका वृक्ष ढलायो । यो निकै अद्भुत घटना घट्यो ॥ १४ ॥ हलोको फाली झैं तीक्ष्ण र उग्र दाह्राले युक्त मुख हुने पूतनाको नाक गिरि-कन्दरा समान गम्भीर थिए । त्यसको गण्डस्थल पर्वतबाट ढलेको शिला झैं स्थूल र चारैतिर फिंजिएका राता-राता कपाल थिए ॥ १५ ॥ त्यसका आँखा अँध्यारो कुप झैं गहीरा, तिघ्रा नदीका किनार झैं भयङ्कर र बाहु, पुँडा र खुट्टा नदीमाथिको पुल झैं थिए । त्यसको पेट पानी नभएको

मान्नाऽखिलजीवमर्मणि ॥ निवृत्य नेत्रे चरणौ भुजौ मुहुः प्रस्विन्नगात्रा क्षिपती रुरोद ह ॥ ११ ॥ तस्याः स्वनेनातिगभीररंहसा साद्रिर्मही द्यौश्च चचाल सग्रहा ॥ रसा दिशश्च प्रतिनेदिरे जनाः पेतुः क्षितौ वज्रनिपातशङ्कया ॥ १२ ॥ निशाचरीत्थं व्यथितस्तना व्यसुर्व्यादाय केशाँश्चरणौ भुजावपि ॥ प्रसार्य गोष्ठे निजरूपमास्थिता वज्राहते वृत्र इवापतन्नृप ॥१३॥पतमानोऽपि तद्देहस्त्रिगव्यूत्यन्तरद्रुमान् ॥ चूर्णयामास राजेन्द्र महदासीत्तदद्भुतम् ॥ १४ ॥ ईषामात्रोग्रदंष्ट्रास्यं गिरिकन्दरनासिकम् ॥ गण्डशैलस्तनं रौद्रं प्रकीर्णारुणमूर्धजम् ॥ १५ ॥ अन्धकूपगभीराक्षं पुलिनारोहभीषणम् ॥ बद्धसेतुभुजोर्वङ्घ्रिशून्यतोयह्रदोदरम् ॥ १६ ॥ सन्तत्रसुः स्म तद्वीक्ष्य गोपा गोप्यः कलेवरम् ॥ पूर्वं तु तन्निःस्वनितभिन्नहृत्कर्णमस्तकाः ॥ १७ ॥ बालं च तस्या उरसि क्रीडन्तमकुतोभयम् ॥ गोप्यस्तूर्णं समभ्येत्य जगृहुर्जातसम्भ्रमाः ॥ १८ ॥ यशोदारोहिणीभ्यां ताः समं बालस्य सर्वतः ॥ रक्षां विदधिरे सम्यग्गोपुच्छभ्रमणादिभिः ॥ १९ ॥ गोमूत्रेण स्नापयित्वा पुनर्गोरजसाऽर्भकम् ॥ रक्षां चक्रुश्च शकृता द्वादशाङ्गेषु नामभिः ॥ २० ॥ गोप्यः संस्पृष्टसलिला अङ्गेषु करयोः पृथक् ॥ न्यस्यात्मन्यथ बालस्य बीजन्यासमकुर्वत ॥ २१ ॥ अव्यादजोऽङ्घ्रि मणिमांस्तव जान्वथोरू यज्ञोऽच्युतः कटितटं जठरं हयास्यः ॥ हृत्केशवस्त्वदुर ईश इनस्तु कण्ठं विष्णुर्भुजं मुखमुरुक्रम ईश्वरः कम् ॥ २२ ॥ चक्रयग्रतः

तलाउ झैं थियो ॥ १६ ॥ पूतनाको देह देखेर सबै गोप-गोपी डराए । त्यसको चीत्कार सुनेर तिनको हृदय, कान र मस्तक थर्कियो ॥ १७ ॥ परन्तु बाल-कृष्ण पूतनाको वक्षःस्थलमा निर्भय भएर खेलिरहेका थिए । गोपिनीहरू आत्तिएर दगुर्दै आइपुगे र तिनले कृष्णलाई उचाले ॥१८॥ यशोदा, रोहिणी सबै गोपिनीहरूले गाईको पुच्छरले पुछिदिए र घुमाउने आदि उपायले बालकका अङ्गको राम्ररी रक्षा गरे ॥ १९ ॥ तिनले बालकलाई गोमूत्रले स्नान गराए, अनि अङ्गमा गोरज लगाए र बाह्रै अङ्गहरूमा गोबर लगाएर भगवान्‌का केशव आदि नामले रक्षा गरे ॥ २० ॥ अनि गोपीहरूले आचमन गरेर आदि एघार बीजमन्त्रले आफ्ना अंगमा अङ्गन्यास, करन्यास, गरेर बालकको अङ्गमा बीजन्यास गरे ॥ २१ ॥ 'तिम्रा चरणयुगलको अजन्मा भगवान्, जानुको मणिमान्, ऊरुको यज्ञ पुरुष, कटिको अच्युत, उदरको र हृदयको केशव, वक्षस्थलको ईश, घाँटीको सूर्य, दुवै भुजाको विष्णु,

मुखको उरुक्रम र शिरको ईश्वर रक्षा गरुन् ॥२२॥ अगाडि चक्रधर, पछाडि गदाधर, दुवै छेउमा धनुष र खड्गधारी भगवान मधुसूदन र अजन्मा, चारै कोणका शङ्खधारी उरुगाय, माथि उपेन्द्र, तल गरुड, पृथ्वीमा हलधर र सर्वतिर भगवान् परमपुरुष विद्यमान रहेर तिम्रो रक्षा गरुन् ॥२३॥ तिम्रा इन्द्रियको हृषीकेश, प्राणको नारायण, चित्तको श्वेतद्वीपपति, मनको योगेश्वर, बुद्धिको पृश्निगर्भ र अहङ्कारको षडैश्वर्यसम्पन्न परमात्मा रक्षा गरुन् । खेल्दा गोविन्द, निदाउँदा माधव, हिड्दा-डुल्दा वैकुण्ठ, बस्ता श्रीपति र खाने वेलामा सबै ग्रहलाई भयभीत पार्ने यज्ञभोक्ता भगवान्को रक्षा गरुन् ॥२४-२६॥ डाकिनी, यातुधानी र कूष्माण्डा आदि बालग्रह, भूत, प्रेत, पिशाच, यक्ष, राक्षस, विनायक, कोटरा, रेवती, ज्येष्ठा, पूतना र मातृका आदि तथा शरीर, इन्द्रिय र प्राणको नाश गर्ने उन्माद एवं अपस्मार आदि रोग, सपनामा देखिएका ठूला उत्पात, वृद्धग्रह र बालग्रह आदि सबै अनिष्ट भगवान् विष्णुको नामोच्चारण मात्र गर्नाले भयभीत भई नष्ट होउन् ॥२७-२९॥ श्रीशुकदेव नन्दनन्दन–प्रेमपाशमा आबद्ध गोपीहरूले यसरी बालग्रह शान्त गरिसकेपछि

सद्गदो हरिस्तु पश्चात्त्वत्पार्श्वयोर्धनुरसी मधुहाऽजनश्च ॥ कोणेषु शङ्ख उरुगाय उपर्युपेन्द्रस्तार्क्ष्यः क्षितौ हलधरः पुरुषः समन्तात् ॥ २३ ॥ इन्द्रियाणि हृषीकेशः प्राणान्नारायणोऽवतु ॥ श्वेतद्वीपपतिश्चित्तं मनो योगेश्वरोऽवतु ॥ २४ ॥ पृश्निगर्भस्तु ते बुद्धिमात्मानं भगवान्परः ॥ क्रीडन्तं पातु गोविंदः शयानं पातु माधवः ॥ २५ ॥ व्रजन्तमव्याद्वैकुण्ठ आसीनं त्वां श्रियः पतिः ॥ भुञ्जानं यज्ञभुक्पातु सर्वग्रहभयङ्करः ॥ २६ ॥ डाकिन्यो यातुधान्यश्च कूष्माण्डा येऽर्भकग्रहाः ॥ भूतप्रेतपिशाचाश्च यक्षरक्षोविनायकाः ॥ २७ ॥ कोटरा रेवती ज्येष्ठा पूतना मातृकादयः ॥ उन्मादा ये ह्यपस्मारा देहप्राणेन्द्रियद्रुहः ॥२८॥ स्वप्नदृष्टा महोत्पाता वृद्धबालग्रहाश्च ये ॥ सर्वे नश्यन्तु ते विष्णोर्नामग्रहणभीरवः ॥ २९ ॥ श्रीशुक उवाच ॥ इति प्रणयबद्धाभिर्गोपीभिः कृतरक्षणम् ॥ पाययित्वा स्तनं माता संन्यवेशयदात्मजम् ॥३०॥ तावन्नन्दादयो गोपा मथुराया व्रजं गताः ॥ विलोक्य पूतनादेहं बभूवुरतिविस्मिताः ॥ ३१ ॥ नूनं बतर्षिः संजातो योगेशो वा समास सः ॥ स एव दृष्टो ह्युत्पातो यदाहानकदुन्दुभिः ॥ ३२ ॥ कलेवरं परशुभिश्छित्त्वा तत्ते व्रजौकसः ॥ दूरे क्षिप्त्वाऽवयवशो न्यदहन्काष्ठधिष्ठितम् ॥ ३३ ॥ दह्यमानस्य देहस्य धूमश्चागुरुसौरभः ॥ उत्थितः कृष्णनिर्भुक्तः सपद्याहतपाप्मनः ॥ ३४ ॥ पूतना लोकबालघ्नी राक्षसी रुधिराशना ॥ जिघांसयाऽपि हरये स्तनं दत्त्वाऽऽप सद्गतिम् ॥ ३५ ॥

माता यशोदाले स्तन-पान गराई बालक कृष्णलाई सुताइन् ॥३०॥ उसै वेला नन्दादि गोप मथुराबाट व्रजमा पुगे र पूतनाको डरलाग्दो शरीर देखेर सार्है छक्क परे र आपसमै भन्नलागे—॥३१॥ निःसन्देह वसुदेवको रूपमा कुनै ऋषि प्रकट भएछन् अथवा पूर्वजन्ममा ती कुनै योगेश्वर थिए, किनकि जस्तो उनले भनेका थिए, उस्तै उत्पात यहाँ देखिइरहेछ' ॥३२॥ अनि व्रजवासीहरूले बञ्चराले पूतनाको शरीर टुक्रा-टुक्रा पारेर गोकुलदेखि निकै पर पुर्याई काठमाथि राखेर पोलिदिए ॥३३॥ डढ्ने वेलामा त्यसको शरीरबाट जुन धुवाँ निस्क्यो,त्यसबाट श्रीखण्ड जस्तै सुगन्ध आउँथ्यो, किनकि भगवान्ले स्तनपान गर्नाले त्यसका सबै पाप नष्ट भइसकेका थिए ॥३४॥ पूतना संसारका बालकहरूलाई मार्ने र तिनको रगत पिउने राक्षसी थिई । त्यसले भगवान्लाई मार्ने इच्छाले दूध खुवाएकी थिई, तथापि उसले सद्गति पाई ॥३५॥ अनि जसले परमात्मा कृष्णलाई माआको समान

⊕ यस्तो कथा पनि छ—जब ब्रह्माजी ग्वालबाल र बाछाहरू हरेर लगेका थिए, तब भगवान् स्वयं नै ग्वाल-बाल र बाछाहरू बनेर थिए गोप र बाछाका माताहरूका स्तनपान गरेका थिए ।

स्नेहपूर्वक श्रद्धा र भक्तिले उनका इच्छित वस्तुहरू दिए, ती गोपिनीहरूका सद्‌गतिको विषयमा त केही भन्ने कुरै छैन ॥३६॥ जसका अङ्गमा भगवान्‌ले आफ्ना लोकवन्द्य, देवता पनि पूज्य र भक्तका हृदयमा निरन्तर विराजमान रहने चरणले चढेर स्तनपान गरेका थिए, त्यो पूतना राक्षसी भएर पनि जब आमाले पाउने योग्य परमगतिरूप स्वर्गलोकमा पुगी भने जसका स्तन दूध भगवान्‌ले स्वयं पिएका थिए, ती गाई र माताहरूको कुरै छैन ॥३७॥३८॥ हे राजन्! कैवल्य आदि मुक्तिहरूका दाता भगवान् देवकीनन्दनले पुत्र-स्नेहले स्वयं बगिरहेको जसको दूध पिउनु भयो, ती कृष्णमा निरन्तर पुत्रभाव राख्ने ती गाई र गोपीहरूले फेरि कहिल्यै अज्ञानजन्य संसारको प्राप्ति कसरी हुन सक्तथ्यो? ॥३९॥४०॥ नन्दजीसित आउने सबै ब्रजवासी चिताको धुवाँको सुगन्ध पाएर–'यो के हो? कहाँबाट यो सुगन्ध आइरहेको छ?' यस्ता कुरा गर्दै ब्रजमा पुगे ॥ ४१ ॥

किं पुनः श्रद्धया भक्त्या कृष्णाय परमात्मने ॥ यच्छन्प्रियतमं किं नु रक्तास्तन्मातरो यथा ॥ ३६ ॥ पद्भ्यां भक्तहृदिस्थाभ्यां वन्द्याभ्यां लोकवन्दितैः ॥ अङ्गं यस्याः समाक्रम्य भगवानपिबत्स्तनम् ॥ ३७ ॥ यातुधान्यपि सा स्वर्गमवाप जननीगतिम् ॥ कृष्णभुक्तस्तनक्षीराः किमु गावो नु मातरः ॥ ३८ ॥ पयांसि यासामपिबत्पुत्रस्नेहस्नुतान्यलम् ॥ भगवान्देवकीपुत्रः कैवल्याद्यखिलप्रदः ॥ ३९ ॥ तासामविरतं कृष्णे कुर्वतीनां सुतेक्षणम् ॥ न पुनः कल्पते राजन्संसारोऽज्ञानसम्भवः ॥ ४० ॥ कटधूमस्य सौरभ्यमवघ्राय व्रजौकसः ॥ किमिदं कुत एवेति वदन्तो व्रजमाययुः ॥ ४१ ॥ ते तत्र वर्णितं गोपैः पूतनागमनादिकम् ॥ श्रुत्वा तन्निधनं स्वस्ति शिशोश्चासन्सुविस्मिताः ॥ ४२ ॥ नन्दः स्वपुत्रमादाय प्रेत्यागतमुदारधीः ॥ मूर्ध्न्युपाघ्राय परमां मुदं लेभे कुरूद्वह ॥ ४३ ॥ य एतत्पूतनामोक्षं कृष्णस्यार्भकमद्भुतम् ॥ शृणुयाच्छ्रद्धया मर्त्यो गोविन्दे लभते रतिम् ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे षष्ठोऽध्यायः ॥ ६ ॥

राजोवाच ॥ येन येनावतारेण भगवान् हरिरीश्वरः ॥ करोति कर्णरम्याणि मनोज्ञानि च नः प्रभो ॥ १ ॥ यच्छृण्वतोऽपैत्यरतिर्वितृष्णा सत्त्वं च शुद्धय-

त्यहाँ उनीहरूले गोपगणको मुखबाट पूतनाको आगमन वृत्तान्त सुने। 'पूतना मरी र बालक कुशलपूर्वक बाँचे' यस्तो कुरा सुनेर तिनलाई आश्चर्य लाग्यो ॥४२॥ हे कुरुनन्दन! उदारबुद्धि नन्दले मृत्युको मुखबाट बाँचेका आफ्नू बालकलाई काखमा उठाए र बारम्बार उनको शिर सुँघेर मनमनै धेरै प्रसन्न भए ॥ ४३ ॥ जो पुरुष बालकृष्णको यो 'पूतना-मोक्ष' नामको अद्भुत लीला श्रद्धापूर्वक सुन्दछ, त्यसको भगवान् कृष्णमा अचल प्रेम हुन्छ ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे पं० गौरीशंकर कृष्ण 'वासिष्ठी' भाषाटीकायां षष्ठोऽध्यायः ॥ ६ ॥

राजा परीक्षितले सोधे–हे प्रभो! भगवान् जुन-जुन अवतार लिएर जस्ता-जस्ता श्रवण-सुख लीलाहरू गर्दछन्, ती सबै मलाई आनन्दित पार्दछन् ॥ १ ॥ जो सुन्नाले

मनको मल र विषय-तृष्णा हराएर जान्छ, अन्तःकरण शुद्ध हुन्छ, भगवानमा भक्ति र भक्तजनमा प्रीति बढ्दछ, तिनै हरि-चरित्रहरू यदि हजुरको इच्छा भए वर्णन गर्नुहवस् ॥ १ ॥ श्रीकृष्णले मर्त्यलोकमा आएर मानवी लीलाहरूको अनुसरण गरेर जुन अद्भुत बाललीलाहरू गरे, ती पनि वर्णन गर्नुहवस् ॥ ३ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! एक दिन श्रीकृष्णको औत्थानिक अर्थात् कोल्टे फर्कने अभिकोत्सव थियो र उसै दिन उनको जन्म-नक्षण ( रोहिणी ) पनि थियो । अतः यशोदाले घरमा डाकेका गोपिनीहरूको गान बजान र ब्राह्मणहरूद्वारा मन्त्रपाठ गराई छोरोको अभिषेक गराइन् ॥ ४ ॥ फेरि उनले अन्न, वस्त्र, पुष्प, गाई आदि माङ्गलिक वस्तुले पूजित ब्राह्मणहरूद्वारा स्वस्तिवाचन गराई अभिषेकादि सकिएपछि छोरो उँघ्न लागेको देखेर शय्यामा सुताइदिइन् ॥ ५ ॥ एक छिनमा जब भगवान्‌का आँखा खुले तब ती स्तनपानको निम्ति रुनलागे । उत्सवमा आएका व्रजका ती गोप-गोपिनीको सत्कारमा तल्लीन भएकी यशोदाले छोरो रोएको सुनिनन् । उता कृष्णचन्द्र रुँदा-रुँदा आफ्ना पाउ पछार्नलागे ॥ ६ ॥ त्यस बेला श्रीकृष्ण यौटा शकट ( गाडा )

त्यचिरेण पुंसः ॥ भक्तिर्हरौ तत्पुरुषे च सख्यं तदेव हारं वद मन्यसे चेत्॥२॥अथान्यदपि कृष्णस्य तोकाचरितमद्भुतम् ॥ मानुषं लोकमासाद्यतज्जाति मनुरुन्धतः॥३॥ श्रीशुक उवाच ॥ कदाचिदौत्थानिककौतुकाप्लवे जन्मर्क्षयोगे समवेतयोषिताम् ॥ वादित्रगीतद्विजमन्त्रवाचकैश्चकार सूनोरभिषेचनं सती ॥४॥ नन्दस्य पत्नी कृतमज्जनादिकं विप्रैः कृतस्वस्त्ययनं सुपूजितैः ॥ अन्नाद्यवासः स्रगभीष्टधेनुभिःसंजातनिद्राक्षमशीशयच्छनैः ॥५॥ औत्थानिकौत्सुक्यमना मनस्विनी समागतान्पूजयती व्रजौकसः ॥ नैवाशृणोद्वै रुदितं सुतस्य सा रुदन्स्तनार्थी चरणावुदक्षिपत् ॥६॥ अधः शयानस्य शिशोरनोऽल्पकप्रवालमृद्वङ्घ्रिहतं व्यवर्तत ॥ विध्वस्तनानारसकुप्यभाजनं व्यत्यस्तचक्राक्षविभिन्नकूबरम् ॥७॥ दृष्ट्वा यशोदाप्रमुखा व्रजस्त्रिय औत्थानिके कर्मणि याः समागताः ॥ नन्दादयश्चाद्भुतदर्शनाकुलाः कथं स्वयं वै शकटं विपर्यगात् ॥ ८ ॥ ऊचुरव्यवसितमतीन्गोपान्गोपीश्च बालकाः ॥ रुदताऽनेन पादेन क्षिप्तमेतन्न संशयः ॥ ९ ॥ न ते श्रद्दधिरे गोपा बालभाषितमित्युत ॥ अप्रमेयं बलं तस्य बालकस्य न ते विदुः ॥ १० ॥ रुदन्तं सुतमादाय यशोदा ग्रहशङ्किता ॥ कृतस्वस्त्ययनं विप्रैः सूक्तैः स्तनमपाययत् ॥ ११ ॥ पूर्ववत्स्थापितं गोपैर्बलिभिः सपरिच्छदम् ॥ विप्रा हुत्वाऽर्चयाञ्चक्रुर्दध्यक्षतकुशाम्बुभिः ॥ १२ ॥ येऽसूयानृतदम्भेर्ष्याहिंसामानविवर्जिताः ॥ न तेषां सत्यशीलानामाशिषो विफलाः कृताः ॥ १३ ॥ इति बालकमादाय

मुनि सुतेका थिए तिमयो नवपल्लव झैं कोमल र साना पाउ लाग्नासाथ गाडा पल्टियो । त्यसमाथि राखिएका दूध-दही आदि रसहरूले भरिएका जो भाँडा थिए ती सबै फुटे । गाडाको चक्का र धुरा यता-उता फालिए र जुआ भाँच्चियो ॥ ७ ॥ यशोदा र उत्सवमा आएका व्रजबालाहरू र नन्दादि गोपगण त्यो विचित्र घटना देखेर निकै चकित हुनगए अनि आपसमा कुरा गर्नलागे—यो के भयो ? गाडा स्वयं कसरी पल्टियो ?' ॥ ८ ॥ तर तिनले यसको कुनै कारण निधो गर्न सकेनन् । अनि त्यहाँ खेलिरहेका बालकहरूले गोप-गोपीसित भने—'कृष्णले नै रोई-रोई आफ्ना पाउले हिर्काएर यो पल्टाइदिए—यसमा शंका छैन' ॥ ९ ॥ तर ठूलाले 'साना बालको कुरा' मानेर विश्वास गरेनन्, किनकि ती बालक श्रीकृष्ण अतुलित बलबाट अनभिज्ञ थिए ॥ १० ॥ अनि यशोदाले रोइरहेका बालकलाई बोकिन् र ग्रहादिको उत्पात ठानी ब्राह्मणद्वारा वेदमन्त्रले शान्तिपाठ गराई स्तनपान गराइन् ॥ ११ ॥

अनि बलिया गोपहरूले गाडा सँझो पारेर त्यसमा पहिले झैं सामग्री राखिदिए। अनि ब्राह्मणद्वारा हवन गराएर दही, अक्षता र कुशोदकले पूजन गरे ॥ १२ ॥ जो दोष दृष्टि, मिथ्या-भाषण, दम्भ, हिंसा र सम्मान रहित हुन्छन्, ती सत्यशील ब्राह्मणको आशिर्वाद कहिल्यै विफल हुन्नन्'॥ १३ ॥ यस्तो ठानेर नन्दजीले बालकलाई काखमा लिएर ब्राह्मणद्वारा ऋक्, साम र यजुर्वेदका मन्त्रले संस्कृत एवं पवित्र औषधि मिसाएको जलले अभिषेक गराए। उनले स्वस्तिवाचन गराए अग्निहोत्र गरे र ब्राह्मणहरूलाई उत्तम अन्नको भोजन गराए ॥ १४-१५ ॥ अनि उनले पुत्रको अभ्युदयको इच्छाले अनेक वस्त्र र सुवर्णका मालाहरूले विभूषित सर्वगुण सम्पन्न गाईहरू ब्राह्मणहरूलाई दान गरेर दिए र ब्राह्मणहरूले अमोघ आशीर्वाद दिए ॥ १६ ॥ वेदवेत्ता र योगयुक्त ब्राह्मणहरूको आशीर्वाद कहिल्यै विफल हुँदैन—यो कुरा स्पष्ट छ ॥ १७ ॥ एक दिन

सामर्ग्यजुरुपाकृतैः ॥ जलैः पवित्रौषधिभिरभिषिच्य द्विजोत्तमैः ॥ १४ ॥ वाचयित्वा स्वस्त्ययनं नन्दगोपः समाहितः ॥ हुत्वा चाग्निं द्विजातिभ्यः प्रादादन्नं महागुणम् ॥ १५ ॥ गावः सर्वगुणोपेता वासःस्रग्रुक्ममालिनीः ॥ आत्मजाभ्युदयार्थाय प्रादात्ते चान्वयुञ्जत ॥ १६ ॥ विप्रा मन्त्रविदो युक्तास्तैर्याः प्रोक्तास्तथाशिषः ॥ ता निष्फला भविष्यन्ति न कदाचिदपि स्फुटम् ॥ १७ ॥ एकदारोहमारूढं लालयन्ती सुतं सती ॥ गरिमाणं शिशोर्वोढुं न सेहे गिरिकूटवत् ॥ १८ ॥ भूमौ निधाय तं गोपी विस्मिता भारपीडिता ॥ महापुरुषमादध्यौ जगतामास कर्मसु ॥१९॥ दैत्यो नाम्ना तृणावर्तः कंसभृत्यःप्रणोदितः ॥ चक्रवातस्वरूपेण जहारासीनमर्भकम् ॥२०॥ गोकुलं सर्वमावृण्वन्मुष्णंश्चक्षूंषिरेणुभिः ॥ ईरयन्सुमहाघोरशब्देन प्रदिशो दिशः ॥२१॥ मुहूर्तमभवद्गोष्ठं रजसा तमसाऽऽवृतम् ॥ सुतं यशोदा नापश्यत्तस्मिन्न्यस्तवती यतः ॥२२॥ नापश्यत्कश्चनात्मानं परं चापि विमोहितः ॥ तृणावर्तनिसृष्टाभिः शर्कराभिरुपद्रुतः ॥ २३ ॥ इति खरपवनचक्रपांसुवर्षे सुतपदवीमबला विलक्ष्य माता ॥ अतिकरुणमनुस्मरन्त्यशोच-

यशोदा पुत्रलाई काखमा लिएर खेलाइरहेकी थिइन्। अकस्मात् कृष्ण पर्वत-शिखर झैं गह्रौं लागेर तिनले प्रभुको भार सहन सकिनन् ॥ १८ ॥ अन्त्यमा भगवान्को भारले पीडित भएर यशोदाले पृथ्वीमा बसालिदिइन् र छक्क पर्दै जगदीश्वरको ध्यान गर्दै घरको काममा लागिन् ॥ १९ ॥ त्यसै बेला कंसले पठाएको उनको सेवक तृणावर्त दैत्य आँधीको रूपमा त्यहाँ आयो र बसेका बालक कृष्णलाई लिएर आकाशमा उड्यो ॥ २० ॥ त्यसले सारा व्रजमण्डललाई धूलोले ढाकिदिएर सबैका नेत्र बन्द पारिदियो र आफ्नो डरलाग्दो शब्दले सबै दिशाहरूलाई गुञ्जायमान पारिदियो ॥ २१ ॥ एक मुहूर्तसम्म व्रजमा धूलो र घोर अन्धकारले ढाकिरह्यो। यशोदा जब छोरोलाई हेर्न गइन् तब जहाँ बसालेर गएकी थिइन्, त्यहाँ बालक कृष्णलाई देखिनन् ॥२२॥ त्यस बखत तृणावर्तले उडाएको धूलाले सबै जना उद्विग्न भइरहेका थिए कि उनलाई आफ्ना बिरानाको ज्ञान भइरहेको थिएन

○ यस विषयमा सूरदासका अनेक पदहरू प्रचलित छन्, जसमा थोरै पदको सारांश यस्तो छ— यशोदा कृष्णलाई झलामा राखेर झुलाउँदै गीत गाउँथिन्। ती गीत पनि केवल कृष्णको कल्याण गर्ने विषयमा नै हुन्थे। यशोदाको गान सुनेर कृष्ण कुनै बेला आँखा उघार्ने र कुनै बेला चिम्लने गर्थे। कुनै बेला ओठमात्र हल्लाउँथे। त्यसै बेला आत्तिए झैं गरेर हरि उठे अनि यशोदा मधुर स्वरमा गान गर्दै रहिन्। त्यस बेला सुर मुनिलाई समेत मध्ये पनि दुर्लभ सुख नन्दकी भामिनी यशोदाले प्राप्त गरिन्।

॥२३॥ यस्तो आँधी र धूलोको वेगमा छोरोलाई नदेखेर अत्यन्त करुणाले उनलाई सम्झन्दै रुन लागिन् र जसको बाछो मरिसकेको होस त्यो गाई जस्तै शुद्धि हराएर पृथ्वीमा लडिन् ॥२४ ॥ चक्रवात ( आँधी ) शान्त भएपछि जब धूलो उड्न छाड्यो तब अरु गोपिनी पनि यशोदा रोएको सुनेर त्यहाँ धमाधम आइपुगे र नन्दलाल लाई नभेटेर मनमनै सन्ताप मान्दै र आँसु बगाउँदै रुनलागे ॥ २५ ॥ उता आँधीको रूपधारी तृणावर्त जब भगवान् कृष्णलाई उडाएर आकाशमा लग्यो, तब उनको साह्रै गह्रौं भार थाम्न नसक्नाले त्यसको वेग शान्त भयो । अतः त्यो वर्ता जान सकेन ॥२६॥ भगवान् साह्रै गह्रौं भइदिएका थिए । ती उसलाई यौटा ठूलो शिला समान गह्रुँ लागिरहेका थिए । सहसा श्रीकृष्णले त्यसको घाँटी थिचिदिए त्यसै कारण त्यो विचित्र बालकलाई छाड्न पनि पाइरहेको थिएन ॥ २७ ॥ आफ्नु घाँटी बर्ता थिचिनाले त्यो दैत्य निश्चेष्ट भयो, त्यसका आँखा पल्टिए, शब्द बन्द भयो र त्यो प्राणहीन भएर बालक कृष्णका साथ व्रजमा पछारियो ॥ २८ ॥ त्यहाँ जम्मा भएर विलाप गरिरहने नारीहरूले महा-

द्भुवि पतिता मृतवत्सका यथा गौः ॥२४॥ रुदितमनु निशम्य तत्र गोप्यो भृशमनुतप्तधियोऽश्रुपूर्णमुख्यः ॥ रुरुदुरनुपलभ्य नन्दसूनुं पवन उपारतपांसुवर्षवेगे ॥ २५ ॥ तृणावर्तः शान्तरयो वात्यारूपधरो हरन् ॥ कृष्णं नभोगतो गन्तुं नाशक्नोद्भूरिभारभृत् ॥ २६ ॥ तमश्मानं मन्यमान आत्मनो गुरुमत्तया ॥ गले गृहीत उत्स्रष्टुं नाशक्नोदद्भुतार्भकम् ॥ २७ ॥ गलग्रहणनिश्चेष्टो दैत्यो निर्गतलोचनः ॥ अव्यक्तरावो न्यपतत्सहबालो व्यसुर्व्रजे ॥ २८ ॥ तमन्तरिक्षात्पतितं शिलायां विशीर्णसर्वावयवं करालम् ॥ पुरं यथा रुद्रशरेण विद्धं स्त्रियो रुदत्यो ददृशुः समेताः ॥ २९ ॥ आदाय मात्रे प्रतिहृत्य विस्मिताः कृष्णं च तस्योरसि लम्बमानम् ॥ तं स्वस्तिमन्तं पुरुषादनीतं विहायसा मृत्युमुखात्प्रमुक्तम् ॥ गोप्यश्च गोपाः किल नन्दमुख्या लब्ध्वा पुनः प्रापुरतीव मोदम् ॥ ३० ॥ अहो बतात्यद्भुतमेष रक्षसा बालो निवृत्तिंगमितोऽभ्यगात्पुनः ॥ हिंस्रः स्वपापेन विहिंसितः खलः साधुः समत्वेन भवाद्विमुच्यते ॥ ३१ ॥ किं नस्तपश्चीर्णमधोक्षजार्चनं पूर्तेष्टदत्तमुत भूतसौहृदम् ॥ यत्संपरेतः पुनरेव बालको दिष्ट्या स्वबन्धून्प्रणयन्नुपस्थितः ॥३२॥ दृष्ट्वाऽद्भुतानि बहुशो नन्दगोपो बृहद्वने ॥ वसुदेववचो भूयो मानयामास विस्मितः ॥३३॥ एकदाऽर्भकमादाय स्वाङ्कमारोप्य भामिनी ॥ प्रस्नुतं पाययामास स्तनं स्नेहपरिप्लुता ॥ ३४ ॥ पीतप्रायस्य जननी सा तस्य रुचिरस्मितम् ॥ मुखं लालयती

देवका बाणले विद्ध त्रिपुर समान डरलाग्दो दैत्यलाई आकाशबाट पृथ्वीमा पछारिएको र त्यसका अवयवहरू धूलोपीठो भएको देखे ॥ २९ ॥ अनि तिनले छक परेर त्यसको छातीमा झुण्डिएका कृष्णलाई तुरुन्त उचालेर यशोदालाई दिए । जसलाई राक्षसले आकाशमा लगेको थियो, मृत्युको मुखबाट सकुशल फर्केका ती बालकलाई फेरि भेट्टाएर गोपिनी एवं नन्दादि गोपहरूलाई अपार आनन्द भयो ॥३०॥ ती भन्नलागे–'यो कति आश्चर्यको कुरा छ कि बालक राक्षसद्वारा मृत्युमा प्राप्त भएर पनि जीवित आएको र हिंसक दैत्य आफ्ना छल र पापले स्वयं मारियो । सत्य हो, साधुजन आफ्नो साम्य बुद्धि द्वारा सबै प्रकारका भयबाट जोगिन्छन् ॥३१॥ हामीले यस्तो कुन तप, विष्णु भगवान्को पूजन, यज्ञ, दान अथवा प्राणीहरूको प्रिय कार्य गरेको थियो, जसले सौभाग्यवश आफ्ना स्वजनलाई आनन्दित पार्नको निम्ति एक प्रकारले मरिसकेको बालक फेरि फर्केर आए ?' ॥३२॥ यसरी गोकुलमा अनेक

अद्भुत घटनाहरू घटित भएका देखेर छक्क परेका नन्दले यशोदाको भनाइ बारम्बार समर्थन गरे ॥३३॥ एक दिन यशोदाले पुत्रलाई काखमा लिएर आफ्ना दूधले भरिएका स्तन पिलाइन् ॥३४॥ हे राजन् ! जब बालकले दूध पिइसके र यशोदा उनको मनोहर मुखमा म्वाइँ खाइरहेकी थिइन्, त्यसै बेला बालकले 'हाई' गरे । अनि यशोदाले उनको मुखमा आकाश, अन्तरिक्ष, ज्योतिर्मण्डल, सबै दिशा, सूर्य चन्द्रमा, अग्नि, वायु, समुद्र, द्वीप,पर्वत तथा तिनैबाट:उत्पन्न सबै नदीहरू, वन,स्थावर-जङ्गम समस्त प्राणी त्यहीं मुखमा विराजमान देखिन ॥३५॥३६॥ हे महाराज ! आफ्ना छोराको मुखमा एक-एक गरेर सारा जगत् उपस्थित देखेर यशोदा डरले काम्न लागिन् र ती मृगनयनीले अतिशय विस्मित भएर आफ्ना आँखा चिम्लिइन् ॥३७॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर वसिष्ठकृत 'वासिष्ठी' भाषाटीकायां सप्तमोऽध्यायः ॥७॥

( वासुदेवको नामकरण संस्कार र बाललीला ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! एक दिन यादवहरूका कुल पुरोहित गर्गमुनि वसुदेवले पठाएर नन्दको गोकुलमा पुगे ॥१॥

राजञ्जृम्भतो ददृशे इदम् ॥ ३५ ॥ खं रोदसी ज्योतिरनीकमाशाः सूर्येन्दुवह्निश्वसनाम्बुधींश्च ॥ द्वीपान्नगाँस्तद्दुहितॄर्वनानि भूतानि यानि स्थिरजङ्गमानि ॥ ३६ ॥ सा वीक्ष्य विश्वं सहसा राजन्सञ्जातवेपथुः ॥ सम्मील्य मृगशावाक्षी नेत्रे आसीत्सुविस्मिता ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे तृणावर्तमोक्षो नाम सप्तमोऽध्यायः ॥ ७ ॥

श्रीशुक उवाच ॥ गर्गः पुरोहितो राजन्यदूनां सुमहातपाः ॥ व्रजं जगाम नन्दस्य वसुदेवप्रचोदितः ॥१॥ तं दृष्ट्वापरमप्रीतः प्रत्युत्थाय कृताञ्जलिः॥ आनर्चाधोक्षजधिया प्रणिपातपुरःसरम् ॥२॥ सूपविष्टं कृतातिथ्यं गिरा सूनृतया मुनिम् ॥ नन्दयित्वाऽब्रवीद्ब्रह्मन्पूर्णस्यकरवाम किम् ॥३॥ महद्विचलनं नृणां गृहिणां दीनचेतसाम् ॥ निःश्रेयसाय भगवन्कल्पते नान्यथा क्वचित् ॥४॥ ज्योतिषामयनं साक्षाद्यत्तज्ज्ञानमतीन्द्रियम् ॥ प्रणीतं भवता येन पुमान्वेद परावरम् ॥५॥ त्वं हि ब्रह्मविदां श्रेष्ठः संस्कारान्कर्तुमर्हसि ॥ बालयोरनयोर्नृणां जन्मना ब्राह्मणो गुरुः ॥६॥ गर्ग उवाच ॥ यदूनामहमाचार्यः ख्यातश्च भुवि सर्वतः ॥ सुतं मया संस्कृतं ते मन्यते देवकीसुतम् ॥७॥कंसः पापमतिः सख्यं तव चानकदुन्दुभेः ॥ देवक्याअष्टमो गर्भोन स्त्री भवितुमर्हति ॥८॥

उनलाई देख्नासाथ नन्दजीले जुरुक्क उठेर दुवै हात जोरी प्रणाम गरे र विष्णु-बुद्धिले उनको पूजा गरे ॥२॥ गर्गमुनि जब नन्दको उत्तम आतिथ्य पाएर राम्ररी बसे, अनि उनले नम्र वाणीमा गर्गमुनिको प्रशंसा गर्दै भने—'हे भगवन् ! हजुर पूर्णकाम हुनुहुन्छ, म हजुरको के सेवा गरौं ? ॥ ३ ॥ महात्माहरूको आगमन—दीन हृदय गृहस्थको कल्याणका लागि नै हुन्छ, उनको अरु कुनै प्रयोजन रहन्न ॥ ४ ॥ जो इन्द्रिय देखिपरै छन् र जसद्वारा मानिस भूत-भविष्यको वृत्तान्त जान्न सक्छन्, हजुरले त्यस्तो ज्योतिष शास्त्रको रचना गर्नुभएको छ ॥ ५ ॥ हजुर ब्रह्मवेत्तामा प्रधान हुनुहुन्छ । अतः यी दुवै बालकको नामकरण संस्कार गरिदिनोस्, किनकी ब्राह्मण जन्मैदेखि मानिसका गुरु हुन्छन् ॥६॥ गर्गले भने—हे नन्दजी ! यदुकुलको आचार्य हुँ भन्ने कुरा सबैलाई थाहा छ, अतः यस बेला यदि म तिम्रा पुत्रको संस्कार गरौं भने सबैले देवकीका छोरा ठान्नेछन् । कंसको बुद्धि पापमयी छ । तिम्रो र वसुदेवको मित्रता पनि उसले जान्दछ र देववाणीको कथनानुसार देवकीको आठौं सन्तान कन्या हुन सक्तिन भन्ने त्यसको विश्वास अटल भइसकेको छ ॥ ७ ॥

॥८॥ यी कुरा विचारेर देवकीकी कन्याको कथनानुसार र मैले संस्कार गर्नाले सन्देहवश उसले यदि तिम्रा बालकलाई मारिदियो भने ठूलो अनर्थ हुनेछ ॥ ९ ॥ नन्दजी भन्न-लागे—हे मुने ! अरुको त कुरै छैन, मेरा आफ्नाको पनि आँखा नपर्ने गरी हजुर यो एकान्त गोशालामा स्वस्तिवाचन गरेर यिनको द्विजाति संस्कार गरिदिनोस् ॥१०॥ श्रीशुकदेव भन्नुहुन्छ—गर्गमुनि त्यै कामको निम्ति आएकै थिए, अतः नन्दको प्रार्थना सुनेर एकान्तमा गुप्तभावले दुवै बालकको नामकरण संस्कार गरे ॥ ११ ॥ गर्गमुनिले भने—यी रोहिणी छोरा आफ्ना अनेक गुणले स्वजनलाई खुसी पार्नेन, अतः यिनको नाम 'राम' हुनेछ। बर्ता बल हुनाले 'बलभद्र' कहिनेछन् र मेल गराउनाले यिनलाई 'सङ्कर्षण' भन्नेछन् ॥१२॥ तिम्रो यो दोस्रो छोरो पहिलेका तीन युगमा अवतीर्ण भइसकेको छ। तब इनको क्रमशः सेतो, पहेलो र रातो वर्ण थियो। यसपल्ट कालोवर्ण भएर प्रकट भएको छ।

इति सञ्चिन्तयञ्श्रुत्वा देवक्या दारिकावचः ॥ अपि हन्ताऽऽगताशङ्कस्तर्हि तन्नोऽनयो भवेत् ॥ ९ ॥ नन्द उवाच ॥ अलक्षितोऽस्मिन्रहसि मामकैरपि गोव्रजे ॥ कुरु द्विजातिसंस्कारं स्वस्तिवाचनपूर्वकम् ॥१०॥ श्रीशुक उवाच ॥ एवं सम्प्रार्थितो विप्रः स्वचिकीर्षितमेव तत् ॥ चकार नामकरणं गूढो रहसि बालयोः ॥११॥ गर्ग उवाच ॥ अयं हि रोहिणीपुत्रो रमयन्सुहृदो गुणैः ॥ आख्यास्यते राम इति बलाधिक्याद्बलं विदुः ॥ यदूनामपृथग्भावा-त्सङ्कर्षणमुशन्त्युत ॥ १२ ॥ आसन्वर्णास्त्रयो ह्यस्य गृह्णतोऽनुयुगं तनूः ॥ शुक्लो रक्तस्तथा पीत इदानीं कृष्णतां गतः ॥ १३ ॥ प्रागयं वसुदेवस्य क्वचिज्जातस्तवात्मजः ॥ वासुदेव इति श्रीमानभिज्ञाः सम्प्रचक्षते ॥ १४ ॥ बहूनि सन्ति नामानि रूपाणि च सुतस्य ते ॥ गुणकर्मानुरूपाणि तान्यहं वेद नो जनाः ॥ १५ ॥ एष वः श्रेय आधास्यद्गोपगोकुलनन्दनः ॥ अनेन सर्वदुर्गाणि यूयमञ्जस्तरिष्यथ ॥ १६ ॥ पुराऽनेन व्रजपते साधवो दस्युपीडिताः ॥ अराजके रक्ष्यमाणा जिग्युर्दस्यून्समेधिताः ॥ १७ ॥ य एतस्मिन्महाभागाः प्रीतिं कुर्वन्ति मानवाः ॥ नारयोऽभिभव-

यसै निम्ति यसको नाम कृष्ण हुनेछ। यो पहिले वसुदेवकहाँ पनि उत्पन्न भएको हुनाले विद्वान्हरू यस श्रीमान् बालकको नाम 'वासुदेव' पनि भन्दछन् ॥ १३ ॥ १४ ॥ गुण र कर्मानुसार तिम्रा पुत्रको अरू पनि नाम र रूप छन्। त्यो म जान्दछु, तर साधारण व्यक्ति जान्दैनन् ॥ १५ ॥ यो बालक तिम्रो कल्याण-साधन गर्दै सबै गोपगण र गाईहरू-लाई आनन्दित गर्नेछ। यसैको सहायताले तिमीहरू अनेक दुस्तर विपत्तिहरू सहजै तर्नेछौ ॥ १६ ॥ हे व्रजराज ! पूर्वकालमा अराजकताको मौकामा यसले दुष्ट द्वारा पीडित साधुजनको रक्षा गरेको थियो। यसद्वारा रक्षित भएर नै ती साधुहरूले दुष्टजनमा विजय पाएका थिए ॥ १७ ॥ भाग्यमानी व्यक्ति नै योसित प्रेम गर्दछन्, उनलाई तिनका शत्रुले

---

⊙ कुनै कविले वर्णन गरेका छन्—उत्तम संवाद, भाद्र महीना, अष्टमी तिथि, बुधवार, कृष्णपक्ष, रोहिणी नक्षत्र, आधारात, उदार हर्षण योग। शुभ लग्न र उच्च स्थानमा चन्द्रमा जन-मनलाई सुख दिने। सिंह राशिका चतुर्थ सूर्य हुनाले समस्त पृथ्वीलाई जितेछन्। पञ्चम स्थानमा बुधले छोरा-छोरी धेरै फैलाउने छन्। छैठौं शनियुत तुलाका शुक्र शत्रुको त्रिक पनि रहन दिने छैनन्। सातौं राहु परेको हुनाले अनेक पत्नीहरू हुनेछन्। भूमिसुत मकर राशि, भाग्यभवन हुनाले अपरिमित ऐश्वर्य हुनेछ। लाभ-भवनमा मीन बृहस्पति अष्टसिद्धि र नवनिधि परमा ल्याउने छन्। कर्म-भवनमा ईश शनिश्चर श्याम वर्णको शरीर दिनेछन्।

थिच्न सक्तैनन्, जस्तै विष्णु भगवान्द्वारा रक्षित देवगणलाई असुरहरूले थिच्न सक्तैनन् ॥ १८ ॥ तिम्रो यो बालक गुण, कीर्ति र प्रभावमा नारायण समान छ। तिमी यसको रक्षा राम्ररी गर ॥ १९ ॥ यसरी नन्दजीलाई बुझाएर गर्गमुनि फर्किए। नन्दजी तिनको कथनले आनन्दित भएर आफूलाई पूर्ण ठान्न लागे ॥ २० ॥ केही दिनपछि राम र कृष्ण गोकुलमा चार हात खुट्टा टेकेर घस्रन र हिंड्न थाले ॥ २१ ॥ जब दुवै भाई आफ्ना स-साना पाउ गोठको हिलोमा घिसार्दै हिंड्दथे, तब तिनका पाउ र कम्मरका गहनाको शब्द सार्है मीठो सुनिन्थ्यो। त्यो सुनेर ती प्रसन्न हुन्थे। *कहिले परसम्म कसैको पछि-पछि जान्थे र मुग्ध एवं भयभीत भएर आफ्नी आमाकहाँ फर्केर आउँथे ॥ २२ ॥ त्यस वेला स्नेहले माताका स्तनबाट दूध बग्न लाग्दथ्यो र उनी हीलोरूपी अङ्गराग लाग्नाले राम्रा प्रतीत हुने आफ्ना बालकलाई दुवै हातले काखमा लिएर हृदयमा टाँस्तथे र तिनलाई स्तनपान गराउँथे। जब कृष्ण-बलराम दूध पिउन लाग्दथे तब स-साना दन्तावलीले युक्त तिनको मुखारविन्द

न्त्येतान्विष्णुपक्षानिवासुराः ॥ १८ ॥ तस्मान्नन्दात्मजोऽयं ते नारायणसमो गुणैः ॥ श्रिया कीर्त्याऽनुभावेन गोपायस्व समाहितः ॥ १९ ॥ इत्यात्मानं समादिश्य गर्गे च स्वगृहं गते ॥ नन्दः प्रमुदितो मेने आत्मानं पूर्णमाशिषाम् ॥ २० ॥ कालेन व्रजताऽल्पेन गोकुले रामकेशवौ ॥ जानुभ्यां सह पाणिभ्यां रिङ्गमाणौ विजह्रतुः ॥ २१ ॥ तावङ्घ्रियुग्ममनुकृष्य सरीसृपन्तौ घोषप्रघोषरुचिरं व्रजकर्दमेषु ॥ तन्नादहृष्टमनसावनुसृत्य लोकं मुग्धप्रभीतवदुपेयतुरन्ति मात्रोः ॥ २२ ॥ तन्मातरौ निजसुतौ घृणया स्नुवन्त्यौ पङ्काङ्गरागरुचिरावुपगुह्य दोर्भ्याम् ॥ दत्त्वा स्तनं प्रपिबतोः स्म मुखं निरीक्ष्य मुग्धस्मिताल्पदशनं ययतुः प्रमोदम् ॥ २३ ॥ यर्ह्यङ्गनादर्शनीयकुमारलीलावन्तर्व्रजे तदबला प्रगृहीतपुच्छैः ॥ वत्सैरितस्तत उभावनुकृष्यमाणौ प्रेक्षन्त्य उज्झितगृहा जहृषुर्हसन्त्यः ॥ २४ ॥ शृङ्ग्यग्निदंष्ट्र्यसिजलद्विजकण्टकेभ्यः क्रीडापरावतिचलौ स्वसुतौ निषेद्धुम् ॥ गृह्याणि कर्तुमपि यत्र न तज्जनन्यौ शेकात आप्तुरलं मनसोऽनवस्थाम् ॥ २५ ॥ कालेनाल्पेन राजर्षे रामः कृष्णश्च गोकुले ॥ अघृष्टजानुभिः पद्भिर्विचक्रमतुरञ्जसा ॥२६॥ ततस्तु भगवान्कृष्णो वयस्यैर्व्रजबालकैः ॥ सहरामो व्रजस्त्रीणां चिक्रीडे जनयन्मुदम् ॥२७॥ कृष्णस्य गोप्यो रुचिरं वीक्ष्य

हेरेर यशोदा-रोहिणी आनन्दमग्न हुन्थे ॥ २३ ॥ ती दुवै भाई अलि ठूला भएपछि व्रजमा गोपीहरूले हेर्नयोग्य अचम्भका बाललीलाहरू गर्दै बाछाको पुच्छर समातेर, उनले यता-उता तान्दा गोपिनीहरू घरबाट निस्केर तिनलाई देख्दै आनन्दले हाँस्तथे ॥ २४ ॥ जब माता यशोदा र रोहिणी आफ्ना दुवै अत्यन्त बाठा र चपल बालकलाई खेल्दा गाई-गोरु आदि सींग हुने पशु, अग्नि र कुकुर आदि जीवसित तथा तरवार आदि शस्त्रसित र जल, पक्षी एवं टोक्ने जन्तु, बिझ्ने काँढासित जोगाउने काममा अल्झेर घरका काममा बाधा पर्दा तिनको मन उद्विग्न हुन्थ्यो ॥ २५ ॥ हे राजन्! केही दिनपछि राम-कृष्ण घुँडाको सहायता नलिएरै सजिलोसित दुवै खुट्टाले हिंड्न लागे ॥ २६ ॥ अब बलराम र श्रीकृष्ण व्रजबालाहरूलाई आनन्दित पार्दै व्रजका अन्यान्य समवयस्क बालकहरूसित खेल्न लागे ॥ २७ ॥ श्रीकृष्णचन्द्रको मनोहर

* कुनै कविले वर्णन गरेका छन्—छम-छम बज्ने श्यामका पाउजेबको ध्वनि सुन्दै, पुत्रको दुवै हातका औंला समातेर हिंड्न सिकाउने गर्दथिन्। श्याम वर्णमा परेको सिंगुलिया (बालकलाई लगाइदिने एक प्रकारको गहना) प्रद्युम्नलाई—इन लखा पनि खान्न-बुझ्न सक्तैनथे-तिनलाई खेलाउँथे नवका ग्वालिनी।

बाल-चपलता देखेर गोपिनीहरू नन्दको घर आउँथे र यशोदासित भन्दथे—॥ २८ ॥ 'यशोदा ! तिम्रो कृष्ण सार्है चञ्चल भएको छ । त्यो गएर कहिले गाई दुहुने बेला नहुँदै बाछा फुकाइदिन्छ । त्यस बेला हामीले हप्कायौं भने हाँस्न लाग्दछ । कहिले हाम्रो मीठो दही र दूध अनेक यत्न गरेर चोरी आफू खान्छ र बानरहरूलाई पनि बाँडेर खुवाउँदछ । यदि त्यतिबाट पनि चित्त बुझेन भने दूध-दहीका भाँडा फोरिदिन्छ । यदि कहिले कुनै वस्तु पनि पाइएन भने घरपट्टिसित रिसाई साना-साना बालकलाई कुटेर भाग्दछ ॥ २९ ॥ जब हामी यसको भयले दूध-दहीको भाँडो अग्लो स्थानमा राखिदिन्छौं, तब यदि यसको हात त्यहाँसम्म पुगेन भने ओखल, पीर्का माथि चढेर उहाँ-सम्म पुग्ने उपाय गरिहाल्छ । त्यतिमा पनि भाँडो झिक्न सकेन भने माथिको भाँडामा प्वाल पारिदिन्छ । यदि हामीले ती वस्तुहरूलाई नदेखिने अँध्यारोमा लुकाएर राखे पनि यसले जुन मणि जडित गहना लगाइराखेको छ, तिनैको उज्यालोमा यसलाई सबै स्पष्ट देखिन चाल्दछ । फेरि मणिका के कुरा, यसको शरीर नै सबै पदार्थलाई

कौमारचापलम् ॥ शृण्वत्याः किल तन्मातरिति होचुः समागताः ॥ २८ ॥ वत्सान्मुञ्चन्कचिदसमये क्रोशसंजातहासः स्तेयं स्वाद्वत्त्यथ दधि पयः कल्पितैः स्तेययोगैः ॥ मर्कान्भोक्ष्यन्विभजति स चेन्नात्ति भाण्डं भिनत्ति द्रव्यालाभे स गृहकुपितो यात्युपक्रोश्य तोकान् ॥ २९ ॥ हस्ताग्राह्ये रचयति विधिं पीठकोलूखलाद्यैश्छिद्रं ह्यन्तर्निहितवयुनः शिक्यभाण्डेषु तद्वित् ॥ ध्वान्तागारे धृतमणिगणं स्वाङ्गमर्थप्रदीपं काले गोप्यो यर्हि गृहकृत्येषु सुव्यग्रचित्ताः ॥ ३० ॥ एवं धार्ष्ट्यान्युशति कुरुते मेहनादीनि वास्तौ स्तेयोपायैर्विरचितकृतिः सुप्रतीको यथाऽऽस्ते ॥ इत्थं स्त्रीभिः सभयनयनश्रीमुखालोकिनीभिर्व्याख्यातार्था प्रहसितमुखी न ह्युपालब्धुमैच्छत् ॥ ३१ ॥ एकदा क्रीडमानास्ते रामाद्या गोपदारकाः ॥ कृष्णो मृदं भक्षितवानिति मात्रे न्यवेदयन् ॥ ३२ ॥ सा गृहीत्वा करे कृष्णमुपालभ्य हितैषिणी ॥ यशोदा भयसम्भ्रान्तप्रेक्षणाक्षमभाषत ॥ ३३ ॥ कस्मा-न्मृदमदान्तात्मन्भवान्भक्षितवान्रहः ॥ वदन्ति तावका ह्येते कुमारास्तेऽग्रजोऽप्ययम् ॥ ३४ ॥ कृष्ण उवाच ॥ नाहं भक्षितवानम्ब सर्वे मिथ्या-भिशंसिनः ॥ यदि सत्यगिरस्तर्हि समक्षं पश्य मे मुखम् ॥ ३५ ॥ यद्येवं तर्हि व्यादेहीत्युक्तः स भगवान्हरिः ॥ व्यादत्ताव्याहतैश्वर्यः क्रीडामनुज-

प्रकाशित पार्ने बत्ती झैं छ । जुन बेला हामी गोपिनीहरू घर-धन्दामा लागेका रहन्छौं, उसै बेला यो उत्पात गर्दछ ॥३०॥ यो धृष्टताको कुरा पनि गर्दछ । कहिले काहीं त हाम्रो लिपे-पोतेको घरमा मल-मूत्र त्यागिदिन्छ । यो जुन बेला पनि चोर्ने युक्ति खोजिरहन्छ । तर हेर, अहिले कस्तो साधु झैं चुपलागेर बसिरहेको छ !' यस प्रकार जब ती गोपिनीहरू भयपूर्ण नेत्र हुने कृष्णको मुखतिर हेर्दै यशोदासित उसका सबै कुरा सुनाउँथे तब यशोदालाई पनि हाँसो उठ्दथ्यो र कृष्णलाई हप्काउने पनि इच्छा हुँदैनथ्यो ॥ ३१ ॥ एक दिन बलराम र ग्वाल-बाल खेलिरहेको बेला उनले गएर यशोदासित भने—कृष्णले माटो खाएका छन् ॥ ३२ ॥ अनि जसका नेत्र भयले चञ्चल हेराइयुक्त देखिइ रहेथ्यो, ती बालक कृष्णको हात समाएर यशोदाले उनैको हितका लागि हप्काउँदै भनिन्—॥ ३३ ॥ 'कसो हो ! तैंले एकान्तमा लुकेर माटो किन खाएको ? हेर, तेरा यी मित्र र तेरा दाजु बलराम पनि भनिरहेका छन् ?' ॥ ३४ ॥ अनि कृष्णचन्द्र भन्नलागे—आमा ! मैंले माटो खाइन । यी सबै

अहो बोल्दैछन्, यदि यिनका भनाई सत्य हो भने लौ, मेरो मुख हेर ॥३५॥ यशोदाले भनिन्—'हुन्छ, यदि यही कुरा हो भने मुख उघार ।' आमाले भनेको सुनी लीलाको निम्ति नै मनुष्यरूपधारी र अखण्ड ऐश्वर्यशाली भगवान्ले मुख खोलिदिए ॥ ३६ ॥ अनि यशोदाले त्यस मुखमा सम्पूर्ण चराचर जगत्, आकाश, दिशा, द्वीप र समुद्र सहित सम्पूर्ण भूलोक, वायु, अग्नि, चन्द्रमा, तारागण सहित सबै ज्योतिर्मण्डल, जल, तेज, पवन आदि पञ्चभूत, वैकारिक अहंकारका कार्य, इन्द्रियाधिष्ठान-देवता, मन, इन्द्रिय तथा पञ्च तन्मात्राहरू, तीनै गुण विद्यमान देखिन् ॥३७॥३८॥ यसरी जीव, काल, कर्म, स्वभाव, आशय र विविध शरीरले गर्दा विचित्र भेदयुक्त सम्पूर्ण विश्व र आफूसहित समस्त व्रजमण्डल छोराको सानो मुखमा देखेर यशोदालाई शंका भयो ॥३९॥ ती विचार्न लागिन्–यो सपना हो कि भगवान्को माया हो, मेरो बुद्धिमा नै कुनै भ्रम भएको छ या मेरो बालकमै कुनै अलौकिक योगसिद्धि छ ॥ ४० ॥ जुन मन, चित्त, वाणी र कर्मद्वारा राम्ररी जान्न सकिन्न, जसमा यो जगत् स्थित छ तथा जुन

बालकः ॥ ३६ ॥ सा तत्र ददृशे विश्वं जगत्स्थास्नु च खं दिशः ॥ साद्रिद्वीपाब्धिभूगोलं सवाय्वग्नीन्दुतारकम् ॥ ३७ ॥ ज्योतिश्चक्रं जलं तेजो नभस्वान्वियदेव च ॥ वैकारिकाणीन्द्रियाणि मनो मात्रा गुणास्त्रयः ॥ ३८ ॥ एतद्विचित्रं सह जीवकालस्वभावकर्माशयलिङ्गभेदम् ॥ सूनोस्तनौ वीक्ष्य विदारितास्ये व्रजं सहात्मानमवाप शङ्काम् ॥३९॥ किं स्वप्न एतदुत देवमाया किं वा मदीयो बत बुद्धिमोहः ॥ अथो अमुष्यैव ममार्भकस्य यः कश्चनौत्पत्तिक आत्मयोगः ॥४०॥ अथो यथावन्न वितर्कगोचरं चेतोमनः कर्मवचोभिरञ्जसा ॥ यदाश्रयं येन यतः प्रतीयते सुदुर्विभाव्यं प्रणतोऽस्मि तत्पदम् ॥ ४१ ॥ अहं ममासौ पतिरेष मे सुतो व्रजेश्वरस्याखिलवित्तपा सती ॥ गोप्यश्च गोपाः सहगोधनाश्च मे यन्माययेत्थं कुमतिः स मे गतिः ॥ ४२ ॥ इत्थं विदिततत्त्वायां गोपिकायां स ईश्वरः ॥ वैष्णवीं व्यतनोन्मायां पुत्रस्नेहमयीं विभुः ॥ ४३ ॥ सद्यो नष्टस्मृतिर्गोपी सारोप्यारोहमात्मजम् ॥ प्रवृद्धस्नेहकलिलहृदयाऽऽसीद्यथा पुरा ॥ ४४ ॥ त्रय्या चोपनिषद्भिश्च सांख्ययोगैश्च सात्वतैः ॥ उपगीयमानमाहात्म्यं हरिं साऽमन्यतात्मजम् ॥ ४५ ॥ राजोवाच ॥ नन्दः किमकरोद्ब्रह्मञ्छ्रेय एवं महोदयम् ॥ यशोदा च महाभागा पपौ यस्याः स्तनं हरिः ॥ ४६ ॥ पितरौ

इन्द्रियाधिष्ठाता र बुद्धिका प्रेरकद्वारा यसको प्रतीति हुन्छ, ती अचिन्त्य शक्ति परमात्मालाई प्रणाम छ ॥४१॥ 'यो म हुँ, यो मेरो पति, यो मेरो पुत्र हो, म व्रजराज नन्दको समस्त सम्पत्तिकी स्वामिनी हुँ, समस्त गोप-गोपी र जो धन मेरो अधीन छन्, जसको मायाले मलाई यस्ता कुमतिले घेरेको छ, ती भगवान् नै मेरा एकमात्र गति छन्' ॥४२॥ यशोदालाई यसरी तत्त्वज्ञान भएको जानेर भगवान्ले आफ्नो पुत्रस्नेहमयी वैष्णवी मायाले ढाकिदिए ॥४३॥ तिनले तुरुन्त त्यो दृश्य बिर्सिइन् र तिनले छोरोलाई काखमा बोकिन् । हृदयमा प्रेमको बाढी उर्लेर ती पहिले जस्ती थिइन् उस्तै फेरि भइन् ॥ ४४ ॥ तीनै वेद, उपनिषद्, सांख्य, योग र भक्तजन जसको यशगान गर्दछन्, तिनलाई तिनलाई यशोदा आफ्नो छोरो ठान्दथिन् ॥४५॥ यति कथा सुनेर परीक्षितले सोधे–हे ब्रह्मन् ! नन्द र यशोदाले कुन यस्तो तपस्या र पुण्य गरेका थिए, जसको प्रभावले गर्दा प्रभुले तिनको स्तन-पान गरे । जो तीनै लोकको ताप शान्त पार्ने र कविजन जसको आज पनि गान गर्दछन् भगवान कृष्णका ती उदार बाललीला देख्न पाउने सुख तिनका माता-पिता

वसुदेव-देवकीलाई पनि प्राप्त भएन। फेरि उसले साक्षात् अनुभव गरेका थिए, ती नन्द-यशोदाका भाग्यको विषयमा के भन्नु छ? श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! आफ्नी भार्या धरासहित वसुश्रेष्ठ द्रोणले ब्रह्माको आज्ञा स्वीकार गरेर भनेका थिए—॥ ४८ ॥ 'हे भगवन्! जब म पृथ्वीमा उत्पन्न हुनेछु तब देवाधिदेव विश्वपति श्री हरिमा यस्तो अविचल भक्तिहोस्, जसले जीव सहजै दुर्गतिबाट पारी तरोस्' ॥ ४९ ॥ ब्रह्माजीले भने—'त्यस्तै हुनेछ।' त्यसै अनुसार उनै द्रोण व्रजमा उत्पन्न भएर नन्द नामले प्रख्यात भए। तिनकी पत्नी 'यशोदा' भइन् ॥ ५० ॥ हे भारत! पुत्र रूपले उत्पन्न भगवान्‌मा सबै गोप-गोपिनीको अपेक्षा यी दुवै स्त्री-पुरुषको वर्ता भक्ति थियो ॥ ५१ ॥

नान्वविन्देतां कृष्णदारार्भकेहितम् ॥ गायन्त्यद्यापि कवयो यल्लोकशमलापहम् ॥ ४७ ॥ श्रीशुक उवाच ॥ द्रोणो वसूनां प्रवरो धरया सह भार्यया ॥ करिष्यमाण आदेशान्ब्रह्मणस्तमुवाच ह ॥ ४८ ॥ जातयोर्नौ महादेवे भुवि विश्वेश्वरे हरौ ॥ भक्तिः स्यात्परमा लोके ययाऽञ्जो दुर्गतिं तरेत् ॥ ४९ ॥ अस्त्वित्युक्तः स भगवान्व्रजे द्रोणो महायशाः ॥ जज्ञे नन्द इति ख्यातो यशोदा सा धराऽभवत् ॥५०॥ ततो भक्तिर्भगवति पुत्रीभूते जनार्दने ॥ दम्पत्योर्नितरामासीद्गोपगोपीषु भारत ॥ ५१ ॥ कृष्णो ब्रह्मण आदेशं सत्यं कर्तुं व्रजे विभुः ॥ सहरामो वसँश्चक्रे तेषां प्रीतिं स्वलीलया ॥५२॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे विश्वरूपदर्शनेऽष्टमोऽध्यायः ॥८॥

श्रीशुक उवाच ॥ एकदा गृहदासीषु यशोदा नन्दगेहिनी ॥ कर्मान्तरनियुक्तासु निर्ममन्थ स्वयं दधि ॥१॥ यानि यानीह गीतानि तद्बालचरितानि

भगवान कृष्ण पनि ब्रह्माजीको वाक्य सत्य पार्नको निम्ति बलराम सहित व्रजमा बसेर * माता-पिताको सेवा गर्दै सबै व्रजवासीहरूलाई आफ्ना बाललीलाले आनन्दित पार्नलागे ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायां अष्टमोऽध्यायः ॥ ८ ॥

( भगवान कृष्ण ओखलमा बाँधिनु ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! एक दिन घरका दासीहरू अन्य काममा लागेका थिए, त्यसैले नन्द-रानी यशोदा आफैं दही मथ्न लागिन् ॥ १ ॥ कृष्णका जुन-जुन बाललीलाको यहाँसम्म वर्णन गरियो ती सबैको स्मरण गर्दै ती दही मथ्दा गान गर्दै जान्थिन् ॥ २ ॥ ती आफ्नू स्थूल कटिभागमा कठिबन्धनले

---

* दृष्टान्त ( माता-पिताको सेवा )—पूर्वकालमा मिथिला नगरीमा ज्ञानी महाराज जनक बस्तथे। कुनै बेला तिनको कीर्ति सुनेर महर्षि विश्वामित्र उनीसित ज्ञान प्राप्त गर्न गइरहेका थिए,तर धर्मव्याधले नै तिनलाई यथार्थ ज्ञानको उपदेश दिए। कौशिकश्री निकै प्रसन्न भए र उनलाई आश्चर्य भयो—यस्तो महापापी व्याधालाई यो ज्ञान कसरी प्राप्त भयो! व्याधाले ऋषिको विचार जानेर भन्यो—'मैले तिमीलाई जुन ज्ञान दिएँ, त्यो त कथाको ज्ञान हो। अब वास्तविक ज्ञान हेर्न मेरो घर हिंड!' यति भनेर घर लग्यो। व्याधाका आमा-बाबूले तुरुन्त उठेर ऋषिको स्वागत गरे। अनि व्याधाले आमा-बाबूलाई स्नान गराई पीढामा बसालेर तिनको पूजा गर्‍यो पङ्खा हम्कन्दै उनलाई खानेकुरा खान दियो। अनि आफैंले बिछौना लगाएर तिनलाई सुतायो। यो सबै देखेर कौशिकले—चकित हुनै पर्‍यो। बिहानै गएर उसले आमा-बाबू ढोग्यो र आफ्नो काममा आज्ञा माग्यो। ती दुवैले भने—'बाबू! तिमी धर्मात्मा भए, धर्म तिम्रो रक्षा गरोस र दीर्घायु रहे!' तत्पश्चि व्याधा हिंड्यो। ऋषिले भने—'सन्ध्यावन्दन, देवदर्शन आदि नित्यकर्म नगरेर तिमी किन हिंडेका!' व्याधाले भन्यो—'हे मुने! देवता, यज्ञ वेद आदि सत्कर्म सबै मेरा आमा-बाबु हुन्। आफ्ना स्त्री-पुत्रलाई मैले इनकै सेवामा खटाएको छु। हे मुने! मेरो यो सिद्धान्त छ—कल्याणको इच्छा हुने व्यक्ति माताको सेवा गरुन्।' कौशिक व्याधाको मातृ-पितृ भक्ति देखेर प्रसन्न भए र आफ्नो आश्रममा फर्के।

समेत रेशमी वस्त्र लगाएकी थिइन् । तिनका स्तन हल्लिरहेथे र पुत्रस्नेहले दूध चुहिरहेथे । नेति तान्नाले थाकेका बाहुका कङ्कण र कानका कुण्डल हल्लिरहेथे । तिनको मुखमा पसीनाका थोपा आए र तिनको चुल्ठोमा बाँधेका मालती पुष्प झरिरहेको थियो । यसरी भृकुटी हुने यशोदा-रानी दही मथिरहेकी थिइन् ॥ ३ ॥ जुन बेला ती दधिमन्थनमा तल्लीन थिइन्, त्यसै बेला स्तन-पानका लागि श्रीकृष्ण तिनको नगचै पुगे र आमालाई आनन्दित पार्दै मथानी समाएर दही मथ्ने काम छेकिदिए ॥ ४ ॥ आमाले काखामा उचालिन् र तिनको मनोहर हास्ययुक्त मुखारविन्दमा हेर्दै स्नेहले आफैं बगिरहेको दूध पिलाउन लागिन् । त्यसै बखत आगोमा बसालेको कराहीबाट दूध तातेर उम्लन लाग्यो । अनि यशोदाले तिनलाई अतृप्तै छाडेर झट्ट दगुरिन् ॥५॥ त्यसले भगवान् कृष्ण मनमनै रिसाए । उनले आफना कामिरहेका अरुण अधर दाँतले थिचेर झट्ट लोहोरोले हानी दहीको भाँडो फोरिदिए र नकली आँसु बगाउँदै घरभित्र गएर नौनी खान लागे ॥ ६ ॥ जब यशोदा तातेको दूध झिकेर फेरि मन्थन-गृहमा आइन् तब उनले दहीको भाँडो फुटिसकेको देखिन् । तिनलाई

च ॥ दधिनिर्मन्थने काले स्मरन्ती तान्यगायत ॥२॥ क्षौमं वासः पृथुकटितटे बिभ्रती सूत्रनद्धं पुत्रस्नेहस्नुतकुचयुगं जातकम्पं च सुभ्रूः ॥ रज्ज्वाकर्षश्रमभुजचलत्कङ्कणौ कुण्डले च स्विन्नं वक्त्रं कबरविगलन्मालती निर्ममन्थ॥३॥तां स्तन्यकाम आसाद्यमथ्नन्तीं जननीं हरिः ॥ गृहीत्वा दधिमन्थानं न्यषेधत्प्रीतिमावहन् ॥४॥ तमङ्कमारूढमपाययत्स्तनं स्नेहस्नुतं सस्मितमीक्षती मुखम् ॥ अतृप्तमुत्सृज्य जवेन सा यथावुत्सिच्यमाने पयसि त्वधिश्रिते ॥५॥ सञ्जातकोपः स्फुरितारुणाधरं संदश्य दद्भिर्दधिमन्थभाजनम् ॥ भित्त्वा मृषाश्रुर्दृषदश्मना रहो जघास हैयङ्गवमन्तरं गतः ॥ ६ ॥ उत्तीर्य गोपी सुशृतं पयः पुनः प्रविश्य सन्दृश्य च दध्यमत्रकम् ॥ भग्नं विलोक्य स्वसुतस्य कर्म तज्जहास तं चापि न तत्र पश्यती ॥७॥ उलूखलाङ्घ्रेरुपरि व्यवस्थितं मर्काय कामं ददतं शिचि स्थितम् ॥ हैयङ्गवं चौर्यविशङ्कितेक्षणं निरीक्ष्य पश्चात्सुतमागमच्छनैः ॥ ८ ॥ तामात्तयष्टिं प्रसमीक्ष्य सत्वरस्ततोऽवरुह्यापससार भीतवत् ॥ गोप्यन्वधावन्न यमाप योगिनां क्षेमं प्रवेष्टुं तपसेरितं मनः ॥ ९ ॥ अन्वञ्चमाना जननी बृहच्चलच्छ्रोणीभराक्रान्तगतिः सुमध्यमा ॥ जवेन विस्रंसितकेशबन्धनच्युतप्रसूनानुगतिः परामृशत् ॥ १० ॥ कृतागसं तं प्ररुदन्तमक्षिणी कषन्तमञ्जन्मषिणी स्वपाणिना ॥ उद्वीक्षमाणं

यो सबै काम त्यसैको हो भन्ने बुझन बेर लागेन र कृष्णलाई त्यहाँ नदेखी हाँस्न लागिन् ॥ ७ ॥ यता-उता खोज्दा तिनले देखिन् श्रीकृष्ण यौटा उल्टो ओखलमा उक्लेर माथि झुण्ड्याएर राखेको नौनी झिकेर इच्छानुसार बानरहरूलाई दिइरहेका छन् । चोरी पक्रियो भन्ने डरले ती सतर्क भएर यता-उता हेर्न लागे । त्यसै बेला यशोदा सुटुक्क नगीचै पुगिन् ॥ ८ ॥ छडी लिएकी मातालाई नगीचै आएकी देखेर ओखलबाट हाम्फाली डराएर भागे । अनि उसलाई योगीहरूको तपस्या द्वारा प्रेरित र भगवत्तत्त्वमा प्रवेश गर्नमा समर्थ मन पनि प्राप्त गर्न सक्तैन, तिनै भगवानलाई समाउन यशोदाजी छडी लिएर तिनको पछि-पछि दगुरिन् ॥ ९ ॥ यसरी कृष्णको पछि-पछि दगुर्दा स्थूल नितम्बले गर्दा उसको गति मन्द भइसकेको थियो, वेगले दगुरेर उसको केशपाश खुकुलो भएको थियो र त्यसमा लगाएको फूल झरिसकेका थिए, ती राम्रो कटि हुने माता यशोदाले पुत्रलाई समातिन् ॥ १० ॥ कृष्ण अपराधी हुनाले रुन लागे । हातले आँखा मिचेका हुनाले तिनको मुखभरि गाजल फिंजियो र कुटाई खाने

डरले व्याकुल नेत्रद्वारा मास्तिर हेर्नलागे । यशोदाले तिनलाई समातेर चर्को स्वरले हप्काउन लागिन् ॥ ११ ॥ छोरो धेरै डरायो भन्ने जानेर पुत्रवत्सला यशोदाले हातको छडी पर फ्याँकि दिइन् र तिनको प्रभाव नजान्नाले उनले श्रीकृष्णलाई डोरीले बाँध्ने इच्छा गरिन् ॥१२॥ जसको कोही बाहिर-भित्र अथवा पूर्व र पर छैनन्, जो स्वयं सम्पूर्ण जगत्को बाहिर-भित्र र आदि-अन्त्यमा जगत्-रूपले विद्यमान छन्, ती मानवरूपधारी, इन्द्रियातीत, अव्यक्त प्रभुलाई छोरो ठानेर यशोदा साधारण बालक झैं डोरीले ओखलमा बाँध्न लागिन् ॥१३-१४॥ जुन डोरीले ती आफ्नो अपराधी बालकलाई बाँध्न खोज्दै थिइन्, त्यो दुइ अङ्गुल सानो भयो । अतः उनले अर्को डोरी गाँसिन् ॥ १५ ॥ जब त्यो पनि सानो भयो तब अर्को गाँसिन् । यसरी तिनले जति डोरी गाँसिन् सबै दुइ अङ्गुल सानो हुँदै गयो ॥ १६ ॥ जब यशोदाले घरका सबै डोरी गाँसेर पनि भगवानलाई बाँध्न सकिनन्, तब त्यस असफलताले मुसु-मुसु हाँसिरहेका अन्य गोपिनीका साथैं आफू पनि हाँसेर छक्क परिन् ॥ १७ ॥ जब कृष्णचन्द्रले देखे—माताको शरीर पसीनाले भिजिसक्यो र

भयविह्वलेक्षणं हस्ते गृहीत्वाभिषयन्त्यवागुरत् ॥११॥ त्यक्त्वा यष्टिं सुतं भीतं विज्ञायार्भकवत्सला ॥ इयेष किल तं बद्धुं दाम्नाऽतद्वीर्यकोविदा ॥१२॥ न चान्तर्न बहिर्यस्य न पूर्वं नापि चापरम् ॥ पूर्वापरं बहिश्चान्तर्जगतो यो जगच्चयः ॥१३॥ तं मत्वात्मजमव्यक्तं मर्त्यलिङ्गमधोक्षजम् ॥ गोपिकोलूखले दाम्ना बबन्ध प्राकृतं यथा ॥१४॥ तद्दाम बध्यमानस्य स्वार्भकस्य कृतागसः ॥ द्व्यङ्गुलोनमभूत्तेन सन्दधेऽन्यच्च गोपिका ॥ १५ ॥ यदासीत्तदपि न्यूनं तेनान्यदपि सन्दधे ॥ तदपि द्व्यङ्गुलं न्यूनं यद्यदादत्तबन्धनम् ॥१६॥ एवं स्वगेहदामानि यशोदा सन्दधत्यपि ॥ गोपीनां सुस्मयन्तीनां स्मयन्ती विस्मिताऽभवत् ॥१७॥ स्वमातुः स्विन्नगात्राया विस्रस्तकबरस्रजः ॥ दृष्ट्वा परिश्रमं कृष्णः कृपयाऽऽसीत्स्वबन्धने ॥ १८ ॥ एवं सन्दर्शिता ह्यङ्ग हरिणा भृत्यवश्यता ॥ स्ववशेनापि कृष्णेन यस्येदं सेश्वरं वशे ॥ १९ ॥ नेमं विरिञ्चो न भवो न श्रीरप्यङ्गसंश्रया ॥ प्रसादं लेभिरे गोपी यत्तत्प्राप विमुक्तिदात् ॥ २० ॥ नायं सुखापो भगवान्देहिनां गोपिकासुतः ॥ ज्ञानिनां चात्मभूतानां यथा भक्तिमतामिह ॥ २१ ॥ कृष्णस्तु गृहकृत्येषु व्यग्रायां मातरि प्रभुः ॥ अद्राक्षीदर्जुनौ पूर्वं गुह्यकौ धनदात्मजौ ॥ २२ ॥ पुरा नारदशापेन वृक्षतां प्रापितौ मदात् ॥ नलकूबरमणिग्रीवाविति ख्यातौ श्रियान्वितौ ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे पूर्वार्धे गोपीप्रसादो नाम नवमोऽध्यायः ॥ ९ ॥

तिनको जुरोमा लगाइएको फूलको माला फुस्किएको छ, तब ती उनको अथक परिश्रम देखेर दयावश स्वयं बन्धनमा बाँधिए ॥ १८ ॥ हे राजन् ! ब्रह्मादि लोकपाल सहित सम्पूर्ण विश्व जसको वशीभूत छ, ती स्वाधीन भगवान् कृष्णले माताको बन्धनमा बाँधिएर स्पष्ट पारिदिए—म भक्तका वशमा रहन्छु ॥ १९ ॥ यसरी मुक्तिदाता भगवान्को जुन कृपा ब्रह्मा, शिव र तिनका अङ्गमा स्थित लक्ष्मीजीलाई पनि प्राप्त भएको थिएन त्यो गोपी यशोदाले पाइन् ॥ २० ॥ यशोदानन्द श्रीकृष्ण जस्तो सजिलोसित भक्तजनलाई प्राप्त हुन सक्छन्, त्यस्तो अन्य मनुष्य र आफ्नो आत्मस्वरूप तत्त्वज्ञानीलाई पनि प्राप्त हुन सक्तैनन् ॥ २१ ॥ अनि यशोदा घर-धन्दामा लागिन् उता कृष्णको दृष्टि आँगमा उभिएका यमलार्जुन नामका दुइ वृक्षमा परे, जो पूर्वजन्ममा यक्षपति कुबेरका छोरा थिए ॥२२॥ उस जन्ममा ती नलकूबर र मणिग्रीव नामले प्रख्यात यक्ष थिए र नारदको श्रापले यस जन्ममा

बृक्ष भएका थिए ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वसिष्ठी' भाषाटीकायां नवमोऽध्यायः ॥ ९ ॥

( यमलार्जुन उद्धार वर्णन )—यति कथा सुनेर राजा परीक्षितले भने–हे भगवन् ! अब हजुर नलकूवर र मणिग्रीवले श्राप पाउने कारण के थियो, भन्नुहवस् । तिनले कुन यस्तो निन्दनीय काम गरेका थिए, जसले देवर्षि नारद रिसाए ! ॥ १ ॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! राजन् ! कुबेरका ती दुवै छोरा रुद्रका सेवक थिए । यसको तिनलाई निकै गर्व थियो । वारुणी मदिराको मातले तिनका आँखा घुमिरहेका थिए । ती मदोन्मत्त यक्ष कैलासको रमणीक मन्दाकिनीको तटमा गान-बजान गर्ने स्त्रीहरूसित उपवनमा डुलिरहेका थिए ॥२-३॥ डुल्दा-डुल्दै ती कमल-पुष्पले शोभित गङ्गाजीमा पसिए । जसरी दोईसित हात्तीले विहार गर्दछ, त्यस्तै ती युवतीहरूसित जलक्रीडा गर्न लागे ॥ ४ ॥ हे कुरुनन्दन ! । संयोगले देवर्षि नारद त्यतै आइपुगे । तिनले ती यक्ष-युवकहरूलाई देखेर मतवाला भइरहेका छन् भन्ने ठाने ॥ ५ ॥ देवर्षिलाई देखेर वस्त्रहीना अप्सरागणले

राजोवाच ॥ कथ्यतां भगवन्नेतत्तयोः शापस्य कारणम् ॥ यत्तद्विगर्हितं कर्म येन वा देवर्षेस्तमः ॥ १ ॥ श्रीशुक उवाच ॥ रुद्रस्यानुचरौ भूत्वा सुदृप्तौ धनदात्मजौ ॥ कैलासोपवने रम्ये मन्दाकिन्यां मदोत्कटौ ॥ २ ॥ वारुणीं मदिरां पीत्वा मदाघूर्णितलोचनौ ॥ स्त्रीजनैरनुगायद्भिश्चेरतुः पुष्पिते वने ॥ ३ ॥ अन्तः प्रविश्य गङ्गायामम्भोजवनराजिनि ॥ चिक्रीडतुर्युवतिभिर्गजाविव करेणुभिः ॥ ४ ॥ यदृच्छया च देवर्षिर्भगवाँस्तत्र कौरव ॥ अपश्यन्नारदो देवौ क्षीबाणौ समबुध्यत ॥ ५ ॥ तं दृष्ट्वा व्रीडिता देव्यो विवस्त्राः शापशङ्किताः ॥ वासांसि पर्यधुः शीघ्रं विवस्त्रौ नैव गुह्यको ॥ ६ ॥ तौ दृष्ट्वा मदिरामत्तौ श्रीमदान्धौ सुरात्मजौ ॥ तयोरनुग्रहार्थाय शापं दास्यन्निदं जगौ ॥ ७ ॥ नारद उवाच ॥ न ह्यन्यो जुषतो जोष्यान्बुद्धिभ्रंशो रजोगुणः ॥ श्रीमदादाभिजात्यादिर्यत्र स्त्रीद्यूतमासवः ॥ ८ ॥ वध्यन्ते पशवो यत्र निर्दयैरजितात्मभिः ॥ मन्यमानैरिमं देहमजरामृत्युनश्वरम् ॥ ९ ॥ देवसंज्ञितमप्यन्ते कृमिविड्भस्मसंज्ञितम् ॥ भूतध्रुक् तत्कृते स्वार्थं किं वेद निरयो यतः ॥१०॥ देहं किमन्नदातुः स्वं निषेक्तुर्मातुरेव च ॥ मातुः पितुर्वा बलिनः क्रेतुरग्नेः शुनोऽपि वा ॥ ११ ॥ एवं साधारणं देहमव्यक्तप्रभवाप्ययम् ॥

त लाज श्रापको डरले छट्ट आफ्-आफ्ना लुगा लगाए, तर ती यक्षले लगाएनन् ॥ ६ ॥ ती देवपुत्रलाई मद्यपानले उन्मत्त ऐश्वर्य-मदले अन्धा देखेर देवर्षि नारदले तिनको प्रति कृपा गर्नको निम्ति श्राप दिंदै भने ॥ ७ ॥ नारदजी भन्दछन्–विषय सेवन गर्ने पुरुषहरूलाई ऐश्वर्यमद जति बुद्धि भ्रष्ट पार्दछ, त्यति बन्धु आदिको मद वा रजोगुणका कार्य हास्यादि पार्दैनन्, किनकि धनको बेलामा जाँड, जूवा र जारीको नै बहुलता रहन्छ ॥ ८ ॥ धन-मदले अन्धा, निर्दयी र अजितेन्द्रिय व्यक्ति आफ्नो नाशवान् देहलाई कहिल्यै नमर्ने ठानेर पशु-हत्या गर्दै हिंड्दछन् ॥ ९ ॥ जुन शरीरलाई 'देव' भनिन्छ त्यो पनि अन्त्यमा किरा, विष्ठा वा भस्मरूप हुन्छ, त्यस शरीरको निम्ति जुन पुरुष प्राणीहरूसित द्रोह गर्दछ, जसले गर्दा नरकमा जानुपर्दछ, के त्यो आफ्नो वास्तविक स्वार्थ जान्दछ ? ॥ १० ॥ यस देहलाई कसको सम्पत्ति भनौं ? अन्न दिनेको, वीर्यदाताको, उदरमा धारण गर्ने आमाको, मातामहको, बलवान्को, किन्ने व्यक्तिको, अग्निको वा कुकुरको ? ॥ ११ ॥ यो अव्यक्तबाट उत्पन्न हुन्छ र उसैमा लीन हुन्छ । जब कि यस्तो साधारण वस्तु

छ भने अधम पुरुष बाहेक अरु कुन बुद्धिमान होला, जो यसलाई आत्मा मानेर यसको निम्ति जीव-हत्या गर्नेछ ? ॥१२॥ जुन असत्पुरुष ऐश्वर्य-मदले अन्धो भएको छ, उसको निम्ति दरिद्रता नै उत्तम अंजन छ, किनकि दरिद्र पुरुष अन्य जीवलाई पनि आफु झैं देख्दछ ॥१३॥ जसको अङ्गमा काँढा बिझ्दछ, त्यो आफु जस्तै अन्य जीवको पीडाको तुल्यता गरेर अर्काको निम्ति त्यस व्यथाको अभाव चाहन्छ, त्यस्तो त्यो पुरुष-जसलाई काँढा बिझेको व्यथा अनुभव नै छैन—चाहन्न ॥१४॥ दरिद्र पुरुष अहङ्कारले हुने औद्धत्य र सबै प्रकारका मदबाट रहित हुन्छ। त्यसलाई दैवयोगले जो कष्ट प्राप्त हुन्छ, त्यही त्यसको तपस्या हो ॥ १५ ॥ जसको देह भोकले क्षीण हुन्छ र जो सदैव अन्नको खोजीमा रहिरहन्छ, त्यस्ता दरिद्र पुरुषका इन्द्रिय शीघ्र शुष्क हुन्छन् र तिनमा हिंसावृत्ति पनि रहन्न ॥१६॥ समदर्शी साधु पुरुषको समागम पनि त्यस्तालाई नै प्राप्त हुन्छ। यिनको सत्संगले त्यो विषय-तृष्णालाई त्यागिदिन्छ र छिटै नै शुद्ध हुन्छ ॥१७॥ भगवच्चरणारविन्दका रसिक साधु पुरुष दुर्गुणले युक्त एवं धन-मानमदले मत्त

को विद्वानात्मसात्कृत्वा हन्ति जन्तून्तेऽसतः ॥ १२ ॥ असतः श्रीमदान्धस्य दारिद्र्यं परमञ्जनम् ॥ आत्मौपम्येन भूतानि दरिद्रः परमीक्षते ॥ १३ ॥ यथा कण्टकविद्धाङ्गो जन्तोर्नेच्छति तां व्यथाम् ॥ जीवसाम्यं गतो लिङ्गैर्न तथाऽविद्धकण्टकः ॥ १४ ॥ दरिद्रो निरहंस्तम्भो मुक्तः सर्वमदैरिह ॥ कृच्छ्रं यदृच्छयाप्नोति तद्धि तस्य परं तपः ॥ १५ ॥ नित्यं क्षुत्क्षामदेहस्य दरिद्रस्यान्नकांक्षिणः ॥ इन्द्रियाण्यनुशुष्यन्ति हिंसाऽपि विनिवर्तते ॥ १६ ॥ दरिद्रस्यैव युज्यन्ते साधवः समदर्शिनः ॥ सद्भिः क्षिणोति तं तर्षं तत आराद्विशुद्ध्यति ॥१७॥ साधूनां समचित्तानां मुकुन्दचरणैषिणाम् ॥ उपेक्ष्यैः किं धनस्तम्भैरसद्भिरसदाश्रयैः ॥ १८ ॥ तदहं मत्तयोर्माध्व्या वारुण्या श्रीमदान्धयोः ॥ तमोमदं हरिष्यामि स्त्रैणयोरजितात्मनोः ॥ १९ ॥ यदिमौ लोकपालस्य पुत्रौ भूत्वा तमःप्लुतौ ॥ न विवाससमात्मानं विजानीतः सुदुर्मदौ ॥ २० ॥ अतोऽर्हतः स्थावरतां स्यातां मैवं यथा पुनः ॥ स्मृतिः स्यान्मत्प्रसादेन तत्रापि मदनुग्रहात् ॥ २१ ॥ वासुदेवस्य सान्निध्यं लब्ध्वा दिव्यशरच्छते ॥ वृत्ते स्वर्लोकतां भूयो लब्धभक्ती भविष्यतः ॥ २२ ॥ श्रीशुक उवाच ॥ एवमुक्त्वा स देवर्षिर्गतो नारायणाश्रमम् ॥ नलकूबरमणिग्रीवावासतुर्यमलार्जुनौ ॥ २३ ॥ ऋषेर्भागवतमुख्यस्य सत्यं कर्तुं वचो हरिः ॥ जगाम शनकैस्तत्र यत्रास्तां यमलार्जुनौ ॥ २४ ॥ देवर्षिर्मे प्रियतमो यदिमौ धनदात्मजौ ॥ तत्तथा

तथा उपेक्षणीय दुर्जनसित कुनै प्रयोजन रहन्न ॥१८॥ अतः वारुणी मदिरा पिएर यी मत्त, ऐश्वर्यले अन्धा, र इन्द्रिय-लम्पट यक्षको अज्ञानजनित मद म धूलो पारिदिन्छु ॥१९॥ त्यत्रा लोकपाल कुबेरका पुत्र भएर पनि यी मदले गर्दा अज्ञानमा यसरी डुबेका छन् कि इनलाई नांगो भएको पनि ज्ञान छैन ॥२०॥ अतः यी वृक्ष योनिमा आने योग्य छन्, जसले कि फेरि इनलाई यस्तो अज्ञान नहोस्, तर मेरो कृपाले इनलाई त्यस अवस्थामा पनि यस जन्मको स्मरण रहिरहने छ ॥ २१ ॥ दिव्य सय वर्ष बितेपछि इनलाई वासुदेवको सन्निधि प्राप्त हुनेछ, अनि भगवान्को भक्ति पाएर यी फेरि स्वर्गका अधिकारी हुनेछन् ॥ २२ ॥ श्रीशुकदेव भन्नुहुन्छ—यति भनेर नारद नारायणको बदरिकाश्रममा गए र नलकूबर तथा मणिग्रीव यमलार्जुन वृक्ष भए ॥ २३ ॥ उनै देवर्षिको वचन सत्य पार्नको निम्ति श्रीकृष्ण जहाँ नलकूबर वृक्ष थिए, बिस्तार-बिस्तार त्यहीं पुगे

॥ २४ ॥ भगवान्ले विचार गर्नुभयो–'नारद मेरा प्रिय-भक्त छन् र यी पनि कुबेरका पुत्र हुन् । अतः नारदले जे जति भनेका छन्, त्यो म पूर्ण गर्नेछु ॥२५॥ यति विचारेर श्रीकृष्ण ती दुवै वृक्षको माझबाट निस्के । उनी निस्कनासाथ ओखल तेर्सियो र वृक्षमा अड्कियो । अनि जसको कम्मरमा डोरो कसिएको थियो. तीकृष्णले पछि-पछि लड्दै आएको ओखललाई बलपूर्वक तान्नासाथ उनको परम पराक्रमले दुवै वृक्षका शाखा-प्रशाखा र पातसमेत विचलित भएर घोर शब्द गर्दै उखेलिएर पृथ्वीमा ढले ॥ २६-२७ ॥ तत्काल ती वृक्षबाट अग्नि झैं तेजस्वी दुइ सिद्ध पुरुष आफ्नो कान्तिले सबै दिशा उज्यालो पार्दै प्रकट भए । ती निर्मल दिव्य पुरुषले समस्त लोकहरूका एकमात्र स्वामी श्री कृष्णचन्द्रलाई शिर निहुराएर प्रणाम गरे र हात जोरी भन्नलागे–॥ २८ ॥ 'हे कृष्ण ! हे महायोगिन् ! हजुर प्रकृतिदेखि पर आदिपुरुष हुनुहुन्छ । समस्त वेदवादी ब्राह्मण सम्पूर्ण व्यक्त र अव्यक्त विश्वलाई हजुरकै रूप मान्दछन् ॥ २९ ॥ हजुर नै समस्त जीवका देह, प्राण, आत्मा र इन्द्रियका ईश्वर हुनुहुन्छ । हजुर नै काल र अव्यय ईश्वर श्रीविष्णु

साधयिष्यामि यद्गीतं तन्महात्मना ॥ २५ ॥ इत्यन्तरेणार्जुनयोः कृष्णस्तु यमयोर्ययौ ॥ आत्मनिर्वेशमात्रेण तिर्यग्गतमुलूखलम् ॥ २६ ॥ बालेन निष्कर्षयताऽन्वगुलूखलं तद्दामोदरेण तरसोत्कलिताङ्घ्रिबन्धौ ॥ निष्पेततुः परमविक्रमितातिवेपस्कन्धप्रवालविटपौ कृतचण्डशब्दौ ॥ २७ ॥ तत्र श्रिया परमया ककुभः स्फुरन्तौ सिद्धावुपेत्य कुजयोरिव जातवेदाः ॥ कृष्णं प्रणम्य शिरसाऽखिललोकनाथं बद्धाञ्जली विरजसाविदमूचतुः स्म ॥ २८ ॥ कृष्ण कृष्ण महायोगिंस्त्वमाद्यः पुरुषः परः ॥ व्यक्ताव्यक्तमिदं विश्वं रूपं ते ब्राह्मणा विदुः ॥ २९ ॥ त्वमेकः सर्वभूतानां देहस्वात्मेन्द्रियेश्वरः ॥ त्वमेव कालो भगवान्विष्णुरव्यय ईश्वरः ॥ ३० ॥ त्वं महान्प्रकृतिः सूक्ष्मा रजःसत्वतमोमयी ॥ त्वमेव पुरुषोऽध्यक्षः सर्वक्षेत्रविकारवित् ॥ ३१ ॥ गृह्यमाणैस्त्वमग्राह्यो विकारैः प्राकृतैर्गुणैः ॥ को न्विहार्हति विज्ञातुं प्राक् सिद्धं गुणसंवृतः ॥ ३२ ॥ तस्मै तुभ्यं भगवते वासुदेवाय वेधसे ॥ आत्मद्योतगुणैश्छन्नमहिम्ने ब्रह्मणे नमः ॥ ३३ ॥ यस्यावतारा ज्ञायन्ते शरीरेष्वशरीरिणः ॥ तैस्तैस्तुल्यातिशयैर्वीर्यैर्देहिष्वसंगतैः ॥ ३४ ॥ स भवान्सर्वलोकस्य भवाय विभवाय च ॥ अवतीर्णोंऽशभागेन साम्प्रतं पतिराशिषाम् ॥ ३५ ॥ नमः परमकल्याण नमः परममङ्गल ॥ वासुदेवाय शान्ताय यदूनां पतये नमः ॥ ३६ ॥ अनुजानीहि नौ भूमँस्तवानुचरकिङ्करौ ॥ दर्शनं नौ भगवत ऋषेरासीदनुग्रहात् ॥ ३७ ॥ वाणी गुणानुकथने

हुनुहुन्छ ॥ ३० ॥ हजुर नै महत्तत्त्व र त्रिगुणमयी सूक्ष्म प्रकृति हुनुहुन्छ । हजुर नै सबै अन्तःकरणका विकारलाई जान्ने सर्वसाक्षी पुरुष हुनुहुन्छ ॥३१॥ जो ग्रहण गरिन्छ, ती प्राकृत गुणका विकारद्वारा हजुरको ग्रहण हुन सक्तैन । हजुर जीवहरूको उत्पत्ति भन्दा पनि पहिले विद्यमान रहँदै आउनु भएको छ । अतः देहादिले ढाकिएको कुन यस्तो प्राणी छ, जो हजुरलाई जानोस् ? ॥ ३२ ॥ हजुर वासुदेव र जगत्का विधाता हुनुहुन्छ । हजुरको स्वरूप हजुरले नै प्रकाशित गुणद्वारा ढाकिएको छ । हजुर साक्षात् परब्रह्मलाई हाम्रो नमस्कार गर्दछौं ॥३३॥ साधारण पुरुषमा जसको हुनु सम्भव छैन, यस्तो निरतिशय कर्मबाट जुन देहरहित हजुरको देहधारीमा अवतार मानिन्छ, त्यही सबै कामनाहरू पूर्ण पार्ने हजुर सबै लोकको रक्षार्थ र उन्नतिको निम्ति यस बखत आफ्ना पूर्ण कलाहरूका साथ अवतरित हुनु भएको छ ॥ ३५ ॥ अतः कल्याणस्वरूप र मङ्गलमय हजुर शान्त-

915

स्वरूप भगवान् वासुदेवलाई नमस्कार छ ॥ ३६ ॥ हे भगवन् ! हामी हजुरका दासका पनि दास हौं । देवर्षि नारदको अनुग्रहले नै हजुरको दर्शन भयो । अब हजुर हामीलाई आफ्नो लोक जाने आज्ञा दिनुहवस् ॥३७॥ हे प्रभो ! हाम्रो वाणी हजुरको गुणानुवादमा, कान कथाश्रवणमा, हात परिचर्यामा, मन चरण-कमलको चिन्तनमा, शिर हजुरको निवासस्थान स्वरूप जगत्लाई प्रणाम गर्नमा र नेत्र हजुरको विग्रहस्वरूप साधुजनको दर्शनमा लगिरहून्* ॥ ३८ ॥ श्रीशुकदेव भन्नुहुन्छ—यक्षकुमार नलकूवर र मणिग्रीवले यसरी स्तुति गरेपछि डोरीले ओखलमा बाँधिएका भगवान्ले हाँसेर भन्नुभयो ॥ ३९ ॥ श्रीभगवान् आज्ञा हुन्छ—म यो पहिल्यैदेखि जान्दछु—तिमी दुवै ऐश्वर्यमदले अन्धा भएका थियौ, अनि दयालु नारदले श्राप दिएर ऐश्वर्य नष्टपारी तिमीमाथि अनुग्रह गरेका थिए ॥४०॥ जसको मनसधैं ममा नै लागिरहन्छ, ती समदर्शी महात्माको दर्शनले समस्त प्राणीका प्रत्येक

श्रवणौ कथायां हस्तौ च कर्मसु मनस्तव पादयोर्नः ॥ स्मृत्यां शिरस्तव निवासजगत्प्रणामे दृष्टिः सतां दर्शनेऽस्तु भवत्तनूनाम् ॥ ३८ ॥ श्रीशुक उवाच ॥ इत्थं संकीर्तितस्ताभ्यां भगवान्गोकुलेश्वरः ॥ दाम्ना चोलूखले बद्धः प्रहसन्नाह गुह्यकौ ॥ ३९ ॥ श्रीभगवानुवाच ॥ ज्ञातं मम पुरैवैतदृषिणा करुणात्मना ॥ यच्छ्रीमदान्धयोर्वाग्भिर्विभ्रंशोऽनुग्रहः कृतः ॥ ४० ॥ साधूनां समचित्तानां सुतरां मत्कृतात्मनाम् ॥ दर्शनान्नो भवेद्बन्धः पुंसोऽक्ष्णोः सवितुर्यथा ॥ ४१ ॥ तद्गच्छतं मत्परमौ नलकूबर सादनम् ॥ सञ्जातो मयि भावो वामीप्सितः परमोऽभवः ॥ ४२ ॥ श्रीशुक उवाच ॥ इत्युक्तौ तौ परिक्रम्य प्रणम्य च पुनः पुनः ॥ बद्धोलूखलमामन्त्र्य जग्मतुर्दिशमुत्तराम् ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे नारदशापो नाम दशमोऽध्यायः ॥ १० ॥

श्रीशुक उवाच ॥ गोपा नन्दादयः श्रुत्वा द्रुमयोः पततो रवम् ॥ तत्राजग्मुः कुरुश्रेष्ठ निर्घातभयशङ्किता ॥१॥ भूम्यां निपतितौ तत्र ददृशुर्यमला-

संसार-बन्धन मुक्त हुन्छन् । जस्तै सूर्योदय भएपछि नेत्रको अन्धकार नष्ट हुन्छ ॥ ४१ ॥ अतः हे नलकूवर ! मणिग्रीव ! तिमी दुवै मेरो स्मरण गर्दै आफ्नो घर जाओ । तिमी जे खोज्दथ्यौ, त्यो संसार बन्धन छिनाल्ने मेरो स्नेह तिमीलाई प्राप्त भयो ॥ ४२ ॥ श्रीशुकदेव भन्नुहुन्छ—भगवान्ले त्यति आज्ञा भएपछि दुवै भाई ओखलमा बाँधिएका कृष्णलाई प्रणाम र परिक्रमा गरेर तथा उनको आज्ञा पाएर उत्तर दिशातिर गए ॥४३॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥१०॥

(व्रजका गोपहरू गोकुलबाट वृन्दावन जानु र बकासुरको वध )—श्रीशुकदेव भन्नुहुन्छ—हे कुरुश्रेष्ठ ! ती वृक्ष ढलेको ठूलो शब्द सुनेर नन्दादि सबै गोप वज्रपातको शंकाले त्यहाँ जम्मा भए ॥१॥ त्यहाँ उनले दुवै अर्जुन-वृक्षलाई ढलेका देखे—यद्यपि वृक्ष ढलाउने बालरूप कृष्ण भगवान् तिनको सामुन्ने नै डोरीले ओखलमा बाँधिएका, त्यसलाई

---

* पुने कविले समर्पणको भावमा स्तुति गरेका छन्—हे प्रभो ! तिमी अन्तर्यामी, मनको प्रेम कसरी सुकाऊँ तिमीसित, हे जीवन-स्वामी ! तिमी सर्वज्ञ, समर्थ म मूढ छु । म चातक तिमी स्वाती । तिमी दीनबन्धु, दयालु छौ, म वंचक अतिकामी ! यो भवपारावार अगम छ, तिमी नै नाविक मेरा । इच्छा भए पारी तारिदेऊ, म त केवल अनुगामी छु । रूप देखेको छैन, बाल जानेको छैन—छन् नाना मार्ग मतान्तर । के भनेर ए तिमी लाई डाकूँ ! हे अज्ञेय ! अनामी ! ( यो भक्तको आत्मसमर्पण भाव हो । )

तानिरहेका थिए तैपनि ती गोपले वृक्ष ढलेको कारण निश्चित गर्न सकेनन् । अतः ती भ्रममा परे—'यो कसको उत्पात हो ? यस्तो किन भयो ?' यस्तो तर्क गर्दै डुने उत्पातको आशंकाले [illegible] ॥ २-३ ॥ उसै बेला केही बालकले भने—यी वृक्ष त मासमा कृष्णले नै ओखल अड्काएर बेसरी तानी दुवै वृक्ष ढलाएका हुन् । हामीले त यसबाट निस्केका दुइजना दिव्य पुरुषलाई पनि देख्यौं ॥ ४ ॥ तर गोपगणले तिनका कुरा पत्याएनन् । ती भन्नलागे—'यौटा सानो बालकले यति पुरानो र बलियो वृक्षलाई उखेले—यस्तो हुन सक्तैन !' तीमध्ये कतिपयलाई कृष्णको पूर्वचरित्र संझना हुनाले संशय पनि भयो ॥ ५ ॥ नन्दजीले देखे—साँच्चै नै उनको बालक डोरीले बाँधिई ओखल तानिरहेका छन् । अनि उनले झट्ट उनको बन्धन फुकाइदिए ॥ ६ ॥ यसै गरी भगवान् कृष्ण अनेक *बाललीला गर्दथे । ती कहिले गोपीहरूले फकाउँदा साधारण बालक झैं नाच्न लाग्दथे भने कहिले कठपुतली झैं तिनको

र्जुनौ ॥ भ्रभ्रमुस्तदविज्ञाय लक्ष्यं पतनकारणम् ॥२॥ उलूखलं विकर्षन्तं दाम्ना बद्धं च बालकम् ॥ कस्येदं कुत आश्चर्यमुत्पात इति कातराः ॥३॥ बाला ऊचुरनेनेति तिर्यग्गतमुलूखम् ॥ विकर्षता मध्यगेन पुरुषावप्यचक्ष्महि ॥४॥ न ते तदुक्तं जगृहुर्न घटेतेति तस्य तत् ॥ बालस्योत्पाटनं तर्वोः केचित्सन्दिग्धचेतसः ॥५॥ उलूखलं विकर्षन्तं दाम्ना बद्धं स्वमात्मजम् ॥ विलोक्य नन्दः प्रहसद्वदनो विमुमोच ह ॥६॥ गोपीभिः स्तोभितोऽनृत्यद्भगवान्बालवत्क्वचित् ॥ उद्गायति क्वचिन्मुग्धस्तद्वशो दारुयंत्रवत् ॥७॥ बिभर्ति क्वचिदाज्ञप्तः पीठकोन्मानपादुकम् ॥ बाहुक्षेपं च कुरुते स्वानां च प्रीतिमावहन् ॥८॥ दर्शयँस्तद्विदां लोक आत्मनो भृत्यवश्यताम् ॥ व्रजस्योवाह वै हर्षं भगवान्बालचेष्टितैः ॥९॥ क्रीणीहि भोः फलानीति श्रुत्वा सत्वरमच्युतः ॥ फलार्थी धान्यमादाय ययौ सर्वफलप्रदः ॥१०॥ फलविक्रयिणी तस्य च्युतधान्यं करद्वयम् ॥ फलैरपूरयद्रत्नैः फलभाण्डमपूरि च ॥ ११ ॥ सरित्तीरगतं कृष्णं

वशमा भइदिन्थे र उनले भन्दा साधारण बालक झैं गान गर्दथे ॥ ७ ॥ कहिले आज्ञा दिएपछि पीढा, खराऊ आदि उचालेर ल्याइदिन्थे र कहिले आफना कुटुम्बीहरू सबैलाई आनन्दित पार्दै ताल ठोक्न थाल्दथे ॥ ८ ॥ यसै गरी लोकमा ज्ञानी जनलाई आफ्नो भक्ति-परवशता देखाउन ती विविध बाललीला गर्दै व्रजवासीहरूलाई आनन्दित पार्नलागे ॥९॥ एक दिन यौटी फल बेच्ने स्त्री कराइरहेकी थिई—'फल लेओ, फल !' त्यो सुनेर सबै थरिका फलदाता श्रीकृष्ण तुरुन्त अन्न लिएर फल किन्न दगुरे ॥१०॥ अकस्मात् भगवान्‌का हातको अन्न छरियो । अनि फल बेच्ने स्त्रीले तिनका दुवै हात फलले भरिदिई र भगवान्‌ले त्यसको पात्र रत्नादिले भरिदिए ॥ ११ ॥ यमलार्जुन वृक्ष उखेलिएपछि एक

---

* कुनै कविले प्रभुको रूप सौन्दर्यको वर्णन गर्दै भनेका छन्—श्याम गात, गालामा औंठी झैं बटारिएका कपाल अर्थात् घुङ्केका, निधारमा श्रीखण्ड चन्दनले भक्तको मन प्रसन्न पारिरहेको छ । आँखाका चञ्चल परेला, हृदयमा उत्साह बढाउने भाव दर्शाउँथे । प्रभुको त्यो सौन्दर्यका दर्शनाभिलाषी घरको मूल द्वारमा उभिएर बाटो हेरिरहन्थे । शरीरमा लगाएको पहेंलो वस्त्र दुइ पाइला दगुर्नासाथ अल्झिएर लड्ने र उठ्ने गरेको तथा कटिमा पहिरेका किंकिणी पाइलैपिच्छे ध्वनि गर्दा रतिको बोलीलाई पनि परै बस भन्दथे । सुक, पिक, चातक, मयूर घनश्यामको सौन्दर्य हेर्न नजीकै आउँथे । तिनको सुषमा कसरी वर्णन गर्न सकिन्छ, बसको चरणरज नै पवित्र पार्दछ । त्यस सौन्दर्यको दर्शन पाउनासाथ अनुराग बढेर आउँछ, विरागको भावना हटाउँछ । त्यो अनुपम रूप हेरिरहने भक्त कहिल्यै भवपाशमा बाँधिन्न । आफ्नो-विरानो, भाव-कुभाव आदि सबै त्यागेर उनकै दास बनेर रहने भक्तको मनमा दुर्भावना निवास गर्न सक्तैन ।

दिन बलराम र कृष्ण निकै बेरदेखि अन्य बालकहरूसित यमुना-तटमा खेलिरहेका थिए। अतः तिनलाई डाक्न रोहिणी पुगिन् ॥ १२ ॥ तर ती खेलनमा तल्लीन हुनाले डाक्दा पनि आएनन् अनि रोहिणीले तिनलाई डाक्न पुत्रवत्सला यशोदालाई पठाइन् ॥ १३ ॥ पुत्रस्नेहवश माता यशोदाका स्तनमा दूध भरिएर आएको थियो। धेरै बेरदेखि बालकहरूसित खेलिरहेका बलराम र कृष्णलाई ती बेसरी चिच्याएर डाक्नलागिन्–॥१४॥ 'हे कृष्ण ! हे कमल-नयन कृष्ण ! हे तात ! तिमी खेल्दा-खेल्दै थाक्यो होला ! बाबू ! आऊ। अब खेल्न छाडेर दूध पिय ॥ १५ ॥ हे कुलनन्दन बलराम ! हे तात ! आफ्नो भाइलाई लिएर छिट्टै आऊ। आज त तिमीले बिहानैदेखि खाजा मात्र खाएका थियौ। आऊ अब केही खाऊ ॥१६॥ हे दशार्ह ! हेर ब्रजराज नन्दजी खानको निम्ति तिम्रो बाटो हेरिरहेका छन्। आऊ, अब हामीलाई सुखी तुल्याऊ। ए बालक हो ! तिमीहरू पनि आफ्आफ्ना घर जाओ ॥१७॥ बाबू ! तिम्रो अङ्गमा धूलो भरिएको छ। आऊ, छिटै स्नान गर। आज तिम्रो जन्म-नक्षत्र हो। अतः स्नानादिबाट निवृत्त भएर ब्राह्मणलाई गोदान देऊ ॥१८॥ हेर, तिम्रो साथीहरूलाई

भग्नार्जुनमथाह्वयत् ॥ रामं च रोहिणी देवी क्रीडन्तं बालकैर्भृशम् ॥१२॥ नोपेयातां यदाहूतौ क्रीडासङ्गेन पुत्रकौ ॥ यशोदां प्रेषयामास रोहिणी पुत्रवत्सलाम् ॥१३॥ क्रीडन्तं सा सुतं बालैरतिवेलं सहाग्रजम् ॥ यशोदाऽजोहवीत्कृष्णं पुत्रस्नेहस्नुतस्तनी ॥ १४ ॥ कृष्ण कृष्णारविन्दाक्ष तात एहि स्तनं पिब ॥ अलं विहारैः क्षुत्क्षान्तः क्रीडाश्रान्तोऽसि पुत्रक ॥१५॥ हे रामागच्छ ताताशु सानुजः कुलनंदन ॥ प्रातरेव कृताहारस्तद्भवान्भोक्तुमर्हति ॥ १६ ॥ प्रतीक्षते त्वां दाशार्ह भोक्ष्यमाणो व्रजाधिपः ॥ एह्यावयोः प्रियं धेहि स्वगृहान्यात बालकाः ॥ १७ ॥ धूलिधूसरिताङ्गस्त्वं पुत्र मज्जनमावह ॥ जन्मर्क्षमद्य भवतो विप्रेभ्यो देहि गाः शुचिः ॥ १८ ॥ पश्य पश्य वयस्याँस्ते मातृमृष्टान्स्वलङ्कृतान् ॥ त्वं च स्नातः कृताहारो विहरस्व स्वलङ्कृतः ॥ १९ ॥ इत्थं यशोदा तमशेषशेखरं मत्वा सुतं स्नेहनिबद्धधीर्नृप ॥ हस्ते गृहीत्वा सहराममच्युतं नीत्वा स्ववाटं कृतवत्युदयम् ॥ २० ॥ गोपवृद्धा महोत्पातानुभूय बृहद्वने ॥ नन्दादयः समागम्य व्रजकार्यममन्त्रयन् ॥ २१ ॥ तत्रोपनन्दनामाऽऽह गोपो ज्ञानवयोऽधिकः ॥ देशकालार्थतत्त्वज्ञः प्रियकृद्रामकृष्णयोः ॥ २२ ॥ उत्थातव्यमितोऽस्माभिर्गोकुलस्य हितैषिभिः ॥ आयांत्यत्र महोत्पाता बालानां नाशहेतवः ॥ २३ ॥ मुक्तः कथंचिद्राक्षस्या बालघ्न्या बालको ह्यसौ ॥ हरेरनुग्रहान्नूनमनश्चोपरि नापतत् ॥ २४ ॥ चक्रवातेन नीतोऽयं दैत्येन विपद्

उनका आमाले स्नान गराई राम्रा वस्त्र र आभूषण लगाइदिएका छन्। तिमी पनि स्नान गरेर खान-पिन सकी राम्रा राम्रा आभूषण धारण गर अनि खेल ॥१९॥ हे राजन् ! यसरी पुत्र-स्नेहमा बाँधिएकी यशोदा सबै चराचरका मुकुटमणि भगवान् कृष्णलाई पुत्र मानेर बलराम सहित तिनको हात समातेर घर लगिन् र जो मङ्गलकृत्य गर्नु थियो, त्यो सबै गरिन् ॥२०॥ गोकुलमा भयङ्कर उत्पात भएका देखेर नन्दादि बूढा-पाका गोप जम्मा भएर 'ब्रजवासीहरूले के गर्नुपर्दछ ?' यस विषयमा विचार गर्नलागे ॥२१॥ तिनमा उपनन्द नामक ज्ञानवृद्ध गोप थिए। ती देश-काल र वस्तुको तत्त्व जान्ने, राम-कृष्णका अत्यन्त हितैषी थिए, तिनले भने–॥ २२ ॥ गोकुलमा बालकहरूको अनिष्ट गर्ने अनेक थरिका उत्पात दिनहुँ भइरहन्छन्। अतः यदि हामी गोकुलको कुशल चाहन्छौं भने हामीले यहाँबाट हिँडिदिनु पर्दछ ॥ २३ ॥ हेर, पहिले बालक कृष्ण बालघातिनी पूतनाको हातबाट

ओगिए । फेरि हेरन, भगवानको कृपाले नै बालक माथि गाडा ढलेन ॥२४॥ त्यसपछि चक्रवातरूपधारी दैत्य तृणावर्त विपत्तिका घरलाई आकाशमा लग्यो र जब ढुङ्गामा पच्छारियो तब यहाँ ईश्वरले नै बालकको रक्षा गरे ॥ २५ ॥ यमलार्जुन वृक्ष ढल्दा त्यसको माझमा परेर पनि यी अथवा अरु कुनै बालक नमर्नु—त्यो पनि त उनै अच्युत भगवानकै द्वारा यिनको रक्षा गरियो ॥२६॥ अतः अर्को कुनै दैवी विपत्ति आएर ब्रजलाई ढाक्न नपाउँदै हामी बालकहरू लिएर अनुगामी गोपहरूका साथै कुनै अन्य स्थानमा जाऊँ ॥२७॥ यहाँ नगीचै नयाँ वनावलीले सुशोभित वृन्दावन नामको यौटा वन छ, त्यो पशुहरूका लागि पनि स्वास्थ्यकर छ। त्यहाँ पवित्र पर्वत, दूध र लता वृक्ष आदि छन्। त्यो गोप, गोपी र गाई सबै बस्न लायक छ ॥ २८ ॥ हामी आजै त्यहाँ जाऊँ, तिमीहरू गाडा जोत, अब अबेर नगर। यदि उचित ठान्दछौ भने गोधन आदि पहिल्यै पठाइदिऊँ ॥ २९ ॥ उपनन्दका कुरा सबैलाई मनपर्‍यो र उनीहरूले 'राम्रो हो, ठीक छ' भनेर त्यो कुरा एकमतले स्वीकार गरे र आफ्ना-आफ्ना गोधन, सबै सामग्रीहरू एकत्रित पारेर गाडा-

वियत् ॥ शिलायां पतितस्तत्र परित्रातः सुरेश्वरैः ॥ २५ ॥ यन्न म्रियेत द्रुमयोरं प्राप्य बालकः ॥ असावन्यतमो वापि नदप्यच्युतरक्षणम् ॥२६॥ यावदौत्पातिकोऽरिष्टो व्रजं नाभिभवेदितः ॥ तावद्बालानुपादाय यास्यामोऽन्यत्र सानुगाः ॥ २७ ॥ वनं वृन्दावनं नाम पशव्यं नवकाननम् ॥ गोपगोपीगवां सेव्यं पुण्याद्रितृणवीरुधम् ॥ २८ ॥ तत्तत्राद्यैव यास्यामः शकटान्युङ्क्त मा चिरम् ॥ गोधनान्यग्रतो यान्तु भवतां यदि रोचते ॥ २९ ॥ तच्छ्रुत्वैकधियो गोपाः साधु साध्विति वादिनः ॥ व्रजान्स्वान्स्वान्समायुज्य ययू रूढपरिच्छदाः ॥ ३० ॥ वृद्धान्बालान्स्त्रियो राजन्सर्वोपकरणानि च ॥ अनःस्वारोच्य गोपाला यत्ता आत्तशरासनाः ॥ ३१ ॥ गोधनानि पुरस्कृत्य शृङ्गाण्यापूर्य सर्वतः ॥ तूर्यघोषेण महता ययुः सहपुरोहिताः ॥ ३२ ॥ गोप्यो रूढरथा नूतनकुचकुंकुमकान्तयः ॥ कृष्णलीलाः जगुः प्रीता निष्ककण्ठ्यः सुवाससः ॥ ३३ ॥ तथा यशोदारोहिण्यावेकं शकटमास्थिते ॥ रेजतुः कृष्णरामाभ्यां तत्कथाश्रवणोत्सुके ॥ ३४ ॥ वृन्दावनं सम्प्रविश्य सर्वकालसुखावहम् ॥ यत्र चक्रुर्व्रजावासं शकटैरर्धचन्द्रवत् ॥ ३५ ॥ वृन्दावनं गोवर्धनं यमुनापुलिनानि च ॥ वीक्ष्यासीदुत्तमा प्रीती राममाधवयोर्नृप ॥ ३६ ॥ एवं व्रजौकसां प्रीती यच्छ-

हरूमा सामग्री राखे र वृन्दावनका लागि प्रस्थान गरिदिए ॥ ३० ॥ हे राजन् ! गोपहरूले आफ्ना सबै वस्तु गाडाहरूमा राखेर त्यसमा वृद्धजन, बालक र स्त्रीहरूलाई बसाले स्वयं धनुष बाण लिएर सावधानीले तिनको संगै हिंडे ॥ ३१ ॥ बाटोमा तिनले गाई र बाछाहरू अघिलगाए र तिनको पछि-पछि अनेक बाजा बजाउँदै आफ्ना कुलपुरोहितका साथै हिंडे ॥३२॥ कुचमा नवीन कुंकुम लगाई र नवीन वस्त्र एवं घाँटीमा गहना लगाई गोपाङ्गनाहरू रथमा चढेर आनन्दपूर्वक श्रीकृष्ण लीला-गान गर्दै वृन्दावनको निम्ति हिंडे ॥ ३३ ॥ आफ्ना बालकहरूका बाललीलाहरू अन्यन्त उत्सुकताले सुन्दै यशोदा र रोहिणी कृष्ण तथा बलरामसित यौटै गाडामा बसेर सुशोभित भइरहेका थिए ॥ ३४ ॥ यस प्रकार सबै ऋतुमा सुखदायक वृन्दावनमा पुगेर गोपगणले गाडाहरू अर्धचन्द्राकाररूपमा उभ्याएर गोधनलाई बस्ने योग्य स्थान बनाए ॥ ३५ ॥ हे राजन् ! वृन्दावनको जंगल, गोवर्धन पर्वत र यमुनाको तट देखेर बलराम र कृष्ण प्रसन्न भए। यस प्रकार मीठो वाणी र बाललीलाहरूले ब्रजवासी सबैगोप-गोपीलाई प्रसन्न पार्दै राम र कृष्ण केही समयपछि

वत्सपाल ( गोठालो ) भए ॥३६-३७॥ अनेक थरिका वस्त्राभूषणले विभूषित भएर ती वृन्दावनमा गोप-बालकहरूसित थरि-थरिका खेल खेल्दै बाछा चराउन लागे ॥ ३८ ॥ त्यहाँ कहिले बंशी बजाउने, कहिले ढल्ला फाल्ने र कहिले खुट्टाका घुँघुरू बजाउने र कहिले नकली गाई वा गोरु बनेर खेल्दथे ॥ ३८ ॥ ती कहिले दुइटा साँढे जस्तै बनेर परस्पर गर्जन्थे र लडाइँ गर्दथे, कहिले साधारण बालकको समान मयुर आदि पक्षीहरू बोल्दै डुल्दथे ॥ ४० ॥ एक दिन जब राम र कृष्ण आफ्ना समवयस्क बालकहरूसित यमुनाजीको तटमा बाछा चराइरहेका थिए, तब तिनलाई मार्न यौटा दैत्य आयो ॥ ४१ ॥ त्यो बाछोको रूप लिएर अन्य बाछाहरूमा मिसिएको कृष्णले देखे। त्यसपछि दाजुलाई पनि देखाएर आफू बिस्तार-बिस्तार त्यसको नगीचै पुगे ॥४२॥ अनि कृष्णले तत्काल त्यसको पुच्छरसमेत पछाडिका दुवै खुट्टा समातेर अन्तरिक्षमा फन्न घुमाई यौटा वृक्षमाथि फ्याँकिदिए। त्यतिले नै प्राणहीन भएर अनेक वृक्षहरू ढाल्दै पृथ्वीमा पच्छारियो ॥ ४३ ॥ त्यो देखेर छक्क परेका गोप बालकले 'साधु-साधु' भनेर, देवगणले प्रसन्न भएर उनमाथि पुष्प वर्षा गरे ॥ ४४ ॥

न्तौ बालचेष्टितैः ॥ कलवाक्यैः स्वकालेन वत्सपालौ वभूवतुः ॥ ३७ ॥ अविदूरे व्रजभुवः सह गोपालदारकैः ॥ चारयामासवत्सान्नानाक्रीडा-परिच्छदौ ॥ ३८ ॥ क्वचिद्वादयतो वेणुं क्षेपणैः क्षिपतः क्वचित् ॥ क्वचित्पादैः किङ्किणीभिः क्वचित्कृत्रिमगोवृषैः ॥ ३९ ॥ वृषायमाणौ नर्दन्तौ युयुधाते परस्परम् ॥ अनुकृत्य रुतैर्जन्तूँश्चेरतुः प्राकृतौ यथा ॥ ४० ॥ कदाचिद्यमुनातीरे वत्साँश्चारयतोः स्वकैः ॥ वयस्यैः कृष्णवलयोर्जिघांसु-र्दैत्य आगमत् ॥ ४१ ॥ तं वत्सरूपिणं वीक्ष्य वत्सयूथगतं हरिः ॥ दर्शयन् बलदेवाय शनैर्मुग्ध इवासदत् ॥४२॥ गृहीत्वाऽपरपादाभ्यां सहलांगूल-मच्युतः ॥ भ्रामयित्वा कपित्थाग्रे प्राहिणोद्गतजीवितम् ॥ स कपित्थैर्महाकायः पात्यतानैः पपात ह ॥ ४३ ॥ तं वीक्ष्य विस्मिता बालाः शशंसुः साधुसाध्विति ॥ देवाश्च परिसन्तुष्टा बभुवुः पुष्पवर्षिणः ॥ ४४ ॥ तौ वत्सपालकौ भूत्वा सर्वलोकैकपालकौ ॥ सप्रातराशौ गोवत्साँश्चारयन्तौ विचेरतुः ॥ ४५ ॥ स्वं स्वं वत्सकुलं सर्वे पाययिष्यन्त एकदा ॥ गत्वा जलाशयाभ्याशं पाययित्वा पपुर्जलम् ॥ ४६ ॥ ते तत्र ददृशुर्बाला महा-सत्त्वमुपस्थितम् ॥ तत्र सुवज्रनिर्भिन्नं गिरेः शृङ्गमिवच्युतम् ॥ ४७ ॥ स वै बको नाम महानसुरो बकरूपधृक् ॥ आगत्य सहसा कृष्णं तीक्ष्णतु-ण्डोऽग्रसद्बली ॥ ४८ ॥ कृष्णं महाबकग्रस्तं दृष्ट्वा रामादयोऽर्भकाः ॥ बभूवुरिन्द्रियाणीव विना प्राणं विचेतसः ॥ ४९ ॥ तं तालुमूलं प्रदहन्त-

यस प्रकार सबै लोकको पालन गर्ने राम र कृष्ण गोठालो भएर आफ्नो खाजा लिएर जान्थे र वनमा बाछा चराउँदै डुल्ने गर्दथे ॥ ४५ ॥ एक दिन सबै ग्वाल-बाल आफ्-आफ्ना बाछाहरूलाई जलाशयमा पानी ख्वाउन लगे र तिनलाई पानी ख्वाई आफूले पनि खाए ॥ ४६ ॥ सहसा बालकहरूले त्यहाँ बसेको यौटा निकै ठूलो जीव देखे, जुन द्वारा काटिएर ढलेको पर्वत शिखर झैं देखिन्थ्यो। त्यसलाई देख्नाथ ती भयभीत भए ॥ ४७ ॥ त्यो बकासुर नामको दैत्य थियो, जुन बकुल्लाको रूप लिएर आएको थियो। अकस्मात् त्यो धारिलो चुचो भएको दैत्यले झम्टेर कृष्णलाई निल्यो ॥ ४८ ॥ कृष्णलाई यौटा भीमकाय बकुल्लाको मुखमा पुगेका देखेर बलराम आदि ग्वालबाल अचेत झैं भए—जस्तै प्राणहीन इन्द्रियहरू अचेत हुन्छन्। उता जगद्गुरु र ब्रह्माका पिता श्रीकृष्ण असुरका मुखमा गएर त्यसको तालु अग्नि झैं पोल्न लागे, त्यसले उनलाई कुनै क्षति नपुर्याई जस्ताको त्यस्तै

तुरुन्त उकेलिदियो । अत्यन्त रिसाएर त्यो भगवान् कृष्णलाई चुच्चोले हिर्काउन दगुर्‍यो ॥ ४९-५० ॥ कंसको सखा बकासुरले आक्रमण गर्नासाथ देवता रूहकाआनन्ददाता, रक्षक र सत्पुरुषका स्वामी भगवान् श्रीकृष्णले दुवै हातले त्यसको चुच्चो समातेर सबै ग्वाल-बालले देख्दा-देख्दै त्यसलाई काँस चिरे झैं रूयाल-रूयाल मै चिरीदिए ॥ ५१ ॥ त्यसले प्रसन्न भएर स्वर्गका देवताहरूले बकासुरका शत्रु भगवान कृष्णमाथि नन्दनवनको मल्लिका आदि पुष्पको वर्षा गरे र बाजा बजाएर उनको स्तुति गर्नलागे । त्यो देखेर ग्वालबाललाई आश्चर्य भयो ॥ ५२ ॥ श्रीकृष्णलाई बकुल्लोको मुखबाट बाहिर निस्केर आफुतिर आउन लागेका देखेर बलराम आदि सबै जनालाई यस्तो आनन्द भयो—जस्तो प्राण फर्केर आउँदा इन्द्रियहरूलाई हुन्छ । ती अतिशय प्रसन्नतापूर्वक अंकमाल गरेर आफ्ना बाछा लिएर व्रजमा फर्के । घरमा आएर उनले वनमा घटेको सारा घटना वर्णन गरेर सुनाए ॥ ५३ ॥ कृष्णको त्यो अद्भुत चरित्र सुनेर गोप-गोपिनीहरूलाई आश्चर्य भयो । जस्तै कोही प्रियजन मरेर फेरि आउँदा हुन्छ, त्यस्तै ती उनलाई प्रेम र आनन्दले आकुल नेत्रले हेर्नलागे

ममिवद्गोपालसूनुं पितरं जगद्गुरोः ॥ चच्छदं सद्योऽतिरुषाक्षतं बकस्तुण्डेन हन्तुं पुनरभ्यपद्यत ॥ ५० ॥ तमापतन्तं स निगृह्य तुण्डयोर्दोर्भ्यां बकं कंससखं सतां पतिः ॥ पश्यत्सु बालेषु ददार लीलया मुदावहो वारणवद्दिवौकसाम् ॥ ५१ ॥ तदा बकारिं सुरलोकवासिनः समाकिरन्नन्दनमल्लिकादिभिः ॥ समीडिरे चानकशङ्खसंस्तवैस्तद्वीक्ष्य गोपालसुता विसिस्मिरे ॥ ५२ ॥ मुक्तं बकास्यादुपलभ्य बालका रामादयः प्राणमिवेन्द्रियो गणः ॥ स्थानागतं तं परिलभ्य निर्वृताः प्रणीय वत्सान्व्रजमेत्य तज्जगुः ॥ ५३ ॥ श्रुत्वा तद्विस्मिता गोपा गोप्यश्चातिप्रियादृताः ॥ प्रेत्यागतमिवोत्सुक्यादैक्षन्त तृषितेक्षणाः ॥ ५४ ॥ अहो बतास्य बालस्य बहवो मृत्यवोऽभवन् ॥ अप्यासीद्विप्रियं तेषां कृतं पूर्वं यतो भयम् ॥ ५५ ॥ अथाप्यभिभवन्त्येनं नैव ते घोरदर्शनाः ॥ जिघांसयैनमासाद्य नश्यन्त्यग्नौ पतङ्गवत् ॥ ५६ ॥ अहो ब्रह्मविदां वाचो नासत्याः सन्ति कर्हिचित् ॥ गर्गो यदाह भगवानन्वभावि तथैव तत् ॥५७॥ इति नन्दादयो गोपाः कृष्णरामकथां मुदा ॥ कुर्वन्तो रममाणाश्च नाविन्दन्भववेदनाम् ॥ ५८ ॥ एवं विहारैः कौमारैः कौमारं जहतुर्व्रजे ॥ निलायनैः सेतुबन्धैर्मर्कटोत्प्लवनादिभिः ॥ ५९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे वत्सबकवधो नामैकादशोऽध्यायः ॥ ११ ॥

॥५४॥ ती परस्पर भन्दथे—अहो ! आश्चर्यको कुरा छ । यस बालकलाई मृत्युले अनेक पल्ट घेर्‍यो, तर जसले इनलाई भय देखायो, उसैको अनिष्ट भयो—यसको केही हानि भएन ॥५५॥ अहो ! ती डरलाग्दा असुरले यसको केही अनिष्ट गर्न पाउन्नन । उल्टै यसलाई मार्न आउने दैत्य बत्तीका पुतली झैं स्वयं नष्ट भएर जान्छन् ॥ ५६ ॥ ब्रह्मवेत्ता ज्ञानीहरूको वचन झुठो हुन सक्तैन । हेरन, गर्ग मुनिले जे-जे कुरा भनेका थिए ती सबै अस्तारो तस्तै सत्य हुँदै गइरहेको छ ।।५७।। हे राजन् ! नन्दादि गोपगणलाई राम-कृष्णका लीलाहरूको आनन्दपूर्वक स्मरण गर्नाले कुनै सांसारिक कष्ट हुँदैनथ्यो ॥ ५८ ॥ यसै गरी व्रजमा 'आँखा थुन्ने, पुल बाँध्ने र बानर झैं उफ्रने' आदि बाल्यावस्थाका अनेक थरिका खेल खेल्दा-खेल्दै भगवान् बलदेव र कृष्णको कौमारावस्था बित्यो ॥ ५९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'बासिष्ठी' भाषाटीकायामेकादशोऽध्यायः ॥ ११ ॥

( अघासुर-वध ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! एक दिन भगवान् उठेर वनमै खाने विचारले आफ्नो मनोहर निनादले सबै साथीहरूलाई डाकेर व्रजमण्डलबाट निस्के ॥ १ ॥ उनका प्रेमी हजारौं बालक खानेकुरा, लट्ठी, बाँसुरी र आफ्ना हजारभन्दा पनि बढ्ता बाछा-बाछी अघि लगाएर प्रसन्नतापूर्वक गाउँबाट बाहिर निस्के ॥ २ ॥ ती सबैले कृष्णचन्द्रका सबै बाछामा आफ्ना पनि मिसाए र तिनलाई चराउँदै, अनेक बाल-लीला गर्दै खेल्न लागे ॥ ३ ॥ यद्यपि ती सबै बालक, काँच, गुन्जा, मणि तथा सुवर्णका आभूषणहरूले विभूषित थिए, तापनि उनले आफूलाई अनेक थरिका फल, पात, फूल, गुच्छा, मयुरपुच्छ र गेरू आदि धातुले अझ बढी अलंकृत पारे ॥ ४ ॥ ती मौटाले अर्कोको खानेकुरा चोर्दथे र उसले थाहा पाएपछि त्यो चोर्ने व्यक्ति अरू कुनै तर्फ फ्याँकिदिन्थ्यो, त्यो व्यक्ति अझ पर फालिदिन्थ्यो। जसको खाने कुरा हो, त्यो व्यक्ति दिक्क भएपछि ती हाँस्तै उसलाई खानेकुराको भाँडो फर्काइदिन्थे ॥ ५ ॥ भगवान् कृष्ण वनको शोभा हेर्नका लागि कहिले वनमा अलि पर जाँदा उनलाई 'पहिले म छुन्छु' भन्दै

श्रीशुक उवाच ॥ क्वचिद्वनाशाय मनो दधद्व्रजात्प्रातः समुत्थाय वयस्यवत्सपान् ॥ प्रबोधयञ्छृङ्गरवेण चारुणा विनिर्वतो वत्सपुरःसरो हरिः ॥१॥ तेनैव साकं पृथुकाः सहस्रशः स्निग्धाः सुशिग्वेत्रविषाणवेणवः ॥ स्वान्स्वान्सहस्रोपरिसंख्ययाऽन्वितान् वत्सान्पुरस्कृत्य विनिर्ययुर्मुदा ॥२॥ कृष्ण-वत्सैरसंख्यातैर्यूथीकृत्य स्ववत्सकान् ॥ चारयन्तोऽर्भलीलाभिर्विजह्रुस्तत्र तत्रह ॥ ३ ॥ फलप्रवालस्तवकसुमनः पिच्छधातुभिः ॥ काचगुञ्जामणिस्वर्ण-भूषिता अप्यभूषयन् ॥ ४ ॥ मुष्णन्तोऽन्योन्यशिक्यादीन्ज्ञातानाराच्च चिक्षिपुः ॥ तत्रत्याश्च पुनर्दूराद्धसन्तश्च पुनर्ददुः ॥ ५ ॥ यदि दूरं गतः कृष्णो वनशोभेक्षणाय तम् ॥ अहं पूर्वमहं पूर्वमिति संस्पृश्य रेमिरे ॥ ६ ॥ केचिद्वेणून्वादयन्तो ध्मान्तः शृङ्गानि केचन ॥ केचिद्भृङ्गैः प्रगायन्तः कूजन्तः कोकिलैः परे ॥७॥ विच्छायाभिः प्रधावन्तो गच्छन्तः साधु हंसकैः ॥ बकैरुपविशन्तश्च नृत्यन्तश्च कलापिभिः ॥८॥ विकर्षन्तः कीशबालानारोहन्तश्च तैर्द्रुमान् ॥ विकुर्वन्तश्च तैः साकं प्लवन्तश्च पलाशिषु ॥ ९ ॥ साकं भेकैर्विलङ्घन्तः सरित्प्रस्रवसम्प्लुताः ॥ विहसन्तः प्रतिच्छायाः शपन्तश्च प्रति-

कराएर ग्वालबाल उनलाई छोएर प्रसन्न हुन्थे ॥ ६ ॥ कोही बाँसुरी बजाउँथे, कोही नरसिंघाको शब्द गर्दथे, कोही भमराका साथै गएर र कोही बालक कोइलीका साथै कुहू-कुहू गरेर आनन्दित हुन्थे ॥ ७ ॥ कुनै आकाशतिर उफ्रन्थे, कोही पक्षीहरूका छायासित दगुर्थे, कोही हँससित हिंड्दथे, कोही बकुल्लाको नगीचै सावधु जस्तै बनेर बस्तथे र कोही मयुरहरूकासाथै मिलेर नाच्न थाल्दथे ॥ ८ ॥ कोही बाँदरका बच्चा समातेर तान्दथे र तिनैसित आफू पनि वृक्षमाथि चढेर तथा उनीतिर मुख बज्याएर गिज्याउन र घुर्की देखाउँदै यौटा हाँगाबाट अर्को हाँगामा उफ्रन्दै जाने गर्दथे ।.९॥ कोही यमुना नदीको भङ्गालोमा बग्ने थोरै पानीमा डुबुल्की लगाउँथे र भ्यागुतो झैं उसैसित आफू पनि उफ्रन थाल्दथे। कोही आफ्नो नै प्रतिध्वनिलाई जाति-नजाति भन्न लाग्दथे । हे राजन् ! यसरी तत्त्वज्ञानी सत्पुरुषका लागि ब्रह्मानन्दानुभव-स्वरूप, दास्यभावमा प्राप्त भक्तजनका लागि परमदेवता र कुमाया-मोहित

* उदारण—मायाको प्रबलताका विषयमा शान्ती सूरदासको भनाई छ–हे हेरि ! तिम्रो भजन गर्न सकिन । संसारमा आएपछि तिम्री मायाले मति भ्रमित पारिदिइन् । साधु कहिदँ अर्काको मन हरण गर्न तयार हुन्छु—यस्तै कुनै नटले नकली रूप धारण गरेर जादू देखाए यस्तै मायाले आफ्नू प्रबलता देखाउँछिन् । कति युक्ति गरेर हजुरको भजन गर्न खोज्दा पनि ठगै मायाले भुलाइदिन्छिन् । हे प्रभो ! धन्य छन् हजुरकी माया !

९/२२

व्यक्तिको निम्ति बालक-रूपधारी श्रीकृष्णसित ती ठूलो भाग्यशाली गोप-कुमारहरू खेल्दथे ॥ १०॥११ ॥ अनेक जन्मसम्म कष्ट सहेर इन्द्रिय र मनको संयम गर्न सक्ने ती योगिहरूलाई पनि जसको चरण-रज प्राप्त हुन कठिन छ, ती भगवान् जसका आँखाको साम्मुन्ने सधैं विद्यमान रहन्थे, ती व्रजवासीहरूका भाग्यको वर्णन कति गर्नं ? ॥ १२ ॥ हे राजन् ! एक दिन ती बालकहरूको आनन्द-दायक क्रीडा हेर्न नसक्ने डाही अघासुर नामक दैत्य त्यहाँ आयो। यद्यपि देवगण अमृत-पानले अमर भइसकेका थिए, तापनि आफ्नो प्राणरक्षाका लागि त्यस अघासुरको छिद्र अर्थात् मृत्युको प्रतीक्षा गरिरहन्थे ॥ १३ ॥ अघासुर पूतना र बकासुरको कान्छो भाई थियो। त्यो कंसको आज्ञाले व्रजमा आयो र कृष्ण आदि बालकहरूलाई देखेर विचार गर्नलाग्यो—यो मेरा सहोदर दाजू र दिदी—दुवैको घातक हो। अतः आज यसका साथीसमेत म यसलाई मार्नेछु ॥१४॥ यी सबै मरेर जब मेरा मृत बन्धुका लागि तिलोदकरूप हुनेछन्, तब सबै व्रजवासी म जस्तै असहाय हुनेछन्, किनकि सन्तान नै प्राणीहरूका प्राण हुन्छन्। अतः यी सबै प्राण नष्ट भएपछि

स्वनान् ॥१०॥ इत्थं सतां ब्रह्मसुखानुभूत्या दास्यं गतानां परदैवतेन ॥ मायाश्रितानां नरदारकेण साकं विजह्रुः कृतपुण्यपुञ्जाः ॥११॥ यत्पादपां-सुर्बहुजन्मकृच्छ्रतो धृतात्मभिर्योगिभिरप्यगम्यः ॥ स एव यद्दृग्विषयः स्वयं स्थितः किं वर्ण्यते दिष्टमतो व्रजौकसाम् ॥१२॥ अथाघनामाऽभ्यपतन्महा-सुरस्तेषां सुखक्रीडनवीक्षणाक्षमः ॥ नित्यं यदन्तर्निजजीवितेप्सुभिः पीतामृतैरप्यमरैः प्रतीक्ष्यते ॥१३॥ दृष्ट्वाऽर्भकान्कृष्णमुखानघासुरः कंसानुशिष्टः स बकीबकानुजः ॥ अयं तु मे सोदरनाशकृत्तयोर्द्वयोर्ममैनं सबलं हनिष्ये ॥१४॥ एते यदा मत्सुहृदोस्तिलापः कृतास्तदा नष्टसमा व्रजौकसः ॥ प्राणे गते वर्ष्मसु का नु चिन्ता प्रजासवः प्राणभृतो हि ये ते ॥ १५ ॥ इति व्यवस्याजगरं बृहद्वपुः स योजनायाममहाद्रिपीवरम् ॥ कृत्वाऽद्भुतं व्यात्त-गुहाननं तदा पथि व्यशेत ग्रसनाशया खलः ॥ १६ ॥ धराधरोष्ठो जलदोत्तरोष्ठो दर्याननान्तो गिरिशृङ्गदंष्ट्रः ॥ ध्वान्तान्तरास्यो वितताध्वजिह्वः परुषानिलश्वासदवेक्षणोष्णः ॥१७॥ दृष्ट्वा तं तादृशं सर्वे मत्वा वृन्दावनश्रियम् ॥ व्यात्ताजगरतुण्डेन ह्युत्प्रेक्षन्ते स्म लीलया ॥ १८ ॥ अहो मित्राणि गदत सत्त्वकूटं पुरःस्थितम् ॥ अस्मत्संग्रसनव्यात्तव्यालतुण्डायते न वा ॥१९॥ सत्यमर्ककरारक्तमुत्तराहनुवद्घनम् ॥ अधराहनुवद्रोधस्तत्प्रतिच्छा-

शरीरको चिन्ता नै के रहने छ ? ॥ १५ ॥ यस्तो विचार गरेर त्यो दुष्ट दैत्यले एक योजन लामो महापर्वत समान अत्यन्त स्थूल, विचित्र र धेरै लामो अजिङ्गरको रूप धारण गर्‍यो र ती सबै बालकलाई निल्नको निम्ति कन्दरा जस्तै मुख फिंजाएर बाटोमा पल्टियो ॥१६॥ त्यसको तल्लो ओठ पृथ्वीसित र माथिल्लो आकाशमा टाँसिएको थियो। त्यसका दरलाग्दा दाह्रा कन्दरा समान थिए। त्यसका बङ्गारा गिरि-शिखर जस्तै थिए। मुखभित्र घोर अन्धकार थियो। जिब्रो लामो रातो सडक झैं देखिन्थ्यो। त्यसको श्वास प्रचण्ड वायुसमान थियो र नेत्र दावानल झैं प्रज्वलित भइरहेका थिए ॥१७॥ पापी अघासुरको त्यस्तो भीषण रूप देखेर बालकहरूले त्यसलाई पनि वनको शोभा नै ठाने, अनि कौतुकवश त्यसको उघ्रेको मुखसित अजिङ्गरकै तुलना गर्नलागे ॥ १८ ॥ ती भन्छन्—'मित्र हो ! लौ भन त, साम्मुन्ने यो कुनै जीव झैं पल्टेको हामीलाई निल्नको निम्ति अजिङ्गरको खुला मुखझैं देखिरहेको छैन ? ॥ १९ ॥ हेर, सूर्यका किरण पर्नाले राता-राता मेघमण्डल ठीक यसको माथिल्लो ओठ जस्तै प्रतीत हुन्छ र यसको छायाले तलको भूमि केही

रातो हुनाले तलका ओंठ ज्ञात भइरहेछ ॥२०॥ हरे, यी दायाँ र बायाँतिर गिरिकन्दरा झैं यसका दाह्रासित होडबाजी गर्दैछन् र अग्ला शिखर पंक्ति यसका बङ्गारा जस्तै देखिन्छन् ॥२१॥ यो चाक्लो सडक यसको जिब्रो झैं देखिंदैछ र भित्रको अन्धकार मुखको आन्तरिक शून्यभाग झैं देखिन्छ ॥ २२ ॥ यो दावानलको उष्ण र तीक्ष्ण वायु यसको श्वास झैं बुझिन्छ । यसद्वारा दग्ध जीवहरूको दुर्गन्ध अजिंगरको भित्रबाट निस्कने मासुको गन्ध जस्तै थाहा भइरहेको छ ॥ २३॥ यसामत्र गएमा के यो हामीलाई सलक्क निल्नेछ ? तर यस्तो गऱ्यो भने बकासुर जस्तै यो पनि हाम्रा कृष्णको हातबाट मारिने छ ।' यति भनेर बालकहरूले बकासुरलाई मार्ने श्रीकृष्णचन्द्रको मोहक मुखतिर हेरे र दुवै हातले ताली बजाउँदै, हाँस्तै त्यसको मुखभित्र पसे ॥ २४ ॥ ती अज्ञानी बालकले भनेका भ्रमपूर्ण कुरा सुनेर कृष्णले विचार गर्नुभयो—यिनलाई सत्य सर्प पनि मिथ्या प्रतीत भइरहेको छ । भगवान् सर्वान्तरयामी थिए । यो राक्षस हो भन्ने उनले तत्काल जाने र आफ्ना मित्रहरूलाई राक्षसको मुखमा जानबाट रोक्ने विचार गरे ॥ २५ ॥ तर त्यतिवेलासम्म सबै

ययाऽरुणम् ॥ २० ॥ प्रतिस्पर्धेते सृक्किभ्यां सव्यासव्ये नगोदरे ॥ तुङ्गशृङ्गालयोऽप्येतास्तद्दंष्ट्राभिश्च पश्यत ॥ २१ ॥ आस्तृतायाममार्गोऽयं रसनां प्रतिगर्जति ॥ एषामन्तर्गतं ध्वान्तमेतदप्यन्तराननम् ॥ २२ ॥ दावोष्णखरवातोऽयं श्वासवद्भाति पश्यत ॥ तद्दग्धसत्त्वदुर्गन्धोऽप्यन्तरामिषगन्धवत् ॥२३॥ अस्मान्किमत्र ग्रसिता निविष्टानयं तथा चेद्बकवद्विनङ्क्ष्यति ॥ क्षणादनेनेति बकार्युशन्मुखं वीक्ष्योद्धसन्तः करताडनैर्ययुः ॥ २४ ॥ इत्थं मिथोऽतथ्यमतज्ज्ञभाषितं श्रुत्वा विचिन्त्येत्यमृषा मृषायते ॥ रक्षो विदित्वाऽखिलभूतहृत्स्थितःस्वानां निरोद्धुं भगवान्मनो दधे ॥ २५ ॥ तावत्प्रविष्टा-स्त्वसुरोदरान्तरं परं न गीर्णाः शिशवः सवत्साः ॥ प्रतीक्षमाणेन बकारिवेशनं हतस्वकांतस्मरणेन रक्षसा ॥ २६ ॥ तान्वीक्ष्य कृष्णः सकलाभयप्रदो ह्यनन्यनाथान्स्वकरादवच्युतान् ॥ दीनाँश्च मृत्योर्जठराग्निघासान् घृणार्दितो दिष्टकृतेन विस्मितः ॥ २७ ॥ कृत्यं किमत्रास्य खलस्य जीवनं न वा अमीषां च सतां विहिंसनम् ॥ द्वयं कथं स्यादिति संविचिन्त्य तज्ज्ञात्वाऽविशत्तुण्डमशेषदृग्घरिः ॥ २८ ॥ तदा घनच्छदा देवा भयाद्धाहेति चुक्रुशुः ॥ जहृषुर्ये च कंसाद्याः कौणपास्त्वघबान्धवाः ॥ २९ ॥ तच्छ्रुत्वा भगवान् कृष्णस्त्वव्ययः सार्भवत्सकम् ॥ चूर्णीचिकीर्षोरात्मानं तरसा ववृधे गले ॥३०॥

दैत्यको उदरमा पसिसके, तथापि अघासुरले बाछासमेत बालकहरूलाई निलेन, किनकि त्यो आफ्ना स्वजन ( दाजू-बहिनी ) को वध सम्झेर बकासुरका शत्रु श्रीकृष्ण मुखमा पसुन् भनी पर्खिरहेको थियो ॥ २६ ॥ सबैका अभयदाता श्रीकृष्णले देखे—यी दीन बालकहरूको मबाहेक अरु कोही रक्षक छैन । ती मेरा हातबाट उम्केर यो मृत्युरूप जठरानलका गाँस बनिसकेका छन् । अतः उनलाई बालकहरू प्रति दया लाग्यो र साथै दैवको विचित्र लीलामा आश्चर्य पनि भयो ॥ २७ ॥ ती विचार्न लागे—'अब म के गरूँ, जसले यस दुष्टको मृत्यु होओस् र सोझा-सादा बालकको बध्या नहोस्, तर यी दुवै काम कसरी हुनन् ?' यसरी विचार गर्दागर्दै सर्वद्रष्टाले आफ्नो कर्तव्य बुझेर आफू पनि त्यसको मुखमा पसे ॥२८ ॥ त्यो देखेर मेघमण्डलमा लुकेका देवता हाहाकार गर्नलागे र अघासुरका बन्धु कंसादि राक्षस अत्यन्त आनन्दित भए ॥ २९ ॥ अघासुरको मुखमा श्रीकृष्ण पसेपछि उसले बाछा र बालकहरू सबैलाई धूलो पार्न खोज्यो, त्यसै वेला—अविनाशी भगवान् कृष्णले देवताको हाहाकार सुनेर त्यस असुरको घाँटीमा

पुगेर आफ्नू शरीर ठूलो पारिदिए ॥ ३० ॥ यसले त्यस असुरको घाँटी रोकियो अनि त्यसका आँखा पल्टिए र त्यो व्याकुल भएर छटपटाउन लाग्यो । अब श्वास रोकिएर त्यसको शरीर वायुले फुल्यो, तब त्यो वायु ब्रह्मरन्ध्र फोरेर बाहिर निस्कियो ॥३१॥ अब प्राणसितै त्यसका इन्द्रिय पनि शरीरबाट बाहिर निस्किए, तब भगवान्‌ले मरिसकेका बाछा र ग्वाल-बालहरूलाई आफ्नो अमृतमयी दृष्टिले हेरेर जीवित पारिदिनुभयो र सबैलाई साथै लिएर अघासुरको मुखबाट बाहिर निस्के ॥ ३२ ॥ अनि त्यो अजिगरको देहबाट यौटा अद्भुत र महान् ज्योति निस्क्यो, जो आफ्नू प्रकाशले सबै दिशाहरू प्रकाशित पार्दै भगवान बाहिर निस्केर आउने प्रतीक्षामा आकाशमै अडिएको थियो । त्यो भगवान् बाहिर निस्कना साथ देवगणले हेर्दाहेर्दै उनैमा लीन भयो ॥ ३३ । त्यसबेला देवताले फूल बर्षाएर अप्साराले नाचेर, गन्धर्वले गाएर, विद्याधरले बाजा बजाएर, ब्राह्मणले स्तुति पाठ र पार्षदले जय-जयकार गरेर आफ्नू काम सम्पन्न पार्ने श्रीकृष्णको आनन्दपूर्वक अभिनन्दन गरे ॥ ३४ ॥ ती अद्भुत स्तुति, सुन्दर बाजा, गीत र जय-जयकारको शब्दले युक्त अनेक

ततोऽतिकायस्य निरुद्धमार्गिणो ह्युद्गीर्णदृष्टेर्भ्रमतस्त्वितस्ततः ॥ पूर्णोऽन्तरङ्गे पवनो निरुद्धो मूर्धन्विनिष्पाट्य विनिर्गतो बहिः ॥ ३१ ॥ तेनैव सर्वेषु बहिर्गतेषु प्राणेषु वत्सान्सुहृदः परेतान् ॥ दृष्ट्या स्वयोत्थाप्य तदन्वितः पुनर्वक्त्रान्मुकुन्दो भगवान्विनिर्ययौ ॥ ३२ ॥ पीनाहिभोगोत्थितमद्भुतं महज्ज्योतिः स्वधाम्ना ज्वलयद्दिशो दश ॥ प्रतीक्ष्य खेऽवस्थितमीशनिर्गमं विवेश तस्मिन्मिषतां दिवौकसाम् ॥ ३३ ॥ ततोऽतिहृष्टाः स्वकृतोऽकृतार्हणं पुष्पैः सुरा अप्सरसश्च नर्तनैः ॥ गीतैः सुगा वाद्यधराश्च वाद्यकैः स्तवैश्च विप्रा जयनिःस्वनैर्गणाः ॥ ३४ ॥ तदद्भुतस्तोत्रसुवाद्यगीतिकाजयादिनैकोत्सवमङ्गलस्वनान् ॥ श्रुत्वा स्वधाम्नोऽन्त्यज आगतोऽचिराद्दृष्ट्वा महीशस्य जगाम विस्मयम् ॥ ३५ ॥ राजन्नाजगरं चर्म शुष्कं वृन्दावनेऽद्भुतम् ॥ व्रजौकसां बहुतिथं बभूवाक्रीडगह्वरम् ॥ ३६ ॥ एतत्कौमारजं कर्म हरेरात्माऽहिमोक्षणम् ॥ मृत्योः पौगण्डके बाला दृष्ट्वोचुर्विस्मिता व्रजे ॥३७॥ नैतद्विचित्रं मनुजार्भमायिनः परावराणां परमस्य वेधसः ॥ अघोऽपि यत्स्पर्शनधौतपातकः प्रापात्मसाम्यं त्वसतां सुदुर्लभम् ॥ ३८ ॥ सकृद्यदङ्गप्रतिमान्तराहिता मनोमयी भागवतीं ददौ गतिम् ॥ स एव नित्यात्मसुखानुभूत्यभिव्युदस्तमायोऽन्तर्गतो हि किं पुनः ॥ ३९ ॥

थरिका आनन्दोत्सवको मङ्गलध्वनि आफ्नू लोकको नजिकै सुनेर ब्रह्माजी शीघ्र त्यहाँ आए र ती जगत्पतिको महिमा देखेर निकै विस्मयमा परे ॥ ३५ ॥ हे राजन् ! त्यो मरेको अजिङ्गरको अद्भुत छाला वृन्दावनमा सुकेर धेरै दिनसम्म व्रजवासी केटाकेटीलाई खेल्ने यौटा गुफा झैं बनेको थियो ॥ ३६ ॥ अजिगररूपी कालको मुखबाट आफ्नू रक्षा र सर्प-मोक्ष—यो भगवान्‌को कौमार अर्थात् पाँच वर्षको उमेरको काम थियो, किन्तु बालकहरूले उनलाई पौगण्ड अर्थात् छ वर्षको उमेरमा व्रजमा गएर अत्यन्त आश्चर्यपूर्वक वर्णन गरे ॥३७॥ हे राजन् ! जसको अङ्ग स्पर्शले निष्पाप भएर अघासुर जस्तो पापीले त्यो गति पायो, जुन असत् पुरुषका लागि अत्यन्त दुर्लभ छ। ती सम्पूर्ण जगत्‌का विधाता र मायाले नै मानव-शिशुको रूप धारण गर्ने श्रीहरिको निम्ति यो कुनै आश्चर्यको कुरा थिएन ॥ ३८ ॥ जसका स्वरूपको मनोमयी दिव्य प्रतिमा अन्तःकरणमा केवल एकपल्ट धारण गर्नाले प्रह्लाद आदिलाई भगवती गति प्राप्त भयो, उनै आत्मानन्दानुभवस्वरूप र मायातीत भगवान्‌ले जो भित्र स्वयं प्रवेश गरे, त्यसको सद्गतिमा के संशय हुन सक्छ ?

॥ ३९ ॥ सूतजी भन्दछन्–हे द्विजगण ! यदुवंशका कुलदेव भगवान् कृष्णले असलाई जीवनदान दिएका थिए, ती परीक्षित्‌ले आफ्ना जीवनदाताको चरित्र सुनेर व्यास-पुत्र श्रीशुकदेवसित फेरि उनैको पवित्र लीलाका विषयमा प्रश्न गरे, किनकि उस बखत तिमको मन हरिचर्चामै लीन लियो ॥४०॥ परीक्षित्‌ले भने–हे भगवन् ! जुन काम अर्कै समयमा गरियो, त्यो उसै बखत गरियो भन्ने कसरी हुन सक्छ ? फेरि भगवान्‌को कौमारावस्थामा गरिएको कर्म बालकहरूले गोपाललाई पौगण्डावस्थामा कसरी सुनाए ? ॥४१॥ हे गुरो ! हजुरको यो कुराले मलाई कुतूहल भइरहेको छ । हे महायोगिन् ! यसको के रहस्य हो, मलाई बुझाउनोस् । यसमा अवश्य भगवान्‌को गुनै माया छ, नभए कसै गरेर पनि यस्तो हुन सक्तैन ॥४२॥ हे गुरुवर ! हामी क्षत्रिय भएर पनि संसारमा ठूला भाग्यमानी छौं जुन बारम्बार हजुरको मुखबाट निस्केको कृष्णकथारूपी अमृत-पान गर्दछौं ॥४३॥ सूतजी भन्दछन्–हे भगवद्भक्तहरूमा

सूतउवाच ॥ इत्थं द्विजा यादवदेवदत्तः श्रुत्वा स्वरातुश्चरितं विचित्रम् ॥ पप्रच्छ भूयोऽपि तदेव पुण्यं वैयासकिं यन्निगृहीतचेताः ॥ ४० ॥ राजोवाच ॥ ब्रह्मन्कालान्तरकृतं तत्कालीनं कथं भवेत् ॥ यत्कौमारे हरिकृतं जगुः पौगण्डकेऽर्भकाः ॥ ४१ ॥ तद्ब्रूहि मे महायोगिन्परं कौतूहलं गुरो ॥ नूनमेतद्धरेरेव माया भवति नान्यथा ॥ ४२ ॥ वयं धन्यतमा लोके गुरोऽपि क्षत्रबन्धवः ॥ यत्पिबामो मुहुस्त्वत्तः पुण्यं कृष्णकथामृतम् ॥ ४३ ॥ सूत उवाच ॥ इत्थं स्म पृष्टः स तु बादरायणिस्तत्स्मारितानन्तहृताखिलेन्द्रियः ॥ कृच्छ्रात्पुनर्लब्धबहिर्दृशिः शनैः प्रत्याहतं भगवतोत्तमोत्तम ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्दे पूर्वार्धे द्वादशोऽध्यायः ॥ १२ ॥

श्रीशुक उवाच ॥ साधु पृष्टं महाभाग त्वया भागवतोत्तम ॥ यन्नूतनयसीशस्य शृण्वन्नपि कथां मुहुः ॥ १ ॥ सतामयं सारभृतां निसर्गो यदर्थवा·

श्रेष्ठ शौनकजी ! यसरी राजा परीक्षितको प्रश्न आफूप्रति *प्रत्युपकार ठानेर श्रीकृष्णको स्मरण हुनाले गर्दा श्रीशुकदेवका इन्द्रिय-वृत्ति शून्य भए । अनि उनले निकै कष्टपूर्वक त्यो शून्य हटाएर फेरि बाह्य दृष्टि प्राप्त गरे र राजा परीक्षित्‌सित ती यस प्रकार भन्नलागे ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥

(ब्रह्माजीको मोह र त्यस मोहको नाश)–श्रीशुकदेव भन्नुहुन्छ–! हे भागवत प्रधान ! तिम्रो प्रश्न निकै उत्तम छ । तिमी भगवान्‌का कथाहरू सुनी-सुनी र त्यसमा नयाँ-नयाँ प्रश्न गरेर त्यसलाई नयाँ बनाइदिन्छौ ॥ १ ॥ असले आफ्नु मन, वाणी र कान भगवान्‌को चर्चामा नै लगाइदिएका छन्, ती सार-संग्रही साधुजनको यो स्वभाव नै हुन्छ कि उनलाई भगवान्‌का कथाहरू क्षण-क्षणमा नवीन प्रतीत हुन्छन् । जस्तै स्त्रैण पुरुषहरूलाई स्त्रीविषयक चर्चामा नयाँ-नयाँ रसको अनुभव हुन्छ ॥ २ ॥ हे राजन् ! तिमी सावधान मनले

* दृष्टान्त (प्रत्युपकार)–बौटा कमिलालाई प्यास लाग्यो । त्यो नदी किनारमा पानी पिउन गयो । त्यसै बखत नदीमा बौटा छाल आयो र कमिलालाई पानीमा बगाएर लग्यो । बिचरा कमिला डुब्नलाग्यो । नदीको किनारमा बौटा परेवा बसेको थियो । त्यसले कमिलालाई मृत्युसित लड्न लागेको देखेर तत्काल बौटा सिन्का लिएर उड्यो र कमिलाको नजीकै खसालिदियो । डुब्नलागेकोलाई सिन्काको भर प्राप्त भयो । कमिला सिन्कामा बस्यो । सिन्का छेउलाग्यो । कमिला बाँचियो । उसले विचार गर्‍यो–मैले यसको प्रत्युपकार गर्नुपर्दछ । एक दिन बौटा व्याधाले त्यहीं घुमघुमि आएर धनुषमा बाण राख्यो । शिकारीले परेवालाई मार्न आँट्यो कमिलाले देख्यो र दगुर्दै आएर उसले व्याधाको खुट्टामा बेसरी टोकिदियो । शिकारी आत्तियो । निशाना बिग्रियो । परेवा भाग्यो र त्यसको प्राणरक्षा भयो ।

९२०

सुन–म तिमीलाई यौटा अत्यन्त गुप्त कुरा भन्दछु, किनकि गुरुजन आफ्नू मनपर्रको शिष्यलाई गुप्त रहस्य पनि भनिदिन्छन् ॥३॥ भगवान्ले आफ्ना साथी लाई अघासुरको मुखबाट बचाए र फेरि तिनलाई यमुना-तटमा ल्याएर भने–॥४॥ मित्र हो ! हेर, यो यमुनाको तट कति रमाइलो छ ? यहाँ हामीले खेल्ने सबै सामग्री प्रस्तुत छ । यहाँको स्वच्छ बालुवा निकै कोमल छ । यो स्थान फक्रेका कमलको सुवासद्वारा आकृष्ट भ्रमरको गुन्जार र पक्षिहरूको कलरवको प्रतिध्वनिले सुशोभित वृक्षबाट कस्तो हरियो-भरिलो देखिन्छ ? ॥५॥ हे भाइ हो ! दिन पनि मध्याह्न भयो, हामीहरू भोकले कष्ट पाइरहेका छौं । आओ, यहाँ बसेर खानेकुरा खाऔं र हाम्रा बाछा पनि पानी खाएर बिस्तार-बिस्तार चरुन् ॥६॥ कृष्णचन्द्रले यति भनेपछि सबै बालकले 'राम्रो हो' भनेर बाछालाई पानी खुवाई चर्न छाडिदिए र आफाफ्ना पोका फुकाएर प्रसन्नतापूर्वक भगवान्सित खानथाले ॥ ७ ॥ कृष्ण-दर्शनको आनन्दले उसका नेत्र फक्रेका थिए, ती सबै ग्वाल-बाल अनेक गोलाकार पंक्ति बनाएर भगवान्का चारैतिर उनैतर्फ मुख पारेर यौटा अर्कोसित टाँसिएर बसेका थिए। त्यस वनमा

णीश्रुतिचेतसामपि ॥ प्रतिक्षणं नव्यवदच्युतस्य यत्स्त्रिया विटानामिव साधुवार्ता ॥२॥ शृणुष्वावहितो राजन्नपि गुह्यं वदामिते ॥ ब्रूयुः स्निग्धस्यशिष्यस्य गुरवो गुह्यमप्युत ॥३॥तथाघवदनान्मृत्यो रक्षित्वा वत्सबालकान् ॥ सरित्पुलिनमानीय भगवानिदमब्रवीत् ॥४॥ अहोऽतिरम्यं पुलिनं वयस्याः स्वकेलि-सम्पन्मृदुलाच्छबालुकम् ॥स्फुटत्सरोगन्धहृतालिपत्रिकध्वनिप्रतिध्वानलसद्द्रुमाकुलम् ॥५॥ अत्र भोक्तव्यमस्माभिर्दिवारूढं क्षुधार्दिताः ॥ वत्साःसमीपे-ऽपः पीत्वा चरन्तु शनकैस्तृणम् ॥६॥ तथेति पाययित्वाऽर्भा वत्सानारुध्य शाद्वले ॥ मुक्त्वा शिक्यानि बुभुजुः समंभगवता मुदा ॥७॥कृष्णस्यविष्वक् पुरुराजिमण्डलैरभ्याननाः फुल्लदृशो व्रजार्भकाः ॥ सहोपविष्टा विपिने विरेजुश्छदा यथाम्भोरुहकर्णिकायाः॥८॥ केचित्पुष्पैर्दलैः केचित्पल्लवैरंकुरैः फलैः ॥ शिग्भिस्त्वग्भिर्दृषद्भिश्च बुभुजुः कृतभोजनाः ॥९॥ सर्वे मिथो दर्शयन्तः स्वस्वभोज्यरुचि पृथक् ॥ हसन्तो हासयन्तश्चाभ्यवजह्रुः सहेश्वराः ॥१०॥ बिभ्र-द्वेणुं जठरपटयोः शृङ्गवेत्रे च कक्षे वामे पाणौ मसृणकवले तत्फलान्यङ्गुलीषु ॥ तिष्ठन्मध्ये स्वपरिसुहृदो हासयन्नर्मभिः स्वैः स्वर्गे लोके मिषति बुभुजे यज्ञभुग्बालकेलिः ॥११॥ भारतैवं वत्सपेषु भुञ्जानेष्वच्युतात्मसु ॥ वत्सास्त्वन्तर्वने दूरं विविशुस्तृणलोभिताः ॥१२॥ तान्दृष्ट्वा भयसन्त्रस्तानूचे कृष्णोऽ-स्य भीभयम् ॥ मित्राण्यशान्मा विरमतेहानेष्ये वत्सकानहम् ॥१३॥ इत्युक्त्वाऽद्रिदरीकुञ्जगह्वरेष्वात्मवत्सकान् ॥ विचिन्वन्भगवान् कृष्णः सपाणिक-

कृष्णका चारैतिर ती यस्ता देखिइरहेका थिए, जस्तै कुनै कमलका कर्णिकाको चारैतिर स-साना दल फैलिएका हुन् ॥८॥ तीमध्ये कोही फूलमा, कोही पातमा,कोही कोपिलामा, अंकुरमा, कोही फलमा, कोही वृक्षको बोक्रामा र कोही ढुङ्गामा नै आफ्नू खानेकुरा राखेर खानलागे ॥९॥ भगवान् कृष्णसित ती सबै बालक खानमा आफ्नो भिन्न-भिन्न रुचि देखाउँथे र यौटा अर्कोलाई हँसाउँदै खाइरहेका थिए ॥१०॥ यज्ञभाग भोक्ता भगवान् कृष्ण बाल-लीला गर्दै कम्मरमा मुरली घुसारी, सींग र बेंत काखी च्यापी, दाहिने हातमा स्निग्ध गाँस लिई, औंलामा फलको अचार थिचेर माझमा बसी आफ्नो चारैतिर बसेका साथीहरूलाई मीठा-मीठा कुराले हँसाउँदै खानलागे । स्वर्गवासी देवगण त्यस बेला पनि भगवान्को त्यो बाललीला हेरिरहेका थिए ॥११॥ हे भारत ! जब सबै ग्वाल-बाल भगवान्मा दत्तचित्त भएर खाँदै थिए तब तिनका बाछा नयाँ-नयाँ दूबोको लोभमा निकै पर पुग्न गए ॥१२॥

त्यसले आफ्ना साथी बालकहरूलाई डराएका देखेर जगत्को भयलाई पनि भयभीत पार्नसक्ने भगवानले तीपित गर्नुभयो–'मित्र हो ! तिमीहरू खाओ, म बाछा फर्काएर ल्याउँछु ।' ग्वालबाललाई यति भनेर कृष्ण हातमा गाँस लिएरै आफ्ना र साथीहरूका बाछा खोज्दै पर्वत, कन्दरा, कुञ्ज र गह्वरादि अन्यान्य अगम्य स्थानहरूमा घुम्नलागे ॥ १३-१४ ॥ हे कौरव ! ब्रह्मलोकमा स्थित ब्रह्माजीलाई अघासुरको मुक्ति देखेर विस्मय भएको थियो । अतः कमलयोनि ब्रह्मा मायाबालक-रूपधारी हरिको कुनै अर्को महिमा हेर्नका लागि अनुकूल अवसर जानेर पहिले बाछाहरू चोरेर लगे, फेरि बालकहरूलाई पनि अन्तै लुकाएर अलक्षित भए ॥ १५ ॥ बाछा नपाएर श्रीकृष्ण यमुनातटको बालुवामा आए तर त्यहाँ ग्वाल-बाल पनि देखिएनन्, अनि ती दुवैलाई वनमा यता-उता खोज्नलागे ॥ १६ ॥ भगवान्ले जब बाछा र ग्वाल-बाललाई वनमा कहीं पनि पाएनन् ती विश्ववेत्ता तुनाले तुरुन्त ब्रह्माको काम हो भन्ने जाने ॥ १७ ॥ अनि विश्व रचयिता भगवान् कृष्णले बालकका आमा र ब्रह्माजीको हित गर्नका लागि आफूलाई नै बाछा र बालकहरू तुल्याए॥

वत्सौ ययौ ॥ १४ ॥ अम्भोजन्मजनिस्तदन्तरगतो मायार्भकस्येशितुर्द्रष्टुं मंजुमहित्वमन्यदपि तद्वत्सानितो वत्सपान् ॥ नीत्वाऽन्यत्र कुरूद्वहान्तरदधात्खेऽवस्थितो यः पुरा दृष्ट्वाऽघासुरमोक्षणं प्रभवतः प्राप्तः परं विस्मयम् ॥ १५ ॥ ततो वत्सानदृष्ट्वैत्य पुलिनेऽपि च वत्सपान् ॥ उभावपि वने कृष्णो विचिकाय समन्ततः ॥ १६ ॥ क्वाप्यदृष्ट्वाऽन्तर्विपिने वत्सान्पालांश्च विश्ववित् ॥ सर्वं विधिकृतं कृष्णः सहसाऽवजगाम ह ॥ १७ ॥ ततः कृष्णो मुदं कर्तुं तन्मातॄणां च कस्य च ॥ उभयायितमात्मानं चक्रे विश्वकृदीश्वरः ॥ १८ ॥ यावद्वत्सपवत्सकाल्पकवपुर्यावत्कराङ्घ्र्यादिकं यावद्यष्टिविषाणवेणुदलशिग्यावद्विभूषाम्बरम् ॥ यावच्छीलगुणाभिधाकृतिवयो यावद्विहारादिकं सर्वं विष्णुमयं गिरोऽङ्गवदजः सर्वस्वरूपो बभौ ॥ १९ ॥ स्वयमात्मात्मगोवत्सान्प्रतिवार्यात्मवत्सपैः ॥ क्रीडन्नात्मविहारैश्च सर्वात्मा प्राविशद्व्रजम् ॥ २० ॥ तत्तद्वत्सान्पृथङ् नीत्वा तत्तद्गोष्ठे निवेश्य सः ॥ तत्तदात्माऽभवद्राजंस्तत्तत्सद्म प्रविष्टवान् ॥ २१ ॥ तन्मातरो वेणुरवत्वरोत्थिता उत्थाप्य दोर्भिः परिरभ्य निर्भरम् ॥ स्नेहस्नुतस्तन्यपयः सुधासवं मत्वा परं ब्रह्म सुतानपाययन् ॥ २२ ॥ ततो नृपोन्मर्दनमज्जलेपनालंकाररक्षातिलकाशनादिभिः ॥ संलालितः स्वाचरितैः प्रहर्षयन् सायं गतो याम-

॥१८॥ ती सबै बालक र बाछाहरूको जस्तो स-साना हात-खुट्टा थिए, जस्ता लट्ठी, सींग, बाँसुरी, पात र भाँडा थिए, जस्ता तिनका लुगा र आभूषण थिए, जस्तो तिनको स्वभाव, गुण, नाम, रूप र अवस्था तथा आहार थिए, सर्वस्वरूप भगवान ठीक उस्तै प्रकार प्रकट भएर 'सम्पूर्ण जगत् विष्णुरूप छ' यो कथन सार्थक पार्दै शोभित भए ॥ १९ ॥ सर्वात्मा भगवान् कृष्ण वत्सरूप आफूलाई ग्वाल-बालरूपको घेरामा पारेर आकेलित विहार गर्दै ब्रजमा प्रविष्ट भए ॥ २० ॥ ब्रजमा जुन-जुन ग्वालका जो-जो बाछाहरू थिए, उनलाई उही-उही रूपले पृथक् पृथक् लगेर उनको घारीमा थुनिदिए र भिन्न-भिन्न बालकका रूपमा भिन्न-भिन्न घरमा गए ॥ २१ ॥ तिनका आमाहरू बाँसुरीको शब्द सुन्नासाथ दगुरे र सक्षात् परब्रह्मलाई नै आफ्ना छोरा मानेर तिनलाई प्रेमपूर्वक काखमा बोके र अंकमाल गरेर स्नेहवश स्वयं ने बगिरहेको आफ्नु सुधामधुर स्तनपान गराए ॥२२॥

भगवानले इच्छा गरेको भए ब्रह्माजीले चोरेका ग्वाल-बाल र र बाछाहरू ल्याउन सक्थे तर त्यसले ब्रह्माको मोह भंग हुने थिएन र ती भगवानको दिव्य मायाको ऐश्वर्य पनि देख्न पाउने थिएनन् । यसै निमित्त भगवान् ती ग्वाल बाल र बाछाहरूलाई नल्याएर स्वयं ग्वाल बाल र बाछा बने ।

हे राजन् ! यसै प्रकार नित्य साँझमा फर्केर भगवान् आमाहरूलाई आफ्नो लीलाले आनन्दित पार्दथे र ती पनि बुकुवा लगाउने, चन्दनादिको लेप गर्ने, वस्त्राभूषण लगाइदिनु, रक्षा गर्नु, चन्दन लगाउनु र भोजन गराउनु आदि उपायहरूले तिनको लालन-पालन गर्दथे ॥ २३ ॥ यसै गरी गाई पनि जब छिटै-छिटै हिंडेर आफ्नो ब्रजमा पुग्दथे, तब हुङ्कार शब्द गरेर डाकेपछि आफ्नो नगीचै आएका आफाफ्ना बाछालाई चाट्दथे र तिनलाई आफ्नो थुनबाट स्नेहवश बगिरहेको दूध पिउन दिन्थे ॥ २४ ॥ भगवान्माथि गाई र गोपीहरूको पहिले जस्तै मातृभाव बनिरह्यो । अँ, यस मौकामा स्नेहको अधिकता थियो । भगवान्ले पनि पहिले जस्तै उनलाई पुत्रभाव देखाउनुभयो, तर यो सम्बन्धमा मोह थिएन ॥२५॥ ब्रजवासीहरूको पहिले जस्तो असीम स्नेह थियो, उस्तै यशोदा-नन्दन कृष्णमा र आफ्ना पुत्रहरूमा उनको स्नेह वर्षदिनसम्म दिनहुँ बढ्दै र असीम हुँदै गयो ॥ २६ ॥ यस प्रकार भगवान् आफूलाई वत्सपाल ( गोठालो ) र बाछाको रूपमा परिवर्तित गरेर सबैलाई स्वयं पालन गर्दै एक वर्षसम्म ब्रज र वनमा खेल्दै रहे ॥ २७ ॥ वर्ष पूर्ण हुनमा केवल

यमेन माधवः ॥ २३ ॥ गावस्ततो गोष्ठमुपेत्य सत्वरं हुङ्कारघोषैः परिहूतसङ्गतान् ॥ स्वकान्स्वकान्वत्सतरानपाययन् मुहुर्लिहन्त्यः स्रवदौधसं पयः ॥२४॥ गोगोपीनां मातृताऽस्मिन्सर्वा स्नेहर्धिकां विना ॥ पुरोवदास्वपि हरेस्तोकता मायया विना ॥ २५ ॥ व्रजौकसां स्वतोकेषु स्नेहवल्ल्याब्दमन्वहम् ॥ शनैर्निःसीम ववृधे यथा कृष्णे त्वपूर्ववत् ॥२६॥ इत्थमात्मात्मनात्मानं वत्सपालमिषेण सः ॥ पालयन्वत्सपो वर्षं चिक्रीडे वनगोष्ठयोः ॥२७॥ एकदा चारयन्वत्सान्सरामो वनमाविशत् ॥ पञ्चषासु त्रियामासु हायनापूरणीष्वजः ॥ २८ ॥ ततो विदूराच्चरतो गावो वत्सानुपव्रजम् ॥ गोवर्धनाद्रिशिरसि चरन्त्यो ददृशुस्तृणम् ॥ २९ ॥ दृष्ट्वाऽथ तत्स्नेहवशोऽस्मृतात्मा स गोव्रजोऽत्यात्मपदुर्गमार्गः ॥ द्विपात्ककुद्ग्रीव उदास्यपुच्छोऽगाद्धुंकृतैरास्नुपया जवेन ॥ ३० ॥ समेत्य गावोऽधोवत्सान्वत्सवत्योऽप्यपाययन् ॥ गिलन्त्य इव चाङ्गानि लिहन्त्यः स्वौधसं पयः ॥ ३१ ॥ गोपास्तद्रोधनायासमौघ्यलज्जोरुमन्युना ॥ दुर्गाध्वकृच्छ्रतोऽभ्येत्य गोवत्सैर्ददृशुः सुतान् ॥ ३२ ॥ तदीक्षणोत्प्रेमरसाप्लुताशया जातानुरागा गतमन्यवोऽर्भकान् ॥ उदुह्य दोर्भिः परिरभ्य मूर्धनि घ्राणैरवापुः परमां मुदं ते ॥ ३३ ॥ ततः प्रवयसो गोपास्तोकाश्लेषसुनिर्वृताः ॥ कृच्छ्राच्छनैरपगतास्तदनु-

पाँच वा छ रात बाँकी थियो, तब अजन्मा भगवान् कृष्ण बलरामसित बाछा चराउँदै वनमा गए ॥ २८ ॥ त्यस दिन निकै पर गोवर्धनको शिखरमा चरिरहेका गाईहरूले ब्रजको नजीक नै आफ्ना बाछाहरू चरेको देखे ॥ २९ ॥ आफ्ना बाछालाई देख्नासाथ गाईहरूको मन स्नेह-विभोर भयो र ती ग्वालाहरूले रोकेका विचारै नराखी हुङ्कार गर्दै त्यो दुर्गम बाटोमा ठूलो वेगले दगुरे । त्यस बेला तिनका स्तनबाट दूध बगिरहेको थियो, तिनको ठाडो घाँटी ककुद्म ( मजुर ) टाँसिए झैं थियो र पुच्छर ठाडो पारेर वेगले दगुर्दा ती लुइाका जस्तै देखिन्थे ॥ ३० ॥ ती गाईका अरु बाछा पनि थिए, तापनि ती गोवर्धनको फेदीमा आफ्ना पहिलेका बाछाहरूको नगीच पुगेर स्नेहले स्वयं बगिरहेका दूध पिआउन लागे । ती उनका अङ्ग यस्तो स्नेहले चाटिरहेका थिए—सलक निल्छन् कि जस्तो गरेर ॥ ३१ ॥ गोठालाले तिनलाई रोक्ने प्रयत्न गरेका हुन्, तर ती सफल भएनन् । अतः अब ती लाज र क्रोधवश निकै कष्टले त्यो दुर्गम बाटो नाघेर त्यहाँ आए, तब तिनले बाछासहित आफ्ना बालकहरू पनि देखे ॥ ३२ ॥ तिनलाई देख्नासाथ उनका मन प्रेमरसमा डुब्यो ।

बालकहरूको अनुरागले तिनको रिस पनि शान्त भएको थियो । उनले आफाफना बाछालाई बोकेर हृदयमा टाँसे र तिनको सिर सुँघेर अतिशय आनन्दित भए ॥३३॥ आफ्ना बालकको अङ्कमालले वृद्ध गोपहरूलाई निकै सुख प्राप्त भयो । ती उनलाई छाडेर निकै कष्टले घर जानसके । तिनको स्मरण हुनासाथ उनका नेत्रमा पानी भरिन्थ्यो । उता बलरामले देख्नुभयो—आज व्रजवासीहरूको आफ्ना छोरामा क्षण-क्षण प्रेम बढिरहेको छ र जसले दूध पिइसके, त्यस्ता बाछाहरूमा पनि गाईहरूको स्नेह प्रबल छ । निकै विचार गर्दा पनि उनले त्यसको कुनै कारण जान्न सकेनन् । अतः मनमनै विचार लागे—॥३४॥३५॥ यो कस्तो विचित्र कुरा छ—पर्मात्मा भगवन्‌मा व्रजवासीहरूको जस्तो अपूर्व स्नेह थियो, त्यस्तै नै आफ्ना छोराहरूमा पनि बढ्दै गइरहेको छ ॥३६॥ यो कस्तो माया हो र कहाँबाट आयो ? यो कुनै देवता, मनुष्य वा राक्षसी माया त हुनै सक्तैन ! यो मेरा प्रभुको नै कुनै लीला हो ! किनकि अरु कसैको मायाले मलाई मोहित पार्न सक्तैन ॥३७॥ यस्तो विचार गरेर यादव-श्रेष्ठ बलरामले ज्ञानदृष्टि द्वारा हेर्दा त सबै बाछा र ग्वाल-बाल, उनलाई विष्णुरूप देखिए ॥३८॥ त्यस्तो देखेर बलरामले श्रीकृष्णसित भन्नु भयो—हे भगवन् ! यी ग्वाल-बाल र बाछाहरू त देवता तथा ऋषि कोही पनि होइनन् । यी विभिन्न उपाधिमा हजुर नै

स्मृत्युदश्रवः ॥ ३४ ॥ व्रजस्य रामः प्रेमर्धेर्वीक्ष्यौत्कण्ठ्यमनुक्षणम् ॥ मुक्तस्तनेष्वपत्येष्वप्यहेतुविदचिन्तयत् ॥३५॥ किमेतदद्भुतमिव वासुदेवेऽखिलात्मनि ॥ व्रजस्य सात्मनस्तोकेष्वपूर्वं प्रेम वर्धते ॥३६॥ केयं वा कुत आयाता दैवी वा नार्युतासुरी ॥ प्रायो मायास्तु मे भर्तुर्नान्या मेऽपि विमोहिनी ॥ ३७ ॥ इति सञ्चिन्त्य दाशार्हो वत्सान्सवयसानपि ॥ सर्वानाचष्ट वैकुण्ठं चक्षुषा वयुनेन सः ॥ ३८ ॥ नैते सुरेशा ऋषयो न चैते त्वमेव भासीश भिदाश्रयेऽपि ॥ सर्वं पृथक्त्वं निगमात्कथं वदेत्युक्तेन वृत्तं प्रभुणा बलोऽवैत् ॥ ३९ ॥ तावदेत्यात्मभूरात्ममानेन त्रुट्यनेहसा ॥ पुरोवदब्दं क्रीडन्तं ददृशे सकलं हरिम् ॥ ४० ॥ यावतो गोकुले बालाः सवत्साः सर्व एव हि ॥ मायाशये शयाना मे नाद्यापि पुनरुत्थिताः ॥ ४१ ॥ इत एतेऽत्र कुतस्त्या मन्मायामोहितेतरे ॥ तावन्त एव तत्राब्दं क्रीडन्तो विष्णुना समम् ॥ ४२ ॥ एवमेतेषु भेदेषु चिरं ध्यात्वा स आत्मभूः ॥ सत्याः के कतरे नेति ज्ञातुं नेष्टे कथञ्चन ॥ ४३ ॥ एवं सम्मोहयन्विष्णुं विमोहं विश्वमोहनम् ॥ स्वयैव माययाऽजोऽपि स्वयमेव विमोहितः ॥४४॥ यस्यां

देखिइरहनु भएको छ । अब मलाई स्पष्ट रूपले भन्नुहवस्—यो सबै कसरी भयो ? भगवान्‌ले बुझाएपछि बलरामलाई ब्रह्माका मोहको कुरा ज्ञात भयो ॥ ३९ ॥ उसै बेला अत्यन्त थोरै समय बितेपछि स्वयम्भू ब्रह्माले आएर हेर्दा भगवान् पहिले जस्तै बाछा र ग्वाल-बालहरूसित व्रजमा एक वर्षदेखि क्रीडा गरिरहेका छन् ॥४०॥ त्यो देखेर ब्रह्मा विचार्न लागे—'गोकुलमा जति ग्वालबाल र बाछा थिए, तिनलाई मैले आफ्नी मायाद्वारा अचेत पारेर गएको थिए, ती अझ पनि सचेत भएका छैनन् ॥ ४१ ॥ अनि मेरो मायाले मोहित ग्वालबाल र बाछा बाहेक यी उत्तिनै कहाँबाट आइपुगे—जुन एक वर्षदेखि भगवान्‌सित क्रीडा गर्दैछन् ॥४२॥ ती ग्वालबाल र बाछाको विषयमा निकै विचार गर्दा पनि आत्मयोनि ब्रह्माले यो निर्णय गर्न सकेनन् कि कुन ग्वालबाल सत्य हुन र कुन मिथ्या ? ॥४३॥ यसरी संसारलाई मोहमा पार्ने मोहरहित भगवान् विष्णुलाई मोहित पार्नमा प्रवृत्त ब्रह्मा आफ्नी मायाले स्वयं मोहमा पारिए ॥ ४४ ॥ जस्तै कुइराको अन्धकारले रात्रिको अन्धकारलाई छिप्न सक्तैन र जसरी जुनकिरीको प्रकाश दिनको उज्यालोमा

स्वयं विलीन हुन्छ, त्यस्तै नै महापुरुषमा प्रयोग गरिने तुच्छ माया उनको त कहाँ बिगार्न सक्तैन, बरु आफ्नै सामर्थ्य क्षीण* पार्दछ ॥ ४५ ॥ ब्रह्माजीले हेर्दाहेर्दै तत्काल सबै ग्वाल-बाल र बाछा विष्णुरूप देखिनलागे। तिनको वर्ण सजल मेघ झैं श्याम थियो र ती सबै पहेलो रंगको रेशमी वस्त्र लगाएका थिए ॥ ४६ ॥ ती सबैका चार-चार भुजा थिए र तिनमा शङ्ख, चक्र गदा र पद्म शोभित थिए तथा सबै ग्वाल-बाल मुकुट, कुण्डल, हार र वनमालाले सुशोभित भइरहेका थिए ॥ ४७ ॥ तिनका वक्षस्थलमा श्रीवत्स चिह्न, बाहुमा बाजूबन्द, हातमा शङ्खका उत्तम कंकण, पाऊमा नूपुर र हातमा बाला तथा कम्मरमा करधनी र औंलाहरूमा औंठी सुशोभित थिए ॥ ४८ ॥ तिनका पाउदेखि शिरसम्म सबै अंग पुण्यवान् भक्तगणले अर्पण गरेका कोमल तुलसीका मालाहरूले ढाकिएको थियो ॥ ४९ ॥ ती सबै आफ्ना अरुण वर्ण नेत्रका कटाक्ष र चन्द्रिका झैं उज्ज्वल हास्यले

तमोवन्नैहारं खद्योतार्चिरिवाहनि ॥ महतीतरमायैश्यं निहन्त्यात्मनि युञ्जतः ॥ ४५ ॥ तावत्सर्वे वत्सपालाः पश्यतोऽजस्य तत्क्षणात् ॥ व्यदृश्यन्त घनश्यामाः पीतकौशेयवाससः ॥ ४६ ॥ चतुर्भुजाः शङ्खचक्रगदाराजीवपाणयः ॥ किरीटिनः कुण्डलिनो हारिणो वनमालिनः ॥ ४७ ॥ श्रीवत्साङ्गददोरत्नकम्बुकङ्कणपाणयः ॥ नूपुरैः कटकैर्भाताः कटिसूत्राङ्गुलीयकैः ॥ ४८ ॥ अङ्घ्रिमस्तकमापूर्णास्तुलसीनवदामभिः ॥ कोमलैः सर्वगात्रेषु भूरिपुण्यवदर्पितैः ॥ ४९ ॥ चन्द्रिकाविशदस्मेरैः सारुणापाङ्गवीक्षितैः ॥ स्वकार्थानामिव रजःसत्त्वाभ्यां स्रष्टृपालकाः ॥ ५० ॥ आत्मादिस्तम्बपर्यन्तैर्मूर्तिमद्भिश्चराचरैः ॥ नृत्यगीताद्यनेकार्हैः पृथक्पृथगुपासिताः ॥ ५१ ॥ अणिमाद्यैर्महिमभिरजाद्याभिर्विभूतिभिः ॥ चतुर्विंशतिभिस्तत्त्वैः परीता महदादिभिः ॥ ५२ ॥ कालस्वभावसंस्कारकामकर्मगुणादिभिः ॥ स्वमहिध्वस्तमहिभिर्मूर्तिमद्भिरुपासिताः ॥ ५३ ॥ सत्यज्ञानन्तानन्दमात्रैकरसमूर्तयः ॥ अस्पृष्टभूरिमाहात्म्या अपि ह्युपनिषद्दृशाम् ॥ ५४ ॥ एवं सकृद्ददर्शाजः परब्रह्मात्मनोऽखिलान् ॥ यस्य भासा सर्वमिदं विभाति सच-

यस्ता देखिन्थे, जस्तै रजोगुण र सत्वगुणले आफ्ना भक्तको रचना र पालन गरिरहेका छन् ॥ ५० ॥ ब्रह्माजीले यो पनि देखे—ती अर्थात् ब्रह्मादेखि लिएर लघु कीट पतंगपर्यन्त सबै चराचर जीव मूर्तिमान् भएर नृत्य-गीतादि अनेक उपचारले उनको पृथक्-पृथक् पूजा गरिरहेका छन् ॥ ५१ ॥ ती सर्वतिरबाट अणिमादि सिद्धि, माया आदि विभूति तथा महत्तत्त्वादि चौबीस तत्त्वले ढाकिएका छन् ॥ ५२ ॥ भगवान्‌को महिमाले नष्ट महिमा भएका काल, स्वभाव, संस्कार, कर्म आदि पनि मूर्तिमान् भएर उपासना गरिरहेछन् ॥ ५३ ॥ उनले देखे—ती सत्य, ज्ञान र आनन्दरूप तथा सजातीय-विजातीय भेद रहित भएर एकरसस्वरूप छन्। उनको महिमा उपनिषदादिका मर्मज्ञ विद्वान् पनि जान्न सकिरहेन।

* दृष्टान्त ( आफ्नो स्थिति हेर )—धेरै राजाका धेरै नोकर थिए। नोकरसित राजा परिवार झैं सम्बन्ध राख्दथे। खाँचो परेमा तिनको ओकात अनुसार धन पनि दिन्थे। एक पल्टमा चाँण्डा धेरै नोकरमाथि राजाको हजार रुपियाँ भइसकेको। कर्मचारीले त्यसलाई समातेर राजाकहाँ पुऱ्याए। ऋण तिर्ने त्यो नोकरसित कुनै साधन थिएन। अतः त्यो हातको निहुराएर उभिइरह्यो। पहिलेका राजाहरूमा ईश्वरको अंश रहन्थ्यो, त्यसै हुनाले त्यसलाई देखेर राजालाई दया लाग्यो र त्यसको ऋण माफ गरिदिए। राजाले जुन सेवकको ऋण माफ गरिदिएका थिए, त्यसको रुपियाँ चौटा अर्को मानिससित लिनु थियो। त्यो माग्न गयो। अर्को मानिसले भन्यो—'मेरो घरमा संचो छैन, अतः दुइ चार दिनपछि आउनु।' त्यतिमै राजसेवक रिसाएर त्यसको घाँटी थिचिदियो। त्यस मनुष्यले हात जोरेर भन्यो—'रुपियाँ त तयार छ, घरमा संचो नहुनाले ल्याउन पाएको छैन।' तर त्यो राजकर्मचारी किन मान्दथ्यो! उसले राजाकहाँ उजूर गरिदियो। राजाले नोकरलाई बोलाएर भने—'मूर्ख! तैंले आफ्ना दिन बिर्सिदिइस? राज्यको ऋण हजार रुपियाँ तैं अहिल्यै ल्याएर बुझा। मैले तँलाई माफी दिएको थिएँ—अर्कोलाई माफ गर्नको निमित्त—सतपलाई कष्ट दिन होइन।'

छैनन् ॥ ५४ ॥ यसरी ब्रह्माजीले ती सबैलाई उनै परब्रह्मको रूपमा देखे, जसको कान्तिले चराचर जगत् भाममान भइरहेको छ ॥ ५५ । त्यसपछि अत्यन्त कौतुहलवश उसका एघारै इन्द्रियहरू क्षुब्ध र स्तब्ध भएका थिए, ती ब्रह्माजी सबैको तेजले अभिभूत भएर आत्मविभोर भए । उस बखत ती यस्ता देखिंदै थिए—मानो व्रजकी अधिष्ठात्री देवीका प्रतिरूप उभिएका हुन् ॥ ५६ ॥ यसरी तर्कभन्दा पर, स्वयं प्रकाशानन्दरूप, मायाले अतीत र अनात्म पदार्थका बाध गर्न श्रुतिद्वारा जानिने आफ्नो महिमाको विषयमा वाक्पति ब्रह्मालाई 'यो के हो ?' यस्तो विचारेर मुग्ध हुने, फेरि त्यतातिर हेर्नमा पनि असमर्थ जस्तै भएका जानेर परमपुरुष श्रीकृष्णचन्द्रले तुरुन्त आफ्नी मायाको पर्दा हटाइदिनुभयो ॥५७॥ अनि ब्रह्मालाई बाह्यज्ञान भयो । ती मरेर जागेको व्यक्ति झैं गमेर उठे र कुनै प्रकारले आँखा खोल्नासाथ आफू सहित यो सम्पूर्ण जगत् प्रत्यक्ष देखियो ॥ ५८ ॥ फेरि साम्न्ने सबैतिर दृष्टि घुमाउँदा उनले जीवमात्रलाई सदा जीवन दिने वृक्षहरूले पूर्ण वृन्दावनको त्यो भूमि देखे ॥ ५९ ॥ जहाँ श्रीकृष्णचन्द्रको निवासले क्रोध र लोभ

राचरम् ॥५५॥ ततोऽतिकुतुकोद्वृत्तस्तिमितैकादशेन्द्रियः ॥ तद्धाम्नाऽभूदजस्तूष्णीं पूर्देव्यन्तीव पुत्रिकाः ॥ ५६ ॥ इतीरेशे'तर्क्ये निजमहिमनि स्वप्रमितिके परत्राजातोऽतन्निरसनमुखब्रह्मकमितौ ॥ अनीशेऽपि द्रष्टुं किमिदमिति वा मुह्यति सति चच्छादाजो ज्ञात्वा सपदि परमोऽजाजवनिकाम् ॥ ५७ ॥ ततोऽर्वाक्प्रतिलब्धाक्षः कः परेतवदुत्थितः ॥ कृच्छ्रादुन्मील्य वै दृष्टीराचष्टेदं महात्मना ॥ ५८ ॥ सपद्येवाभितः पश्यन्दिशोऽपश्यत्पुरःस्थितम् ॥ वृन्दावनं जनाजीव्यद्रुमाकीर्णं समाप्रियम् ॥ ५९ ॥ यत्र नैसर्गदुर्वैराः सहासन्नृमृगादयः ॥ मित्राणीवाजितावासद्रुतरुट्तर्षकादिकम् ॥ ६० ॥ तत्रोद्वहत्पशुपवंशशिशुत्वनाट्यं ब्रह्माद्वयं परमनन्तमगाधबोधम् ॥ वत्सान्सखीनिव पुरा परितो विचिन्वदेकं सपाणिकवलं परमेष्ठ्यचष्ट॥६१॥ दृष्ट्वा त्वरेण निजधोरणतोऽवतीर्य पृथ्व्यां वपुः कनकदण्डमिवाभिपात्य ॥ स्पृष्ट्वा चतुर्मुकुटकोटिभिरङ्घ्रियुग्मं नत्वा मुदश्रुसुजलैरकृताभिषेकम् ॥ ६२ ॥ उत्थायोत्थाय कृष्णस्य चिरस्य पादयोः पतन् ॥ आस्ते महित्वं प्राग्दृष्टं स्मृत्वा स्मृत्वा पुनः पुनः ॥६३॥ शनैरथोत्थाय विमृज्य लोचने मुकुन्दमुद्वीक्ष्य विनम्रकन्धरः॥कृताञ्जलिःप्रश्रयवान्समाहितः सवेपथुर्गद्गदयैलतेलया ॥६४॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे त्रयोदशोऽध्यायः ॥१३॥

आदिको अन्त्य भइसकेको थियो । जसमा स्वभावतः शत्रुता थियो, ती मनुष्य र मृग आदि जीव मित्र झैं परस्पर मिलेर त्यहाँ रहेका थिए ॥ ६० ॥ अनि ब्रह्माले देखे—अद्वितीय परमपुरुष ब्रह्म नै गोपवंशीय बालकको रूप धारण गरेर त्यहाँ यौटा हातमा गाँस लिएका एक्लै आफ्ना साथी ग्वाल-बाल र बाछाहरूलाई खोज्दैछन् ॥ ६१ ॥ ती भगवानलाई देख्नासाथ ब्रह्माजी तुरुन्त आफ्नू वाहनबाट ओर्लिए र स्वर्णदण्ड जस्तै पृथ्वीमा लम्पसार परेर उनका चरणलाई आफ्ना चारै मुकुटको टुप्पाले स्पर्श गर्दै आनन्दाश्रुले अभिषिक्त गर्नलागे । श्रीहरिका पहिल्यै देखेका लीलाहरू बारम्बार स्मरण गर्दै ती उठ्दै-झुर्दै बारम्बार गरेर उनका चरणमा परेर धेरै बेरसम्म लुटपुट गरिरहे ॥६२॥६३॥ तिनै बेरपछि बिस्तार-बिस्तार उठेर आँखा पुछी भगवानुतिर हेर्दै शिर निहुराएर दुवै हात जोडी अत्यन्त विनय र सावधानीपूर्वक भयले काम्दै ब्रह्माजी गद्गद् वाणीमा स्तुति गर्दै भन्नलागे—॥६४॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां त्रयोदशोऽध्यायः ॥१३॥

( ब्रह्मा द्वारा श्रीकृष्णको स्तुति र बाछा एवं ग्वालबाल पाउनु )–ब्रह्माजी भन्दछन्–हे प्रभो ! सजल जलधर जस्तै श्यामवर्ण, बिजुली झैं कान्ति, सुन्दर पीताम्बर धारी, गुञ्जाका गहनाले विभूषित, कुण्डल र मुकुटले अत्यन्त उद्भासित मुख, घाँटीमा वनमालाले सुशोभित, अत्यन्त सुकुमार चरण भएका, खानेकुराको गाँस, छडी, सींग र बाँसुरी आदि चिह्नले अपूर्व शोभायुक्त हजुर गोपाल-नन्दनलाई म प्रणाम गर्दछु । हे देव ! हजुरले ममाथि कृपा गर्नका लागि–जो आफ्नू इच्छाले नै धारण गर्नु भएको छ जो पाँच भौतिक नभएर शुद्ध सत्वमय छ । यस्तो हजुरको यो शरीरको पनि महिमा जान्न म या अरु कुनै पनि समर्थ छैनन् । आत्मानन्दानुभवस्वरूप हजुरको महिमा एकाग्रचित्तले विचार गरेर पनि कसैले सहजै दसरी जान्न सक्दछ ? ॥ १-२ ॥ हे नाथ ! जो ज्ञान प्राप्तिको लागि प्रयास गर्न छाडेर आफ्नू स्थानमै सत्पुरुषका मुखबाट निस्केको कथावार्ता सुनेर मन, वाणी र शरीरले तिनको सत्कार गर्दै जीवन-निर्वाह गर्दछन् । हे अजित ! त्रिलोकमा ती प्रायः हजुरलाई जितिलिन्छन् ॥ ३ ॥ हे विभो ! जो जन कल्याण-प्राप्तिको मार्गरूपिणी हजुरको भक्ति छाडेर केवल

ब्रह्मोवाच ॥ नौमीड्य तेऽभ्रवपुषे तडिदम्बराय गुञ्जावतंसपरिपिच्छलसन्मुखाय ॥ वन्यस्रजे कवलवेत्रविषाणवेणुलक्ष्मश्रिये मृदुपदे पशुपाङ्गजाय ॥ १ ॥ अस्यापि देव वपुषो मदनुग्रहस्य स्वेच्छामयस्य न तु भूतमयस्य कोऽपि ॥ नेशे महित्ववसितुं मनसाऽऽन्तरेण साक्षात्तवैव किमुतात्मसुखानुभूतेः ॥ २ ॥ ज्ञाने प्रयासमुदपास्य नमन्त एव जीवन्ति सन्मुखरितां भवदीयवार्ताम् ॥ स्थाने स्थिताः श्रुतिगतां तनुवाङ्मनोभिर्ये प्रायशोऽजित जितोऽप्यसि तैस्त्रिलोक्याम् ॥ ३ ॥ श्रेयःसृतिं भक्तिमुदस्य ते विभो क्लिश्यन्ति ते केवलबोधलब्धये ॥ तेषामसौ क्लेशल एव शिष्यते नान्यद्यथा स्थूलतुषावघातिनाम् ॥ ४ ॥ पुरेह भूमन्बहवोऽपि योगिनस्त्वदर्पितेहा निजकर्मलब्धया ॥ विबुध्य भक्त्यैव कथोपनीतया प्रपेदिरेऽञ्जोऽच्युत ते गतिं पराम् ॥ ५ ॥ तथापि भूमन्महिमागुणस्य ते विबोद्धुमर्हत्यमलान्तरात्मभिः ॥ अविक्रियात्स्वानुभवादरूपतो ह्यनन्यबोध्यात्मतया न चान्यथा ॥ ६ ॥ गुणात्मनस्तेऽपि गुणान्विमातुं हितावतीर्णस्य क ईशिरेऽस्य ॥ कालेन यैर्वा विमिताः सुकल्पैर्भूपांसवः खे मिहिका द्युभासः ॥ ७ ॥ तत्तेऽनुकम्पां सुसमीक्षमाणो भुञ्जान एवात्मकृतं विपाकम् ॥ हृद्वाग्वपुर्भिर्विदधन्नमस्ते जीवेत यो मुक्तपदे स दायभाक्

ज्ञानलाभको निम्ति क्लेश बोकछन्, तिनको निम्ति केवल कष्ट नै शेष रहन्छ—तिनलाई केही प्राप्त हुन्न । जस्तै धानको भुस कुट्नेलाई श्रमबाहेक केही मिल्दैन ॥४॥ हे अच्युत ! यस लोकमा अनेक योगीजन हजुरलाई आफ्नू लौकिक वैदिक कर्म अर्पण गरेर ती कर्म तथा-वार्ताबाट प्राप्त भक्तिद्वारा हजुरको सत्यस्वरूप जानेर सजिलै परमपद प्राप्त गरिसकेका छन् ॥५॥ यद्यपि हजुरका सगुण र निर्गुण दुवै रूपको महिमा जान्न कठिन छ, तापनि हजुरको निर्गुणरूपको महिमा त जसको अन्तःकरण शुद्ध, निर्मल भइसकेको छ, उनै पुरुष स्वयं प्रकाश आत्मरूपले जान्न सक्दछन्–कुनै अन्य प्रकारले होइन, किनकि हजुर निर्विकार स्वानुभवस्वरूप र इन्द्रियादिदेखि धेरै पर हुनुहुन्छ ॥ ६ ॥ हे प्रभो ! जसले धेरै समयपछि पृथ्वीका परमाणु, आकाशका हिमकण र नक्षत्रहरूलाई गनिसकेका छ–यस्ता कति पुरुष छन्, जो संसारको कल्याणार्थ अवतीर्ण हजुर सगुणका गुणहरू गन्नेछन् ॥ ७ ॥ अतः जो प्राणी 'हजुरको कृपा कहिले होला ?' यो उत्सुकताले वेलाको प्रतीक्षा गर्दै आफ्नो प्रारब्ध-फल भोग्दै रहन्छन् र मन, वाणी र शरीरले हजुरलाई नमस्कार गर्दै सानन्द जीवन

धारण गर्दछ, त्यही मुक्तिपदको अधिकारी हुन सक्तछ * ॥ ८ ॥ ब्रह्माजी भन्दछन्–हे प्रभो ! मेरो कुटिलता हेर्नुहवस् ! हजुर अनन्त, आदिपुरुष, परमात्मा र समस्त मायावीहरूलाई मोहित तुल्याउनु हुन्छ । तैपनि हजुरमाथि आफ्नू माया फिजाएर हजुरको ऐश्वर्य हेर्न खोजेको थिएँ । अहो ! आगोको अघिल्तिर झिल्का झैं म हजुरको साम्मुन्ने के गर्न सक्छु ? ॥९॥ हे अच्युत ! म रजोगुणबाट उत्पन्न हुनाले अज्ञानवश हजुरदेखि भिन्न स्वयं आफूलाई स्वामी मानेको थिएँ । 'म अजन्मा-जगत्कर्ता हूँ' यस्तो मदपूर्ण *अभिमानरूपी बाक्लो अन्धकारले मेरो विवेकरूपी नेत्र नष्ट भएका थिए । यसै निम्ति यो ठानेर कि म हुनाले नै यो संसार सनाथ भएको छ । अतः यसमा कृपया गर्नुगर्दछ । हजुर मेरो अपराध क्षमा गर्नोस्

॥ ८ ॥ पश्येश मेऽनार्यमनन्त आद्ये परात्मनि त्वय्यपि मायिमायिनि ॥ मायां वितत्येक्षितुमात्मवैभवं ह्यहं कियानैच्छमिवार्चिरग्नौ ॥ ९ ॥ अतः क्षमस्वाच्युत मे रजोभुवो ह्यजानतस्त्वत्पृथगीशमानिनः ॥ अजावलेपान्धतमोऽन्धचक्षुष एषोऽनुकम्प्यो मयि नाथवानिति ॥ १० ॥ क्वाहं तमोमहदहंखचराग्निवार्भूसंवेष्टिताण्डघटसप्तवितस्तिकायः ॥ क्वेदृग्विधाविगणिताण्डपराणुचर्यावाताध्वरोमविवरस्य च ते महित्वम् ॥ ११ ॥ उत्क्षेपणं गर्भगतस्य पादयोः किं कल्पते मातुरधोक्षजागसे ॥ किमस्तिनास्तिव्यपदेशभूषितं तवास्ति कुक्षेः कियदप्यनन्तः ॥ १२ ॥ जगत्त्रयान्तोदधिसम्प्लवोदे

॥१०॥ हे नाथ ! कहाँ प्रकृति, महत्तत्त्व, आकाश, वायु, अग्नि, जल र पृथ्वीरूपी आवरणहरूले ढाकिएको यो ब्रह्माण्ड नैजसकोसात कुरेनकोशरीर छ, त्यो म ? कहाँजसका रोमकूपरूपी झ्यालमा अगणित ब्रह्माण्ड परमाणु झैं आउने जाने गर्दछन्, त्यस्ता हजुरको महिमा ॥११॥ हे अधोक्षज ! गर्भमा स्थित बालकले खुट्टा उफारे आमाले त्यसको त्यो अपराध मान्लीं ? तथा 'छ' र 'छैन' यी शब्दले कहिने के कुनै यस्तो वस्तु छ, जो हजुरको भित्र विद्यमान नहोस् ? ॥१२॥ 'जुन बेला स्वर्ग, मर्त्य र पाताल तीनै लोकमा प्रलयकालीन जलमा

---

* उदाहरण—दुइ जना भक्त थिए । दुवै जना निकै तत्परताले ईश्वर-प्राप्तिका लागि आर धना गरिरहेका थिए । तिनमा यौटा अलि उत्ताउलो थियो, अर्को गम्भीर । यौटा वटवृक्षमुनि आसन जमाएर बसेको थियो भने अर्को अमिलीको रूखमुनि । एक दिन डुल्दै नारदजी त्यतैबाट जाँदा पहिले बटवृक्ष निर बस्ने भक्तकहाँ गए । उसले मुनिको सत्कार गरेर निकै आतुरताले सोध्यो–'मलाई भगवान् कहिले दर्शन दिनुहुन्छ ?' नारदजीले भने—'भजन गर्दै गर । यस वटवृक्षमा जति पात छन् त्यति नै वर्षपछि भगवान्ले दर्शन दिनेछन् ।' यति सुन्दा त्यसको पैतले ठाउँ छाड्यो । उसले भन्यो—'भयो, मलाई चाहिएन यस्तो ईश्वरको दर्शन । यो वटवृक्षमा जति पात छन्, उति वर्षसम्म यो कष्ट सहनु पर्ने हो ।' अनि त्यसले लट्ठी र कमण्डलु फ्याँक्यो र फेरि परन्दहरुथीमा लाग्यो । त्यहाँबाट नारदजी अमिलीको वृक्षमुनि बस्ने भक्तकहाँ पुगे । उसले पनि मुनिको पूजा र सत्कार गरेर सोध्यो–'भगवन् ! ममाथि भगवान्को कहिले कृपा होला ?' नारदजीले भने–यस अमिलीको वृक्षमा जति पात छन्, त्यति वर्षपछि । त्यति सुन्नासाथ भक्त आनन्द विभोर भएर नाच्नलाग्यो । उसलाई आफ्नो शरीरको पनि ध्यान रहेन । उसै बखत भगवान् ती भक्तको अगाडि प्रकट भए र त्यसलाई काखमा बोकेर आफ्नू लोक लैजानुभयो । नारदले सं.धे—'प्रभो ! यो के भयो ?' भगवान्ले भन्नुभयो–'तिमीले भनेको समय बढी हो ।'

◎ दृष्टान्त नारदको अभिमान भंग भयो )—नारदजीलाई 'म जस्तो भगवद्भक्त अरू कोही छैन' भन्ने अभिमान थियो । यो कुरा भगवान्ले थाहा पाउनु भयो । अनि नारदजीलाई सँगै लिएर एक दिन जङ्गलमा डुल्न जानुभयो । त्यहाँ यौटा दुर्बल ब्राह्मण कम्मरमा तरवार लिएर सुकेका पात चपाइरहेको थियो । नारदले विचार गरे–यो सुकेका पात खाइरहेको छ, तर हरियो पात छिप्दैन त्यो कति ठूलो अहिंसक रहेछ । तर अर्कोतिर हिंसाको साधन स्वरूप तरवार पनि बाँधिरहेको छ ।' नारदले त्योसित सोधे–'तिमीले यो तरवार किन बाँधिराखेका हौ ?' उसले उत्तर दियो —'यो तरवार भगवान्का तीन जना शत्रुलाई मार्न बाँधेको हुँ ।' नारदजीले फेरि सोधे— ती तीन जना को-को हुन् ?' ब्राह्मणले भने–'यौटा अर्जुन, जसले हाम्रा भगवान्लाई सारथि तुल्यायो । दोस्रो द्रौपदी–जसले हाम्रा भगवान्सित साडी मागी । तेस्रो नारदजी हाम्रा प्रभुलाई एक दिन रातरी तास फेरेर बस्न पनि दिदैनन् ।' नारदजी ब्राह्मणका कुरा सुनेर चुपलागे र भगवान्ले ब्राह्मण-भक्तलाई तत्काल दर्शन दिएर कृतार्थ पार्नुभयो ।

होइन ? ॥१३॥ हे सबैका अधीश्वर ! सम्पूर्ण जीवका आत्मा र सम्पूर्ण लोकहरूमा साक्षी हुनाले के हजुर नै नारायण नामले विख्यात हुनुहुन्न ? नरबाट उत्पन्न जलमा निवासगर्नाले उसको नारायण संज्ञा छ, त्यो पनि हजुरको नै अंश हो, किन्तु हजुर जल आदि कुनै एक देशमा स्थित हुनु पनि वास्तविक होइन, त्यो हजुरकी माया नै हुन् ॥१४॥ यदि हजुरको यो विराट् स्वरूप साँच्चै नै जलमा थियो भने त्यस बेला कमलनालको बाटोमा जलबाट सय वर्षसम्म अत्यन्त खोज्दा पनि मैले त्यसलाई किन देख्न सकिन ? फेरि तपस्या गरेपछि तत्काल आफ्नो हृदयमा नै मलाई उसको दर्शन कसरी प्राप्त भयो ? फेरि तुरुन्त त्यो अन्तर्धान किन भयो ? यो हजुरकी मायाको नै प्रभाव हो भन्ने ज्ञात भइरहेको छ ॥१५॥ हे माया-नाशक ! हजुरले यस अवतारमा पनि बाहिर स्पष्टरूपमा उद्भासित हुने यो जगत् आफ्नी आमाको उदरमा देखाएर यसको माया प्रकट गरिदिएको छ ॥१६॥ जब कि हजुर

नारायणस्योदरनाभिनालात् ॥ विनिर्गतोऽजस्त्विति वाङ् न वै मृषा किन्त्वीश्वर त्वन्न विनिर्गतोऽस्मि ॥ १३ ॥ नारायणस्त्वं न हि सर्वदेहिना-मात्मास्यधीशाखिललोकसाक्षी ॥ नारायणोऽङ्ग नरभूजलायनात्तच्चापि सत्यं न तवैव माया ॥ १४ ॥ तच्चेज्जलस्थं तव सज्जगद्वपुः किं मे न दृष्टं भगवँस्तदैव ॥ किं वा सुदृष्टं हृदि मे तदैव किं नो सपद्येव पुनर्व्यदर्शि ॥ १५ ॥ अत्रैव मायाधमनावतारे ह्यस्य प्रपञ्चस्य बहिः स्फुटस्य ॥ कृत्स्नस्य चान्तर्जठरे जनन्या मायात्वमेव प्रकटीकृतं ते ॥१६॥ यस्य कुक्षाविदं सर्वं सात्मं भाति यथा तथा ॥ तत्त्वय्यपीह तत्सर्वं किमिदं मायया विना ॥ १७ ॥ अद्यैव त्वदृतेऽस्य किं मम न ते मायात्वमादर्शितमेकोऽसि प्रथमं ततो व्रजसुहृद्वत्साः समस्ता अपि ॥ तावन्तोऽसि चतुर्भुजास्तद-खिलैः साकं मयोपासितास्तावन्त्येव जगन्त्यभूस्तदमितं ब्रह्माद्वयं शिष्यते ॥ १८ ॥ अजानतां त्वत्पदवीमनात्मन्यात्मात्मना भासि वितत्य मायाम् ॥ सृष्टाविवाहं जगतो विधान इव त्वमेषोऽन्त इव त्रिनेत्रः ॥ १९ ॥ सुरेष्वृषिष्वीश तथैव नृष्वपि तिर्यक्षु यादःस्वपि तेऽजनस्य ॥ जन्मासतां दुर्मदनिग्रहाय प्रभो विधातः सदनुग्रहाय च ॥ २० ॥ को वेत्ति भूमन्भगवन्परात्मन्योगेश्वरोतीर्भवतस्त्रिलोक्याम् ॥ क्व वा कथं वा

समेत सम्पूर्ण विश्व जस्तो बाहिर देखिन्छ, त्यस्तै हजुरको उदरमा पनि प्रतीत भयो भने के यो सबै हजुरको माया नभएर नै प्रतीत भएको थियो ? ॥ १७ ॥ यस बखत पनि के हजुरले मलाई आफू बाहेक अखिल विश्वको माया र मोह देखाउनु भएको होइन ? पहिले हजुर एक्लै हुनुहुन्थ्यो, फेरि सबै ग्वालबाल र बाछा पनि स्वयं बन्नुभयो, उसपछि मैले देखें-हजुरका यी सबै मूर्ति चतुर्भुज छन् र म समेत सबै तत्त्वहरूले सेवित छन् । हजुरले भिन्न-भिन्न उतिनै ब्रह्माण्डको रूप पनि धारण गर्नुभयो । अब अन्त्यमा फेरि आफ्नो अपरिमित अद्वितीय ब्रह्मरूपले केवल हजुर नै अवशिष्ट रहनु भएको छ ॥ १८ ॥ जो व्यक्ति अज्ञानवश हजुरको स्वरूप जान्दैनन्, उनैलाई अनात्मामा स्थित आत्मरूप तीयाथि मायाको पर्दाले ढाकेर सृष्टिको बेला मेरो रूपले, पालनकालमा विष्णुरूपले र संहारको बेला त्रिनयन शिवको रूपमा भासमान हुनुहुन्छ ॥१९॥ हे जगन्नियन्ता प्रभो ! हे विधाता ! हजुर अजन्मा हुनुहुन्छ, तैपनि देवता, ऋषि, मनुष्य, तिर्यक् र जल-थलचरादि योनिहरूमा हजुरका अवतार हुन्छन् । ती असत्पुरुषका मदको मन्थन र सत्पुरुष हरूमा कृपा गर्नको निम्ति नै हुँदै

रहन्छन् ॥२०॥ हे भगवन् ! हजुर सर्वव्यापक र परमात्मा योगेश्वर हुनुहुन्छ । जुन आफ्नो योगमायाको विस्तार गरेर क्रीडा गर्नुहुन्छ त्यस बेला त्रिलोकमा यस्तो कुन छ, जो यो जान्न सकोस्–हजुरको लीला कहाँ, कसरी र कहिले हुन्छ ? ॥ २१ ॥ अतः यो सम्पूर्ण जगत् स्वप्न जस्तै असत्, ज्ञानशून्य र उत्तरोत्तर दुःखमय छ । यो मायाले उत्पन्न भए पनि नित्यानन्दस्वरूप हजुर अनन्तमा स्थित हुनाले गर्दा यो सत्य जस्तै प्रतीत हुन्छ ॥ २२ ॥ हजुर संसारका एकमात्र पुराण-पुरुष, सत्य तथा स्वयंप्रकाश, अनन्त, आदिपुरुष, नित्य, अक्षर, निरन्तर सुख-स्वरूप, निरञ्जन, परिपूर्ण, अद्वितीय, उपाधिरहित र अमृतरूप हुनुहुन्छ ॥२३॥ उपर्युक्त सबै महिमाहरूले युक्त हजुर परमात्मालाई जो जन सबै प्राणिहरूका आत्मा जानेर सूर्यस्वरूप गुरुबाट प्राप्त उपनिषद्रूपी ज्ञाननेत्र द्वारा आत्मारूपले देख्दछन्, ती यस असत्य संसार-सागरलाई तर्दछन् ॥ २४ ॥ जो पुरुष आत्मालाई आत्मा मान्दैन, तिनलाई यस अज्ञानले नै यो सबै प्रपञ्च सत्य प्रतीत हुन्छ । ज्ञान हुनासाथ यो अज्ञान विलीन भएर जान्छ । जस्तै डोरीमा भ्रमवश प्रतीत हुने सर्प भ्रम नष्ट हुनासाथ हराउँछ ॥२५॥

क्रति वा कदेति विस्तारयन्क्रीडसि योगमायाम् ॥ २१ ॥ तस्मादिदं जगदशेषमसत्स्वरूपं स्वाप्नाभमस्तधिषणं पुरुदुःखदुःखम् ॥ त्वय्येव नित्यसुखबोधतनावनन्ते मायात उद्यदपि यत्सदिवावभाति ॥ २२ ॥ एकस्त्वमात्मा पुरुषः पुराणः सत्यः स्वयंज्योतिरनंत आद्यः ॥ नित्योऽक्षरोऽजस्रसुखो निरञ्जनः पूर्णोऽद्वयो मुक्त उपाधितोऽमृतः ॥ २३ ॥ एवंविधं त्वां सकलात्मनामपि स्वात्मानमात्मात्मतया विचक्षते ॥ गुर्वर्कलब्धोपनिषत्सुचक्षुषा ये ते तरन्तीव भवानृताम्बुधिम् ॥ २४ ॥ आत्मानमेवात्मतयाऽविजानतां तेनैव जातं निखिलं प्रपञ्चितम् ॥ ज्ञानेन भूयोऽपि च तत्प्रलीयते रज्ज्वामहेर्भोगभवाभवौ यथा ॥ २५ ॥ अज्ञानसंज्ञौ भवबन्धमोक्षौ द्वौ नाम नान्यौ स्त ऋतज्ञभावात् ॥ अजस्रचित्यात्मनि केवले परे विचार्यमाणे तरणाविवाहनी ॥२६॥ त्वामात्मानं परं मत्वा परमात्मानमेव च ॥ आत्मा पुनर्बहिर्मृग्य अहोऽज्ञजनताऽज्ञता ॥ २७ ॥ अन्तर्भवेऽनंत भवंतमेव ह्यतत्त्यजन्तो मृगयन्ति सन्तः ॥ असंतमप्यंत्यहिमंतरेण संतं गुणं तं किमु यंति सन्तः ॥ २८ ॥ अथापि ते देव पदाम्बुजद्वयप्रसादलेशानुगृहीत एव हि ॥ जानाति तत्त्वं भगवन्महिम्नो न चान्य एकोऽपि चिरं विचिन्वन् ॥ २९ ॥ तदस्तु मे नाथ स भूरिभागो भवेऽत्र वान्यत्र तु वा तिरश्चाम् ॥ येनाहमेकोऽपि भवज्जनानां भूत्वा निषेवे तव पादपल्लवम् ॥ ३० ॥ अहोऽतिधन्या व्रजगोरमण्यः स्तन्यामृतं पीतमतीव

जसको संज्ञा अज्ञानले नै कल्पित छ, ती संसार-सम्बन्धी बन्धन र मोक्ष दुवै नै सत्य र ज्ञानस्वरूप परमात्माबाट अलग्ग छैनन् । जस्तै सूर्यमा दिन र रात्रिको अभाव छन् त्यस्तै नै विचार गर्दा अखण्डचेतनस्वरूप अद्वितीय परमात्मामा बन्धन र मोक्षको भाव रहन्न ॥ २६ ॥ अहो ! अज्ञानता छ–हजुर आत्मालाई अन्य मानेर अरु देहादिलाई आत्मा मानेर सत्य आत्मालाई बाहिर खोज्दछन् ॥ २७ ॥ हे अनन्त ! सन्तजन अनात्म वस्तुको त्याग गर्दै आफ्नू अन्तःकरणमा विराजमान हजुरलाई खोज्दछन्, किनकि ती सन्तजन डोरीको स्पर्श नभएर पनि के असत् सर्पको बाध नगरीकन सत्य डोरीलाई जान्न सक्छन् ? ॥ २८ ॥ यस्तो भएर पनि हे देव ! जो प्राणी हजुरका चरणकमल युगललाई लेशमात्र प्रसादले अनुगृहीत हुन्छ, त्यही हजुरको महिमाको तत्त्व, प्रभाव जान्न सक्छ । अर्को धेरै कालसम्म खोजी गर्दै रहे पनि जान्न सक्दैन ॥ २९ ॥ अतएव हे प्रभो ! मलाई यस्तो

यज्ञले जसको तृप्ति गर्न सकेनन्, उनै परमेश्वरले जसका स्तनको दुग्धामृत बाछा र बालकरूपले आनन्दपूर्वक पिए, ती व्रजका गाई र ग्वालिनीहरू सबै परम धन्य हुन् ॥ ३१ ॥ अहो ! नन्दादि व्रजवासी गोप धन्य हुन्, जसका सुहृद् परमानन्दस्वरूप सनातन पूर्णब्रह्म हजुर हुनुहुन्छ ॥ ३२ ॥ हे अच्युत ! यी व्रजवासीहरूको सौभाग्यको महिमा त भिन्नै रहोस्—म, शिवजी आदि एघार इन्द्रियाधिष्ठाता देवताहरूको पनि ठूलो भाग्य रहेछ, जो मन आदि एघार इन्द्रियहरूलाई कचौरा तुल्याएर हजुरका अमृतमयी मधुर मदिरा पिउँछौं ॥ ३३ ॥ यस व्रजभूमिको कुनै वनमा र त्यसमा पनि गोकुलमा जन्म पाउनु परम सौभाग्य हो, जसले कहिले कुनै गोकुलवासीका चरणरजले अभिषिक्त हुने अवसर पाइन्छ किनकि जसको पदरजलाई श्रुति आज पनि खोज्दै रहन्छन्, ती हजुर भगवान् मुकुन्द नै यी व्रजबालाहरूका एकमात्र आधार, स्वामी हुनुहुन्छ ॥ ३४ ॥ हे देव !

ते मुदा ॥ यासां विभो वत्सतरात्मजात्मना यत्तृप्तयेऽद्यापि न चालमध्वराः ॥ ३१ ॥ अहो भाग्यमहो भाग्यं नंदगोपव्रजौकसाम् ॥ यन्मित्रं परमानन्दं पूर्णं ब्रह्म सनातनम् ॥ ३२ ॥ एषां तु भाग्यमहिमाऽच्युत तावदास्तामेकादशैव हि वयं बत भूरिभागाः ॥ एतद्धृषीकचषकैरसकृत्पिबामः शर्वादयोऽङ्घ्र्युदजमध्वमृतासवं ते ॥ ३३ ॥ तद्भूरिभाग्यमिह जन्म किमप्यटव्यां यद्गोकुलेऽपि कतमाङ्घ्रिरजोऽभिषेकम् ॥ यज्जीवितं तु निखिलं भगवान् मुकुन्दस्त्वद्यापि यत्पदरजः श्रुतिमृग्यमेव ॥ ३४ ॥ एषां घोषनिवासिनामुत भवान्किं देव रातेति नश्चेतो विश्वफलात्फलं त्वदपरं कुत्राप्ययन् मुह्यति ॥ सद्वेषादिव पूतनाऽपि सकुला त्वामेव देवापिता यद्धामार्थसुहृत्प्रियात्मतनयप्राणाशयास्त्वत्कृते ॥ ३५ ॥ तावद्रागादयः स्तेनास्तावत्कारागृहं गृहम् ॥ तावन्मोहोऽङ्घ्रिनिगडो यावत्कृष्ण न ते जनाः ॥ ३६ ॥ प्रपञ्चं निष्प्रपञ्चोऽपि विडम्बयसि भूतले ॥ प्रपन्नजनतानन्दसन्दोहं प्रथितुं प्रभो ॥ ३७ ॥ जानंत एव जानन्तु किं बहूक्त्या न मे प्रभो ॥ मनसो वपुषो वाचो वैभवं तव गोचरम् ॥ ३८ ॥ अनुजानीहि मां कृष्ण सर्वं त्वं वेत्सि सर्वदृक् ॥ त्वमेव जगतां नाथो जगदेतत्तवार्पितम् ॥ ३९ ॥ श्रीकृष्ण वृष्णिकुलपुष्कर जोषदायिन् क्ष्मानिर्जरद्विजपशूदधि·

यी व्रजवासीहरूलाई इनका सेवाको साटो हजुर के फल बक्सिन्छ ? सम्पूर्ण फलका फलरूप हजुरको स्वरूप भन्दा बढ्ता अरु कुनै फल नदेखिनाले हाम्रो चित्त मोहित भइरहेछ । यदि म उनलाई आफ्नो स्वरूपनै दिएर अऋणी हुनेछु भने पनि हजुरको स्वरूपलाई त नारी वेष तुल्याएर आएकी पूतनाले पनि आफ्ना सम्बन्धी ( अघासुर-बकासुर ) सहित प्राप्त गरिसकेकी थिई । फेरि जसले आफ्नो घर, धन, स्वजन, प्रिय, शरीर, पुत्र, प्राण र मन सबै हजुरलाई नै अर्पण गरिदिएका छन्, ती व्रजवासीहरूलाई पनि त्यही फल दिएर हजुर अऋणी कसरी हुने ? ॥ ३५ ॥ हे कृष्ण ! जबसम्म मनुष्य हजुरको भक्त बन्दैन, तबसम्म उसको लागि राग-द्वेषादि चोर झैं, घर झ्यालखाना झैं र मोह नेल ठोकिएको समान ॥३६॥ हे प्रभो ! निष्प्रपञ्च भएर पनि हजुर आफ्ना शरणागत भक्तका आनन्द राशि बढाउनु संसारमा अवतार लिएर प्रपञ्चको अनुसरण गर्नुहुन्छ ॥ ३७ ॥ हे स्वामिन् ! धेरै भनेर के हुन्छ, जो जन हजुरको वैभव जान्दछन्, ती जान्दैरहुन् । हजुरको वैभव त मेरो मन, वाणी र शरीरको विषय होइन॥३८॥ हे कृष्णचन्द्र ! अब मलाई आज्ञा दिनोस् । हजुर समदर्शी

हुनुहुन्छ, त्यसैले सबै जान्नुहुन्छ । हजुर नै सम्पूर्ण जगत्का स्वामी हुनुहुन्छ । यी सबै प्रपञ्च हजुरमै स्थित छन् ॥ ३९ ॥ हे कृष्ण ! हजुर वृष्णिकुलकमललाई विकसित पार्ने (सूर्य) तथा पृथ्वी, देवता, ब्राह्मण र पशुरूपी समुद्रलाई बढाउने चन्द्रमा हुनुहुन्छ । हजुर पाखण्ड-धर्मरूपिणी रात्रिलाई नष्ट पार्न, पृथ्वीमा राक्षसहरूसित द्वेष गर्ने र सूर्यपर्यन्त समस्त देवताका पूज्य पिता हुनुहुन्छ । हे भगवन् ! हजुरलाई कल्पपर्यन्त नमस्कार छ ॥ ४० ॥ श्रीशुकदेव भन्नुहुन्छ ! यसरी स्तुति गरेर ब्रह्माजीले लीलाको निम्ति नै अवतीर्ण सर्वव्यापक भगवान् कृष्णको तीन परिक्रमा गरेर उनका चरण-कमलाई प्रणाम गरी आफ्नो लोक फर्किए ॥ ४१ ॥ ब्रह्मालाई विदा गरेर कृष्णचन्द्र उनैद्वारा पहिले नै उपस्थित गरिएका बाछाहरू लिएर यमुनाको जुन बालुवामा आफ्ना अघिका सखाहरूलाई छाडेर गएका थिए, त्यहीं आए ॥ ४२ ॥ हे राजन् ! ती बालकहरूका प्राणाधार कृष्णको वियोगमा एक वर्ष बितेको थियो, तापनि भगवान्को मायाले मोहित हुनाले तिनलाई त्यो समय आधा क्षण झैं प्रतीत भयो ॥ ४३ ॥ जोसित मोहित भएर सारा जगत् निरन्तर आफ्नो आत्मालाई बिर्सेको

वृद्धिकारिन् ॥ उद्धर्मशार्वरहर क्षितिराक्षसध्रुगाकल्पमार्कभगवन्नमस्ते ॥ ४० ॥ श्रीशुक उवाच ॥ इत्यभिष्टूय भूमानं त्रिः परिक्रम्य पादयोः ॥ नत्वाऽभीष्टं जगद्धाता स्वधाम प्रत्यपद्यत ॥ ४१ ॥ ततोऽनुज्ञाप्य भगवान्स्वभुवं प्रागवस्थितान् ॥ वत्सान्पुलिनमानिन्ये यथापूर्वसखं स्वकम् ॥४२॥ एकस्मिन्नपि यातेऽब्दे प्राणेशं चान्तरात्मनः ॥ कृष्णमायाहता राजन्क्षणार्धं मेनिरेऽर्भकाः ॥ ४३ ॥ किं किं न विस्मरन्तीह मायामोहितचेतसः ॥ यन्मोहितं जगत्सर्वमभीक्ष्णं विस्मृतात्मकम् ॥४४॥ ऊचुश्च सुहृदः सर्वे स्वागतं तेऽतिरंहसा ॥ नैकोऽप्यभोजि कवल एहीतः साधु भुज्यताम् ॥४५॥ ततो हसन्हृषीकेशोऽभ्यवहृत्य सहार्भकैः दर्शयँश्चर्माजगरं न्यवर्तत वनाद्व्रजम् ॥ ४६ ॥ बर्हप्रसूननवधातुविचित्रिताङ्गः प्रोद्दामवेणुदलशृङ्गरवोत्सवाढ्यः ॥ वत्सान्गृणन्ननुगगीतपवित्रकीर्तिर्गोपीदृगुत्सवदृशिः प्रविवेश गोष्ठम् ॥ ४७ ॥ अद्यानेन महाव्यालो यशोदानन्दसूनुना ॥ हतोऽविता वयं चास्मादिति बाला व्रजे जगुः ॥४८॥ राजोवाच ॥ ब्रह्मन्परोद्भवे कृष्णे इयान्प्रेमा कथं भवेत् ॥ योऽभूतपूर्वस्तोकेषु स्वोद्भवेष्वपि कथ्यताम् ॥४९॥ श्रीशुक उवाच ॥ सर्वेषामपि भूतानां नृपः स्वात्मैव वल्लभः ॥ इतरेऽपत्यवित्ताद्यास्तद्वल्लभतयैव हि ॥ ५० ॥ तद्राजेन्द्र यथा स्नेहः स्वस्वकात्मनि

छ, त्यो मायाले जसको चित्त मोहित पारेको छ, ती के-के भूल गर्न सक्तैनन् ॥ ४४ ॥ भगवान् कृष्णलाई देख्नासाथ बालकहरूले भने—हे भाई ! तिमी त खूब आयौ, हामीले त तिमी नहुनाले एक गाँस पनि खाएका छैनौं । यता आऊ, बसेर आनन्दले खाऊ ॥ ४५ ॥ अनि हाँस्तै भगवानले सखाहरूसित भोजन गरे र उनलाई अजिंगर (अघासुर) को कंकाल देखाउँदै वनबाट व्रजमा फर्किए ॥ ४६ ॥ अनि जसको शरीर मयूरपंख, पुष्प र गेरु आदि धातुले चित्रित थियो, जो आफ्नो बाँसुरी र नरसिंघाको उच्च स्वरले सबैको चित्तमा उल्लास बढाइरहेथे, भक्तजन जसको पवित्र कीर्तिगान गर्दछन् र जो आफ्नू दर्शनले गोपीजनका नेत्रलाई आनन्दित पार्दथे ती कृष्णले बाछाहरूको नाम लिएर डाक्दै आफ्नू गोठमा प्रवेश गरे ॥ ४७ ॥ त्यसै दिन बालकहरूले व्रजमा गएर भने—आज यी नन्द-यशोदाका पुत्र कृष्णले वनमा ठूलो अजिङ्गर मारेर हाम्रो रक्षा गरे ॥ ४८ ॥ राजा परीक्षितले सोधे—हे भगवन् ! अब यो भन्नोस्—अर्काका छोरा कृष्णमा व्रजवासी र ग्वाल-बालहरूको त्यस्तो प्रेम किन भयो, जस्तो कि तिनलाई आफ्नै छोरामा पनि

दिएन ? ॥ ४९ ॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! समस्त प्राणीलाई आफ्नू आत्मा नै सबभन्दा बढ्ता प्रिय हुन्छ र पुत्र-वित्तादि त त्यसैको प्रिय हुनाले नै प्रिय हुन्छन् ॥ ५० ॥ अतः हे राजन् ! देहधारीहरूको जस्तो आफूमा प्रेम हुन्छ, त्यस्तो आफ्ना कहिने पुत्र, धन र घर आदिमा हुँदैन ॥ ५१ ॥ हे क्षत्रियश्रेष्ठ ! देहात्मवादी पुरुषहरूलाई पनि देह जति प्रिय हुन्छ, त्यति तीसित सम्बद्ध पुत्र-मित्रादि प्रिय हुँदैनन् ॥ ५२ ॥ जब विवेक भएर देह नै ममत्वको पात्र बन्दछ, तब यो आत्मा समान प्रिय रहन्न, नभए त यो देह जराग्रस्त भएर पनि बाँच्ने आशा प्रबल किन बनिरहन्थ्यो ? ॥ ५३ ॥ अतएव सबै देहधारीहरूलाई आफ्नू आत्मा नै सबभन्दा बढ्ता प्रिय छ र उसैको निम्ति यो समस्त चराचर जगत् प्रिय प्रतीत हुन्छ ॥ ५४ ॥ हे राजन् ! यी कृष्णलाई नै तिमी समस्त आत्मा ( जीवका ) आत्मा अर्थात् परमात्मा ठान । यी सबै संसारको कल्याणका लागि नै मायामय देहधारी समान देखिन्छन् ॥ ५५ ॥ जो वास्तविक तत्त्वलाई जान्दछन् तिनको दृष्टिमा स्थावर-जङ्गम सबै जीव कृष्णरूप नै देखिन्छन् । सम्पूर्ण जगत कृष्णमय छ । कृष्णबाहेक कुनै पनि वस्तु

देहिनाम् ॥ न तथा ममतालम्बिपुत्रवित्तगृहादिषु ॥ ५१ ॥ देहात्मवादिनां पुंसामपि राजन्यसत्तम ॥ यथा देहः प्रियतमस्तथा न ह्यनुये च तम् ॥५२॥ देहोऽपि ममताभाक्चेत्तर्ह्यसौ नात्मवत्प्रियः यज्जीर्यत्यपि देहेऽस्मिञ्जीविताशा बलीयसी ॥ ५३ ॥ तस्मात्प्रियतमः स्वात्मा सर्वेषामपि देहिनाम् ॥ तदर्थमेव सकलं जगदेतच्चराचरम् ॥ ५४ ॥ कृष्णमेनमवेहि त्वमात्मानमखिलात्मनाम् ॥ जगद्धिताय सोऽप्यत्र देहीवाभाति मायया ॥ ५५ ॥ वस्तुततो जानतामत्र कृष्णं स्थास्नु चरिष्णु च ॥ भगवद्रूपमखिलं नान्यद्वस्त्विह किञ्चन ॥ ५६ ॥ सर्वेषामपि वस्तूनां भावार्थो भवति स्थितः ॥ तस्यापि भगवान्कृष्णः किमतद्वस्तु रूप्यताम् ॥ ५७ ॥ समाश्रिता ये पदपल्लवप्लवं महत्पदं पुण्ययशो मुरारेः ॥ भवाम्बुधिर्वत्सपदं परं पदं पदं पदं यद्विपदां न तेषाम् ॥५८॥ एतत्ते सर्वमाख्यातं यत्पृष्टोऽहमिह त्वया ॥ यत्कौमारे हरिकृतं पौगण्डे परिकीर्तितम् ॥ ५९ ॥ एतत्सुहृद्भिश्चरितं मुरारेरघार्दनं शाद्वलजेमनं च ॥ व्यक्तेतरद्रूपमजोर्वभिष्टवं शृण्वन्गृणन्नेतिनरोऽखिलार्थान् ॥६०॥ एवं विहारैः कौमारैः कौमारं जहतुर्व्रजे ॥ निलायनैः सेतुबन्धैर्मर्कटोत्प्लवनादिभिः ॥ ६१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे ब्रह्मस्तुतिर्नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥

आफ्ना कारणरूपले स्थित छन् र भगवान् श्रीकृष्ण त्यस कारणका पनि कारण हुन्, अनि यी सबै वस्तु कृष्णरूप बाहेक अरु के हुन् ? ॥ ५७ ॥ अतः यस अनित्य संसारमा जसले पुण्यकीर्ति श्रीकृष्णका चरणकमलरूपी डुङ्गाको—जुन महापुरुषको आधार हो—आश्रय लिए, तिनको निम्ति यो संसार-समुद्र बाछाको खुर समान छ र परमपद नै उनको पाउ हो । जो विपत्तिको पद ( स्थान ) छ, त्यस संसारमा उनले कहिल्यै आउनुपर्दैन ॥ ५८ ॥ हे राजन् ! तिमीले जे सोधेका थियौ—'भगवान्ले जुन कर्म कौमारावस्थामा गरेका थिए, त्यो बालकहरूले उनको पौगण्डावस्थामा व्रजमा गएर कसरी भने ?' यो रहस्य तिमीलाई बुझाएँ ॥ ५९ ॥ जो यो ग्वाल-बालसित वनक्रीडा, अघासुरको दमन, हरियो-हरियो घाँसले युक्त भूमिमा बसेर खानेकुरा खाएको, जड प्रपञ्चदेखि भिन्न शुद्ध सत्त्वमय बाछा र बालकहरूको रूप धारण गर्नु तथा ब्रह्माजीले गरेको महती स्तुति आदि लीलाहरू सुन्दछ या भन्दछ, त्यसका सबै कामना पूर्ण हुन्छन् ॥ ६० ॥ हे महाराज ! यसरी श्रीबलराम र कृष्णचन्द्रले खेल खेल्नु, पुल बनाउनु, बाँदर झैं उफ्रनु तथा हाम्फाल्नु

आदि बालसुलभ लीलाहरू गर्दै ब्रजमा कुमारावस्था बिताए ॥६१॥ इति श्रीमद्भागवते दशमस्कन्धे 'बासिष्ठी' भाषाटीकायां चतुर्दशोऽध्यायः ॥१४॥

(कृष्णले गाई चराउनु, धेनुक वध र कालीय नागको विषबाट बालकहरूको मुक्ति)—श्री शुकदेव भन्नुहुन्छ—हे राजन् ! पौगण्ड अर्थात् पाँच वर्षभन्दा बढी अवस्थामा प्रवेश गरेपछि बलराम र कृष्ण ब्रज-भूमिमा गाई चराउने योग्य मानिए । अनि ती आफ्ना मित्र ग्वालबालसित गाई चराउँदै आफ्ना चरण-चिह्नले वृन्दावन पवित्र पार्नलागे ॥१॥ एक दिन आफ्नो सुयश गान गर्ने ग्वालबालले घेरिएर श्रीकृष्ण वन विहार गर्ने इच्छाले दाजु सहित बंशी बजाउँदै गाईहरू अघिलाएर यौटा पुष्प-प्रचुर बनमा प्रवेश गरे, जहाँ पशुहरूले चर्ने सबै प्रकारले राम्रा थियो ॥२॥ त्यस वनलाई गुञ्जार गर्ने भ्रमर, मृग र पक्षिहरूले पूर्ण, महात्माहरूको चित्त झैं स्वच्छ जलका सरोवरले युक्त र कमलगन्ध-सुरभित वायुले मनोरम देखेर भगवान्ले त्यहीं क्रीडा गर्ने निधो गरे ॥३॥ ती आदि पुरुष भगवान्ले ठाउँठाउँ नवपल्लवको तरुण कान्ति र फल-फूलका भारले न्हुरेर चरण स्पर्श गर्ने

श्रीशुक उवाच ॥ ततश्च पौगण्डवयःश्रितौ व्रजे बभूवतुस्तौ पशुपालसम्मतौ ॥ गाश्चारयन्तौ सखिभिः समं पदैर्वृन्दावनं पुण्यमतीव चक्रतुः॥१॥ तन्माधवो वेणुमुदीरयन्वृतो गोपैर्गृणद्भिः स्वयशो बलान्वितः ॥ पशून्पुरस्कृत्य पशव्यमाविशद्विहर्तुकामः कुसुमाकरं वनम् ॥ २ ॥ तन्मञ्जुघोषालि-मृगद्विजाकुलं महन्मनःप्रख्यपयःसरस्वता ॥ वातेन जुष्टं शतपत्रगन्धिना निरीक्ष्य रन्तुं भगवान्मनो दधे ॥ ३ ॥ स तत्रतत्रारुणपल्लवश्रिया फलप्रसूनोरुभरेण पादयोः ॥ स्पृशच्छिखान्वीक्ष्य वनस्पतीन्मुदा स्मयन्निवाहाग्रजमादिपूरुषः ॥ ४ ॥ श्रीभगवानुवाच ॥ अहो अमी देववरामरार्चितं पादाम्बुजं ते सुमनःफलार्हणम् ॥ नमन्त्युपादाय शिखाभिरात्मनस्तमोऽपहत्यै तरुजन्म यत्कृतम् ॥ ५ ॥ एतेऽलिनस्तव यशोऽखिललोकतीर्थं गायन्त आदिपुरुषानुपदं भजन्ते ॥ प्रायो अमी मुनिगणा भवदीयमुख्या गूढं वनेऽपि न जहत्यनघात्मदैवम् ॥ ६ ॥ नृत्यन्त्यमी शिखिन ईड्य मुदा हरिण्यः कुर्वन्ति गोप्य इव ते प्रियमीक्षणेन ॥ सूक्तैश्च कोकिलगणा गृहमागताय धन्या वनौकस इयान्हि सतां निसर्गः ॥ ७ ॥ धन्येयमद्य धरणी

शाखाग्रहरूले युक्त वृक्षहरू देखेर आफ्ना दाजु बलरामसित मुसु-मुसु हाँस्तै भने ॥ ४ ॥ श्रीभगवान् भन्नुहुन्छ—हे देवश्रेष्ठ ! यी वृक्ष जुन कारले यिनलाई वृक्षयोनि प्राप्त भएको छ, सो पाप नष्ट पार्नको निम्ति आफ्ना हाँगाद्वारा फल-फूल आदि पूजा-सामग्री लिएर हजुरका चरणकमलको पूजा, प्रणाम गर्दैछन्॥५॥हे आदि पुरुष ! यी भ्रमर सम्पूर्ण लोकलाई पवित्र पार्ने तीर्थस्वरूप हजुरको गुण-गान गर्दै हजुरलाई नै भज्दछन् । हे अनघ ! वास्तवमा यी हजुरका भक्त मुनिगण हुन्, यो वनमा गूढभावले रहेर आफ्ना इष्टदेव हजुरलाई यहाँ पनि छोड्न मन गर्दैनन् ॥६॥ हे स्तुत्य ! हेर्नोस्, हजुर घर आएको देखेर यी मयूरगण हजुरको दर्शनले आनन्दित भएर नाचिरहेछन्, मृगीहरू मृगनयनी गोपिनीहरूको समान आफ्ना प्रेम कटाक्षले हजुरको प्रिय कार्य गरिरहेछन् र कोकिलाहरू मनोरम वाणीले हजुरको स्वागत गर्दैछन् । यी वनवासी पशु-पक्षी पनि धन्य छन् किनकि यो *सत्पुरुषको स्वभाव हो

* दृष्टान्त ( सत्पुरुषका कुरा )— एक दिन नानक दुर्दै यौटा पहाडको फेदीमा गए र गाउँको यौटा धनीनामा बसे । त्यहाँ लाल यौटा किसान मकैको रोटी र तीउँको साग लिएर आयो । त्यसै बेला यौटा धनीले अनेक थरिका स्वादिष्ट सामग्री बनाएर उनको सामुन्ने ल्याएर राख्यो । गुरु नानकले किसानको रोटी खाए, धनीको पक्वान्न हातले छोएर फर्काइदिए । धनीले त्यसको कारण सोध्यो । नानकले भने—यो किसानले स्वयं परिश्रम गरेर अन्न फलायो र प्रेमले पकाएर मकहाँ ल्याएको छ । अतः यो रोटी अमृत समान छ । तिमीले छल कपटद्वारा अर्काको धन चुसेर जम्मा पारेका छौ र कीर्ति पाउनका लागि खाने कुरा यहाँ ल्याएका छौ । यस

॥७॥ आज हजुरका चरण-स्पर्शले तृण र लता-गुल्म समेत यहाँको भूमि, वृक्ष र लताहरू हजुरका करकमलका नङको सङ्कले–नदी, पर्वत, मृग र पक्षी हजुरको कृपा दृष्टाक्षले, जसको निम्ति लक्ष्मी पनि लालायित रहन्छिन्, तो हजुरका भुजा र वक्षःस्थलको आलिङ्गनले गोपिनी कृतार्थ भएका छन् ॥८॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! यसरी वृन्दावनलाई देखेर प्रसन्न श्रीकृष्ण आफ्ना मित्र ग्वालबालसित प्रसन्नतापूर्वक गिरिराजको समीपवर्ती यमुनातटमा गाई चराउँदै क्रीडा गर्नलागे ॥ ९ ॥ भक्तिजन जसको सुयश गाउँदछन्, घाँटीमा वनमाला पैन्हेका ती भगवान् कृष्ण कहिले दाजूसँगै गीत गाउँथे ॥ १० ॥ कहिले आफ्ना साथीहरूलाई हँसाउँदै राजहंस झैं ध्वनि निकाल्दथे र कहिले नाच्दै मयूरका साथैं नाच्न थाल्दथे ॥११॥ कहिले गाई र गोपालको चित्त चोर्ने आफ्नो मेघ समान गम्भीर वाणीले पर पुगेका पशुलाई तिनको नाम लिएर डाक्दथे ॥१२॥ कहिले चकोर,

तृणवीरुधस्त्वत्पादस्पृशो द्रुमलताः करजाभिमृष्टाः ॥ नद्योऽद्रयः खगमृगाः सदयावलोकैर्गोप्योऽन्तरेण भुजयोरपि यत्स्पृहा श्रीः ॥ ८ ॥ श्रीशुक उवाच ॥ एवं वृन्दावनं श्रीमत्कृष्णः प्रीतमनाः पशून् ॥ रेमे सञ्चारयन्नद्रेः सरिद्रोधःसु सानुगः ॥ ९ ॥ क्वचिद्गायति गायत्सु मदान्धालिष्वनुव्रतैः ॥ उपगीयमानचरितः स्रग्वी सङ्कर्षणान्वितः ॥१०॥ क्वचिच्च कलहंसानामनुकूजति कूजितम् ॥ अभिनृत्यति नृत्यन्तं बर्हिणं हासयन्क्वचित् ॥११॥ मेघगम्भीरया वाचा नामभिर्दूरगान्पशून् ॥ क्वचिदाह्वयति प्रीत्या गोगोपालमनोज्ञया ॥ १२ ॥ चकोरक्रौञ्चचक्राह्वभारद्वाजांश्च बर्हिणः ॥ अनुरौति स्म सत्त्वानां भीतवद्व्याघ्रसिंहयोः ॥ १३ ॥ क्वचित्क्रीडापरिश्रान्तं गोपोत्सङ्गोपबर्हणम् ॥ स्वयं विश्रमयत्यार्यं पादसंवाहनादिभिः ॥ १४ ॥ नृत्यतो गायतः क्वापि वल्गतो युध्यतो मिथः ॥ गृहीतहस्तौ गोपालान्हसन्तौ प्रशशंसतुः ॥ १५ ॥ क्वचित्पल्लवतल्पेषु नियुद्धश्रमकर्शितः ॥ वृक्षमूलाश्रयः शेते गोपोत्सङ्गोपबर्हणः ॥ १६ ॥ पादसंवाहनं चक्रुः केचित्तस्य महात्मनः ॥ अपरे हतपाप्मानो व्यजनैः समवीजयन् ॥ १७ ॥ अन्ये तदनुरूपाणि मनोज्ञानि महात्मनः ॥ गायन्ति स्म महाराज स्नेहक्लिन्नधियः शनैः ॥ १८ ॥ एवं निगूढात्मगतिः स्वमायया गोपात्मजत्वं चरितैर्विडम्बयन् ॥ रेमे

क्रौञ्च, चखेवा, भारद्वाज र मयूर आदि पक्षिको जस्तै बोली बोल्दथे र कहिले व्याघ्र-सिंहादिका शब्दले डराएका जीवहरू झैं आफू पनि भयभीत जस्तै आचरण गर्दथे ॥ १३ ॥ कहिले खेल्दाखेल्दै थाकेर कुनै ग्वाल-बालको काखमा शिर राखेर पल्टिई दाजू बलरामको पाउ मिचेर उनको श्रम निवारण गर्दथे ॥१४॥ कहिले दुवै भाई हातेमालो गरेर उफ्रिन्थे र नाच्दै-गाउँदै, तिघ्रा ठटाएर कुश्ती लड्दै साथीहरूको हाँसी-हाँसी प्रशंसा गर्दथे ॥ १५ ॥ कहिले मल्लयुद्धमा थाकेर वृक्षको जराको नरमा कोमल पातको शय्यामा कुनै ग्वाल-बालको काखमा शिर राखेर सुत्थे ॥ १६ ॥ हे महाराज ! त्यस बेला कुनै-कुनै पुण्यात्मा ग्वाल-बाल महात्मा कृष्णको पाउ मिच्दथे, कोही पङ्खा हम्कन्थे र कोही स्नेहार्द्र भएर मन्द-मन्द स्वरमा भगवान्का लीलाहरूको अनुरूप उनको चित्तलाई मनपर्ने मनोहर गीत गाउँथे ॥ १७ ॥ साक्षात् लक्ष्मी जसका चरणको सेवा गर्दछिन्,

---

कारण मेरो साङ्गने यो रगत समान छ ।' भनि भनेर उनले झोपेको बालबाट बमाड इटाइदिनाशाथ खोज्ने नै पूरा थाक रगत मरिएको देखियो । त्यो लेलेर धनी पुष नाकका पाठमा थोप्यो र उनीबाट ... घर फर्कियो ।

उनै भगवान आफ्नो मायाद्वारा आफ्नू वास्तविक स्वरूप लुकाएर आफ्ना आचरणले गोपकुमारको अनुकरण गर्दै ग्रामीण बालकहरूका साथै उनै जस्ता क्रीडा गर्नलागे ॥ १९ ॥ एक दिनको कुरा हो–बलराम र कृष्णका सखा श्रीदामा नामका गोप तथा सुबल र तोककृष्ण आदि अन्य बालकहरूले दुवै भाइसित प्रेमले भने–॥२०॥ हे महाबाहो बलराम ! हे दुष्ट-दलन कृष्ण ! यहाँबाट अलि पर तालवृक्षले पूर्ण यौटा ठूलो वन छ ॥ २१ ॥ त्यहाँ धेरै तालफल पाकेर नित्य झैंझा गर्दै रहन्छन् र झरेका पनि छन् तर दुष्ट धेनुकासुरले त्यो सबै आफ्नू अधिकारमा पारिराखेको छ ॥ २२ ॥ हे राम ! हे कृष्ण ! त्यो गर्दभरूपधारी दैत्य स्वयं निकै बलियो छ र आफू जस्तै अरु पनि धेरै बलवान् दैत्यहरू साथैमा राख्दछ ॥ २३ ॥ हे शत्रुदमन ! त्यस दैत्यले अनेक मनुष्य खाइसक्यो यसै निम्ति डराई कोही पनि त्यो पशु-पक्षी विहीन वनमा जाँदैनन् ॥ २४ ॥ त्यहाँको बास्ना आउने मीठा-फल हामीले कहिल्यै खाएका छैनौं । हेर्नोस्, चारैतिर त्यसैको सुगन्धले पूर्ण पवनको सुगन्ध आइरहेको छ ॥ २५ ॥ तिनको सुगन्धीले हाम्रो चित्त लोभिइरहेछ । अतः हे कृष्ण ! हामीलाई

रमालालितपादपल्लवो ग्राम्यैः समं ग्राम्यवदीशचेष्टितः ॥ १९ ॥ श्रीदामा नाम गोपालो रामकेशवयोः सखा ॥ सुबलस्तोककृष्णाद्या गोपाः प्रेम्णेदमब्रुवन् ॥२०॥ राम राम महाबाहो कृष्ण दुष्टनिबर्हण ॥ इतोऽविदूरे सुमहद्वनं तालालिसङ्कुलम् ॥ २१ ॥ फलानि तत्र भूरीणि पतन्ति पतितानि च ॥ सन्ति किन्त्ववरुद्धानि धेनुकेन दुरात्मना ॥२२॥ सोऽतिवीर्योऽसुरो राम हे कृष्ण खररूपधृक् ॥ आत्मतुल्यबलैरन्यैर्ज्ञातिभिर्बहुभिर्वृतः ॥ २३ ॥ तस्मात्कृतनराहाराद्भीतैर्नृभिरमित्रहन् ॥ न सेव्यते पशुगणैः पक्षिसङ्घविवर्जितम् ॥ २४ ॥ विद्यन्तेऽभुक्तपूर्वाणि फलानि सुरभीणि च ॥ एष वै सुरभिर्गन्धो विषूचीनोऽवगृह्यते ॥ २५ ॥ प्रयच्छ तानि नः कृष्ण गन्धलोभितचेतसाम् ॥ वाञ्छाऽस्ति महती राम गम्यतां यदि रोचते॥ २६॥ एवं सुहृद्वचः श्रुत्वा सुहृत्प्रियचिकीर्षया ॥ प्रहस्य जग्मतुर्गोपैर्वृतौ तालवनं प्रभू ॥ २७ ॥ बलः प्रविश्य बाहुभ्यां तालान्सम्परिकम्पयन् ॥ फलानि पातयामास मतङ्गज इवौजसा ॥ २८ ॥ फलानां पततां शब्दं निशम्यासुररासभः ॥ अभ्यधावत्क्षितितलं सनगं परिकम्पयन् ॥ २९ ॥ समेत्य तरसा प्रत्यग्द्वाभ्यां पद्भ्यां बलं बली ॥ निहत्योरसि काशब्दं मुञ्चन्पर्यसरत्खलः ॥ ३० ॥ पुनरासाद्य संरब्ध उपक्रोष्टा पराक् स्थितः ॥ चरणावपरौ राजन्बलाय प्राक्षिपद्रुषा ॥ ३१ ॥ स तं गृहीत्वा प्रपदोर्भ्रामयित्वैकपाणिना ॥ चिक्षेप तृणराजाग्रे भ्रामणत्यक्तजीवितम् ॥ ३२ ॥

ती फल दिनु हवस् ! हामीलाई त्यसफलको अभिलाषा छ । हे बलराम ! यदि हजुरको इच्छा भए जाऔं ॥ २६ ॥ आफ्ना सखाहरूको वचन सुनेर भगवान राम र कृष्ण तिनको प्रिय कार्य गर्ने इच्छाले मित्रसंग खेल्दै तालवनमा गए ॥ २७ ॥ त्यस वनमा पुग्नासाथ त्यहाँका तालवृक्षहरूलाई हात्ती मत्ता झैं वीर बलरामले बेसरी हल्लाएर धेरै फल खसालिदिए ॥२८॥ फल झैंझा झरेको शब्द सुनेर गर्दभ रूपधारी धेनुक पर्वत सहित समस्त भूमण्डललाई कम्पायमान पार्दै उनको अघिल्तिर दगुर्दै आयो ॥ २९ ॥ त्यो महाबलवान् दैत्यले निकै वेगले बलरामको साम्मुन्ने आएर आफ्ना पछिल्ला खुट्टाले उनको छातीमा हिर्कायो र कर्कश गर्दभ-नाद गर्दै त्यहाँबाट भाग्यो ॥ ३० ॥ एकै छिनपछि फेरि घोर शब्द गर्दै त्यो गदहाले दोखोपल्ट वेगले बलरामको नजीकै गई रामतिर पिठिउँ पारेर ठूलो क्रोधले उनीमाथि आफ्ना पछिल्ला दुवै खुट्टाले हिर्कायो ॥३१॥ अनि

बलरामले आफ्नो यौटै हातले त्यसका दुवै खुट्टा समाएर अन्तरिक्षमा फन्न घुमाई पच्छारिदिए। घुमाउँदा नै त्यसको प्राण गइसकेको थियो। मरेको दैत्यलाई बलरामले यौटा ताल वृक्षमाथि फालिदिए ॥ ३२ ॥ त्या अघातले फैलिएको शिखर हुने महान तालवृक्ष थर्र काँमेर आफ्ना वरिपरिका वृक्ष ढाल्दै ढल्यो। उसले अर्को र दोस्रोले तेस्रोलाई गर्दै यौटाले अर्कोलाई ढाल्दै अनेक तालवृक्ष ढले ॥ ३३॥ बलरामद्वारा लीलापूर्वक पछारिएको धेनुकासुरको शरीरले आहत भएर ती सबै तालवृक्ष चक्रवातले विचलित पारिए झैं कम्पायमान भए ॥ ३४ ॥ हे तात ! जगत्पति भगवान् अनन्तको निम्ति यो कुनै ठूलो कुरा थिएन, उनमा तपम्मा तन्तुहरुको समान सारा विश्व भरिएको छ ॥ ३५ ॥ धेनुकासुरका अन्य जात भाई आफ्नो बन्धु मारिनाले कुपित भएर घमन्डै निकै वेगले राम र कृष्णमाथि झम्टिए ॥ ३६ ॥ हे राजन् ! तिनमा जुन-जुन दैत्य उनको नजीक आए, तिनलाई बलभद्र र कृष्णले लीलाले नै पछिल्ला खुट्टा समातेर तालवृक्षहरूमा फ्याँकिदिए ॥ ३७ ॥ त्यस बेला फलेका समूह, भाँच्चिएका वृक्ष र दैत्यका प्राणीहीन देहले भरिएर त्यो भूमि

तेनाहतो महातालो वेपमानो बृहच्छिराः ॥ पार्श्वस्थं कम्पयन्भग्नः स चान्यं सोऽपि चापरम् ॥ ३३ ॥ बलस्य लीलयोत्सृष्टखरदेहहताहताः ॥ तालाश्चकम्पिरे सर्वे महावातेरिता इव ॥ ३४ ॥ नैतच्चित्रं भगवति ह्यनन्ते जगदीश्वरे ॥ ओतप्रोतमिदं यस्मिंस्तन्तुष्वङ्ग यथा पटः ॥ ३५ ॥ ततः कृष्णं च रामं च ज्ञातयो धेनुकस्य ये ॥ क्रोष्टारोऽभ्यद्रवन्सर्वे संरब्धा हतबान्धवाः ॥ ३६ ॥ ताँस्तानापततः कृष्णो रामश्च नृप लीलया ॥ गृहीतपश्चाच्चरणान्प्राहिणोत्तृणराजसु ॥ ३७ ॥ फलप्रकरसङ्कीर्णं दैत्यदेहैर्गतासुभिः रराज भूः सतालाग्रैर्घनैरिव नभस्तलम् ॥ ३८ ॥ तयोस्तत्सुमहत्कर्म निशम्य विबुधादयः ॥ मुमुचुः पुष्पवर्षाणि चक्रुर्वाद्यानि तुष्टुवुः ॥३९॥ अथ तालफलान्यादन्मनुष्या गतसाध्वसाः ॥ तृणं च पशवश्चेरुर्हतधेनुककानने ॥ ४० ॥ कृष्णः कमलपत्राक्षः पुण्यश्रवणकीर्तनः ॥ स्तूयमानोऽनुगैर्गोपैः साग्रजो व्रजमाव्रजत् ॥ ४१ ॥ तं गोरजश्छुरितकुन्तलबद्धबर्हवन्यप्रसूनरुचिरेक्षणचारुहासम् ॥ वेणुं क्वणन्तमनुगैरनुगीतकीर्तिं गोप्यो दिदृक्षितदृशोऽभ्यगमन्समेताः ॥ ४२ ॥ पीत्वा मुकुन्दमुखसारघमक्षिभृङ्गैस्तापं जहुर्विरहजं व्रजयोषितोऽह्नि ॥ तत्सत्कृतिं समधिगम्य विवेश गोष्ठं सव्रीडहासविनयं यदपाङ्गमोक्षम् ॥४३॥ तयोर्यशोदारोहिण्यौ पुत्रयोः

मेघमालाले ढाकिएको आकाश समान सुशोभित भए ॥ ३८ ॥ श्रीराम र कृष्णचन्द्रको त्यो महान कार्य देखेर देवताले पुष्पवर्षा र बाजा बजाउँदै स्तुति गर्न लागे ॥ ३९ ॥ धेनुकासुर मारिनाले त्यस वनमा सबैजना निर्भय भएर तालफल खाने र पशु स्वच्छन्दतापूर्वक घाँस चर्नलागे ॥ ४० ॥ सायंकालमा, जसको श्रवण र कीर्तन अत्यन्त पुण्यदायक छ, ती कमलनयन भगवान कृष्ण आफ्ना साथी ग्वालबालद्वारा प्रशंसित हुँदै दाजु बलरामसित ब्रजमा आए ॥ ४१ ॥ त्यस बेला उसका बाटिएका अलक गोरजले धूसरित थिए, जसको शिरमा मयूरपिच्छ र वन्य-पुष्प सुशोभित थिए, जसको कमनीय कटाक्षमञ्जु थियो र मन्द हास्यले अपूर्व शोभा फिंजिइरहेको थियो, साथी ग्वाल-बालद्वारा जसको कीर्तिगान भइरहेको थियो र जो मधुर मुरली बजाइरहेका थिए ती कृष्णलाई हेर्नको निम्ति उत्कण्ठित नेत्र हुने गोपिनी एकैपल्ट ब्रजको बाहिर दगुर्दै आए ॥ ४२ ॥ गोपीहरूले आफ्ना नेत्ररूपी भ्रमरले भगवान्का मुखारविन्दको मकरन्द पान गरेर आफ्ना विरह-तापलाई शान्त पारे। भगवान् पनि उनका सलज्ज हास्यपूर्ण विनय र प्रणय-कटाक्षरूपी

सत्कार स्वीकार गरेर व्रजमा प्रविष्ट भए ॥ ४३ ॥ घर पुगेपछि पुत्रवत्सला यशोदा र रोहिणीले बालकहरूलाई समयानुसार यथोचित आशीर्वाद दिए ॥४४॥ बाटोको थकाई मरेपछि उनलाई बुकुवा लगाएर स्नान गराए । राम्रा लुगा लगाएर दिव्य पुष्पमाला र चन्दनले विभूषित पारे ॥ ४५ ॥ फेरि आमाद्वारा प्रेमपूर्वक पस्किएको सुस्वादु अन्न खाएर दुवै भाई कोठमा राम्रा शय्यामा पल्टेर सुखपूर्वक निदाए ॥ ४६ ॥ यसरी विहार गर्दै भगवान् कृष्णचन्द्र एक दिन दाजुलाई नलिई एक्लै आफ्ना मित्र ग्वाल-बालहरूलाई साथै लिई यमुना-तटमा गए ॥ ४७ ॥ त्यस दिन ग्रीष्म ऋतुको घामले पीडित गाई र ग्वाल-बालहरूले साह्रै प्यास लाग्नाले यमुनाजीको विष-दूषित जल पिए ॥ ४८ ॥ हे कुरुनन्दन ! त्यो विषमिश्रित पानी पिउनासाथ दैववश तिनको बुद्धि मोहित भयो र ती सबै गाई, ग्वालबाल प्राणहीन भएर जलकै किनारमा ढले ॥ ४९ ॥ यस्तो अवस्थामा तिनलाई देखेर योगेश्वरका पनि योगेश्वर भगवान् कृष्णले आफ्ना आश्रित गोप र गाईलाई आफ्नू अमृत वर्षाउने दृष्टिले जीवित पारिदिए ॥५०॥ स्मृतिलाभ भएपछि ती सबै

पुत्रवत्सले ॥ यथाकामं यथाकालं व्यधत्तां परमाशिषः ॥ ४४ ॥ गताध्वानश्रमौ तत्र मज्जनोन्मर्दनादिभिः ॥ नीवीं वसित्वा रुचिरां दिव्यस्रग्गन्धमण्डितौ ॥ ४५ ॥ जनन्युपहृतं प्राश्य स्वाद्वन्नमुपलालितौ ॥ संविश्य वरशय्यायां सुखं सुषुपतुर्व्रजे ॥ ४३ ॥ एवं स भगवान्कृष्णो वृन्दावनचरः क्वचित् ॥ ययौ राममृते राजन्कालिन्दीं सखिभिर्वृतः ॥ ४७ ॥ अथ गावश्च गोपाश्च निदाघातपपीडिताः ॥ दुष्टं जलं पपुस्तस्यास्तृषार्ता विषदूषितम् ॥ ४८ ॥ विषाम्भस्तदुपस्पृश्य दैवोपहतचेतसः ॥ निपेतुर्व्यसवः सर्वे सलिलान्ते कुरूद्वह ॥ ४६ ॥ वीक्ष्य तान्वै तथाभूतान्कृष्णो योगेश्वरेश्वरः ॥ ईक्षयाऽमृतवर्षिण्या स्वनाथान्समजीवयत् ॥ ५० ॥ ते सम्प्रतीतस्मृतयः समुत्थाय जलान्तिकात् ॥ आसन्सुविस्मिताः सर्वे वीक्षमाणाः परस्परम् ॥ ५१ ॥ अन्वमंसत तद्राजन्गोविन्दानुग्रहेक्षितत् ॥ पीत्वा विषं परेतस्य पुनरुत्थानमात्मनः ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे धेनुकवधो नाम पंचदशोऽध्यायः ॥ १५ ॥

श्रीशुक उवाच ॥ विलोक्य दूषितां कृष्णः कृष्णकृष्णाहिनाविभुः॥तस्या विशुद्धिमन्विच्छन्सर्पं तमुदवासयत् ॥१॥ राजोवाच ॥ कथमन्तर्जलेऽगाधे न्यगृ ाद्भगवानहिम्॥तस्यवै बहुयुगावासं यथासीद्विप्र कथ्यताम् ॥२॥ ब्रह्मन्भगवतस्तस्य भूम्नःस्वच्छन्दवर्तिनः॥गोपालोदारचरितं कस्तृप्येतामृतंजुषन्

उठेर बसे र याँटाले अर्कोतिर हेरेर आश्चर्यचकित भए ॥ ५१ ॥ हे राजन् ! अन्त्यमा उनले ठाने—हामी जुन विष-पानले मरेर फेरि बाँच्यौं, यो श्रीगोविन्दकोनै कृपादृष्टिको फल हो ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषा-टीकायां पञ्चदशोऽध्यायः ॥ १५ ॥

( कालीय नाग दमन ) श्री शुकदेव भन्नुहुन्छ—हे राजन् ! कालीय नागद्वारा यमुनाको जल दूषित देखेर कृष्णले त्यसलाई शुद्ध पार्न त्यो सर्पलाई त्यहाँबाट झिकेर बाहिर धपाए ॥ १ ॥ राजा परीक्षितले सोधे—हे विप्र ! यमुनाजीको अगाध जलमा भगवानले त्यो सर्पलाई कसरी पछारे ? यो पनि भन्नुस् कि त्यो सर्प कति युगदेखि त्यो जलमा बसिरहेको थियो ? ॥ २ ॥ हे ब्रह्मन् ! सर्वव्यापी र स्वेच्छाचारी भगवानले गोपरूपमा गरेका लीलारूपिणी सुधा पिएर को तृप्त हुन सक्छ ? श्रीशुकदेव भन्दछन्—हे राजन् !

यमुनामा कालियदह नामको यौटा कुण्ड थियो । त्यसको जल विषको ज्वालाले सधैं छड्किरहन्थ्यो । त्यसमाथि उड्ने पक्षीसम्म डढेर झर्दथे । त्यसको विषयुक्त जलका तरङ्गहरू बग्दै जलकणयुक्त वायुको स्पर्श हुनाले नै किनारमा चर र अचर जीव मर्दथे ॥ ३-५ ॥ त्यो प्रचण्ड वेगवान् विषको शक्तिले बलवान् कालियनाग र त्यसले दूषित पारिएको यमुनालाई देखेर दुष्टलाई दमन गर्नको निम्ति नै जसको अवतार भएको थियो, ती कृष्णचन्द्र यौटा अग्लो कदम्बवृक्षमा चढेर कम्मर बाँधी त्यो दूषित जलमा हाम्फाले ॥६॥ भगवान् कृष्णले हाम्फालेको वेगले सर्पविषद्वारा उम्लिरहेको जल क्षुभित भयो, जसमा विष मिसिएको हुनाले राता-नीला तरङ्गहरू उठिरहेका थिए । त्यो कालियदह यता उता उम्लेर सय धनुष ( चार सय हात ) सम्म फैलियो । बलशाली भगवान्‌को निम्ति यो कुनै विचित्र कुरा थिएन ॥७॥ हे प्रिय ! महान् गजराज झैं पराक्रमी भगवान् कृष्णले त्यस सरोवरमा जल-क्रीडा गर्नाले तिनका बाहुसित ठक्कर खाने जलमा ठूलो खलबली मच्चियो । त्यो शब्द सुनेर तथा आफ्नू स्थानको तिरस्कार देखेर कालिय-

॥ ३ ॥ श्रीशुक उवाच ॥ कालिन्द्यां कालियस्यासीद्ध्रदः कश्चिद्विषाग्निना ॥ श्रप्यमाणपया यस्मिन्पतंत्युपरिगाः खगाः ॥४॥ विप्रुष्मता विषोदोर्मिमारुतेनाभिमर्शिताः ॥ म्रियन्ते तीरगा यस्य प्राणिनः स्थिरजङ्गमाः ॥ ५ ॥ तं चण्डवेगविषवीर्यमवेक्ष्य तेन दुष्टां नदीं च खलसंयमनावतारः ॥ कृष्णः कदम्बमधिरुह्य ततोऽतितुङ्गमास्फोट्य गाढरशनो न्यपतद्विषोदे ॥ ६ ॥ सर्पह्रदः पुरुषसारनिपातवेगसंक्षोभितोरगविषोच्छ्वसिताम्बुराशिः ॥ पर्यक्प्लुतो विषकषायविभीषणोर्मिर्धावन्धनुःशतमनन्तबलस्य किं तत् ॥ ७ ॥ तस्य ह्रदे विहरतो भुजदण्डघूर्णवार्घोषमङ्ग वरवारणविक्रमस्य ॥ आश्रुत्य तत्स्वसदनाभिभवं निरीक्ष्य चक्षुःश्रवा समसरत्तदमृष्यमाणः ॥ ८ ॥ तं प्रेक्षणीयसुकुमारघनावदातं श्रीवत्सपीतवसनं स्मितसुन्दरास्यम् ॥ क्रीडन्तमप्रतिभयं कमलोदराङ्घ्रिं सन्दश्य मर्मसु रुषा भुजया चछाद ॥ ९ ॥ तं नागभोगपरिवीतमदृष्टचेष्टमालोक्य तत्प्रियसखाः पशुपा भृशार्ताः ॥ कृष्णेऽर्पितात्मसुहृदर्थकलत्रकामा दुःखानुशोकभयमूढधियो निपेतुः ॥१०॥ गावो वृषा वत्सतर्यः क्रन्दमानाः सुदुःखिताः ॥ कृष्णे न्यस्तेक्षणा भीता रुदत्य इव तस्थिरे ॥११॥ अथ व्रजे महोत्पातास्त्रिविधा ह्यतिदारुणाः ॥ उत्पेतुर्भुवि दिव्यात्मन्यासन्न भयशंसिनः ॥१२॥ तानालक्ष्य भयोद्विग्ना गोपा नन्दपुरोगमाः ॥ विना रामेण गाः कृष्णं ज्ञात्वा चारयितुं गतम् ॥१३॥ तैर्दुर्निमित्तैर्निधनं मत्वा प्राप्तमतद्विदः ॥ तत्प्राणास्तन्मनस्कास्ते दुःखशोकभयातुराः

नागलाई असह्य भयो र त्यो तुरुन्त कृष्णको साम्‌न्ने आयो ॥ ८ ॥ उसले देख्यो—यौटा अत्यन्त दर्शनीय, मेघ झैं साम्रो र सुकुमार श्रीवत्सचिह्न र पीताम्बरले सुशोभित, मधुर हास्ययुक्त र मनोहर मुख हुने बालक, जसका चरण कमलकोश झैं अत्यन्त कोमल छन्, निर्भय भएर खेलिरहेको छ । त्यो देखेर सर्पले रिसाई कृष्णका मर्मस्थानमा टोक्दै उनलाई आफ्नू देहको बन्धनमा कस्यो ॥ ९ ॥ श्रीकृष्णलाई नागपाशमा बाँधिएर निश्चेष्ट देखेर उनका सखा ग्वालबाल पीडित भई दुःख, पश्चात्ताप र भयले मूर्छित भई पृथ्वीमा ढले, किनकि उनले आफ्नू शरीर, सुहृद्, धन, स्त्री-पुत्र र कामना सबै श्रीकृष्णलाई नै अर्पण गरिसकेका थिए ॥ १० ॥ गाई र बाछा-बाछी दुःखले कराउँदै कृष्णचन्द्रतिर नै एकहोरो दृष्टि लगाई भयभीत भावले रुँदै निचेष्ट भएर हेर्दै रहे ॥ ११ ॥ यता व्रजमा पृथ्वी, आकाश र शरीरमा कुनै आगामी भयको सूचना दिने तीन थरिका निकै भयङ्कर

उत्पात देखिन लागे ॥१२॥ ती उत्पात देखेर नन्दादि गोपगण यो थाहा पाएर—आज श्रीकृष्ण दाजूलाई पनि साथमा नलिई एक्लै गाई चराउन गएका छन्—भयले व्याकुल भए॥१३॥ तिनीहरू भगवान्‌को प्रभाव जान्दैनथे। यसैले ती अपशकुनले उनको मृत्युको अनुमान गरेर ती दुःख, शोक र डरले कातर भए, किनकि तिनको प्राण र मन कृष्णमा नै बसथ्यो ॥१४॥ हे प्रिय ! अनि पशु ( गाईहरू ) झैं अत्यन्त वत्सल स्वभावका बालक वृद्ध र स्त्रीहरू तथा सबै ब्रजवासी अत्यन्त दीन र श्रीकृष्णचन्द्रको दर्शन गर्ने उत्कट इच्छाले आत्तिए झैं भएर गोकुलबाट निस्किए ॥१५॥ तिनलाई त्यसरी आतुर भएका देखेर मधुवंशमा उत्पन्न श्रीबलराम मनमनै हाँस्न लागे, किनकि ती आफ्नो भाईको प्रभाव जान्दथे, तर ब्रजवासीहरूसित उनले केही भने-पुनेनन् ॥१६॥ आफ्ना प्रिय कृष्णलाई सबैतिर खोज्दै ती गोप-गोपीगण भगवल्लक्षणले युक्त उनका चरण-चिह्नले उनको जाने बाटो पैल्याउँदै यमुनातटतर्फ दगुरे ॥१७॥ हे राजन् ! ती गोप गाईहरू जाने बाटोमा जता-ततै कमल, जौ, अङ्कुश, वज्र र ध्वजा आदि चिह्नले युक्त गोपबालक भगवान् श्रीकृष्णका चरण-

॥ १४ ॥ आबालवृद्धवनिताः सर्वेऽङ्ग पशुवृत्तयः ॥ निर्जग्मुर्गोकुलाद्दीनाः कृष्णदर्शनलालसाः ॥ १५ ॥ ताँस्तथा कातरान्वीक्ष्य भगवान्माधवो बलः ॥ प्रहस्य किञ्चिन्नोवाच प्रभावज्ञोऽनुजस्य सः ॥ १६ ॥ तेऽन्वेषमाणा दयितं कृष्णं सूचितया पदैः ॥ भगवल्लक्षणैर्जग्मुः पदव्या यमुनातटम् ॥ १७ ॥ ते तत्र तत्राब्जयवाङ्कुशाशनिध्वजोपपन्नानि पदानि विश्पतेः ॥ मार्गे गवामन्यपदान्तरान्तरे निरीक्षमाणा ययुरङ्ग सत्वराः ॥ १८ ॥ अन्तर्ह्रदे भुजगभोगपरीतमारात्कृष्णं निरीहमुपलभ्य जलाशयान्ते ॥ गोपाँश्च मूढधिषणान्परितः पशूंश्च संक्रन्दतः परमकश्मलमापुरार्ताः ॥ १९ ॥ गोप्योऽनुरक्तमनसो भगवत्यनन्ते तत्सौहृदस्मितविलोकगिरः स्मरन्त्यः ॥ ग्रस्तेऽहिना प्रियतमे भृशदुःखतप्ताः शून्यं प्रियव्यतिहृतं ददृशुस्त्रिलोकम् ॥ २० ॥ ताः कृष्णमातरमपत्यमनुप्रविष्टांस्तुल्यव्यथाः समनुगृह्य शुचः स्रवन्त्यः ॥ तास्ता व्रजप्रियकथाः कथयन्त्य आसन् कृष्णाननेऽर्पितदृशो मृतकप्रतीकाः ॥ २१ ॥ कृष्णप्राणान्निर्विशतो नन्दादीन्वीक्ष्य तं ह्रदम् ॥ प्रत्येषधत्स भगवान्रामः कृष्णानुभाववित् ॥ २२ ॥ इत्थं स्वगोकुलमनन्यगतिं निरीक्ष्य सस्त्रीकुमारमतिदुःखितमात्महेतोः ॥ आज्ञाय मर्त्यपदवीमनुवर्तमानः स्थित्वा मुहूर्तमुदतिष्ठदुरङ्गबन्धात् ॥२३॥ तत्प्रथ्यमानवपुषा

चिह्न तथा अन्य पद-चिह्नका माझमा हेर्दै निकै छिटो-छिटो हिंडे ॥१८॥ परबाट नै कालियदहमा सर्प-शरीरको बन्धनमा जकडिएर निश्चेष्ट कृष्णलाई र अचेत अवस्थामा जलाशयको छेउमा ढलेका ग्वालबाल र सबैतिर आर्तस्वरले डुक्रने गाईहरूलाई देखेर ती अत्यन्त व्याकुल तथा मूर्च्छित भए ॥ १९ ॥ गोपिनीहरूलाई पनि, जसको भगवान् अनन्तमा अत्यन्त अनुराग थियो, आफ्ना प्रियतमलाई सर्पको पाशमा परेका देखेर उनको सौहार्द, हाँस्ने, हेराई र सुमधुर वचनहरू स्मरण गरेर साह्रै दुःखी भए र आफ्ना प्रिय बिना उनलाई त्रिलोक नै शून्य देखिन लाग्यो ॥२०॥ भगवान् कृष्णकी आमा यशोदालाई आफ्नो पुत्रको निम्ति कुण्डमा हाम्फाल्न लागेकी देखेर उनैजस्ती दुःखिनी गोपिनीहरूले समातेर रोकेर ती श्रीकृष्णको मुखचन्द्रतिर हेर्दै एवं शोकले मरे समान भएर आँखाबाट आँसु बगाउँदै मुरलीधरका विविध लीलाहरू भन्नलागिन् ॥२१॥ कृष्ण नै जसका प्राण थिए, ती नन्दादि गोप जब दहमा हाम्फाल्न तयार भए तब तिनलाई श्रीकृष्णको प्रभाव जान्ने भगवान् बलरामले छेक्नुभयो ॥२२॥ जसको आफू बाहेक अरु कुनै आधार थिएन, ती स्त्रीहरू र बालकगण समेत

व्रजवासीहरूलाई आफ्नू निम्ति अत्यन्त व्याकुल देखेर लीलाकै निम्ति मनुष्यभावको अनुसरण गर्ने कृष्णचन्द्र एकैछिन सर्पको बन्धनमा रहेर बाहिर निस्के ॥२३॥ बन्धनमा परेका भगवान्ले जब आफ्नो शरीर फुलाए तब शरीर अत्यन्त व्यथित हुनाले सर्पले उनलाई छाडिदियो र क्रोधपूर्वक फणा उचालेर स्वाँ-स्वाँ गर्दै प्रभुतिर एकहोरो दृष्टि पारेर हेर्नलाग्यो। त्यस बखत सर्पको नाकबाट विष निस्किरहेको थियो। त्यसका स्थिर नेत्र खलाँतीमा तताएको फलाम जस्तै राता भइरहेका थिए र त्यसका मुखबाट आगोको ज्वाला निस्कि-रहेको थियो ॥२४॥ अनि आफ्ना चिरिएका जिब्रोले ओंठको छेउ चाट्तै भयङ्कर विषाग्निमयी दृष्टि हुने त्यस सर्पका चारैतिर श्रीकृष्ण क्रीडा गर्दै गरुड झैं निर्भय-भावले फनफनी घुम्नलागे। कालिय पनि उनीमाथि प्रहार गर्ने अवसर खोज्दै फनफनी घुम्न लाग्यो ॥२५॥ यसरी निकै बेरसम्म घुम्नाले उसको बल क्षीण भयो, अनि सबै विद्याका आदिपुरुष भगवान् कृष्ण त्यो उन्नत मस्तक हुने सर्पलाई न्वाएर त्यसका विशाल शिरमा चढेर नृत्य गर्नलागे। त्यस बखत नागका मणिहरूको स्पर्शले भगवान्का चरणकमल

व्यथितात्मभोगस्त्यक्त्वोन्नमय्य कुपितः स्वफणान्भुजङ्गः ॥ तस्थौ श्वसञ्छ्वसनरन्ध्रविषाम्बरीषस्तब्धेक्षणोल्मुकमुखो हरिमीक्षमाणः ॥ २४ ॥ तं जिह्वया द्विशिखया परिलेलिहानं द्वे सृक्किणी ह्यतिकरालविषाग्निदृष्टिम् ॥ क्रीडन्नमुं परिससार यथा खगेन्द्रो बभ्राम सोऽप्यवसरं प्रसमीक्षमाणः ॥ २५ ॥ एवं परिभ्रमहतौजसमुन्नतांसमानम्य तत्पृथुशिरःस्वधिरूढ आद्यः ॥ तन्मूर्धरत्ननिकरस्पर्शातिताम्रपादाम्बुजोऽखिलकलादिगुरुर्ननर्त ॥ २६ ॥ तं नर्तुमुद्यतमवेक्ष्य तदा तदीयगन्धर्वसिद्धसुरचारणदेववध्वः ॥ प्रीत्या मृदङ्गपणवानकवाद्यगीतपुष्पोपहारनुतिभिः सहसोपसेदुः ॥ २७ ॥ यद्यच्छिरो न नमतेऽङ्ग शतैकशीर्ष्णस्तत्तन्ममर्द खरदण्डधरोऽङ्घ्रिपातैः ॥ क्षीणायुषो भ्रमत उल्बणमास्यतोऽसृङ् नस्तो वमन्परमकश्मलमाप नागः ॥ २८ ॥ तस्याक्षिभिर्गरलमुद्वमतः शिरःसु यद्यत्समुन्नमति निःश्वसतो रुषोच्चैः ॥ नृत्यन्पदानुनमयन्दमयाम्बभूव पुष्पैः प्रपूजित इवेह पुमान्पुराणः ॥ २९ ॥ तच्चित्रताण्डवविरुग्णफणातपत्रो रक्तं मुखैरुरु वमन्नृप भग्नगात्रः ॥ स्मृत्वा चराचरगुरुं पुरुषं पुराणं नारायणं तमरणं मनसा जगाम ॥ ३० ॥ कृष्णस्य गर्भजगतोऽतिभरावसन्नं पार्ष्णिप्रहारपरिरुग्णफणातपत्रम् ॥ दृष्ट्वा तमाद्यमुपसेदुरमुस्य पत्न्य आर्ताः श्लथद्वसन-

अङ्ग पनि राता भएका थिए ॥२६॥ भगवान्लाई नृत्यमा उद्यत भएका देखेर उनका सेवक गन्धर्व, सिद्ध, देवता, चारण र अप्सरा आदि प्रसन्नतापूर्वक मृदङ्ग, पणव, आनक आदि बाजा बजाएर गाउन लागे। पुष्पहरूको वर्षा र प्रणाम गर्दै ती सबै श्रीहरिको नजीकै गए ॥२७॥ हे राजन्! कालियनागका एक सय एक मस्तक थिए। त्यो जुन सिर झुकाउँदैनथ्यो त्यसैलाई प्रचण्ड-दण्डधारी भगवान् आफ्ना पाद-प्रहारले थिचिदिन्थे। यसले कालिय नागको आयु क्षीण भयो। त्यो मुख र नाकबाट तीव्र रक्त फ्याँक्तै फनफनि घुम्न लाग्यो र अन्त्यमा मूर्च्छित भयो ॥२८॥ आफ्ना नेत्रबाट विष वमन गर्दै रिसले बेसरी श्वास छाड्दै त्यो आफ्ना सिरमध्ये जुन-जुन अरलो पार्थ्यो, त्यही-त्यही सिरमा नृत्य गर्दै रहने भगवान् आफ्ना चरणले हिर्काएर निहुराई थिचिदिन्थे। त्यस बखत स्वर्गका देवताहरू द्वारा वर्षा गरिएका पुष्पहरूले पूजित भएर पुराण पुरुष शेषशायी विष्णुभगवानको समान शोभित भए ॥२९॥ हे राजन्! भगवान्को विचित्र ताण्डव नृत्यले कालियका फणारूप छत्र छिन्न-भिन्न भए, त्यसका अङ्ग-प्रत्यङ्ग चूर्ण-पिठो भए र त्यो मुखबाट रगत फ्याँक्नलाग्यो।

अन्त्यमा मनमनै पुराणपुरुष नारायणको स्मरण गर्दै त्यो उनकै शरणमा गयो ॥ ३० ॥ सारा विश्व जसको गर्भमा छ, ती श्रीकृष्णको ठूलो भारले कालियनागलाई भ्रमित र त्यसका छत्र समान फणालाई प्रभुका कुरकुच्चाका प्रहारले घायल देखेर त्यसका पत्नीहरू आर्त भएर आदिपुरुष भगवान कृष्णकहाँ आए। आतुरतावश तिनका वस्त्र, आभूषण र केशपाश शिथिल भएका थिए ॥ ३१ ती साध्वी नागपत्नीहरूले आफ्ना छोरा-छोरी अघिलाएर अत्यन्त उद्विग्न-चित्तले पृथ्वीमा लम्पसार भएर निखिल भूतपति भगवानलाई प्रणाम गरे र आफ्ना अपराधी पतिलाई बन्धन-मुक्त गराउन हात जोरेर आश्रयदाता श्रीहरिका शरणमा परे ॥ ३२ ॥ नागपत्नीहरू *स्तुति गर्दै भन्नलागे—हे भगवन् ! यस अपराधीलाई हजुरले दण्ड दिनुभयो, यो उचित छ किनकि हजुरको अवतार दुष्टको दमन गर्नका निम्ति नै भएको हो, तर शत्रु र पुत्र दुवैमा समान दृष्टि राख्नु हुन्छ। यसै निम्ति पापको

भूषणकेशबन्धाः ॥ ३१ ॥ तास्तं सुविग्नमनसोऽथ पुरस्कृतार्भाः कायं निधाय भुवि भूतपतिं प्रणेमुः ॥ साध्व्यः कृताञ्जलिपुटाः शमलस्य भर्तुर्मोक्षेप्सवः शरणदं शरणं प्रपन्नाः ॥ ३२ ॥ नागपत्न्य ऊचुः ॥ न्याय्यो हि दण्डः कृतकिल्बिषेऽस्मिंस्तवावतारः खलनिग्रहाय ॥ रिपोः सुतानामपि तुल्यदृष्टेर्धत्से दमं फलमेवानुशंसन् ॥ ३३ ॥ अनुग्रहोऽयं भवतः कृतो हि नो दण्डोऽसतां ते खलु कल्मषापहः ॥ यद्दन्दशूकत्वममुष्य देहिनः क्रोधोऽपि तेऽनुग्रह एव सम्मतः ॥ ३४ ॥ तपः सुतप्तं किमनेन पूर्वं निरस्तमानेन च मानदेन ॥ धर्मोऽथ वा सर्वजनानुकम्पया यतो भवाँस्तुष्यति सर्वजीवः ॥ ३५ ॥ कस्यानुभावोऽस्य न देव विद्महे तवाङ्घ्रिरेणुस्पर्शाधिकारः ॥ यद्वाञ्छया श्रीर्ललनाऽचरत्तपो विहाय कामान्सुचिरं धृतव्रता ॥ ३६ ॥ न नाकपृष्ठं च सार्वभौमं न पारमेष्ठ्यं न रसाधिपत्यम् ॥ न योगसिद्धिरपुनर्भवं वा वाञ्छन्ति यत्पादरजः प्रपन्नाः ॥ ३७ ॥ तदेष

प्रायश्चित्त ठानेर नै हजुर आफ्ना शत्रुलाई दण्ड दिनुहुन्छ ॥ ३३ ॥ हजुरको दण्ड दुष्टजनका पापको नाशक हुन्छ। यस प्राणीलाई यो जुन सर्पयोनि मिलेको छ, यसले यो कुबुद्धिको पाप त प्रत्यक्ष नै छ। अतः हजुरले हामीमाथि कृपा गरेको हो। हामी त हजुरको रिस पनि अनुग्रह मान्दछौं ॥ ३४ ॥ यसले पूर्वजन्ममा मानरहित भएर अर्काको सम्मान गर्दै कुन यस्तो ठूलो तप गरेको छ ? अथवा सबै जीवमा दया गर्दै यस्तो कुन धर्म गरेको छ, जसले हजुर यसमाथि सन्तुष्ट हुनुभयो ॥३५॥ हे देव ! हामीलाई थाहा छैन कि यो यसको कुन धर्मको प्रभाव हो—जसले यसलाई हजुरका ती चरण-रज स्पर्श गर्ने अधिकार मिल्यो, जसको निम्ति स्त्री भएर पनि लक्ष्मीले सबै कामनाहरू छाडेर कठोर तपस्या गरकी थिइन् ॥ ३६ ॥ अहो ! हजुरका चरणरजको शरणमा आएका भक्तजन स्वर्गलोक, सार्वभौम साम्राज्य, ब्रह्मपद, पृथ्वीको आधिपत्य, योगका सिद्धिहरू अथवा कैवल्यमुक्ति आदि कुनै पनि

---

* सानु बिन्दु कृपा हुँदा हजुरको, त्यो सिन्धु हौं भन्दछ। हेर्दौं हुन्छ हजुरलाई करुणा का सिन्धु जो भन्दछ।
भन्ने हो कसरी म वाञ्छित प्रभो ! कुन् पाप के पुण्य हो ! पाए दर्शन मात्र पुग्छ मनको विश्वास मेरो छ यो ॥
कुन यस्तो कुबुद्धि मनमा उपज भयो र तैंले आफ्ना प्रभुलाई बिर्सिई चित्त अन्तै लगाइस्। विषयरूपी सुखको लोभले प्रभुको सम्झना पनि हराएर गयो ! यो त ढुङ्गाले अमूल्य रत्न धूलो पारे समान भयो। यस्तो अमूल्य नरदेह पाएर पनि आफ्ना अनन्य प्रभुलाई बिर्सिदिने मनुष्यलाई वारम्वार धिक्कार छ।

महान फलको इच्छा गर्दैनन् ॥ ३७ ॥ हे नाथ ! नागराज कालिय अत्यन्त रिसाहा र तमोगुणी योनिमा उत्पन्न भएका थिए, तथापि यिनलाई हजुरको चरणरज प्राप्त भयो जो अरूलाई दुर्लभ छ र जसको इच्छामात्रले संसार-चक्रमा परेका जीवलाई वैभव प्राप्त हुन्छ॥३८॥हे प्रभो ! हामी हजुरलाइ प्रणाम गर्दछौं । हजुर षडैश्वर्य युक्त थैः। अन्तःकरणमा विराजमान, सबै प्राणीका आश्रयस्थान, सर्वभूतस्वरूप, प्रकृतिदेखि अतीत र परमपिता परमात्मा हुनुहुन्छ ॥ ३९ ॥ हजूर ज्ञान-विज्ञान निधान प्रकृतिका प्रवर्तक, निर्गुण, निर्विकार र अनन्त शक्ति ब्रह्म हुनुहुन्छ, हाम्रो हजुरलाई प्रणाम छ ॥ ४० ॥ हजुर काल, कालशक्तिका आश्रय र कालका अङ्गभूत सृष्टि-प्रलयादिका साक्षीरूप हजुर नै समस्त विश्वका एकमात्र साक्षी, विश्वकर्ता र विश्वका निदान हुनुहुन्छ ॥ ४१ ॥ पञ्चभूत, तन्मात्राहरू, इन्द्रिय, प्राण, मन, बुद्धि र चित्त––यी सबै हजुर नै हुनुहुन्छ । त्रिगुणात्मक अभिमानद्वारा हजुरले आफ्नू आत्मानुभव लुकाउनु भएको छ ॥ ४२ ॥ हजुर अनन्त, सूक्ष्म, उपाधिका विकारले रहित र सर्वज्ञ हुनुहुन्छ । हजुर नै अस्ति, नास्ति, सर्वज्ञ र अल्पज्ञादि नाना थरिका

नाथाप दुरापमन्यैस्तमोजनिः क्रोधवशोऽप्यहीशः ॥ संसारचक्रे भ्रमतः शरीरिणो यदिच्छतः स्याद्विभवः समक्षः ॥ ३८ ॥ नमस्तुभ्यं भगवते पुरुषाय महात्मने ॥ भूतावासाय भूताय पराय परमात्मने ॥ ३९ ॥ ज्ञानविज्ञाननिधये ब्रह्मणेऽनन्तशक्तये ॥ अगुणायाविकाराय नमस्ते प्राकृताय च ॥ ४० ॥ कालाय कालनाभाय कालावयवसाक्षिणे ॥ विश्वाय तदुपद्रष्ट्रे तत्कर्त्रे विश्वहेतवे ॥ ४१ ॥ भूतमात्रेन्द्रियप्राणमनोबुद्ध्याशयात्मने ॥ त्रिगुणेनाभिमानेन गूढस्वात्मानुभूतये ॥ ४२ ॥ नमोऽनन्ताय सूक्ष्माय कूटस्थाय विपश्चिते ॥ नानावादानुरोधाय वाच्यवाचकशक्तये ॥ ४३ ॥ नमः प्रमाणमूलाय कवये शास्त्रयोनये ॥ प्रवृत्ताय निवृत्ताय निगमाय नमो नमः ॥ ४४ ॥ नमः कृष्णाय रामाय वसुदेवसुताय च ॥ प्रद्युम्नायानिरुद्धाय सात्वतां पतये नमः ॥ ४५ ॥ नमो गुणप्रदीपाय गुणात्मच्छादनाय च ॥ गुणवृत्त्युपलक्ष्याय गुणद्रष्ट्रे स्वसंविदे ॥ ४६ ॥ अव्याकृतविहाराय सर्वव्याकृतसिद्धये ॥ हृषीकेश नमस्तेऽस्तु मुनये मौनशीलिने ॥ ४७ ॥ परावरगतिज्ञाय सर्वाध्यक्षायते नमः ॥ अविश्वाय च विश्वाय तद्द्रष्ट्रेऽस्य च हेतवे ॥ ४८ ॥ त्वं ह्यस्य जन्मस्थितिसंयमान्प्रभो गुणैरनीहोऽकृत कालशक्तिधृक् ॥ तत्तत्स्वभावान्प्रतिबोधयन्सतः समीक्षयाऽमोघविहार

मत-मतान्तरको अनुवर्तन गर्नुहुन्छ र शब्द एवं अर्थ पनि हजुरकै शक्ति छन्, हजुरलाई नमस्कार छ ॥ ४३ ॥ हजुर प्रत्यक्षादि प्रमाणका मूल, स्वतःसिद्ध, ज्ञानवान् र शास्त्रका उत्पत्ति स्थान तथा विधिनिषेधरूपी वेद हुनुहुन्छ । हामी हजुरलाई नमस्कार गर्दछौं ॥४४॥ हजुर शुद्ध सत्त्वमय वसुदेवका पुत्र ( वासुदेवका ) संकर्षण, प्रद्युम्न र अनिरुद्ध हुनुहुन्छ । यस्ता हजुर सात्वत अर्थात् यादवहरूका स्वामी श्रीकृष्णलाई हाम्रो नमस्कार छ ॥४५॥ हजुर अन्तःकारण चतुष्टयरूपी गुणका प्रकाशक आफ्नो स्वरूपलाई गुणले ढाकेर विभिन्न रूपमा प्रकट हुने, अन्तःकरणका वृत्तिले उलक्षित तथा ती वृत्तिहरूका साक्षी र स्वयंप्रकाश हुनुहुन्छ, हजुरलाई नमस्कार ॥ ४६ ॥ हे हृषीकेश ! हजुरका लीला जान्न सकिन्न र सबै व्यक्त वस्तुहरू हजुरद्वारा नै सिद्ध हुन्छन् । हजुर आत्माराम हुनाले आत्मामै रमण गर्नु हजुरको स्वभाव छ । हजुरलाई हाम्रो नमस्कार छ ॥४७॥ हजुर स्थूल-सूक्ष्म गतिका ज्ञाता सबैका साक्षी, विश्वरहित, विश्वरूप, विश्वका साक्षी र त्यसका कारण हुनुहुन्छ । हामी हजुरलाइ बारम्बार नमस्कार गर्दछौं ॥४८॥ हे प्रभो ! हजुर निष्क्रिय भएर पनि आफ्नो कालशक्तिलाई

धारण गरेर प्रकृतिका गुणद्वारा संसारको उत्पत्ति-स्थिति आदि कार्य गर्दछन् । अमोघ लीलाहरू गर्ने हजुर जीवमा संस्काररूपले विद्यमान स्वभावलाई आफ्नो इच्छाशक्तिले जागृत गरेर विविध क्रीडाहरू गर्नुहुन्छ ।।४९।। त्रिलोकमा जो शान्त अर्थात् सात्त्विक, अशान्त, राजस र मूढ अर्थात् तामस योनिहरू छन्, ती सबै हजुरकै क्रीडा हुन् । यस बखत हजुरले साधुजनको रक्षाका लागि अवतार लिनुभयो र तिनको धर्म-रक्षा गर्नको निम्ति नै हजुर सतत चेष्टा गर्नुहुन्छ । अतः हजुरलाई शान्त योनि नै मनपर्छ ।।५०।। हे प्रभो ! आफ्ना सेवकले गरेको पहिलो अपराध स्वामीले सहनै पर्दछ । हे शान्तात्मन् ! यो सर्प मूढ हो, यो हजुरलाई जान्दैन । अतः हजुर यसको अपराध क्षमा गर्नोस् ।।५१।। हेर्नोस्—यो सर्प अब मर्न तयार छ । हे भगवन् ! यसलाई क्षमा गर्नोस् । साधु-पुरुषका दयापात्र हामी अबला स्त्रीलाई हाम्रा प्राणस्वरूप पति दान गरेर दिनु हवस् ॥ ५२ ॥ हामी हजुरका दासी हौं, हामीलाई आज्ञा गर्नोस् । हामी हजुरको के सेवा गरौं ? किनकि श्रद्धापूर्वक हजुरको सेवा गर्ने प्राणी समस्त भयबाट मुक्ति पाउँछ ॥ ५३ ॥ श्रीशुकदेव भन्नुहुन्छ—यसरी

ईहसे ॥ ४९ ॥ तस्यैव तेऽमूस्तनवस्त्रिलोक्यां शान्ता अशान्ता उत मूढयोनयः ॥ शान्ताः प्रियास्ते ह्यधुनाऽवितुं सतां स्थातुश्च ते धर्मपरीप्सये- हतः ॥ ५० ॥ अपराधः सकृद्भर्त्रा सोढव्यः स्वप्रजाकृतः ॥ क्षन्तुमर्हसि शान्तात्मन्मूढस्य त्वामजानतः ॥ ५१ ॥ अनुगृह्णीष्व भगवन्प्राणाँस्त्य- जति पन्नगः ॥ स्त्रीणां साधुशोच्यानां पतिः प्राणः प्रदीयताम् ॥ ५२ ॥ विधेहि ते किङ्करीणामनुष्ठेयं तवाज्ञया ॥ यच्छ्रद्धयाऽनुतिष्ठन्वै मुच्यते सर्वतो भयात् ॥५३॥ श्रीशुक उवाच ॥ इत्थं स नागपत्नीभिर्भगवान्समभिष्टुतः ॥ मूर्च्छितं भग्नशिरसं विससर्जाङ्घ्रिकुट्टनैः ॥ ५४ ॥ प्रतिलब्धे- न्द्रियप्राणः कालियः शनकैर्हरिम् ॥ कृच्छ्रात्समुच्छ्वसन्दीनः कृष्णं प्राह कृताञ्जलिः ॥ ५५ ॥ कालिय उवाच ॥ वयं खलाः सहोत्पत्त्या तामसा दीर्घमन्यवः ॥ स्वभावो दुस्त्यजो नाथ लोकानां यदसद्ग्रहः ॥ ५६ ॥ त्वया सृष्टमिमं विश्वं धातुर्गुणविसर्जनम् ॥ नानास्वभाववीर्यौजोयोनिबी- जाशयाकृति ॥ ५७ ॥ वयं च तत्र भगवन्सर्पा जात्युरुमन्यवः ॥ कथं त्यजामस्त्वन्मायां दुस्त्यजां मोहिताः स्वयम् ॥ ५८ ॥ भवान्हि कारणं तत्र सर्वज्ञो जगदीश्वरः ॥ अनुग्रहं निग्रहं वा मन्यसे तद्विधेहि नः ॥ ५९ ॥ श्रीशुक उवाच ॥ इत्याकर्ण्य वचः प्राह भगवान्कार्यमानुषः ॥ नात्र स्थेयं

नागपत्नीहरूले स्तुति गरेपछि भगवान्ले आफ्ना पाउका आघातद्वारा जसका फणा छिन्न-भिन्न पारिदिएथे र जो चेतना शून्य भइरहेको थियो, त्यो नागलाई छाडिदिए । अनि बिस्तार-बिस्तार प्राणलाई हुनाले केही सचेत भई कालियले लामो श्वास फेर्दै अत्यन्त दीनतापूर्वक हात जोरेर श्रीकृष्णसित भन्यो ।।५४।५५।। नाग भन्दछ—हे नाथ ! जन्मैदेखि सान्है दुष्ट, तमोगुणी स्वभाव र महाक्रोधी छन् । स्वभाव सबै जीवका लागि मिथ्या अभिनिवेश झैं अत्यन्त दुस्त्यज हुन्छ ॥ ५६ ॥ हे विधाता ! हजुर यस जगत्का गुण-विभाग गरेर अनेक थरिका स्वभाव, वीर्य, बल, योनि, बीज, चित्त र आकाश रच्नुभयो ॥ ५७ ॥ हे भगवन् ! हजुरको सृष्टिमा हामी सर्पगण जन्मैदेखि रिसाहा हुँदै आएका छौं । हामी मोहित जीव हजुरको मायालाई स्वयं कसरी त्याग्न सक्छौं ? ।।५८।। फेरि सर्वज्ञ र सम्पूर्ण जगत्का स्वामी हुनुहुन्छ, हजुर नै हामीलाई त्यस मायाबाट छुटाउन सक्नु हुन्छ । अब हजुर दया र दण्ड जो उचित लाग्छ, त्यही गर्नुहवस् ।।५९।। श्रीशुकदेव भन्नुहुन्छ–कालियका कुरा सुनेर लीलारूपधारी कृष्णचन्द्रले भन्नुभयो–हे सर्प ! यहाँ बस्नु उचित छैन ।

तिमी आफ्ना बन्धु, छोरा र पत्नी सहित यहाँबाट जाऊ–यसले यमुनाको जल गाई र मनुष्य इच्छानुसार उपभोग गर्न सकून् ॥६०॥ जो व्यक्ति तिमीले पाएको यो दमन र आदेशको कथा प्रातः सायं स्मरण तथा कीर्तन गर्नन्, उनलाई सर्पको भय हुनेछैन ॥६१॥ जो मेरो क्रीडास्थल स्वरूप यो कालियदहमा स्नान गरेर देवता पितृलाई जलले तर्पण गर्ला र उपवास, ध्यान गर्दै मेरो पूजा गर्ला, त्यो सबै पापबाट मुक्त हुनेछ ॥६२॥ जसको भयले तिमीले रमणक द्वीप छाडेर यस कुण्डको आश्रय लिएका थियौ, त्यो गरुड अब मेरो चरण चिह्नले अंकित देखेर तिमीलाई खाने छैन' ॥६३॥ श्रीशुकदेव भन्नुहुन्छ–भगवान् कृष्णले यति भनेपछि कालिय र त्यसका पत्नीहरूले प्रसन्न भएर दिव्य वस्त्र, माला, मणि, बहुमूल्य आभूषण र दिव्य गन्ध युक्त चन्दनादि लेप र उत्तम कमलका मालाले सादर उनको पूजा गरे ॥ ६४ ॥ ॥ ६५ ॥ कालियले गरुडध्वज भगवान् जगन्नाथको यसरी पूजा गरेर प्रसन्न तुल्याए, अनि उनको आवज्ञा लिएर भगवान्‌को परिक्रमा गरेर वन्दना गरी छोरा, मित्र र

त्वया मर्प समुद्रं याहि मा चिरम् ॥ स्वज्ञात्यपत्यदाराढ्यो गोनृभिर्भुज्यतां नदी ॥ ६० ॥ य एतत्संस्मरेन्मर्त्यस्तुभ्यं यदनुशासनम् ॥ कीर्तयन्नुभयोः सन्ध्ययोर्न युष्मद्भयमाप्नुयात् ॥६१॥ योऽस्मिन्स्नात्वा मदाक्रीडे देवादींस्तर्पयेज्जलैः ॥ उपोष्य मां स्मरन्नर्चेत्सर्वपापैः प्रमुच्यते॥६२॥ द्वीपं रमणकं हित्वा ह्रदमेतमुपाश्रितः ॥ यद्भयात्स सुपर्णस्त्वां नाद्यान्मत्पदलाञ्छितम् ॥६३॥ श्रीशुक उवाच ॥ एवमुक्तो भगवता कृष्णेनाद्भुतकर्मणा ॥ तं पूजयामास मुदा नागपत्न्यश्च सादरम् ॥६४॥ दिव्याम्बरस्रङ्मणिभिः परार्ध्यैरपि भूषणैः ॥ दिव्यगन्धानुलेपैश्च महत्योत्पलमालया ॥६५॥ पूजयित्वा जगन्नाथं प्रसाद्य गरुडध्वजम् ॥ ततः प्रीतोऽभ्यनुज्ञातः परिक्रम्याभिवन्द्य तम् ॥६६॥ सकलत्रसुहृत्पुत्रो द्वीपमब्धेर्जगाम ह ॥ तदैवसाऽमृतजला यमुना निर्विषाऽभवत् ॥ अनुग्रहाद्भगवतः क्रीडामानुषरूपिणः ॥ ६७ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे कालियमोक्षणं नाम षोडशोऽध्यायः ॥ १६ ॥

राजोवाच ॥ नागालयं रमणकं कस्मात्तत्याज कालियः ॥ कृतं किं वा सुपर्णस्य तेनैकेनासमञ्जसम् ॥ १ ॥ श्रीशुक उवाच ॥ उपहार्यैः सर्पजनैर्मासि मासीह यो बलिः ॥ वानस्पत्यो महाबाहो नागानां प्राङ्निरूपितः ॥ २ ॥ स्वं स्वं भागं प्रयच्छन्ति नागाः पर्वणि पर्वणि ॥ गोपीथायात्मनः सर्वे सुपर्णाय महात्मने ॥ ३ ॥ विषवीर्यमदाविष्टः काद्रवेयस्तु कालियः ॥ कदर्थीकृत्य गरुडं स्वयं तं बुभुजे

कलत्रहरूका साथ समुद्रको माझमा स्थित रमणक द्वीपमा गए । त्यसै दिनदेखि लीलामानवरूपधारी भगवान् कृष्णको अनुग्रहले यमुनाजी विषहीन भएर अमृत झैं स्वादिष्ट जलमयी भइन् ॥६६॥६७॥ इति श्रीमद्भागवते महापुराणे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां षोडशोऽध्यायः ॥ १६॥

(कालिय नाग त्यो दहमा आउने कथा र भगवान्‌द्वारा व्रजवासीहरूलाई दावानलबाट रक्षा गर्नु)—यति कथा सुनेर राजा परीक्षित्‌ले सोधे—हे भगवन् ! कालियले सर्पहरूको निवासस्थान रमणक द्वीप किन छाड्यो र त्यसले गरुडको के हानि गरेको थियो ॥१॥ श्रीशुकदेव भन्नुहुन्छ–हे महाबाहो ! गरुडका भक्ष्य सर्पहरूले महीनैं पिछे पीपल वृक्षमनि एक सर्पको बलि दिने नियम बनाएका थिए ॥१॥ तदनुसार औंसीको दिन सबै सर्प आफ्नो रक्षाका लागि गरुडलाई आफाफ्नो भाग दिने गर्दथे, तर विषको बलले उत्पन्न कद्रूपुत्र

कालियले गरुडलाई तुच्छ ठानेर उनको भाग स्वयं खाइदिन्थ्यो ॥ ३-४ ॥ हे राजन् ! यो सुनेर भगवान्का प्रिय पार्षद गरुड रिसाएर कालियलाई मार्न ठूलो वेगले झम्टे ॥५॥ गरुड द्रुतगतिले आफूतिर आउन लागेका देखेर विष र दाँतको अस्त्र धारण गर्ने एवं उग्र नेत्र हुने कालिय जिब्रो र फणा फिंजाएर आफ्ना अनेक शिर उचालेर गरुडतिर लम्क्यो र दाँतले टोक्नलाग्यो ॥ ६ ॥ अनि मधुसूदन भगवान्का वाहन र पराक्रमी गरुडले कालियलाई आफ्नो देहबाट छुटाएर पर फ्याँकी आफ्नो स्वर्णवर्ण दाहिने पखेटाले क्रोधपूर्वक आघात गरे ॥ ७ ॥ गरुडका पखेटाको चोटले कालिय विह्वल भएर यमुनाको कुण्डमा भाग्यो, जुन गरुडको निम्ति अगम्य र अत्यन्त गम्भीर हुनाले गर्दा अन्य पुरुषका लागि दुर्गम थियो ॥ ८ ॥ यस विषयमा यौटा इतिहास छ—कुनै दिन त्यहाँ सौभरि ऋषिले छेक्दा पनि गरुडले बर्ता भोको हुनाले आफ्नो रुचिले भक्ष्यरूप यौटा ठूलो माछा बलपूर्वक खाइदिए ॥ ९ ॥ त्यो मत्स्यराज मारिनाले सबै माछालाई अत्यन्त दीन र व्याकुल देखेर दयावश त्यस कुण्डमा बसी अन्य जीवहरूको रक्षा र कुशलताका लागि महर्षि सौभरिले

बलिम् ॥ ४ ॥ तच्छ्रुत्वा कुपितो राजन्भगवान्भगवत्प्रियः ॥ विजिघांसुर्महावेगः कालियं समुपाद्रवत् ॥ ५ ॥ तमापतन्तं तरसा विषायुधः प्रत्यभ्ययादुच्छ्रितनैकमस्तकः ॥ दद्भिः सुपर्णं व्यदशद्ददायुधः करालजिह्वोच्छ्वसितोग्रलोचनः ॥ ६ ॥ तं तार्क्ष्यपुत्रः स निरस्य मन्युमान् प्रचण्डवेगो मधुसूदनासनः ॥ पक्षेण सव्येन हिरण्यरोचिषा जघान कद्रुसुतमुग्रविक्रमः ॥ ७ ॥ सुपर्णपक्षाभिहतः कालियोऽतीव विह्वलः ॥ ह्रदं विवेश कालिन्द्यास्तदगम्यं दुरासदम् ॥ ८ ॥ तत्रैकदा जलचरं गरुडो भक्ष्यमीप्सितम् ॥ निवारितः सौभरिणा प्रसह्य क्षुधितोऽहरत् ॥९॥ मीनान्सुदुःखितान्दृष्ट्वा दीनान्मीनपतौ हते ॥ कृपया सौभरिः प्राह तत्रत्यक्षेममाचरन् ॥ १० ॥ अत्र प्रविश्य गरुडो यदि मत्स्यान्स खादति ॥ सद्यः प्राणैर्वियुज्येत सत्यमेतद्ब्रवीम्यहम् ॥ ११ ॥ तं कालियः परं वेद नान्यः कश्चन लेलिहः ॥ अवात्सीद्गरुडाद्भीतः कृष्णेन च विवासितः ॥ १२ ॥ कृष्णं ह्रदाद्विनिष्क्रान्तं दिव्यस्रग्गन्धवाससम् ॥ महामणिगणाकीर्णं जाम्बूनदपरिष्कृतम् ॥ १३ ॥ उपलभ्योत्थिताः सर्वे लब्धप्राणा इवासवः ॥ प्रमोदनिभृतात्मानो गोपाः प्रीत्याभिरेभिरे ॥ १४ ॥ यशोदा रोहिणी नन्दो गोप्यो गोपाश्च कौरव ॥ कृष्णं समेत्य लब्धेहा आसँल्लब्धमनोरथाः ॥ १५ ॥ रामश्चाच्युतमालिङ्ग्य जहासास्यानुभाववित् ॥ नगा गावो वृषा वत्सा लेभिरे परमां मुदम् ॥ १६ ॥ नन्दं विप्राः समागत्य गुरवः सकलत्रकाः ॥ ऊचुस्ते कालिय-

भने—॥१०॥ 'यदि आजदेखि गरुड यस कुण्डमा पसेर माछा खायो भने तुरुन्त मर्नेछ, म सत्य भन्दैछु' म सत्य भन्दैछु ॥ ११ ॥ यो कुरा कालिय नागबाहेक अरु कुनै सर्प पनि जान्दैनथे। यसै निम्ति त्यो गरुडको डरले त्यहाँ बस्न लागेको थियो र यस बखत श्रीकृष्णचन्द्रले त्यसलाई दहबाट निकालेर बाहर पारिदिए ॥१२॥ हे राजन् ! यता श्रीकृष्णलाई दिव्य माला, गन्ध, वस्त्र र बहुमूल्य मणिमय आभूषण सुवर्णमय गहनाले विभूषित भएर त्यस कुण्डबाट बाहिर निस्कनलागेका देखेर सबै यसरी उभिए, जसरी गइसकेको प्राण फर्केर आउँदा इन्द्रिय सचेत हुन्छन्। ती सबै गोप प्रसन्नतापूर्वक भगवान्को अलिङ्गन गर्नलागे ॥ १३-१४ ॥ हे कुरुनन्दन ! यशोदा, रोहिणी, नन्द, सबै गोपिनी र गोपगण श्रीकृष्णलाई पाएर सफल-मनोरथ भई गद्गद भए ॥ १५ ॥ त्यस बेला भगवान्को प्रभाव राम्ररी जान्ने बलरामजी उनको आलिङ्गन गरेर हाँस्नलागे। उतावृक्ष, गाई, गोरु

र बाछा-बाछीलाई पनि अपार आनन्द प्राप्त भयो ॥ १६ ॥ त्यसपछि गोपका कुलगुरु ब्राह्मणहरूले आफ्नी पत्नी सहित नन्दकहाँ गएर भने–'हे नन्दजी ! तिम्रो भाग्य ठूलो छ, त्यसैले तिम्रो बालक कालियले समातेर पनि सकुशल फर्क्‍यो ॥ १७ ॥ कृष्णको प्राण-रक्षा भयो, अतः तपाईं ब्राह्मणहरूलाई दान दिनोस् ।' अनि नन्दजी खुसी भएर ब्राह्मणहरूलाई गाई र सुवर्ण दान दिए ॥ १८ ॥ उता यशोदा-मृत्युको मुखबाट फर्केर आएका छोरालाई काखमा लिएर आलिङ्गन गर्दै बारम्बार आँसु बगाउन लागिन् ॥ १९ ॥ हे राजेन्द्र ! सबै व्रजवासी र गाई बाछा भोक-प्यासले गर्दा अतिशय दुर्बल भइरहेका थिए । त्यसैले त्यो रात सबै जना यमुनातटमै बसे ॥ २० ॥ अकस्मात् आधा रातमा ग्रीष्म ऋतुमा सुकेको वनमा सहसा दन्केर आएको दावानलले सुतेका व्रजवासीहरूलाई चारैतिरबाट छेकेर पोल्न लाग्यो ॥ २१ ॥ आगोले दग्ध व्रजवासी आत्तिएर उठे र मायामानव रूपधारी भगवान् कृष्णका शरणमा परे ॥२२॥ ती सबै भन्न लागे–'हे कृष्ण ! हे कृष्ण ! हे महाभाग ! हे अमितविक्रम बलराम ! हेर, यो भयङ्कर दावानल हजुरका स्वजन हाम्रो सबैलाई भस्म पार्न लागिरहेछ ॥२३॥ हे

ग्रस्तो दिष्ट्या मुक्तस्तवात्मजः ॥१७॥ देहि दानं द्विजातीनां कृष्णनिर्मुक्तिहेतवे ॥ नन्दः प्रीतमना राजन् गाः सुवर्णं तदादिशत् ॥१८॥ यशोदाऽपि महाभागा नष्टलब्धप्रजा सती ॥ परिष्वज्याङ्कमारोप्य मुमोचाश्रुकलां मुहुः ॥१९॥ तां रात्रिं तत्र राजेन्द्र क्षुत्तृड्भ्यां श्रमकर्शिताः ॥ ऊषुर्व्रजौकसो गावः कालिन्द्या उपकूलतः ॥२०॥ तदा शुचिवनोद्भूतो दावाग्निः सर्वतो व्रजम् ॥ सुप्तं निशीथ आवृत्य प्रदग्धुमुपचक्रमे॥२१॥ तत उत्थाय सम्भ्रान्ता दह्यमाना व्रजौकसः ॥ कृष्णं ययुस्ते शरणं मायामनुजमीश्वरम्॥२२॥ कृष्ण कृष्ण महाभाग हे रामामितविक्रम ॥ एष घोरतमो वह्निस्तावकान्ग्रसते हि नः ॥२३॥ सुदुस्तरान्नः स्वान्पाहि कालाग्नेः सुहृदः प्रभो ॥ न शक्नुमस्त्वच्चरणं सन्त्यक्तुमकुतोभयम् ॥२४॥ इत्थं स्वजनवैक्लव्यं निरीक्ष्य जगदीश्वरः॥ तमग्निमपिबत्तीव्रमनन्तोऽनन्तशक्तिधृक् ॥ २५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे दावाग्निमोचनं नाम सप्तदशोऽध्यायः ॥ १७ ॥

श्रीशुक उवाच ॥ अथ कृष्णः परिवृतो ज्ञातिभिर्मुदितात्मभिः ॥ अनुगीयमानो न्यविशद्व्रजं गोकुलमण्डितम् ॥ १ ॥ व्रजे विक्रीडतोरेवं गोपालच्छद्ममायया ॥ ग्रीष्मो नामर्तुरभवन्नातिप्रेयान् शरीरिणाम् ॥ २ ॥ स च वृन्दावनगुणैर्वसन्त इव लक्षितः ॥ यत्रास्ते भगवान्साक्षाद्रामेण सह केशवः ॥ ३ ॥ यत्र निर्झरनिर्ह्रादनिवृत्तस्वनझिल्लिकम् ॥ शश्वत्तच्छीकरर्जीषद्द्रुममण्डलमण्डितम् ॥ ४ ॥ सरित्सरः प्रस्र-

प्रभो ! हामी हजुरका सुहृद् हौं । अतः यो दुस्तर दावानलबाट हाम्रो रक्षा गर्नोस् । हामी हजुरका अभयदायक चरण त्याग्न सक्तैनौं ॥ २४ ॥ स्वजनको यस्तो व्याकुलता देखेर अनन्त-शक्तिधारी जगत्पति भगवान कृष्णले त्यो अग्नि पिइदिनुभयो ॥ २५ ॥ इति श्रीमद्भागवते दशमस्कन्धे पूर्वार्धे 'वासिष्ठी' भाषाटीकायां सप्तदशोऽध्यायः ॥ १७ ॥

( प्रलम्बासुर बध ) श्रीशुकदेव भन्नु हुन्छ–हे राजन् ! आफ्ना स्वजनलाई दावानलबाट रक्षा गरेर प्रसन्नचित्त सजातीय गोपगणले घेरिएर आफ्नु सुयश सुन्दै श्रीकृष्णले गाईहरूले भरिएको व्रजमा प्रवेश गरे ॥ १ ॥ यसरी दुवै मायामय गोपाल वेषले व्रजमा क्रीडा गर्दागर्दै ग्रीष्म ऋतु आयो, जुन व्यक्तिलाई केही मनपर्दैन ॥ २ ॥ तर जहाँ बलराम सहित साक्षात् भगवान श्रीकृष्ण विहार गर्दथे, त्यस वृन्दावनको आफ्ना गुणले गर्दा त्यो ग्रीष्म ऋतु पनि वसन्त जस्तै देखिन्थ्यो ॥ ३ ॥ जुन वृन्दावनमा झरना...

कल-कल निनाद झ्याउँकिरीको झनकार थिचिएको थियो र जहाँको भूमि झरनाहरूका निरन्तर उड्ने जल-कणले गर्दा आर्द्र वृक्षले परिपूर्ण थिए ॥ ४ ॥ त्यो हरित-तृणपूर्ण भूमिमा वनवासीहरूलाई नदी, सरोवर र झरनाका तरङ्ग मिसिएर बग्ने तथा कह्लार, कमल र उत्पलका परागलाई हरण गर्ने वायु चल्नाले घाम, अग्नि वा सूर्यको तापले कष्ट दिँदैनथ्यो ॥ ५ ॥ त्यहाँको अगाध जल हुने नदीको तटमा पालैसित आइरहने तरङ्गले हीलो भएको तटभूमिको आर्द्रता र तृणको हरियालीलाई विषझैँ तीक्ष्ण सूर्यका किरण पनि सुखाउन सक्तैनथ्यो ॥६ ॥ अत्यन्त राम्रा विचित्र मृग र पक्षी जहाँ सुशोभित थिए। गान गर्ने मयुर, भ्रमर मनोहर पर्दै कोकिल र सारसादि पक्षीहरूले पूर्ण तथा फक्रेका फूलहरूबाट आउने सुगन्ध युक्त वृन्दावनमा विहार गर्ने इच्छाले श्रीकृष्ण बलराम सहित गोपीहरू र गाईहरूले घेरिएर मधुर मुरली बजाउँदै प्रवेश गरे ॥ ७-८ ॥ अनि बलराम र कृष्ण आदि समस्त गोपगण आफ्ना शरीरलाई मूगा, मयूरपंख, फूलका गुच्छा, माला र गेरू आदि धातुले सिंगारेर नाच्न-गाउन र परस्पर मल्लयुद्ध गर्नलागे ॥ ९ ॥ श्रीकृष्णले नाच्ने

वणोर्मिवायुना कह्लारकञ्जोत्पलरेणुहारिणा ॥ न विद्यते यत्र वनौकसां दवो निदाघवह्न्यर्कभवोऽतिशाद्वले ॥ ५ ॥ अगाधतोयह्रदिनीतटोर्मिभिर्द्रव-त्पुरीष्याः पुलिनैः समन्ततः ॥ न यत्र चण्डांशुकरा विषोल्बणा भुवो रसं शाद्वलितं च गृह्णते ॥ ६ ॥ वनं कुसुमितं श्रीमन्नदच्चित्रमृगद्विजम् ॥ गायन्मयूरभ्रमरं कूजत्कोकिलसारसम् ॥ ७ ॥ क्रीडिष्यमाणस्तत्कृष्णो भगवान्बलसंयुतः ॥ वेणुं विरणयन्गोपैर्गोधनैः संवृतोऽविशत् ॥ ८ ॥ प्रवालबर्हस्तबकस्रग्धातुकृतभूषणाः ॥ रामकृष्णादयो गोपा ननृतुर्युयुधुर्जगुः ॥ ९ ॥ कृष्णस्य नृत्यतः केचिज्जगुः केचिदवादयन् ॥ वेणुपाणितलैः शृङ्गैः प्रशशंसुरथापरे ॥ १० ॥ गोपजातिप्रतिच्छन्ना देवा गोपालरूपिणः ॥ ईडिरे कृष्णरामौ च नटा इव नटौ नृप ॥ ११ ॥ भ्रामणैर्लङ्घनैः क्षेपैरास्फोटनविकर्षणैः ॥ चिक्रीडतुर्नियुद्धेन काकपक्षधरौ क्वचित् ॥ १२ ॥ क्वचिन्नृत्यत्सु चान्येषु गायकौ वादकौ स्वयम् ॥ शशंसतुर्महाराज साधु साध्विति वादिनौ ॥ १३ ॥ क्वचिद्बिल्वैः क्वचित्कुम्भैः क्व चामलकमुष्टिभिः ॥ अस्पृश्यनेत्रबन्धाद्यैः क्वचिन्मृगखगेहया ॥ १४ ॥ क्वचिच्च दर्दुरप्लावैर्विविधैरुपहासकैः ॥ कदाचित्स्पन्दोलिकया कर्हिचिन्नृपचेष्टया ॥ १५ ॥ एवं तौ लोकसिद्धाभिः क्रीडाभिश्चेरतुर्वने ॥ नद्यद्रिद्रोणिकुञ्जेषु

बेलामा केही बालक गाउने, केही बंशी, थपरी नरसिंगा बजाउँदै र केही उनको प्रशंसा गर्दथे ॥ १० ॥ हे राजन् ! यौटा नट जसरी अर्को नटको प्रशंसा गर्दछ, त्यस्तै नै गोपजातिमा अवतार लिएर लुकेका गोपवेषधारी देवता श्रीकृष्ण बलरामको स्तुति गरिरहेका थिए ॥ ११ ॥ शिरमा काकपक्ष धारण गरेका कृष्ण र बलराम बेलामा घुम्ने, नाघ्ने, फ्याल्ने, ताल ठोक्ने, यौटाले अर्कोलाई तान्ने र परस्पर मल्लयुद्ध गर्दै खेलिरहेका थिए ॥ १२ ॥ हे महाराज ! ती कहिले अर्कोले नाच्दा स्वयं गाउन बजाउन थाल्दथे र कहिले 'वाह ! वाह' भनेर उसको प्रशंसा गर्न थाल्दथे ॥ १३ ॥ कहिले यौटाले अर्कोमाथि बेल, जलकुम्भी वा अमला हातमा लिएर फ्याँक्थे, कहिले आँखा धुम्ने र छुँदैर स्पर्श गर्ने बालक भन्दा पर भागेर नछोइने र कहिले मृग र पक्षिहरूको चेष्टाको नक्कल गर्न आदि खेल खेल्दथे ॥ १४ ॥ ती कहिले भ्यागुता झैं उफ्रेर हिँड्थे र कहिले उपहास गर्दथे, कहिले दुइ जना गोपको बाहुद्वारा डोली बनाएर झुला झुल्दथे र कहिले राजाको अनेक नक्कल आदि खेल खेल्दथे ॥ १५ ॥ यस प्रकार विविध लोक-

प्रसिद्ध खेल खेल्दै राम र कृष्ण वृन्दावनका पर्वत, नदी, कन्दरा, कुञ्ज, वन र सरोवरमा नित्य विचरण गर्दथे ॥ १६ ॥ एक दिनको कुरा हो–जब राम र कृष्ण अन्य गोपहरूका संगै वनमा गाई चराइरहेका थिए, त्यसै बेला उनलाई हरण गरेर लैजानका लागि प्रलम्बासुर नामको दैत्य गोपवेष धारण गरेर त्यहाँ आयो ॥ १७ ॥ यद्यपि सर्वद्रष्टा यदुनाथले चिन्हिसकेका थिए तापनि त्यसलाई मार्ने विचार गर्दै त्यसलाई आफ्ना साथीहरूमा मिसाउन स्वीकार गरिदिए ॥१८॥ क्रीडाकुशल कृष्णले सबै गोपलाई डाकेर भने–'हे मित्र हो ! अब एकैनासे दुइ दल बनाएर खेलने' ॥१९॥ अतः गोपगणले राम र कृष्णलाई दुवै दलका नाइके तुल्याए र तीमध्ये केही कृष्णका दलमा र केही बलरामको दलमा सम्मिलित भए ॥ २० ॥ जसमा एकदल अर्को दलका व्यक्तिलाई पिठिउँमा बोकेर यौटा निर्दिष्ट स्थानसम्म पुऱ्याउँथे। यस्तै अनेक खेल खेले। ती खेलमा जित्ने पक्ष पिठिउँमा चढ्दथे। हार्ने पक्ष आफ्नो पिठिउँमा बोक्दथे ॥ २१ ॥ यसरी यौटा अर्कोको पिठिउँमा चढ्दा चढ्दै ती कृष्ण आदि सबै बालक गाई, बाछा चराउँदै माण्डीरक वटको नगीचै पुगे ॥ २२ ॥

काननेषु सर.सु च ॥ १६ ॥ पशूँश्चारयतो गोपैस्तद्वने रामकृष्णयोः ॥ गोपरूपी प्रलम्बोऽगादसुरस्तज्जिहीर्षया ॥ १७ ॥ तं विद्वानपि दाशार्हो भगवान्सर्वदर्शनः ॥ अन्वमोदत तत्सख्यं वधं तस्य विचिन्तयन् ॥ १८ ॥ तत्रोपाहूय गोपालान्कृष्णः प्राह विहारवित् ॥ हे गोपा विहरिष्यामो द्वन्द्वीभूय यथायथम् ॥ १९ ॥ तत्र चक्रुः परिवृढौ गोपा रामजनार्दनौ ॥ कृष्णसंघट्टिनः केचिदासन्रामस्य चापरे ॥२०॥ आचेरुर्विविधाः क्रीडा वाह्यवाहकलक्षणाः ॥ यत्रारोहंति जेतारो वहंति च पराजिताः ॥ २१ ॥ वहंतो वाह्यमानाश्च चारयंतश्च गोधनम् ॥ भाण्डीरकं नाम वटं जग्मुः कृष्णपुरोगमाः ॥ २२ ॥ रामसंघट्टिनो यर्हि श्रीदामवृषभादयः ॥ क्रीडायां जयिनस्ताँस्तानूहुः कृष्णादयो नृप ॥ २३ ॥ उवाह कृष्णो भगवान् श्रीदामानं पराजितः ॥ वृषभं भद्रसेनस्तु प्रलम्बो रोहिणीसुतम् ॥ २४ ॥ अविषह्यं म न्यमानः कृष्णं दानवपुङ्गवः ॥ वहन्द्रुततरं प्रागादवरोहणतः परम् ॥ २५ ॥ तमुद्वहन्धरणिधरेन्द्रगौरवं महासुरो विगतरयो निजं वपुः ॥ स आस्थितः पुरटपरिच्छदो बभौ तडिद्द्युमानुडुपतिवाडिवाम्बुदः ॥२६॥ निरीक्ष्य तद्वपुरलमम्बरे चरत्प्रदीप्तदृग्भ्रुकुटितटोग्रदंष्ट्रकम् ॥ ज्वलच्छिखं कटककिरीटकुण्डलत्विषाद्भुतं हलधर ईषदत्रसत् ॥२७॥ अथागतस्मृतिरभयो रिपुं बलो विहाय सार्थमिव हरन्तमात्मनः ॥ रुषाऽहनच्छिरसि दृढेन मुष्टिना सुराधिपो गिरिमिव वज्ररंहसा ॥२८॥

हे राजन् ! त्यस खेलमा एकपल्ट बलरामका दलले श्रीदामा र वृषभ गोपालकले जिते र कृष्ण आदि गोप आफ्नो पिठिउँमा बोकेर हिंडे ॥ २३ ॥ हारेका भगवान् श्रीकृष्णले श्रीदामालाई, भद्रसेनले वृषभलाई र प्रलम्बले बलरामलाई बोक्यो ॥ २४ ॥ प्रलम्बासुर कृष्णको भार असह्य ठानेर बलरामलाई लिई वेगले भाग्यो र पिठिउँबाट बराल्नको निम्ति तोकिएको स्थानभन्दा पनि पर पुऱ्यायो ॥ २५ ॥ पृथ्वीलाई धारण गर्ने अनन्तदेवको ठूलो भार पिठिउँमा बोकेर लैजानाले निकै थाक्यो र त्यो महादैत्यको वेग केही थामियो र उसले आफ्नो स्वाभाविक स्वरूप धारण गऱ्यो। त्यस दैत्यको कालो शरीरमा सुनका गहना थिए त्यसले त्यो यस्तो देखिन्थ्यो कि विजुलीयुक्त श्यामवेघले चन्द्रमालाई आफूमा धारण गरेको होस्। ॥२६॥ त्यस दैत्यका नेत्र अत्यन्त प्रज्वलित थिए र दाह्रा भृकुटीसम्म फैलिएका थिए। त्यो साह्रै डरलाग्दो थियो। त्यसका कपाल अग्निशिखा झैं राता थिए

त्यो दानव किरीट र कुण्डलको कान्तिले अत्यन्त अद्भुत देखिरहेथ्यो । उसलाई वेगले आकाशमा गएको देखेर पहिले त बलराम अलिकति भयभीत हुनुभयो ॥२७॥ फेरि सावधान हुनासाथ उनको डर हरायो । उनले देखे–यो शत्रु धन चोरेर भएको चोर जस्तै मलाई आकाशमा लगिरहेको छ । अनि उनले अत्यन्त क्रोधित भएर जस्तै इन्द्रले पर्वतहरू माथि वज्र प्रहार गरेका थिए उस्तै गरी दुष्टको मस्तकमा एक मुड्की हिर्काए ॥२८॥ रामको मुड्की लाग्नासाथ उसको टाउको फुट्यो, मुखबाट रगत वमन गर्नलाग्यो, उसको चेतना हरायो र डरलाग्दो शब्द गर्दै त्यो इन्द्रको वज्रले आहत पर्वत समान तुरुन्त मरेर धराशायी भयो ॥ २९ ॥ बलवान् बलरामको हातबाट प्रलम्बासुर मरेको देखेर सबै गोप सार्है छक्क परे र उनलाई बारम्बार धन्यवाद दिनलागे ॥३०॥ ती प्रशंसाका योग्य बलरामलाई आशीर्वाद दिंदै र उनको प्रशंसा गर्दै मृत्युको मुखबाट फर्केको समान उनलाई अङ्कमाल गरे । उस बेला तिनको हृदय प्रेमले विह्वल भयो ॥ ३१ ॥ त्यो पापी प्रलम्बासुर मारिनाले देवताहरू धेरै आनन्दित भए र बलरामजी माथि फूलको

स आहतः सपदि विशीर्णमस्तको मुखाद्वमन्रुधिरमपस्मृतोऽसुरः ॥ महारवं व्यसुरपतत्समीरयन् गिरिर्यथा मघवत आयुधाहतः ॥२९॥ दृष्ट्वा प्रलम्बं निहतं बलेन बलशालिना ॥ गोपाः सुविस्मिता आसन्साधु साध्विति वादिनः ॥३०॥ आशिषोऽभिगृणन्तस्तं प्रशशंसुस्तदर्हणम् ॥ प्रेत्यागतमिवालिङ्ग्य प्रेमविह्वलचेतसः ॥ ३१ ॥ पापे प्रलम्बे निहते देवाः परमनिर्वृताः ॥ अभ्यवर्षन्बलं माल्यैः शशंसुः साधु साध्विति ॥ ३२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे प्रलम्बवधो नामाष्टादशोऽध्यायः ॥ १८ ॥

बादरायणिरुवाच ॥ क्रीडासक्तेषु गोपेषु तद्गावो दूरचारिणः ॥ स्वैरं चरन्त्यो विविशुस्तृणलोभेन गह्वरम् ॥१॥ अजा गावो महिष्यश्च निर्विशन्त्यो वनाद्वनम् ॥ इषीकाटवीं निर्विविशुः क्रन्दन्त्यो दावतर्षिताः ॥२॥ तेऽपश्यन्तः पशून्गोपाः कृष्णरामादयस्तदा ॥ जातानुतापा न विदुर्विचिन्वन्तो गवां गतिम्॥३॥तृणैस्तत्खुरदच्छिन्नैर्गोष्पदैरङ्कितैर्गवाम् ॥ मार्गमन्वगमन्सर्वे नष्टाजीव्या विचेतसः ॥४॥मुञ्जाटव्यां भ्रष्टमार्गं क्रन्दमानं स्वगोधनम् ॥ सम्प्राप्य तृषिताः श्रान्तास्ततस्ते संन्यवर्तयन् ॥५॥ ता आहूता भगवता मेघगम्भीरया गिरा ॥ स्वनाम्नां निनदं श्रुत्वा प्रतिनेदुः प्रहर्षिताः ॥६॥ततः समन्ताद्वन-

वर्षा गर्नलागे र 'साधु-साधु' भन्नलागे ॥३२॥ इति श्रीमद्भागवते दशमस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायामष्टादशोऽध्यायः ॥१८॥

( भगवान्द्वारा गाई र गोपहरूलाई दावानलबाट बचाउन् ) श्रीशुकदेव भन्नुहुन्छ—त्यसपछि गोपगण फेरि खेल कूदमा लागे । त्यसै बेला गाईहरू स्वच्छन्दताले चर्दै हरियो-हरियो घाँसको लोभमा यौटा गहन बनमा निकै पर पुगे ॥१॥ तिनका बाख्रा, गाई र भैंसी यौटा बनबाट यर्दै अर्को बनमा जाँदा गर्मीको तापले तृषित भएर कराउँदै काँसको बनमा पसे ॥२॥ पशुहरू नदेखिनाले राम-कृष्ण आदि गोप दुःखी भए र यता-उता खोज्दा पनि तिनको पत्ता लाग्नसकेन । आफ्नू जीविका नष्ट हुनाले ती आखिएर अचेत झैं भइरहेका थिए । अतः गाईका खुर र दाँतले छिन्न-भिन्न घाँस र पृथ्वीमा बनेको खुर पैल्याउँदै अघि बढ्दै गए ॥३॥४॥ अन्तमा आफ्ना गोधनलाई बाटो बिराएर यौटा मुञ्ज बनमा डुकिरहेका भेटर ती अत्यन्त प्यास लागेका र थाकेको स्थितिमा फर्केर आए ॥५॥ अनि भगवान् मेघ झैं गम्भीर वाणीमा तिनलाई नाम लिई-लिईकन डाक्नलागे । ती गाई आफ्ना नाम सुनेर हर्षले

हुकन्दै प्रतिध्वनि गर्नलागे ॥६॥ उसै बेला त्यस वनमा अकस्मात् वनवासी जीवलाई नष्ट पार्ने दावानल लाग्यो । वायुद्वारा प्रेरित भएर डरलाग्दो ज्वालामा बढेर त्यो सबै स्थावर-जङ्गम जीवहरूलाई भस्म पार्नलाग्यो ॥७॥ त्यो दावानल चारैतिरबाट आफूतिर आउन लागेको देखेर गाई, गोपगण भयभीत भए । जस्तै मृत्युको भयले डराएका जीव *आर्तनाद गर्दै हरिको शरणमा जान्छन्, उसै गरी ती सबै राम र कृष्णका शरणमा भएर उनलाई डाक्नलागे ॥८॥ उनले भने—हे कृष्ण ! हे कृष्ण ! हे महावीर ! हे अमितबलशाली बलराम ! हामी हजुरका शरणागत दास भएर पनि यो दावानलले पोलिन लाग्यौं, हाम्रो रक्षा गर्नोस् ॥९॥ हे कृष्ण ! हजुरका बन्धु-बान्धव कष्ट पाउने योग्य छैनन् । हे धर्मज्ञ ! हाम्रा हजुर नै

धूमकेतुर्यदृच्छयाऽभूत्क्षयकृद्वनौकसाम्॥ समीरितः सारथिनोल्वणोल्मुकैर्विलेलिहानः स्थिरजङ्गमान्महान् ॥७॥ तमापतन्तं परितो दवाग्निं गोपाश्च गावः प्रसमीक्ष्य भीताः ॥ ऊचुश्च कृष्णं सबलं प्रपन्ना यथा हरिं मृत्युभयार्दिता जनाः ॥८॥ कृष्ण कृष्ण महावीर हे रामामितविक्रम ॥ दावाग्निना दह्यमानान्प्रपन्नाँस्त्रातुमर्हथः ॥ ९ ॥ नूनं त्वद्बान्धवाः कृष्ण न चार्हन्त्यवसादितुम् ॥ वयं हि सर्वधर्मज्ञ त्वन्नाथास्त्वत्परायणाः ॥ १० ॥ श्रीशुक उवाच ॥ वचो निशम्य कृपणं बन्धूनां भगवान्हरिः ॥ निमीलयत मा भैष्ट लोचनानीत्यभाषत ॥ ११ ॥ तथेति मीलिताक्षेषु भगवानग्निमुल्बणम् ॥ पीत्वा मुखेन तान्कृच्छ्राद्योगाधीशो व्यमोचयत् ॥ १२ ॥ ततश्च तेऽक्षीण्युन्मील्य पुनर्भाण्डीरमापिताः ॥ निशाम्य विस्मिता आसन्नात्मानं गाश्च मोचिताः ॥ १३ ॥ कृष्णस्य योगवीर्यं तद्योगमायानुभावितम् ॥ दावाग्नेरात्मनः क्षेमं वीक्ष्य ते मेनिरेऽमरम् ॥ १४ ॥ गाः सन्निवर्त्य सायाह्ने

प्रभु र एकमात्र गति हजुर हुनुहुन्छ' ॥१०॥ श्रीशुकदेव भन्नुहुन्छ—आफ्ना मित्रको दीन वचन सुनेर भगवान्ले भन्नुभयो—'नडराओ तिमीहरू आफ्ना आँखा चिम्ल' ॥ ११ ॥ भगवान्को आज्ञानुसार जब तिनले 'हुन्छ' भनेर आँखा चिम्ले अनि योगेश्वर भगवान् कृष्णले त्यो प्रचण्ड अग्नि आफ्नो मुखले पिएर तिनलाई महान् सङ्कटबाट रक्षा गरे ॥१२॥ ग्वाल-बालले आफ्ना आँखा खोल्नासाथ देखे—ती भाण्डीरवटको नगिचै पुगेका छन् । यसरी गाई समेत आफूहरूलाई दावानलबाट मुक्त देखेर जी माहै छक्क परे ॥१३॥ श्रीकृष्णको त्यो योग-सामर्थ्य, योगमायाको प्रभाव र दावानलबाट आफ्नो सकुशल मुक्ति देखेर तिनले श्रीकृष्णलाई कुनै देवता ठाने ॥ १४ ॥ साँझ परेपछि बलराम र कृष्णचन्द्र आफ्ना

---

* आर्तनाद—मसित के छैन र म अदसित केही मागूँ । अति धन भए पनि कसैको तृष्णा आवलम्म मेटिएको छ ? कसैसित पनि के छ र मलाई अब के देला ? हे प्रभु ! तिमी नै मलाई पुग्ने गरी दिने छौ देऊ । म सत्य, प्रेम र तिम्रो बिना सलबको दास हुँ । म तिम्रो सेवक भइसकेपछि अरू साधारण मानवसित के पाइन्छ र मागूँ ? तिमी मेरा नगीचैका साथी भएपछि म अरूसित किन सहायता मागूँ र किन डराऊँ कुनै पनि दानवसित ? तिमीभन्दा बढी मलाई मनपराउने अरू कोही छैन । तिमी सबैभन्दा उज्ज्वल र राम्रोमा पनि अति राम्रा छौ । म तिम्रो गुण गान गर्दछु र म तिम्रो सेवक हुँ । तिमी नै कर्ता-धर्ता हौ भन्ने मैले जानिसकेको छु । सबैलाई भनें र हर्ने पनि तिमी नै हौ । तिम्रो अतुलित बलको सामुन्ने अरू कसैको शक्ति पुग्न सक्तैन भन्ने पनि जान्दछु । तिम्रो बल पाएर नै म अभिमानले हीन भएको तिम्रो सेवकको पनि सेवक हुँ । तिमीभन्दा ठूलो कोही छैन र मभन्दा सानो खोजे पनि पाइन्न । तिमीभन्दा पवित्र कोही छैन र मभन्दा अपवित्र खोजेर पाइन्न तापनि म तिम्रो सेवक हुँ । तिमी ठूला दानी छौ, त्यसैले म तिमीलाई नै भिक्षामा माग्ने भिखारी हुँ । म हृदय चिरेर देखाउन सक्दछु—म तिम्रो चाकर हुँ ।

१५७

गाईहरू फर्काएर बाँसुरी बजाउँदै र ग्वालबाल द्वारा प्रशंसित हुँदै ब्रजमा फर्किए ॥ १५ ॥ ब्रजमा श्रीकृष्णको दर्शन पाएर त्यहाँका गोपिनीहरूलाई अत्यन्त आनन्द प्राप्त भयो किनकि आफ्ना प्रिय नहुँदा उनको एकेक क्षण सय-सय युग झैं भइरहेथ्यो ॥ १६ ॥ इति श्रीमद्भागवते दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायामेकोनविंशोऽध्यायः ॥ १९ ॥

( वर्षा र शरदृऋतुको वर्णन ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! घर पुगेपछि आफ्नू रक्षा र प्रलम्बासुरवध, राम र कृष्णका यी दुवै अद्भुत काम गोपिनीहरूलाई सुनाए ॥ १ ॥ ती विचित्र चरित्रहरू सुनेर वयोवृद्ध गोपिनीहरू साह्रै छक्क परे र उनले मनमनै ठाने—यी राम र कृष्णको रूपमा कुनै निकै ठूला देवता ब्रजमा आएका हुन् ॥ २ ॥ केही दिनपछि नवै जीवलाई उत्पन्न गर्ने वर्षाऋतुको आगमन भयो । उस बेला चन्द्रमा र सूर्यको चारैतिर प्रकाशपूर्ण मण्डल देखिन लाग्यो र आकाशमा कोलाहल झैं मच्चियो

सहरामो जनार्दनः ॥ वेणुं विरणयन्गोष्ठमगाद्गोपैरभिष्टुतः ॥ १५ ॥ गोपीनां परमानन्द आसीद्गोविन्ददर्शने ॥ क्षणं युगशतमिव यासां येन विनाऽभवत् ॥ १६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे दावाग्निपानं नामैकोनविंशोऽध्यायः ॥ १९ ॥

श्रीशुक उवाच ॥ तयोस्तदद्भुतं कर्म दावाग्नेर्मोक्षमात्मनः ॥ गोपाः स्त्रीभ्यः समाचख्युः प्रलम्बवधमेव च ॥१॥ गोपा वृद्धाश्च गोप्यश्च तदुपाकर्ण्य विस्मिताः ॥ मेनिरे देवप्रवरौ कृष्णरामौ व्रजं गतौ ॥ २ ॥ ततः प्रावर्तत प्रावृट् सर्वसत्त्वसमुद्भवा ॥ विद्योतमानपरिधिविस्फूर्जितनभस्तला ॥३॥ सान्द्रनीलाम्बुदैर्व्योम सविद्युत्स्तनयित्नुभिः ॥ अस्पष्टज्योतिराच्छन्नं ब्रह्मेव सगुणं बभौ ॥ ४ ॥ अष्टौ मासान्निपीतं यद्भूम्याश्चोदमयं वसु ॥ स्वगोभिर्मोक्तुमारेभे पर्जन्यः काल आगते ॥ ५ ॥ तडित्वन्तो महामेघाश्चण्डश्वसनवेपिताः ॥ प्रीणनं जीवनं ह्यस्य मुमुचुः करुणा इव ॥६॥ ततः कृशा देवमीढा आसीद्धर्षीयसी मही ॥ यथैव काम्यतपसस्तुः सम्प्राप्य तत्फलम् ॥७॥ निशामुखेषु खद्योतास्तामसा भान्ति न ग्रहाः ॥ यथा पापेन पाखण्डा

॥ ३ ॥ आकाशमा विजुली र घोर गर्जनयुक्त बादलो र नीलो-कालो मेघले ढाकेर सूर्यको ज्योति स्पष्ट नदेखिनाले गुणहरूले ढाकिदिएका ब्रह्म समान ज्ञात हुन्थ्यो ॥ ४ ॥ सूर्यदेवले आफ्ना किरण द्वारा आठ महीनासम्म पृथ्वीको जुन जलरूपी धन तानेका थिए, त्यो वर्षा आउनाले मेघरूपी किरणले वर्षाउन थाले ॥ ५ ॥ जस्तै दयालु पुरुष संसारलाई सन्तप्त देखेर आनन्दित पार्नको लागि आफ्नो देह र जीवन पनि अर्पि दिन्छन्, त्यस्तै नै दामिनी ( बिजुली ) युक्त मेघ प्रबल वायुको वेगले उडेर आफ्नो जीवनरूप जल वर्षाउन लागे ॥ ६ ॥ ग्रीष्मऋतुको तापले सुकेकी पृथ्वी वर्षाको जलले 'अभिषिक्त भएर हरियो भरियो भइन्, जस्तै—कुनै सकाम तपस्याले दुर्बल शरीर उसको फल पाएपछि

○ उदाहरण—जसको प्रभाव योगीजन, सिद्ध, महात्मा जान्न सक्तैनन्, जसको प्रभाव शारदा ( सरस्वती ) पनि जान्न समर्थ हुन्नन्, नारद आदि ब्रह्मवादी मुनिगणले जीवन भरि त्यस तपस्याले जसको अन्त्य जान्न सकेनन्, ठूला ठूला दानी राजा, त्यागी तपस्वी, मनीषि, योग्य पण्डित आदिले जीवनभरि प्रयत्न गरेर पनि जसलाई जान्न सक्तैनन्, अष्टसिद्धि, नवनिधि नित्य जसको गुणगान गर्दछन्, फेरि अखण्ड समाधि लगाएर स्वयं महादेव जसको विषयमा जान्न प्रयत्नशील रहन्छन्, जसलाई श्रुतिहरू 'नेति-नेति' भनेर हार मान्दछन्— तिनै नानारूपधारी वृन्दावन विहारी, मोहन-मुरारीलाई व्रजका गोपिनीहरू आफ्नो प्रेम, स्नेहले कितेर—इच्छानुसार काठका पुतलीलाई नर्तकले नचाए झैं—नचाउँछन् र तिनकै निम्ति रासलीला गर्दछन् ।

पुष्ट भएर आओस् ॥ ७ ॥ रात्रिमा बादलहरूको घोर अन्धकारमा जुनकिरीको प्रकाश टल्कन लाग्यो र ग्रह-नक्षत्रको दर्शन दुर्लभ हुनगयो, जस्तै कलिमा पापको प्रबलताले पाखण्डवाद-को प्रचार बर्ता हुन जान्छ र वैदिक सम्प्रदाय वा धर्म लुप्त हुन्छन् ॥ ॥ अहिलेसम्म भ्यागुता मौन थिए, मेघको गर्जन सुनेर बोल्नलागे। जस्तै—नित्य नियमबाट निवृत्त भएर आफ्ना आचार्यको आदेश पाई ब्राह्मण वेद-पाठमा लाग्दछन् ( भ्यागुताको ध्वनि थाल्यो चर्को सुनिन वेसरी। वेद पढ्ने बसी माना शिशुले झैं मिठो गरी। ) ॥ ९ ॥ ग्रीष्ममा सुकेका ससाना नदी हाहाकार गर्दै आफ्तो सीमा उल्लङ्घन गरेर वेगले बग्नलागे, जस्तै—अजितेन्द्रिय पुरुषको मन र धन कुमार्गमा नै लाग्दछ ( वेगले बग्न लागे ती नदी क्षुद्र बढी अति। उर्लन्छन् धन पाएर थोरै जसरी दुर्मति )॥ १० ॥ हरियो-भरिलो घाँसले सज्जित राता र छत्रक ( गोवरे छाता ) का पुष्पले छत्रयुक्त भएर पृथ्वी राजाको सम्पत्ति जस्तै सुशोभित हुन लागिन् ॥१ ॥ अन्नदात्री भूमि आफ्नू अनुरूप सम्पत्तिले कृषकलाई खुशी पार्न लागिन् र 'हानि लाभ दैवाधीन छ' यो कुरा नमान्ने धनी सन्तप्त हुनलागे ॥१२॥ नयाँ

न हि वेदाः कलौ युगे ॥ ८ ॥ श्रुत्वा पर्जन्यनिनदं मण्डूका व्यसृजन्गिरः ॥ तूष्णीं शयानाः प्राग्यद्ब्राह्मणा नियमात्यये ॥ ९ ॥ आसन्नुत्पथवाहिन्यः क्षुद्रनद्योऽनुशुष्यतीः ॥ पुंसो यथाऽस्वतन्त्रस्य देहद्रविणसम्पदः ॥ १० ॥ हरिता हरिभिः शष्पैरिन्द्रगोपैश्च लोहिताः ॥ उच्छिलीन्ध्रकृतच्छाया नृणां श्रीरिव भूरभूत् ॥ ११ ॥ क्षेत्राणि सस्यसम्पद्भिः कर्षकाणां मुदं ददुः ॥ धनिनामुपतापं च दैवाधीनमजानताम् ॥ १२ ॥ जलस्थलौकसः सर्वे नववारिनिषेवया ॥ अबिभ्रन् रुचिरं रूपं यथा हरिनिषेवया ॥ १३ ॥ सरिद्भिः सङ्गतः सिन्धुश्चुक्षुभे श्वसनोर्मिमान् ॥ अपक्वयोगिनश्चित्तं कामाक्तं गुणयुग्यथा ॥१४॥ गिरयो वर्षधाराभिर्हन्यमाना न विव्यथुः ॥ अभिभूयमाना व्यसनैर्यथाऽधोक्षजचेतसः ॥१५॥ मार्गा बभूवुः सन्दिग्धास्तृणैश्छन्ना ह्यसंस्कृताः ॥ नाभ्यस्यमानाः श्रुतयो द्विजैः कालहता इव ॥ १६ ॥ लोकबन्धुषु मेघेषु विद्युतश्चलसौहृदाः ॥ स्थैर्यं न चक्रुः कामिन्यः पुरुषेषु गुणिष्विव ॥ १७ ॥ धनुर्वियति माहेन्द्रं निर्गुणं च गुणिन्यभात् ॥ व्यक्ते गुणव्यतिकरेऽगुणवान्पुरुषो यथा ॥ १८ ॥ न रराजोडुपश्छन्नः स्वज्योत्स्नाराजितैर्घनैः ॥ अहंमत्या भासितया स्वभासा पुरुषो यथा ॥ १९ ॥ मेघागमोत्सवा हृष्टाः प्रत्यनन्दञ्छिखण्डिनः ॥ गृहेषु

जलको सेवन गर्नाले जल र स्थलमा बस्ने सबै जीवको रूप राम्रो भएर आयो, जस्तै—भगवान्‌को सेवाले मनुष्यको आकृति राम्रो बन्दै जान्छ ॥ १३ ॥ जसका वासना क्षीण हुँदैनन् त्यस योगीको चित्त जसरी विषयहरूको संगतिले वासनापूर्ण बन्दछ, त्यस्तै वायुले गर्दा तरल तरङ्ग हुने समुद्र नदीहरूका जलले क्षुब्ध भयो ॥१४॥ वर्षाका धाराको चोट खाएर पनि पर्वतलाई केही कष्ट हुँदैन, जस्तै—दुःखका लवटा खाएर पनि भगवान्‌का भक्त चलायमान हुँदैनन् ॥ १५ ॥ जसको कहिल्यै सफाई हुँदैन, बाटोहरू पनि घाँस-पातले ढाकिएर नदेखिने लुप्त जस्तै भएका छन्। जस्तै—अभ्यास नगर्नाले ब्राह्मणहरूले पढेका श्रुतिहरू कालक्रमले विस्मृत हुन्छन् ॥१६॥ लोकोपकारी मेघमा बिजुली स्थिर भएर रहन्न, जस्तै—चंचल प्रेम हुने व्यभिचारिणी नारीहरू गुणी पुरुषसित टिक्न सक्तैनन् ॥ १७ ॥ गुण ( डोरी ) नभएको इन्द्रेनी गर्जनादि गुणहरूले युक्त आकाशमा यस प्रकार शोभित हुन लाग्यो, जस्तै—गुणका क्षोभले उत्पन्न हुने प्रपञ्चमा निर्गुण पुरुष सुशोभित हुन्छ ॥ १८ ॥ आफ्नू कान्तिले देदीप्यमान र बादलले ढाकिएको चन्द्रमा उसै प्रकार शोभित हुँदैन, जस्तै—आफ्नो नै

आभासले आभासित तर अहङ्कारले ढाकिएको पुरुष प्रकाशित हुन सक्तैन ॥ १९ ॥ जसको निम्ति मेघको आगमन उत्सव जस्तै आनन्ददायी हुन्छ, ती मयूरगण हर्षित भएर प्रसन्नता प्रकट गर्नलागे । जस्तै–गृहस्थाश्रममा तीनै तापले सन्तप्त र उद्विग्न पुरुष हरिभक्तको आगमनले प्रसन्न हुन्छन् ॥ २० ॥ ग्रीष्ममा सुकेका वृक्ष आफ्ना जराले जल पिएर अनेक रूपले सम्पन्न भए, जस्तै–तपस्याले दुर्बल भएका प्रेमी-तपस्वी आफ्नो कामना सिद्धि भएपछि पुष्ट हुन्छन् ॥ २१ ॥ हे राजन् ! सरोवरका तट काँडा र हिलोले भरिएपछि पनि सारस पक्षी त्यहीं रहन्छन् । जस्तै–विषयी मनुष्य झ्याउलोमा गाडिएर गृहस्थाश्रममै बस्तछन् ॥ २२ ॥ घोर वर्षाका जलको वेग बढ्नाले नदीहरूका बाँध पनि भत्किए, जस्तै—कलिमा पाखण्डीहरूको मिथ्या मतले वैदिक मार्ग लुप्त हुन्छन् ॥ २३ ॥ वायुद्वारा प्रेरित भएर मेघ प्राणीहरूका निम्ति अमृत ( जल ) वर्षाउन लागे, जस्तै–ब्राह्मणको प्रेरणाले अनेक राजाहरू

तथा निर्विण्णा यथाऽच्युतजनागमे ॥ २० ॥ पीत्वाऽपः पादपाः पद्भिरासन्नानात्ममूर्तयः ॥ प्राक्क्षामास्तपसा श्रान्ता यथा कामानुसेवया ॥ २१ ॥ सरःस्वशान्तरोधः न्यूषुरङ्गापि सारसाः ॥ गृहेष्वशान्तकृत्येषु ग्राम्या इव दुराशयाः ॥ २२ ॥ जलौघैर्निरभिद्यन्त सेतवो वर्षतीश्वरे ॥ पाखण्डिनामसद्वादैर्वेदमार्गाः कलौ यथा ॥ २३ ॥ व्यमुञ्चन्वायुभिर्नुन्ना भूतेभ्योऽथामृतं घनाः ॥ यथाशिषो विश्पतयः काले काले द्विजेरिताः ॥ २४ ॥ एवं वनं तद्वर्षिष्ठं पक्वखर्जूरजम्बुमत् ॥ गोगोपालैर्वृतो रन्तुं सबलः प्राविशद्धरिः ॥ २५ ॥ धेनवो मन्दगामिन्य ऊधोभारेण भूयसा ॥ ययुर्भगवताहूता द्रुतं प्रीत्या स्नुतस्तनीः ॥ २६ ॥ वनौकसः प्रमुदिता वनराजीर्मधुच्युतः ॥ जलधारा गिरेर्नादादासन्ना ददृशे गुहाः ॥ २७ ॥ क्वचिद्वनस्पतिक्रोडे गुहायां चाभिवर्षति ॥ निर्विश्य भगवान्रेमे कन्दमूलफलाशनः ॥ २८ ॥ दध्योदनं समानीतं शिलायां सलिलान्तिके ॥ सम्भोजनीयैर्बुभुजे गोपैः सङ्कर्षणान्वितः ॥ २९ ॥ शाद्वलोपरि संविश्य चर्वतो मीलितेक्षणम् ॥ तृप्तान्वृषान्वत्सतरान्गाश्च स्वोधोभरश्रमाः ॥ ३० ॥ प्रावृट् श्रियं च तां

बेलामा प्रजाका कामनाहरू पूर्ण पार्दै रहन्छन् ॥ २४ ॥ यसैगरी वर्षाले पाकेका खजूर र जामुनोले युक्त वनमा विहार गर्न राम र कृष्णचन्द्रले गाई र गोपसहित प्रवेश गरे ॥ २५ ॥ थनको भारले सुस्त-सुस्त गाई भगवान्ले डाक्दा दगुरेर आइपुग्दथे । त्यस बेला प्रीतिवश तिनका स्तनबाट दूध बगिरहन्थ्यो ॥ २६ ॥ श्रीकृष्णचन्द्रले प्रसन्न वनवासी भिल्ल-भिल्लिनीलाई महको वर्षा गर्ने वनावली र पर्वतबाट निस्कने जलधारा देखे तथा जुन निर्झरको निनाद र उनका वर-परको गुफा पनि देखे ॥ २७ ॥ त्यसताका भगवान् पानी परेको बेला कहिले कुनै सघन वृक्षमनि गुफामा बसेर कन्द-मूल फल खाँदै आफ्ना साथीहरूसित क्रीडा गर्दथे ॥ २८ ॥ कुनै बेला जलको नगीचै ढुङ्गामा बसेर बलराम र अन्य ग्वालबाल मित्रहरूसित घरबाट ल्याएको दही र भात खान्थे ॥ २९ ॥ त्यस बेला राम्ररी तृप्त भएर हरियो-हरियो घाँसमाथि बसेर आँखा चिम्ली उग्राउने गोरु, बाछा र थुनका

प्रेमी तपस्वी— मोटा मानिस कुनै राम्री राजकन्यामा मुग्ध भयो र उसलाई पाउन खोज्दा सकेन । अन्तमा उसले निश्चय गर्‍यो—म संन्यासी भएर तपस्या गर्दछु । मसा तपोबल आएपछि त्यो कन्या सहजै पाउँ हुनेछ । त्यही निश्चय अनुसार त्यो दरिद्र संसार त्यागेर उग्र तपस्यामा प्रवृत्त भयो । केही दिनमै तपस्या गर्नाले त्यसको ख्याति बढ्दै गयो । धनी-दरिद्र सबै श्रेणीका मानिस त्यस तपस्वीको दर्शन गर्न आउनलागे । विस्तार-विस्तार उसको ख्याति राजदरबारसम्म पुग्यो । एक दिन त्यो राजकन्या स्वयं त्यस तपस्वीको दर्शन गर्न आई । त्यसलाई सामुन्ने देख्नासाथ तपस्वीका भित्री आँखा खुले । उसले विचार गर्‍यो—जुन प्रभुको प्रेमले आज यो राजकन्या मेरो दर्शन गर्न आएकी छ । अब ती प्रभुको प्रेम त्यागेर यो राजकन्याविषय प्रेम गर्नु उचित छैन । परिणाममा तपस्वीको हृदयमा ऐहिक प्रेम हरायो र पारमार्थिक प्रेममा मग्न भयो ।

भारले भरिएका भाई र आफ्नै प्रभावले बढेका समस्त प्राणीहरूलाई आनन्दित पार्ने वर्षाऋतुको शोभा देखेर भगवान् इनको प्रशंसा गर्नलागे ।। ३०।३१ ॥ राम र कृष्ण यस प्रकार व्रजमा रहँदा वस्ता मेघमालाले रहित तथा स्वच्छ जल र शान्त वायुले सुशोभित भएको शरद् ऋतुको आगमन भयो ॥ ३२ ॥ शरद् ऋतुमा कमल फुल्नाले जलाशय स्वच्छ भए, जस्तै–योगभ्रष्ट पुरुषको चित्त योगाभ्यासले निर्मल हुन्छ ॥ ३३ ॥ शरद् ऋतुले आकाशका मेघ, वर्षाकालमा बढेका जीव, पृथ्वीको हिलो-माटो, जलमा जमेको मल नष्ट पारिदियो, जस्तै–भगवान्को भक्ति चारै आश्रमीका पाप नष्ट पारिदिन्छ ॥३४॥ मेघगण आफ्नो जलरूपी सर्वस्व त्यागेर शुभ्र कान्तिले शोभित हुन लागे, जस्तै—विविध एषणाहरू त्यागेर पुण्यात्मा र शान्त स्वभाव मुनिजन शोभित हुन्छन् ॥ ३५ ॥ पर्वतगण कतै झर्नाबाट स्वच्छ जल छाड्थे र कतै छाड्दैनथे, जस्तै–ज्ञानीजन बेला-बेलामा ज्ञानामृतको वर्षा गर्दछन र कहिले गर्दैनन् पनि ॥ ३६ ॥ थोरै जलमा बस्ने जीवहरू नित्य प्रति हुने क्षीणता जान्दैनन् जस्तै—कुटुम्बमा आसक्त मूढ प्राणी आफ्नो नित्य क्षीण हुँदै गएको आयुष्य-

वीस्य सर्वभूतमुदावहाम् ॥ भगवान्पूजयाञ्चक्रे आत्मशक्त्युपबृंहिताम् ॥ ३१ ॥ एवं निवसतोस्तस्मिन्रामकेशवयोर्व्रजे ॥ शरत्समभवद्व्यभ्रा स्वच्छाम्ब्वपरुषानिला ॥ ३२ ॥ शरदा नीरजोत्पत्त्या नीराणि प्रकृतिं ययुः ॥ भ्रष्टानामिव चेतांसि पुनर्योगनिषेवया ॥ ३३ ॥ व्योम्नोऽब्दं भूतशावल्यं भुवः पङ्कमपां मलम् ॥ शरज्जहाराश्रमिणां कृष्णे भक्तिर्यथाऽशुभम् ॥ ३४ ॥ सर्वस्वं जलदा हित्वा विरेजुः शुभ्रवर्चसः ॥ यथा त्यक्तैषणाः शान्ता मुनयो मुक्तकिल्बिषाः ॥ ३५ ॥ गिरयो मुमुचुस्तोयं क्वचिन्न मुमुचुः शिवम् ॥ यथा ज्ञानामृतं काले ज्ञानिनो ददते न वा ॥ ३६ ॥ नैवाविदन्क्षीयमाणं जलं गाधजलेचराः ॥ यमायुरन्वहं क्षय्यं नरा मूढाः कुटुम्बिनः ॥ ३७ ॥ गाधवारिचरास्तापमविन्दञ्छरदर्कजम् ॥ यथा दरिद्रः कृपणः कुटुम्ब्यविजितेन्द्रियः ॥३८॥ शनैः शनैर्जहुः पङ्कं स्थलान्यामं च वीरुधः ॥ यथाऽहंममतां धीराः शरीरादिष्वनात्मसु ॥ ३९ ॥ निश्चलाम्बुरभूत्तूष्णीं समुद्रः शरदागमे ॥ आत्मन्युपरते सम्यङ्मुनिर्व्युपरतागमः ॥ ४० ॥ केदारेभ्यस्त्वपोऽगृह्णन्कर्षका दृढसेतुभिः ॥ यथा प्राणैः स्रवज्ज्ञानं तन्निरोधेन योगिनः ॥ ४१ ॥ शरदर्कांशुजाँस्तापान्भूतानामुडुपोऽहरत् ॥ देहाभिमानजं बोधो मुकुन्दो व्रजयोषिताम् ॥ ४२ ॥ खमशोभत निर्मेघं शरद्वि-

लाई जान्न सक्तैन ॥ ३७ ॥ थोरै जलमा बस्ने प्राणीहरूलाई शरत्कालीन सूर्यको तापले यसरी सन्तप्त पार्नलाग्यो, जसरी अजितेन्द्रिय, दरिद्र र कृपण कुटुम्बीलाई विविध सांसारिक कष्ट दुःख दिइरहन्छ ॥ ३८ ॥ पृथ्वी हिलोलाई र लताहरू आफ्नो कमलोपन विस्तार-विस्तार यसरी छाड्न लागे, जस्तै धीर पुरुष शरीरादि अनात्म पदार्थमा विस्तार-विस्तार ममता र अहन्लाई त्यागिदिन्छन् ॥ ३९ ॥ शरद्ऋतु गएपछि जलको वेग शान्त हुनाले समुद्र गर्जन रहित भयो, जस्तै–मनबाट उपरत भएपछि मुनिजन वैदिक कर्मकाण्ड छाडेर शान्त हुन्छन् ॥४० ॥ कृषक खेतका आलीहरू फोरेर निस्कने पानी बलियो बाँध बाँधेर रोक्नलागे । जस्तै–योगिराजहरू इन्द्रिय-द्वारहरूलाई रोकेर तिनीहरू द्वारा क्षीण हुने ज्ञानका रक्षक-बन्दछन् । ४१ ॥ शरत्कालीन सूर्यका किरणले हुने प्राणीहरूको तापलाई चन्द्रमा आफ्ना शीतल किरणहरूले शान्त पार्न लागजस्तैगे—देहाभिमान जनित दुःखलाई ज्ञान र व्रजवनिताहरूका तापलाई श्रीकृष्णचन्द्र सहजै निवारण गरेर पर सारिदिन्थे ॥ ४२ ॥ शरद्ऋतुको निर्मल र मेघहीन आकाश रातमा तारागणका समूहले मनोहर र सुशोभित हुन लागे,

जस्तै–वेदको वास्तविक अर्थ जान्ने सत्त्वगुणी चित्त शोभायमान हुन्छ ॥४३॥ आकाशमा तारागणका साथै अखण्ड मण्डलले समलंकृत चन्द्रमा शोभित हुन लाग्यो, जस्तै–पृथ्वीतलमा यादवहरूका माझ यदुपति कृष्ण सुशोभित हुन्छन् ॥४४॥ वनका पुष्पसित टक्कर खाएर आएको समशीतोष्ण वायुको स्पर्श पाएर सबैलोकको ताप हराएर गयो, तर जसको चित्त कृष्णले चोरिसकेका थिए, ती गोपिजीले आफ्नू विरह ताप शान्त पार्न सकेनन् ॥४५॥ शरदृऋतुमा गाई, मृग, पक्षी र नारीहरू ऋतुमती भएर तिनका पति त्यसको अनुभव गर्नलागे। जस्तै–कुनै समर्थ सत्पुरुष द्वारा विधिवत् गरिएका क्रियाहरूका फल उनको अनुसरण गर्दछन् ॥४६॥ हे राजन्! जस्तै–राजालाई देखेर चोर बाहेक अन्य सबै निर्भय हुन्छन्, त्यस्तै नै सूर्यको उदय भएपछि कुमुदिनी बाहेक अन्य सबै प्रकारका सरसिज प्रफुल्लित हुन्छन् ॥४७॥ त्यस बखत पुर र गाउँमा नवान्न प्राशन आदि वैदिक र इन्द्रिय सम्बन्धी लौकिक उत्सवहरूले शोभायमान र पाकेका अन्नले सम्पन्न भूमि श्रीहरिका दुवै कला अर्थात् राम र कृष्णले शोभित भइन् ॥४८॥ जस्तै–सिद्धगण मौका उपस्थित भएपछि देवादि शरीर प्राप्त

मलतारकम् ॥ सत्त्वयुक्तं यथा चित्तं शब्दब्रह्मार्थदर्शनम् ॥ ४३ ॥ अखण्डमण्डले व्योम्नि रराजोडुगणैः शशी ॥ यथा यदुपतिः कृष्णो वृष्णिचक्रवृतो भुवि ॥४४॥ आश्लिष्य समशीतोष्णं प्रसूनवनमारुतम् ॥ जनास्तापं जहुर्गोप्यो न कृष्णहृतचेतसः ॥४५॥ गावो मृगाः खगा नार्यः पुष्पिण्यः शरदाऽभवन् ॥ अन्वीयमानाः स्ववृषैः फलैरीशक्रिया इव ॥ ४६ ॥ उदहृष्यन्वारिजानि सूर्योत्थाने कुमुद्विना ॥ राज्ञा तु निर्भया लोका यथा दस्यून्विना नृप ॥४७॥ पुरग्रामेष्वाग्रयणै रैन्द्रियैश्च महोत्सवैः ॥ बभौ भूः पक्वसस्याढ्या कलाभ्यां नितरां हरेः ॥४८॥ वणिङ्मुनिनृपस्नाता निर्गम्यार्थान्प्रपेदिरे॥ वर्षरुद्धा यथा सिद्धाः स्वपिण्डान्काल आगते ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे प्रावृट्शरद्वर्णनं नाम विंशतितमोऽध्यायः ॥२०॥

श्रीशुक उवाच ॥ इत्थं शरत्स्वच्छजलं पद्माकरसुगन्धिना ॥ न्यविशद्वायुना वातं सगोगोपालकोऽच्युतः ॥ १ ॥ कुसुमितवनराजिशुष्मिभृङ्गद्विजकुलघुष्टसरःसरिन्महीध्रम् ॥ मधुपतिरवगाह्य चारयन्गाः सहपशुपालबलश्चुकूज वेणुम् ॥ २ ॥ तद्व्रजस्त्रिय आश्रुत्य वेणुगीतं स्मरोदयम् ॥ काश्चित्परोक्षं कृष्णस्य स्वसखीभ्योऽन्ववर्णयन् ॥ ३ ॥ तद्वर्णयितुमारब्धाः स्मरन्त्यः कृष्णचेष्टितम् ॥ नाशकन्स्मरवेगेन विक्षिप्तमनसो नृप ॥ ४ ॥ बर्हापीडं नटवरवपुः कर्णयोः कर्णिकारं बिभ्रद्वासः कनककपिशं वैजयन्तीं च मालाम् ॥ रन्ध्रान्वेणोरधरसुधया पूरयन्गो-

गर्दछन्, त्यस्तै नै वैश्य, मुनि, राजा र ब्रह्मचारी आदि गएर आफाफ्ना काममा लागे ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां विंशोऽध्यायः ॥२०॥

(वेणुगीत) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! शरत्काल आउनाले जसका जलाशयहरूको जल निर्मल भइसकेको थियो र जसमा कमलवनको सुमधुर सुगन्धले सुरभित मन्द-मन्दवायु चल्न थालिसकेको थियो, त्यस वनमा श्रीअच्युतले गाईहरू र गोपालहरूका साथै प्रवेश गरे ॥ १ ॥ जहाँ फुलेका वनको पंक्तिहरूमा मदमत्त भ्रमरगण र पक्षीहरूले बोल्नाले सरोवर, नदी र पर्वत गुञ्जायमान भइरहेथे, त्यस वृन्दावनमा पुगेर श्रीकृष्णले बलरामजी तथा अन्य व्रजका ग्वालबालका साथै गाई चराउँदै आफ्नो बाँसुरी बजाए ॥ २ ॥ कामदेवलाई उद्दीप्त पार्ने त्यो वेणुनाद सुनेर केही गोपिनी आफ्ना संगिनीसित श्रीकृष्णका गुणहरू वर्णन गर्न लागी ॥ ३ ॥ तिनले भन्न थाल्नासाथ

श्रीकृष्णका चरित्रको सम्झना भएर आयो, जसले कामवेगले गर्दा तिनको चित्त चञ्चल हुन गयो र ती वर्ता बोल्न सकेनन् ॥ ४ ॥ तिनले विचार गरे–'दुवै कानमा फूल लगाएका सुवर्ण झैं प्रकाशित पीताम्बर पैन्हेका र घाँटीमा वैजयन्ती माला लगाएका नटवर, चित्तचोर श्रीकृष्णचन्द्रले बाँसुरीका छिद्रलाई अधरामृतले पूर्ण पार्दै आफ्ना चरण-चिह्नहरूले सुशोभित वृन्दावनमा ग्वालबालका मुखबाट आफ्नो सुयश सुन्दै प्रवेश गरे होलान्' ॥ ५ ॥ हे राजन् ! सबै प्राणीका मन हरण गर्ने मुरलीको मधुर ध्वनि सुनेर ब्रजवासीहरू परस्पर कुरा गर्दै मनमनै भगवान्को मनोहर मूर्तिलाई अंकमाल गर्नलागे ॥ ६ ॥ गोपिनीहरू भन्नलागे–हे संगिनी हो ! आफ्ना मित्रहरूसित वनबाट फर्कका र गाई-बाछाका पछि-पछि हिंडेर ब्रजमा प्रवेश गर्ने वेला दुवै ब्रजराजकुमारका, बजेको वंशीबाट सुशोभित प्रणयकटाक्षयुक्त मुखामृतलाई जसले नेत्रद्वारा पान गरेको होला, ती व्यक्ति धन्य हुन्, किनकि हामी त नेत्रको परम लाभ यही मान्दछौं ॥ ७ ॥ अर्की गोपिनी भन्दछे–'अहो ! नूतन आम्रपल्लव, मयुर पिच्छ, फूलका गुच्छा तथा स्थल र जल दुवैमा उत्पन्न हुने कमल-कुसुमहरूका माला तथा नीलो र पहेंलो वस्त्र लगाएका विचित्र वेषधारी बलराम र कृष्ण गोपालहरूका गोष्ठीमा जुन वेला प्रवेश गर्दछन्, तब यस्ता देखिन्छन्, जस्तै रङ्ग भूमिमा

पवृन्दैर्वृन्दारण्यं स्वपदरमणं प्राविशद्गीतकीर्तिः ॥ ५ ॥ इति वेणुरवं राजन्सर्वभूतमनोहरम् ॥ श्रुत्वा व्रजस्त्रियः सर्वा वर्णयन्त्योऽभिरेभिरे ॥ ६ ॥ गोप्य ऊचुः ॥ अक्षण्वतां फलमिदं न परं विदामः सख्यः पशूननु विवेशयतोर्वयस्यैः ॥ वक्त्रं व्रजेशसुतयोरनुवेणुजुष्टं यैर्वा निपीतमनुरक्तकटाक्षमोक्षम् ॥ ७ ॥ चूतप्रवालबर्हस्तबकोत्पलाब्जमालानुपृक्तपरिधानविचित्रवेषौ ॥ मध्ये विरेजतुरलं पशुपालगोष्ठ्यां रङ्गे यथा नटवरौ क च गायमानौ ॥ ८ ॥ गोप्यः किमाचरदयं कुशलं स्म वेणुर्दामोदराधरसुधामपि गोपिकानाम् ॥ भुङ्क्ते स्वयं यदवशिष्टरसं ह्रदिन्यो हृष्यत्त्वचोऽश्रु मुमुचुस्तरवो यथार्थाः ॥ ९ ॥ वृन्दावनं सखि भुवो वितनोति कीर्तिं यद्देवकीसुतपदाम्बुजलब्धलक्ष्म ॥ गोविन्दवेणुमनु मत्तमयूरनृत्यं प्रेक्ष्याद्रिसान्वपरतान्यसमस्तसत्त्वम् ॥१०॥ धन्याः स्म मूढमतयोऽपि हरिण्य एता या नन्दनन्दनमुपात्तविचित्रवेषम् ॥ आकर्ण्य वेणुरणितं सहकृष्णसाराः पूजां दधुर्विरचितां प्रणयावलोकैः ॥११॥ कृष्णं निरीक्ष्य वनितोत्सवरूपशीलं श्रुत्वा च तत्क्वणितवेणुविचित्रगीतम् ॥ देव्यो विमानगतयः स्मरनुन्नसारा भ्रश्य-

दुइ श्रेष्ठ नट विराजमान छन्' ॥८॥ अर्की गोपी भन्दछे–'ए गोपिनी हो ! यो बाँसुरीले यस्तो कुन पुण्य गरेकी रहिछ र यो गोपिनीहरूको भोग्य भगवान्को अधरामृत स्वयं पान गरेर अरूको निमित्त केवल उब्रेको जुठो छाडिदिन्छे, किनकि जस्तै–भद्रजन आनन्दित हुन्छन्, त्यस्तै नै रोमाञ्चयुक्त देखिइहेका छन् र यी बाँसका वृक्ष कुलका बुढापाका झैं आनन्दाश्रु बगाइरहेका छन्' ॥ ९ ॥ अर्की गोपिनी भन्दछे—'हे सखी ! यो वृन्दावन त भूलोकको कीर्ति फिंजिरहेछ, किनकि देवकीनन्दनका चरण-चिह्नले यसलाई अपूर्व शोभा प्राप्त भएको छ । जुन वेला भगवान् बाँसुरी बजाउँछन् त्यस वेला मन्द-मन्द गर्जने मेघ ठानेर मत्तमयुर नाच्न थाल्दछन् । तिनको नृत्य देखेर पर्वत माथि डुल्ने प्राणी निश्चेष्ट भएर चुपचाप उभिइरहन्छन्' ॥ १० ॥ अर्की भन्दछे—'ए संगिनी ! मूढ बुद्धि भए पनि ती मृगीहरू धन्य हुन्, जो बाँसुरीको स्वर सुन्नासाथ आफ्नू पति कृष्णसार मृगसित आएर आफ्ना प्रणय-कटाक्षले विचित्र वेषधारी नन्दनन्दनको पूजा गर्दछन्' ॥११॥ यौटी गोपी भन्दछे—'जसको रूप र जसको स्वभाव सबै स्त्रीलाई आनन्दित पार्दछ, ती वासुदेव श्रीकृष्ण-

चन्द्रलाई देखेर तथा उनले बजाएको बाँसुरीको विचित्र स्वर सुनेर आफ्ना पतिसित विमानमा बसेर आएका सुर-सुन्दरीहरू कामवेगले यति बढी *अधीर भएका थिए कि तिनका कपालबाट फूल खस्न लाग्यो, तिनका कटिवस्त्र सर्नलागे, तर तिनलाई त्यसको केही ज्ञान थिएन ॥१२॥ यौटी भन्दछे—हेर, भगवान्‌का मुखबाट निस्केको वेणुगीतरूपी अमृत आफ्ना श्रवण पुटले पिउँदै तथा सजल नेत्रद्वारा उनको मधुर मूर्ति हृदयङ्गम गरेर आलिङ्गन गर्दै गाईहरू निश्चेष्ट झैं भइरहेका थिए र तिनका बाछा पनि दूध चाखिरहेको थुनको घुट्का मुखबाट नगाउँदै निश्चेष्ट झैं उभिएका छन् ॥१३॥ अर्की भन्दछे—सखि हो ! यस वनका पक्षी मुनि हुन्, किनकि यी जहाँबाट श्रीकृष्णदर्शन सुविस्ताले हुन्छ, त्यस्ता वृक्षका पल्लवयुक्तहाँगा-

त्प्रसूनकवरा मुमुहुर्विनीव्यः ॥ १२ ॥ गावश्च कृष्णमुखनिर्गतवेणुगीतपीयूषमुत्तभितकर्णपुटैः पिबन्त्यः ॥ शावाः स्नुतस्तनपयः कवलाः स्म तस्थुर्गोविन्दमात्मनि दृशाऽश्रुकलाः स्पृशन्त्यः ॥ १३ ॥ प्रायो बताम्ब विहगा मुनयो वनेऽस्मिन्कृष्णेक्षितं तदुदितं कलवेणुगीतम् ॥ आरुह्य ये द्रुमभुजान्रुचिरप्रवालान् शृण्वन्त्यमीलितदृशो विगतान्यवाचः ॥ १४ ॥ नद्यस्तदा तदुपधार्य मुकुन्दगीतमावर्तलक्षितमनोभवभग्नवेगाः ॥ आलिङ्गनस्थगितमूर्मिभुजैर्मुरारेर्गृह्णन्ति पादयुगलं कमलोपहाराः ॥ १५ ॥ दृष्ट्वाऽऽतपे व्रजपशून्सह रामगोपैः सञ्चारयन्तमनु वेणुमुदीरयन्तम् ॥ प्रेमप्रवृद्ध उदितः

हरूमा बसेर आफ्नो कलरव छाडी निर्निमेष नयनले उनैतिर हेर्दै एकाग्रभावले उनको मनोहर वेणुवाद सुनिरहेका छन् ।१४॥ अर्की गोपीले भनी—सचेतन प्राणीहरूको के कुरा, भ्रमरद्वारा लक्षित हुने कामविकारले जसको वेग अड्एिको छ, ती नदीहरू पनि श्रीकृष्ण भगवान्‌को वेणुगीत सुनेर आफ्नो तरङ्गरूपी भुजाले कमल-कुसुमको भेट अर्पण गर्दै गाढ आलिङ्गनले खिन्न कृष्णका चरणयुगल चुमिरहेका छन् ॥१५॥ अर्की गोपी भन्दछे—हेर, चर्को घामको बेला बलरामजी र अन्यान्य गोपगणका साथै भगवान् कृष्णलाई गाई-

* भक्तिको आवश्यकता—मनुष्य भगवान्‌को सनातन अंश हो । उनको आफ्नै अभिन्न अङ्ग हो—( ममैवांशो जीवलोके, जीवभूतः सनातनः ), तर त्यो भगवान्‌सित बिछोडिए झैं छ । यो कुरा उसलाई ज्ञात नहोस् वा त्यो कुरै मायाद्वारा व्यक्त गर्न नसकोस्, तर उसको साधारण आकांक्षा रहन्छ—भगवान् भेटिन्, उनलाई कुनै बाधा बिना आलिङ्गन गरेर उनैसँग एकाकार हुने । यसैनिमित्त त्यो नित्य आनन्द, ऐश्वर्य, नित्य माधुर्य, नित्य स्वातन्त्र्य, नित्य स्वामित्व र नित्य जीवनलाई सम्पूर्णरूपमा पाउन खोज्दछ । यही कारण हो—उसलाई संसारको कुनै पनि स्थितिमा, त्यो देख्दा जति नै अग्लो होस् र त्यसमा जति नै रस आउँदो होस्, तर शान्ति मिल्दैन । त्यसलाई अत्यास लागिरहन्छ । तर अज्ञानवश उसलाई भोगमा जुन रसको प्रतीति हुनलाग्यो, त्यसैले उसमा भोग-वासनाहरू देखिन लागे र ती भोग वासनाको आवरणले उसको आफ्नो भगवान्‌सित भेट्ने स्वाभाविक आवश्यकता रोकियो । यसैनिमित्त त्यो न त आफ्नो आवश्यकता भग्न गर्छ, न त्यसको पूर्ति बिना त्यसलाई शान्ति प्राप्त हुन्छ । भगवान्‌सित उसको त्यस्तो सजातीयता र आत्मीयता छ कि भगवान् उसित भेट्न चाहन्छन्, यही संसारी र संसारको अत्यासको मूल कारण हो । लाँचो छ उनलाई पाउने, त्यो लाँचोलाई जाग्रत गर्न र उनलाई नपाउञ्जेल छटपटाउने, जस्तै—दीर्घकालको प्यासो व्यक्ति पानीको निमित्त छटपटाउँछ, त्यस्तो आवश्यकताले जब भगवान्‌लाई भेट्ने तीव्रतम आकांक्षा उत्पन्न गरिदिन्छ, अनि अरू सारा कामनाहरू स्वयमेव उसै गरी नष्ट हुन्छन्, जसरी सूर्यको प्रकाशले अन्धकार मेटिन्छ । त्यो आवश्यकताको जागृति हुन्छ भोगहरू दुःखमय भन्ने जानेर उनको यथार्थ ज्ञान भएपछि । भोगका स्वरूप जानेपछि उनमा रस आउन समाप्त हुन्छ । अनि स्वयं नै तीव्रतर अरुचि भएर आउँछ, तीनै लाग्न थाल्दछन् । अति जति त्यसबाट अरुचि हुन्छ, उति-उति भगवत्प्राप्तिको, नित्य रसको र अनन्तलाई पाउने तीव्र इच्छा जाग्दछ । अनि एक दिन पनि प्रभुबिना टिक्न सकिन्न र यस्तो तीव्रतम आकांक्षाले तत्काल ती प्रियतमसित भेट गराइदिन्छ । अतः भोगका यथार्थ रूप जान्ने र आफूलाई भगवान्‌को बनाउने चेष्टा गर । यो नियम छ—यस सत्यलाई धारण गर—भगवान न परवर्ती छन्, न तिम्रोदेखि पर छन्, नटुर्ल भर्नेछन् । तिमी उनका बनेर,आतुर र अधर भई इच्छा गर्नेछौ, तत्काल ती पनि दगुर्दै आएर आफ्ना बाहुपाशमा बाँधी आफूमा मिलाएर कृतार्थ पार्ने छन् ।

चराउँदै र बाँसुरी बजाएका देखेर उनको प्रेमवश उर्लेर आएको मेघ कुसुमावलि जस्तै जलका थोपा सहित आफ्नू शरीरले आफ्ना सखा कृष्णमाथि छत्र लगाइरहेको छ'। १६।। अर्कीले भनी—यी वनका भिल्लिनी पनि धन्य हुन्, किनकि जुन कुमकुम श्रीकृष्णकी प्रियतमा गोपिनी आफ्ना स्तनमा लगाउँछन्, उही जब कृष्णका चरणमा लागेर तिनको अरुण कान्तिले रंजित भएर वनको घाँसमा लाग्दछ, तब उसलाई देखेर इनको मनमा कामवेग उत्पन्न हुन्छ र ती त्यो कुमकुम आफ्ना मुख र कुचमा लगाएर आफ्नू व्यथा फाल्दछन् ।।१७।। एक गोपिनीले भनी—ए गोपिनी हो ! यो गोवर्धन पर्वत अवश्य हरिभक्तहरूमा श्रेष्ठ छ किनकि राम र कृष्णका चरणको स्पर्श पाउनाले आनन्दित भएर यो जल, हरिया घाँस, कन्दरा र कन्दमूलादि दिएर गाई र ग्वाल-बालसित उनको आदर-सत्कार गर्दछ ।।१८।। अर्कीले भनो—हे सखि हो ! यो कति छक्क पर्ने कुरा हो—जसका काँधमा गाई-हरू बाँध्ने डोरी सुशोभित भइरहेको छ, ती राम र कृष्ण जब आफ्ना मित्रहरूसित गाई लिएर मीठा बजाउँदै अर्को वनमा जान्छन्, त्यस बेला उनका मधुर पदयुक्त उदार

कुसुमावलीभिः सख्युर्व्यधात् स्ववपुषाऽम्बुद आतपत्रम् ॥ १६ ॥ पूर्णाः पुलिन्द्य उरुगायपदाब्जरागश्रीकुंकुमेन दयितास्तनमण्डितेन ॥ तद्दर्शन-स्मररुजस्तृणरूषितेन लिम्पन्त्य आननकुचेषु जहुस्तदाधिम् ॥ १७ ॥ हन्तायमद्रिरबला हरिदासवर्यो यद्रामकृष्णचरणस्पर्शप्रमोद ॥ मानं तनोति सहगोगणयोस्तयोर्यत्पानीयसूयवसकन्दरकन्दमूलैः ॥ १८ ॥ गा गोपकैरनुवनं नयतोरुदारवेणुस्वनैः कलपदैस्तनुभृत्सु सख्यः ॥ अस्पन्दनं गतिमतां पुलकस्तरूणां निर्योगपाशकृतलक्षणयोर्विचित्रम् ॥ १ ॥ एवंविधा भगवतो या वृन्दावनचारिणः ॥ वर्णयन्त्यो मिथो गोप्यः क्रीडा-स्तन्मयतां ययुः ॥ २० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे वेणुगीतं नाम एकविंशोऽध्यायः ॥ २१ ॥

श्रीशुक उवाच ॥ हेमन्ते प्रथमे मासि नन्दव्रजकुमारिकाः ॥ चेरुर्हविष्यं भुञ्जानाः कात्यायन्यर्चनव्रतम् ॥१॥ आप्लुत्याम्भसि कालिन्द्या जलान्ते चोदितेऽरुणे ॥ कृत्वा प्रतिकृतिं देवीमानर्चुर्नृप सैकतीम् ॥ २ ॥ गन्धैर्माल्यैः सुरभिभिर्बलिभिर्धूपदीपकैः ॥ उच्चावचैश्चोपहारैः प्रवालफलतण्डुलैः ॥ ३ ॥ कात्यायनि महामाये महायोगिन्यधीश्वरि ॥ नन्दगोपसुतं देवि पतिं मे कुरु ते नमः ॥ इति मन्त्रं जपन्त्यस्ताः पूजां चक्रुः कुमारिकाः ॥४॥ एवं मासं

*वेणुनाद सुनेर जङ्गम जीव स्थिर हुन्छन् र वृक्षलाई रोमाञ्चित भएर आउँछ' ।।१९।। श्रीवृन्दावन-विहारीका लीलाहरू यस प्रकार गान गर्दै गोपिनीहरू उनका प्रेमरसमा लीन भए ।।२०।। इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायामेकविंशोऽध्यायः ।।२१।।

( चीरहरण लीला )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! हेमन्त ऋतुको प्रथम अर्थात् मार्गशीर्षमा नन्दको व्रजका बालिकाले हविष्यान्न खाएर कात्यायनी देवीको पूजाको व्रत लिए ।।१।। हे नृप ! ती सबै गोपिनी अरुणोदयको बेला यमुनामा स्नान गरेर तटमै देवीको बालुकामयी प्रतिमा बनाई चन्दन, माला, थरि-थरिका नैवेद्य, धूप-दीप, साना-ठूला अनेक प्रकारका उपहार र पल्लव, फल-फूल र तण्डुलादिले पूजा गन गर्दथे ।।२।।३।। पूजाको अन्त्यमा ती भन्दथे—हे कात्यायनि । हे महामाये ! हे महायोगिनी ! हे अधीश्वरि ! हजुर

* कसले हेर बजाउँदैछ रसिलो, राम्रो, मिठो बाँसुरी । जसको तान सुनेर जीव जड भौ निर्जीव लाटो सरी ।। वृन्दैउन् सब लडिएर वनमा आश्चर्य लाग्ने गरी । त्यागी लाज नमानि धाक मनमा [illegible] ।। ऐलहे छन् मनमा म शूर बलियो छु वीर भन्ने जति । लचन्छन् सहजै सुनेर ध्वनि त्यो सम्झन्छ चाँडो मति ।। त्यागी को परवार पुत्र पति वा नाना थरी सम्पति । सकेनौ घर बस्न आज [illegible] ।।

नन्द-गोपका पुत्र कृष्णलाई हाम्रो पति बनाउनोस् । हे देवि ! हामी हजुरलाई नमस्कार गर्दछौं ।' यो मन्त्र जप्दै ती कुमारीहरू देवीको उपासना गर्दथे ॥ ४ ॥ यसरी भगवान् कृष्णमा मन लगाएर गोपकुमारीहरूले कात्यायनी व्रतको पालन गर्दै 'नन्दका छोरा हाम्रो पति होऊन्' यस अभिलाषाले एक महीनासम्म भद्रकालीको पूजा गरे ॥ ५ ॥ ती दिनहुँ बिहानै अरुणोदय भन्दा पहिल्यै उठेर, परस्पर नाम लिएर सबै उठाई यमुनामा स्नान गर्न संगै जान्थे । त्यस बेला ती यौटीले अर्कीको हात समाएर उच्च स्वरले कृष्णचन्द्रका लीला गान गर्दै हिड्दथे ॥ ६ ॥ एक दिन सबै गोपिनी नित्य झैं यमुनाजी गए र आफ्नाफ्ना वस्त्र तटमा राखेर श्रीकृष्णको गुण-गान गर्दै प्रसन्नतापूर्वक जल विहार गर्नलागे ॥ ७ ॥ उसै बेला योगेश्वरका पनि ईश्वर भगवान् कृष्ण उनको अभिप्राय जानेर तिनको व्रत सफल तुल्याउन आफ्ना साथी ग्वालबाल संगै यमुनाजी पुगे ॥ ८ ॥ यहाँ उनको वस्त्र लिएर तुरुन्त कदम्बको रुखमा उक्ले र हास्य निमग्न अन्य सखाहरूसित स्वयं पनि हास्यनिमग्न भएर भन्नलागे—॥९॥ हे गोपिका हो ! तिमीहरू यहाँ आएर आफ्नाफ्ना वस्त्र लैजाओ । म

व्रतं चेरुः कुमार्यः कृष्णचेतसः भद्रकाली समानर्चुर्भूयान्नन्दसुतः पतिः ॥ ५ ॥ उषस्युत्थाय गोत्रैः स्वैरन्योन्याबद्धबाहवः ॥ कृष्णमुच्चैर्जगुर्यान्त्यः कालिन्द्यां स्नातुमन्वहम् ॥ ६ ॥ नद्यां कदाचिदागत्य तीरे निक्षिप्य पूर्ववत् ॥ वासांसि कृष्णं गायन्त्यो विजह्रुः सलिले मुदा ॥ ७ ॥ भगवाँस्तदभिप्रेत्य कृष्णो योगेश्वरेश्वरः ॥ वयस्यैरावृतस्तत्र गतस्तत्कर्मसिद्धये ॥ ८ ॥ तासां वासांस्युपादाय नीपमारुह्य सत्वरः ॥ हसद्भिः प्रहसन्बालैः परिहासमुवाच ह ॥ ९ ॥ अत्रागत्याबलाः कामं स्वं स्वं वासः प्रगृह्यताम् ॥ सत्यं ब्रवाणि नो नर्म यद्यूयं व्रतकर्शिताः । १० ॥ न मयोदितपूर्वं वा अनृतं तदिमे विदुः ॥ एकैकशः प्रतीच्छध्वं सहैवोत सुमध्यमाः ॥ ११ ॥ तस्य तत्क्ष्वेलितं दृष्ट्वा गोप्यः प्रेमपरिप्लुताः ॥ व्रीडिताः प्रेक्ष्य चान्योन्यं जातहासा न निर्ययुः ॥ १२ ॥ एवं ब्रुवति गोविन्दे नर्मणाक्षिप्तचेतसः ॥ आकण्ठमग्नाः शीतोदे वेपमानास्तमब्रुवन् ॥ १३ ॥ माऽनयं भोः कृथास्त्वां तु नन्दगोपसुतं प्रियम् ॥ जानीमोऽङ्ग व्रजश्लाघ्यं देहि वासांसि वेपिताः ॥ १४ ॥ श्यामसुन्दर ते दास्यः करवाम तवोदितम् ॥ देहि वासांसि धर्मज्ञ नो चेद्राज्ञे ब्रवामहे ॥ १५ ॥ श्रीभगवानुवाच ॥ भवत्यो यदि मे दास्यो मयोक्तं वा करिष्यथ ॥ अत्रागत्य स्ववासांसि प्रतीच्छन्तु शुचिस्मिताः

तिमीहरूसित सत्य भन्दछु—ठट्टा होइन, किनकि व्रत गरेर अहिले साह्रै दुर्बल भएकाछौ ॥ १० ॥ हेर, यी सबै बालक जान्दछन्, म कहिल्यै झुठो बोल्दिन । हे सुन्दरी हो ! तिमीहरू एक्लैसित या एकैपल्ट आफ्नाफ्ना वस्त्र लैजाओ ॥ ११ ॥ भगवान्ले यसरी ठट्टा गरेको देखेर गोपिनीहरू प्रेममग्न भए । ती लाजले यौटी अर्कीतिर हेरेर मुसुक्क हाँस्दै जलको बाहिर निस्केनन् ॥ १२ ॥ भगवान्ले ठट्टामै त्यसरी भन्नाले तिनको मन उनैतिर तानियो र ती शीतल जलमा घाँटीसम्म डुबेर चिसोले काम्दै उनसित अनुनय-विनय गर्दै भन्नलागे—॥१३॥ 'मोहन ! यस्तो अन्याय नगर, हामी जान्दछौं—तिमी नन्दजीका प्रिय पुत्र हौ र हाम्रा प्रिय सखा हौ । व्रजबासी तिम्रो बढाई गर्दछन् । हेर, हामी जाडोले कामिरहेका छौं तिमी हाम्रा लुगा हामीलाई देऊ ॥ १४ ॥ हे श्यामसुन्दर ! हामी तिम्रा दासी हौं । तिमी जे आज्ञा दिनेछौ, हामी त्यही गर्नेछौं । तिमी ठूला धर्मज्ञ छौ, अतः हाम्रा वस्त्र देऊ । नभए हामी गएर कंस वा नन्दजीसित कुरा लाउँछौं ॥ १५ ॥ भगवान भन्दछन्—यदि तिमीहरू मेरा दासी हौ र मेरो आज्ञा मान्नलाई सबै तयार छौ भने यहाँ भनेर आएर आफ्ना लुगा

लैजाओ ॥ १६ ॥ अनि चीसोले कामिरहेका ती सबै गोपिनी जाडोले हार मानेर गुप्ताङ्गलाई हातले छोपी जलाशयको बाहिर निस्के। यो देखेर तिनको शुद्ध भावले प्रसन्न भई भगवान्‌ले तिनका वस्त्र काँधमा राखेर मुसु-मुसु हाँस्तै भन्नलागे—॥ १७-१८ ॥ तिमीहरूले कात्यायनी देवीको पूजाको व्रत लिएर पनि जुन वस्त्रहीन भएर जलमा स्नान गर्‍यौ, यसले वरुणदेवको अपमान भयो। त्यस दोषको शान्तिका लागि तिमीहरू शिरमा दुवै हात राखी न्युरेर प्रणाम गर अनि आफ्ना लुगा लेओ ॥ १९ ॥ भगवान्‌ले यति भने पछि व्रजबालाहरूले ठाने–वस्त्रहीन भएर स्नान गर्नाले हाम्रो व्रत खण्डित भयो। अतः त्यसको निर्विघ्न समाप्तिका लागि तिनले समस्त कर्मकासाक्षी कृष्णलाई प्रणाम गरे किनकि उनै सबै पाप नाश गर्ने महाप्रभु थिए ॥२०॥ यस प्रकार देवकीनन्दन भगवान् कृष्ण तिनलाई आफ्नो आज्ञानुसार प्रणाम गरेका देखेर प्रसन्न भए र दयापूर्वक तिनका वस्त्र फर्काइदिए ॥२१॥ राजन्! कृष्णले गोपीहरूसित छलका कुरा गरे, तिनको लज्जा समाप्त पारे, ती सित ठट्टा गरे, तिनलाई काठका पुतली झैं नचाएर तिनका वस्त्र हरण गरे, तापनि ती प्रसन्नित

॥१६॥ ततो जलाशयात्सर्वा दारिकाः शीतवेपिता ॥ पाणिभ्यां योनिमाच्छाद्य प्रोत्तेरुः शीतकर्शिताः ॥ १७ ॥ भगवानाह ता वीक्ष्य शुद्धभाव-प्रसादितः ॥ स्कन्धे निधाय वासांसि प्रीतः प्रोवाच सस्मितम् ॥ १८ ॥ यूयं विवस्त्रा यदपो धृतव्रता व्यगाहतैतत्तदु देवहेलनम् ॥ बद्ध्वाञ्जलिं मूर्ध्न्यपनुत्तयेंऽहसः कृत्वां नमोऽधो वसनं प्रगृह्यताम् ॥ १९ ॥ इत्यच्युतेनाभिहितं व्रजाबला मत्वा विवस्त्राप्लवनं व्रतच्युतिम् ॥ तत्पूर्तिकामास्तदशेष-कर्मणां साक्षात्कृतं नेमुरवद्यमृग्यतः ॥ २० ॥ तास्तथाऽवनता दृष्ट्वा भगवान्देवकीसुतः ॥ वासांसि ताभ्यः प्रायच्छत्करुणस्तेन तोषितः ॥ २१ ॥ दृढं प्रलब्धास्त्रपया च हापिताः प्रस्तोभिताः क्रीडनवच्च कारिताः ॥ वस्त्राणि चैवापहृतान्यथाप्यमुं ता नाभ्यसूयन्प्रियसङ्गनिर्वृताः ॥२२॥ परिधाय स्ववासांसि प्रेष्ठसङ्गमसज्जिताः ॥ गृहीतचित्ता नो चेलुस्तस्मिँल्लज्जायितेक्षणाः ॥ २३ ॥ तासां विज्ञाय भगवान्स्वपादस्पर्शकाम्यया ॥ धृतव्रतानां संकल्पमाह दामोदरोऽबलाः ॥ २४ ॥ सङ्कल्पो विदितः साध्व्यो भवतीनां मदर्चनम् ॥ मयाऽनुमोदितः सोऽसौ सत्यो भवितुमर्हति ॥ २५ ॥ न मय्यावेशितधियां कामः कामाय कल्पते ॥ भर्जिताः क्वथिता धानाः प्रायो बीजाय नेष्यते ॥ २६ ॥ याताबला व्रजं सिद्धा मयेमा रंस्यथ क्षपाः ॥ यदुद्दिश्य व्रतमिदं चेरुरार्यार्चनं सतीः ॥ २७ ॥ श्रीशुक उवाच ॥ इत्यादिष्टा भगवता लब्धकामाः कुमारिकाः ॥ ध्यायन्त्यस्तत्पदाम्भोजं

रिसाएनन्, बरु आफ्ना प्रियतमको यति संगतले नै ती कृतार्थ भए ॥२२॥ तिनीहरूले आफ्ना लुगा लगाए, तर प्रियतमको त्यस समागमले तिनको चित्त यस्तो अनुरक्त भयो कि ती त्यहाँबाट जान सकेनन् अझ लज्जित दृष्टिले उनैतिर एकहोरो हेरिरहे ॥२३॥ भगवान्‌ले देखे–ती व्रतवती कुमारीहरूको कात्यायनी-पूजनको सङ्कल्प उनको चरण स्पर्शको कामनाले नै हो। अतः तिनले भने–॥ २४ ॥ 'हे साध्वी हो! म तिमीहरूको विचार जान्दछु–तिमी मेरो पूजा गर्न खोज्दै छौ। म पनि यसको अनुमोदन गर्दछु। तिम्रा सङ्कल्प सत्य हुनेछ अर्थात् तिमीहरूले मलाई पाउने छौ ॥ २५ ॥ किनकि जसको चित्त ममा लागिरहन्छ, तिनका कामना सांसारिक भोगको विषयमा कहिल्यै पनि लाग्दैन वा उत्पन्न हुँदैन। जस्तै–भुटेको वा उमालेको धान आदि अन्न अंकुर उत्पन्न गर्न सक्तैनन्—यो मिथ्या काममा पनि त्यस्तै हुन् ॥ २६ ॥ हे साध्वी हो! अब तिमीहरू

व्रजमा जाओ, तिम्रो व्रत पूर्ण भयो । अब आउने शरद् ऋतुको रात्रिहरूमा मसित रमण गर्नेछौ । यसैको निम्ति यो कात्यायनीको व्रत पूजा तिमीहरूले गरेका थियौ* ।' ॥२७॥ श्रीशुकदेव भन्नुहुन्छ—यसरी भगवान्को आज्ञा पाएर व्रजबालाहरू सफल-मनोरथ भएर उनका चरण-कमलको चिन्तन गर्दै निकै कष्ट मानेर व्रजमा फर्किए ॥ २८ ॥ त्यसपछि गोपगणले घेरिएका भगवान् देवकीनन्दन दाजु बलराम सहित गाई चराउँदै वृन्दावनबाट निकै पर पुगे ॥ २९ ॥ मार्गमा ग्रीष्मऋतुको सूर्यको प्रचण्ड घाममा आफ्नो छायाले छत्र-को काम गर्दै रहेका वृक्षहरू देखेर भगवान्ले व्रजवासीहरूसित भन्नुभयो—हे स्तोककृष्ण ! हे अंशो ! हे श्रीदामन् ! हे सुबल ! हे अर्जुन ! हे विशाल ! हे ऋषभ ! हे तेजस्विन् !

कृच्छ्रान्निविविशुर्व्रजन् ॥ २८ ॥ अथ गोपैः परिवृतो भगवान्देवकीसुतः ॥ वृन्दावनाद्गतो दूरं चारयन्गाः सहाग्रजः ॥ २९ ॥ निदाघार्कातपे तिग्मे छायाभिः स्वाभिरात्मनः ॥ आतपत्रायितान्वीक्ष्य द्रुमानाह व्रजौकसः ॥ ३० ॥ हे स्तोककृष्ण हे अंशो श्रीदामन्सुबलार्जुन ॥ विशालर्षभ तेजस्विन्देवप्रस्थ वरूथप ॥ ३१ ॥ पश्यतैतान्महाभागान्परार्थैकान्तजीवितान् ॥ वातवर्षातपहिमान्सहन्तो वारयन्ति नः ॥ ३२ ॥ अहो एषां वरं जन्म सर्वप्राण्युपजीवनम् ॥ सुजनस्येव येषां वै विमुखा यान्ति नार्थिनः ॥ ३३ ॥ पत्रपुष्पफलच्छायामूलवल्कलदारुभिः ॥ गन्धनिर्यासभस्मास्थितोक्मैः कामान्वितन्वते ॥ ३४ ॥ एतावज्जन्मसाफल्यं देहिनामिह देहिषु ॥ प्राणैरर्थैर्धिया वाचा श्रेय एवाचरेत्सदा ॥ ३५ ॥ इति प्रवालस्य

हे देवप्रस्थ ! हे वरूथप ! ॥ ३१ ॥ एकमात्र अर्काको निम्ति जीवन धारण गर्ने यी महाभाग वृक्षलाई हेर यी, वायु, वर्षा, घाम र तुषारो आदि सहन गर्दै हाम्रो रक्षा गर्दछन् ॥३२॥ समस्त प्राणीहरूका जीवनाधार यी वृक्षको जीवन धन्य छ । हेर, सत्पुरुष झैं अर्थी पुरुष इनाकहाँ आएर कहिल्यै विमुख भई फर्कदैनन् ॥ ३३ ॥ यी आफ्ना पत्र, पुष्प, फल, छाया, जरो, बोक्रा, काठ, गन्ध, गूँद, भस्म, कोपिला र अंकुरादिले सबैको कामना पूर्ण गर्दछन् ॥ ३४ ॥ यस लोकमा देहधारीहरूका जन्मको सफलता यसैमा छ—ती आफ्नो प्राण-

---

* टिप्पणी—हिजो-आजका अल्पज्ञ व्यक्ति भगवान्को चीरहरण-प्रसंगमा अनेक कुतर्क उपस्थित गरेर साधारण मानिसमा भ्रमको बीजारोपण गरिरहेछन् । यो यसैनिम्ति भइरहेको छ कि ती यसको वास्तविक अभिप्राय बुझ्दैनन् । भगवानले चीरहरण गरेर यो भन्नु थियो कि केवल शुद्धात्मा अर्पण गरिन्छ । मनुष्यका तीन उपाधि वा खोलको जड शरीर त्रिगुणात्मक हुनाले विकारवान् रहन्छ । अतः त्यो समर्पित हुन सक्दैन । ती उपाधिका आसक्ति त्यागेर जब जीवात्माको आफ्नो शुद्ध स्वरूपमा स्थित हुन्छ अनि मात्र ईश्वरको समीप जानेयोग्य बन्दछ । भगवानको समीप त केवल नाङ्गो भएर अर्थात् केवल शुद्धात्मा बनेर जानाले नै आत्मसमर्पण स्वीकार हुनेछ र ती प्रिय भेटिन्छन् । अनात्म उपाधिहरूमा आसक्ति राख्नाले ती भेटिँदैनन्, किनकि लज्जा आदिको आवरण चोकिराख्नाले भने यस्तो मिलन असम्भव छ । फेरि शरीरलाई आत्मा मान्नु घोर अज्ञान हो । ज्ञान योग द्वारा सर्वथा मिल्ने छ—अर्थात् आफूलाई आत्मा मान्नु हो । नाङ्गो हुने लज्जा भगवानको साक्षात्कार भएपछि पनि उसैलाई हुन्छ—जो आफूलाई आत्मा नमानेर शरीर मान्दछ र भगवान्लाई पनि सच्चिदानन्द नमानेर केवल मोटा देहधारी मनुष्य ठान्दछ । भक्तको मोटो यो पनि लक्षण छ कि त्यो भगवान्को आज्ञा पालन विचार नगरी तुरुन्त गरोस् । आफ्नो इच्छा-अनिच्छा वा उचित-अनुचित हुने दुराको विचार गर्नु सक्को निमित्त [illegible] हुन् हो । चीरहरणको लीलाले भगवानले यसै लक्षणको अनुसार पनि गोपिनीहरूको परीक्षा लिए । नभए उनका निम्ति जस्ता सक्का गोपिनी थिए उस्तै अवस्था ।'

मन बुद्धि र वाणीले सदा श्रेयको नै आचरण गरोस् ॥ ३५ ॥ यसरी भगवान् कृष्ण वृक्षको प्रशंसा गर्दै नवपल्लव, गुच्छा, फल-फूल रपातहरूले अवका हाँगा न्युरिएका थिए, ती तरु निकुञ्जहरू जोर्दै यमुना तटमा पुगे ॥३६॥ हे राजन् ! त्यहाँ गोपहरूले गाईलाई यमुनाको मधुर, शीतल, स्वादिष्ट स्वच्छ जल खान दिए र आफूले पनि पेट भरि पानी दिए ॥३७॥ अब ती यमुनाको तटवर्ती वनमा स्वच्छन्दतापूर्वक गाईहरू चराइरहेका थिए र ग्वालबालहरूले श्रीकृष्ण र र बलरामको नजीकै गएर भने–॥३८॥इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर कृत 'बालिशी' भाषाटीकायां द्वाविंशोऽध्यायः ॥ २२ ॥

( यज्ञपत्नीमा भगवान्को कृपा ) गोपगण भन्नलागे—हे महाबलशाली बलराम ! हे दुष्ट दलन कृष्ण ! हामी भोकामौं । हजुरहरू कुनै उपायले भोक शान्त पार्नुहवस् ॥१॥ श्रीशुकदेव भन्दछन्–यसरी गोपगणले भनेपछि कृष्णले भक्त ब्राह्मणीमा अनुग्रह गर्नका लागि भन्नुभयो–॥२॥ यहाँबाट अलि पर केही वेदपाठी ब्राह्मण स्वर्ग पाउने इच्छाले आङ्गिरस यज्ञ

बकफलपुष्पदलोत्करैः ॥ तरूणां नम्रशाखानां मध्येन यमुनां गतः ॥ ३६ ॥ तत्र गाः पाययित्वाऽपः सुमृष्टाः शीतलाः शिवाः ॥ ततो नृप स्वयं गोपाः कामं स्वादु वपुर्जलम् ॥ ३७ ॥ तस्या उपवने कामं चारयन्तः पशून्नृप ॥ कृष्णरामावुपागम्य क्षुधार्ता इदमब्रुवन् ॥ ३८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे गोपीवस्त्रापहारो नाम द्वाविंशोऽध्यायः ॥२२॥

गोपा ऊचुः ॥ राम राम महावीर्य कृष्ण दुष्टनिबर्हण ॥ एषावै बाधते क्षुन्नस्तच्छांन्तिं कर्तुमर्हथः ॥१॥ शुक उवाच ॥ इति विज्ञापितो गोपैर्भगवान्देवकीसुतः ॥ भक्ताया विप्रभार्यायाः प्रसीदन्निदमब्रवीत् ॥२॥ प्रयात देवयजनं ब्राह्मणा ब्रह्मवादिनः ॥ सत्रमाङ्गिरसं नाम ह्यासते स्वर्गकाम्यया ॥३॥ तत्र गत्वौदनं गोपा याचतास्मद्विसर्जिताः कीर्तयन्तो भगवत आर्यस्य मम चाभिधाम् ॥ ४ ॥ इत्यादिष्टा भगवता गत्वाऽयाचन्त ते तथा ॥ कृताञ्जलिपुटा विप्रान्दण्डवत्पतिता भुवि ॥ ५ ॥ हे भूमिदेवाः शृणुत कृष्णस्यादेशकारिणः ॥ प्राप्ताञ्जानीत भद्रं वो गोपान्नो रामचोदितान् ॥ ६ ॥ गाश्चारयन्तावविदूर ओदनं रामाच्युतौ वो लषतो बुभुक्षितौ॥तयोर्द्विजा ओदनमर्थिनोर्यदि श्रद्धा च वो यच्छत धर्मवित्तमाः ॥७॥ दीक्षायाः पशुसंस्थायाः सौत्रामण्याश्च सत्तमाः ॥ अन्यत्र दीक्षितस्यापि नान्नमश्नन्हि दुष्यति ॥ ८ ॥ इति ते भगवद्याच्ञां शृण्वन्तोऽपि न शुश्रुवुः ॥ क्षुद्राशा भूरिकर्माणो

गर्दैछन् । तिमीहरू उनको यज्ञशालामा जाओ ॥ ३ ॥ त्यहाँ गएर बलभद्र र मेरो नाम भनेर उनीसित अलिकति भात मागेर ल्याओ ॥ ४ ॥ यसरी भगवान्को आज्ञा पाएर गोपहरू गएर यज्ञकर्ता ब्राह्मणहरूसित अन्न मागे । तिनले भूमिमा लट्टा झैं लम्पसार परेर प्रणाम गरेर भने ॥ ५ ॥ हे भूदेवगण ! हजुरको कल्याण होस् । हामी भगवान् कृष्णका आज्ञाकारी गोप हौं । हामी राम र कृष्णको आज्ञाले हजुरहरूकहाँ आयौं ॥ ६ ॥ राम र कृष्ण यहीं नजीकै गाई चराइरहेका छन् उनलाई भोक लागेको हुनाले ती हजुरसित केही खानेकुरा माग्दछन् । हजुरहरू धर्मज्ञमा श्रेष्ठ हुनुहुन्छ । यदि श्रद्धा भए ती भोकाहरूलाई अलिकति भात दिनुहोस् ॥ ७ ॥ हे सज्जन हो ! यज्ञको दीक्षा लिएपछि अग्निष्टोमीय पशुको बलिदानभन्दा पहिले पूर्वदीक्षितको अन्न दूषित मानिन्छ र सौत्रामणीमा सबै दीक्षित अन्न अग्राह्य हुन्छ । अन्यत्र दीक्षित पुरुषको अन्न खाने पनि दोषी हुन्न

॥ ८ ॥ यस प्रकार भगवान्‌को अन्न-याचनको कुरा सुनेर क्षुद्रहृदय र आफूलाई ठूला कर्मकाण्डी मान्ने मूर्ख ब्राह्मणहरूले सुनेको पनि नसुन्यै गरिदिए। देश, काल, द्रव्य, मन्त्र, तन्त्र, ऋत्विज्, अग्नि, देवता, यजमान र यज्ञ, धर्म जुन भगवान्‌का स्वरूप हुन्, यस्ता साक्षात् परब्रह्म अधोक्षजलाई ती मन्दमति ब्राह्मणले योगा साधारण मनुष्य ठानेर तिनको सम्मान गरेनन्॥ ॥ ९-११ ॥ हे परन्तप! तिनले, 'दिन्छु वा दिन्न' केही पनि भनेनन्। अनि ग्वाल-बाल निराश भएर त्यहाँबाट राम र कृष्णकहाँ फर्केर आए र उनलाई सबै वृत्तान्त सुनाए ॥१२॥ तिनका कुरा सुनेर लौकिक गति देखाउँदै जगत्पति भगवान् कृष्णले हाँसेर तिनीहरूसित भन्नुभयो–॥ १३ ॥ 'अब फेरि गएर तिमीहरू तिनका

बालिशा वृद्धमानिनः ॥ ९ ॥ देशः कालः पृथग्द्रव्यं मन्त्रतन्त्रर्त्विजोऽग्नयः ॥ देवता यजमानश्च क्रतुर्धर्मश्च यन्मयः ॥ १० ॥ तं ब्रह्म परमं साक्षाद्भगवन्तमधोक्षजम् ॥ मनुष्यदृष्ट्या दुष्प्रज्ञा मर्त्यात्मानो न मेनिरे ॥ ११ ॥ न ते यदोमिति प्रोचुर्न नेति च परन्तप ॥ गोपा निराशाः प्रत्येत्य तथोचुः कृष्णरामयोः ॥ १२ ॥ तदुपाकर्ण्य भगवान्प्रहस्य जगदीश्वरः ॥ व्याजहार पुनर्गोपान्दर्शयँल्लौकिकीं गतिम् ॥ १३ ॥ मां ज्ञापयत पत्नीभ्यः ससङ्कर्षणमागतम् ॥ दास्यन्ति काममन्नं वः स्निग्धा मय्युषिता धिया ॥ १४ ॥ गत्वाऽथ पत्नीशालायां दृष्ट्वाऽऽसीनाः स्वलंकृताः ॥ नत्वा द्विजसतीर्गोपाः प्रश्रिता इदमब्रुवन् ॥ १५ ॥ नमो वो विप्रपत्नीभ्यो निबोधत वचांसि नः ॥ इतोऽविदूरे चरता कृष्णेनेहेषिता वयम् ॥ १६ ॥ गाश्चारयन्स गोपालैः सरामो दूरमागतः ॥ बुभुक्षितस्य तस्यान्नं सानुगस्य प्रदीयताम् ॥ १७ ॥ श्रुत्वाऽच्युतमुपायातं नित्यं तद्दर्शनोत्सुकाः ॥

पत्नीहरूलाई बलराम सहित म यहाँ आएको कुरा भन। ममा तिनको अत्यन्त प्रीति छ र तिनको चित्त सदा ममा लागिरहन्छ, अतः उनीहरूले अवश्य मागेजति अन्न दिन्छन्' ॥ १४ ॥ त्यसै अनुसार गोप-बालक पत्नीशालामा गए र उनले वस्त्रालङ्कारले सुसज्जित भएर बसेका विप्रपत्नीहरूलाई देखेर नमस्कार गरी नम्रभावले भने–॥ १५ ॥ 'हे विप्रबन्धु हो! हामी नमस्कार गर्दछौं, हाम्रो कुरा सुन। यहीं नजीचै बसेका भगवान् कृष्णले हामीलाई हजुरहरूकहाँ पठाएका हुन् ॥१६॥ ती हामी ग्वालबाल र बलरामको साथै गाई चराउँदै

---

* उदाहरण (ईश्वरलाई सर्वद्रष्टा भनेर मनुष्यले पापचार छोडिनुपर्दछ) कोटा गुरुकहाँ तीन जना गएर प्रार्थना गरे–हे गुरो! हामीलाई धर्मको उपदेश दिनुस्। गुरुले तीनै जनालाई माटोको एकेक पात्र दिएर भने–'जाओ, यस पात्रलाई कसैले नदेख्ने स्थानमा फोर, अनि म धर्मको उपदेश दिनेछु।' तीनै जना एकेक पात्र लिएर हिंडे। पहिलो व्यक्ति चाँडै फर्केर आयो। गुरुले सोधे–'तिमीले त्यो पात्र कहाँ फोड्यौ?' उसले उत्तर दियो– 'महाराज! म हजुरको कुटी पछाडि गएँ, त्यहाँ वरपर कोही देखिएन। अतः मैले पात्र त्यहीं फोरिदिएँ।' त्यसपछि दोस्रो व्यक्ति पनि आइपुग्यो। गुरुले त्योसित सोधे– तिमीले पात्र कहाँ फुटायौ?' उसले उत्तर दियो 'म नदीपार जङ्गलमा गएँ। त्यहाँ कलमनि बसेर वसा तला हेरें, मानिसको त के कुरा चराचुरुङ्गी पनि त्यहाँ देखिएन। अतः मैले पात्र त्यहीं फुटाइदिएँ।' तिनै बेरपछि तेस्रो व्यक्ति पनि फर्केर आयो, तर त्यसको हातमा पात्र जस्तो दिएको उस्तै थियो। अनि गुरुले सोधे–'तिमीले आफ्नो पात्र किन फोरेनौ?' उसले भन्यो–महाराज! गहन वनमा, निर्जन कन्दरामा, गहिरो नदीको तटमा हेर्दै गएँ, तर कहीं पनि मैले यस्तो स्थान भेटिन जहाँ ईश्वरले हेरिरहेको नहोस्। यसै निमित्त मैले आफ्नू पात्र फोरिन।' गुरुले भने—'सत्य हो, यस्तो कुनै स्थान छैन, जहाँ ईश्वर नहोस्। मनुष्य पाप गर्ने बेलामा सलाई कसैले पनि देखिरहेको छैन भन्ने ठान्दछ तर यो उसको भ्रम हो। यो सबैका पाप पुण्यको फलदाता छ, त्यो ईश्वर सबै कुरा देखि नै रहन्छ। अरूले नदेखेर के भयो!' गुरुले तेस्रो व्यक्तिलाई रोकेर अरू दुवैलाई यो भनेर पठाए–'तिमी दुवै धर्मोपदेशका अधिकारी छैनौ' बिदा गरिदिए।' तात्पर्य—चराचर जगत् देख्ने ईश्वरले देखेन भनेर कुनै पनि पाप नगर।

निकै पर आएका छन् अहिले उनलाई साह्रै भोक लागेको छ । उनलाई केही खानेकुरा दिनुहवस्' ॥१७॥ ती ब्राह्मणीहरूको मन सधैं हरिचर्चामै लागिरहन्थ्यो अतएव भगवान नगीच आएका छन् भन्ने सुनेर दर्शनको लोभले तिनको चित्त चञ्चल भयो ॥ १८ ॥ पूर्णकीर्ति भगवान् कृष्णको कीर्ति सुन्दै रहनाले तिनको चित्त उनैमा लागिरहन्थ्यो । अतः ती सबै नारी आफ्ना पति, भाई, बन्धु र पुत्रले छेक्दा पनि पात्रहरूमा अनेक गुणयुक्त चार थरिका अन्न लिएर आफ्ना प्रियतमकहाँ यसरी हिंडिन्–जसरी नदीहरू समुद्रतिर जान्छन ॥१९-२०॥ तिनले यमुनाको तटमा नवपल्लवविमण्डित अशोक वनमा श्रीकृष्णलाई दाजु बलरामका साथै गोपहरूले घेरिएर डुलिरहेका देखे । भगवानको श्याम शरीर थियो ; ती स्वर्णवर्णका पीताम्बर लगाएका थिए । नयाँ फूलको माला, मयूरपिच्छ, अनेक धातु र नवपल्लवहरूले ती आफ्नो नटुवा वेष बनाएका थिए । कृष्णले याँटा हात कुनै सखाको काँधमा राखेका थिए अर्को हातले कमलको फूल घुमाइरहेका थिए र उनका कानमा कमल-पुष्प, गालामा अलकावली र मुखा विन्दमा मनोहर हास्य अपूर्व शोभा छरिरहेथ्यो ॥२१-२२॥

तत्कथाक्षिप्तमनसो बभूवुर्जातसम्भ्रमाः ॥ १८ ॥ चतुर्विधं बहुगुणमन्नमादाय भाजनैः ॥ अभिसस्रुः प्रियं सर्वाः समुद्रमिव निम्नगाः ॥ १९ ॥ निषिध्यमानाः पतिभिर्भ्रातृभिर्बन्धुभिः सुतैः ॥ भगवत्युत्तमश्लोके दीर्घश्रुतधृताशयाः ॥ २० ॥ यमुनोपवनेऽशोकनवपल्लवमण्डिते ॥ विचरन्तं वृतं गोपैः साग्रजं ददृशुः स्त्रियः ॥ २१ ॥ श्यामं हिरण्यपरिधिं वनमाल्यबर्हधातुप्रवालनटवेषमनुव्रतांसे ॥ विन्यस्तहस्तमितरेण धुनानमब्जं कर्णोत्पलालककपोलमुखाब्जहासम् ॥२२॥ प्रायः श्रुतप्रियतमोदयकर्णपूरैर्यस्मिन्निमग्नमनसस्तमथाक्षिरन्ध्रैः ॥ अन्तः प्रवेश्य सुचिरं परिरभ्य तापं प्राज्ञं यथाऽभिमतयो विजहुर्नरेन्द्र ॥ २३ ॥ तास्तथा त्यक्तसर्वाशाः प्राप्ता आत्मदिदृक्षया ॥ विज्ञायाखिलदृग्द्रष्टा प्राह प्रहसिताननः ॥ २४ ॥ स्वागतं वो महाभागा आस्यतां करवाम किम् ॥ यन्नो दिदृक्षया प्राप्ता उपपन्नमिदं हि वः ॥ २५ ॥ नन्वद्धा मयि कुर्वन्ति कुशलाः स्वार्थदर्शिनः ॥ अहैतुक्यव्यवहितां भक्तिमात्मप्रिये यथा ॥ २६ ॥ प्राणबुद्धिमनः स्वात्मदारापत्यधनादयः ॥ यत्सम्पर्कात्प्रिया आसंस्ततः कोन्वपरः प्रियः ॥ २७ ॥ तद्यात देवयजनं पतयो वो द्विजातयः ॥ स्वसत्रं पारयिष्यन्ति युष्माभिर्गृहमेधिनः ॥ २८ ॥ द्विजपत्न्यः ऊचुः ॥ मैवं विभोऽर्हति भवान्गदितुं

हे राजन् ! अबसम्म जसको सुयश कानमा पर्दै रहनाले मन तन्मय भएको थियो, उनै श्यामसुन्दरलाई साम्मुन्ने पाएर ब्राह्मणीहरूले आफ्ना आँखाबाट हृदयमा धन्याए । जस्तै अहंवृत्तिहरू सुषुप्तिका अभिमानी प्राणीलाई पाएर उसैमा लीन हुन्छन् उसै गरी मनमनै उनको आलिङ्गन गरी ती आफ्नो मनको ताप मेट्दै रहे ॥ २३ ॥ जब भगवान्ले जाने कि अरू-अरू कामनाहरू छाडेर केवल आफ्नो दर्शन गर्ने इच्छाले नै आएका हुन्, तब हाँस्तै भने–॥२४॥ 'हे महाभागा हो ! हामी तिमीहरूको स्वागत गर्दछौं । आओ बस, भन हामी के सेवा गरौं ? तिमीहरू यहाँ हाम्रो दर्शन गर्न आउनु पनि उचित हो ॥ २५ ॥ किनकि ज्ञानी व्यक्ति आफ्नो स्वार्थ जान्दछन् यसै निम्ति ती आफ्ना प्रियतमको समान ममा अहैतुकी र निष्कपट भक्ति गर्दछन् ॥ २६ ॥ प्राण, बुद्धि, मन, देह, स्त्री, पुत्र र यी सबै जसको सम्पर्कले प्रिय ज्ञात हुन्छन्, त्यो भन्दा बढी प्रिय अरू को हुन सक्छ ? ॥ २७ ॥ असल भयो, अब तिमीहरू आफ्नो यज्ञशालामा फर्केर जाओ । अनि तिम्रा गृहस्थ पति तिमीहरूसित मिलेर आफ्नो यज्ञ पूर्ण गरुन्' ॥ ५८ ॥ विप्रपत्नीहरू भन्दछन्—

हे विभो ! हजुर यस्तो कठोर नबन्नुस् । हजुर आफ्ना वेदवाक्य सत्य पार्नोस् । हामी आफ्ना सबै स्वजनलाई त्यागेर हजुरका चरणबाट झरेको तुलसीको माला आफ्ना केशमा धारण गर्ने इच्छाले हजुरका चरणमा आएका छौं ॥२९॥ हे नाथ ! अरुको के कुरा, अब हाम्रा पति, माता-पिता, पुत्र, भाई बन्धु र सुहृद्गण पनि हामीलाई स्वीकार गर्दैनन । अतः हे शत्रुसूदन ! हजुरका शरणमा आएका हामी अबलाको अब कोही सहायक छैन । यसै निम्ति हजुर नै हामीलाई आश्रय दिनोस् ।।३०।। श्रीकृष्ण भन्नुहुन्छ–मेरो आज्ञाले गएपछि तिम्रा पति, माता-पिता, भाई, पुत्रादि र अरुले पनि तिमीहरूको अपमान गर्दैनन, किनकि देवता पनि मेरा कुराको अनुमोदन गर्दछन् ॥३१॥ संसारमा मेरो अङ्ग-सङ्गले मनुष्यहरूमा प्रीति वा अनुरागको कारण हुँदैन । ममा चित्त लगाउनाले नै मलाई छिटै भेट्टाउने छौ ॥ ३२ ॥ श्रीशुकदेव भन्नुहुन्छ–भगवान्‌ले त्यति भनेपछि ती मुनिपत्नीहरू फेरि यज्ञशालामा फर्के । त्यहाँ ती ब्राह्मणहरूले आफ्नी पत्नीको केही पनि अपमान नगरेर उनैसित आफ्नो यज्ञ पूर्ण पारे ॥३३॥ श्रीकृष्णकहाँ जाने बेलामा ती स्त्रीमध्ये यौटीलाई उसका

नृशंसं सत्यं कुरुष्व निगमं तव पादशूलम् ॥ प्राप्ता वयं तुलसिदामपदावसृष्टं केशैर्निवोढुमतिलङ्घ्य समस्तबन्धून् ॥ २९ ॥ गृह्णन्ति नो न पतयः पितरौ सुता वा न भ्रातृबन्धुसुहृदः कुत एव चान्ये ॥ तस्माद्भवत्प्रपदयोः पतितात्मनां नो नान्या भवेद्गतिररिन्दम तद्विधेहि ॥ ३० ॥ श्रीभगवानुवाच ॥ पतयो नाभ्यसूयेरन्पितृमातृसुतादयः ॥ लोकाश्च वो मयोपेता देवा अप्यनुमन्वते ॥ ३१ ॥ न प्रीतये नुरागाय ह्यङ्गसङ्गो नृणामिह ॥ तन्मनो मयि युञ्जाना अचिरान्मामवाप्स्यथ ॥ ३२ ॥ श्रीशुक उवाच ॥ इत्युक्ता मुनिपत्न्यस्ता यज्ञवाटं पुनर्गताः ॥ ते चानसूयवः स्वाभिः स्त्रीभिः सत्रमपारयन् ॥ ३३ ॥ तत्रैका विधृता भर्त्रा भगवन्तं यथाश्रुतम् ॥ हृदोपगुह्य विजहौ देहं कर्मानुबन्धनम् ॥ ३४ ॥ भगवानपि गोविन्दस्तेनैवान्नेन गोपकान् ॥ चतुर्विधेनाशयित्वा स्वयं च बुभुजे प्रभुः ॥ ३५ ॥ एवं लीलानरवपुर्नृलोकमनुशीलयन् ॥ रेमे गोगोपगोपीनां रमयन्रूपवाक्कृतैः ॥ ३६ ॥ अथानुस्मृत्य विप्रास्ते अन्वतप्यन्कृतागसः ॥ यद्विश्वेश्वरयोर्याच्ञामहन्म नृविडम्बयोः ॥ ३७ ॥ दृष्ट्वा स्त्रीणां भगवति कृष्णे भक्तिमलौकिकीम् ॥ आत्मानं च तया हीनमनुतप्ता व्यगर्हयन् ॥ ३८ ॥ धिग्जन्म नस्त्रिवृद्विद्यां धिग्व्रतं धिग्बहुज्ञताम् ॥ धिक्कुलं धिक् क्रियादाक्ष्यं

पतिले बलपूर्वक छेकेका थिए । ती ब्राह्मणीले भगवान्‌को जुन रूप सुनेकी थिइन्, उही हृदयमा धारण गरेर कर्मको परिणामभूत आफ्नो शरीर नै त्यागिदिइन् ।।३४।। यता श्रीकृष्णले ब्राह्मणीले ल्याएका चार थरिका अन्न सबै गोपलाई खान दिएर आफूले पनि खानुभयो ॥३५॥ मायाले मानवरूपधारी भगवान् यसै गरी मानव-चरित्रहरूको अनुसरण गरेर आफ्ना रूप, वाणी र कर्मले गाई, गोप र गोपिनीलाई आनन्दित पार्दै विविध लीलाहरू गर्न थाल्नुभयो ॥३६॥ उता अब ब्राह्मण हरूले थाहा पाए तब यो विचार गरेर कि हामीले मानवरूपधारी दुवै जगदीश्वरको याचना अनादर गरेर ठूलो अपराध गर्यौं–ती मनमनै पछुतो गर्नलागे।।३७।।आफ्ना स्त्रीहरूको श्रीकृष्णमा यस प्रकारको अलौकिक भक्ति देखेर स्वयं आफूलाई भक्ति बाट रहित जानेर निकै पछुतो गर्दै ती आफैं आफ्नो निन्दा गर्नलागे–।।३८।। हरे ! हामी श्रीकृष्णसित विमुख छौं, त्यसैले हाम्रा तीनैथरिका जन्म, शौक्ल अर्थात् जुन आमाको गर्भबाट हुन्छ, अर्को सावित्र जुन गायत्रीको उपदेश ग्रहण गरेपछि हुन्छ र दैक्ष जुन यज्ञको दीक्षा लिएपछि हुन्छ–यी सबै जन्म व्यर्थ छन्, विद्या, ब्रह्मचर्यादि व्रत र हाम्रा बडे–बडेका ज्ञान

पनि धिक्कार छ । हाम्रो उच्च कुल र यज्ञादि-क्रियाहरूका कुशलतालाई पनि बारम्बार धिक्कार छ ॥३९॥ भगवान्‌को मायाले योगीहरूलाई पनि मोहित पार्दछ, त्यसैले मनुष्यका गुरु हामी ब्राह्मण पनि आफ्नू परमस्वार्थको विषयमा मोहित भयौं ॥ ४० ॥ अहो ! स्त्री भएर पनि इनका जगद्गुरु भगवान् कृष्णमा कस्तो अटूट प्रेम छ ! त्यसैले त यिनले मृत्युको पाशरूप गार्हस्थ्य-सम्बन्ध पनि छिनालिदिए ॥४१॥ न यिनको द्विजातिको योग्य यज्ञोपवीतादि संस्कार भएको छ, न यी गुरुकुलमै बसेका छन्, न यिनले तपस्या गरेका छन्, न आत्मतत्त्वको खोजी गरेका छन्, न यिनमा शौच र शुभकर्म नै छ ॥ ४२ ॥ तैपनि योगेश्वरका पनि ईश्वर भगवान् कृष्णमा यिनको यस्तो दृढभक्ति छ । हामी त स्वार्थले विमुख भएर गृहस्थीमै मतवाला-भइरहेछौं । अवश्य यसैले सत्पुरुषका इष्टदेव भगवान् कृष्णले हामीलाई ती गोपद्वारा सचेत पारेका हुन् ॥४३॥४४॥ नभए जो स्वयं पूर्णकाम र सबै लोक-लाई इच्छित कैवल्यादि मुक्तिका स्वामी छन्, ती ईश्वरलाई हामी भृत्यसित के प्रयोजन थियो ? यो त उनको बाँटा निहुँ मात्र थियो ॥४५॥ अहो ! साक्षात् लक्ष्मीजी पनि आफ्नू चंचलता

विमुखा ये त्वधोक्षजे ॥ ३९ ॥ नूनं भगवतो माया योगिनामपि मोहिनी ॥ यद्वयं गुरवो नृणां स्वार्थे मुह्यामहे द्विजाः ॥ ४० ॥ अहो पश्यत नारीणामपि कृष्णे जगद्गुरौ ॥ दुरन्तभावं योऽविध्यन्मृत्युपाशान्गृहाभिधान् ॥ ४१ ॥ नासां द्विजातिसंस्कारो न निवासो गुरावपि ॥ न तपो नात्ममीमांसा न शौचं न क्रियाः शुभाः ॥ ४२ ॥ अथापि ह्युत्तमश्लोके कृष्णे योगेश्वरेश्वरे ॥ भक्तिर्दृढा न चास्माकं संस्कारादिमतामपि ॥ ४३ ॥ ननु स्वार्थविमूढानां प्रमत्तानां गृहेहया ॥ अहो नः स्मारयामास गोपवाक्यैः सतां गतिः ॥ ४४ ॥ अन्यथा पूर्णकामस्य कैवल्याद्याशिषां पतेः ॥ ईशितव्यैः किमस्माभिरीशस्यैतद्विडम्बनम् ॥ ४५ ॥ हित्वाऽन्यान्भजते यं श्रीः पादस्पर्शाशयाऽसकृत् ॥ आत्मदोषापवर्गेण तद्याच्ञा जनमोहिनी ॥ ४६ ॥ देशः कालः पृथग्द्रव्यं मन्त्रतन्त्रर्त्विजोऽग्नयः ॥ देवता यजमानश्च क्रतुर्धर्मश्च यन्मयः ॥ ४७ ॥ स एष भगवान्साक्षाद्विष्णुर्योगेश्वरेश्वरः ॥ जातो यदुष्वित्यशृण्म ह्यपि मूढा न विद्महे ॥ ४८ ॥ अहो वयं धन्यतमा येषां नस्तादृशीः स्त्रियः ॥ भक्त्या यासां मतिर्जाता अस्माकं निश्चला हरौ ॥ ४९ ॥ नमस्तुभ्यं भगवते कृष्णायाकुण्ठमेधसे ॥ यन्मायामोहितधियो भ्रमामः कर्मवर्त्मसु ॥ ५० ॥ स वै न आद्यः पुरुषः स्वमायामोहितात्मनाम् ॥ अविज्ञातानुभावानां क्षन्तुमर्हत्यतिक्रमम् ॥ ५१ ॥ इति स्वाघमनुस्मृत्य कृष्णे ते कृतहेलनाः ॥ दिदृक्षवोऽप्यच्युतयोः कंसाद्भीत्या न

र अवगुणहरू त्यागेर जसको चरण-सेवाको इच्छाले अरु सबै देवतालाई छाडेर उनैलाई भज्दछिन्, तिनले अन्नादि माग्नु हामीलाई मोहित पार्नका लागि नै थियो ॥४६॥ हामीले सुनेका थियौं—देश, काल, समस्त द्रव्य, मन्त्र, तन्त्र ऋत्विज्, अग्नि, देवता, यजमान, यज्ञ र धर्म जसका रूप छन्, ती सर्वलोकेश्वर भगवान् विष्णुले नै यदुकुलमा अवतार लिएका छन्, तैपनि हामी मूढ उनलाई जान्न सकेनौं ॥४७॥४८॥ अहो ! हामी ठूला भाग्यमानी छौं, किनकि हाम्रा पत्नी यस्ता छन्—जसको भक्तिले भगवान्‌मा हाम्रो पनि बुद्धि निश्चल भएको छ ॥४९॥ जसको बुद्धि कहिल्यै कुण्ठित हुँदैन र जसको मायाले मोहित भएर नै हामी कर्ममार्गमा भौंतारी रहेछौं, यस्ता भगवान् कृष्णलाई हाम्रो नमस्कार छ ॥५०॥ ती आदिपुरुष भगवान् कृष्ण आफ्नी मायाले मोहित र आफ्नो प्रभाव नजान्ने हामी अज्ञानीहरूको अपराध क्षमा गर्नोस् ॥५१॥ यसरी कृष्ण-तिरस्काररूपी आफ्नो

अपराध सम्झेर भगवान्‌को दर्शन गर्ने प्रबल इच्छा भए पनि कंसको डरले कृष्णकहाँ जान सकेनन् ॥५२॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपालीभाषाटीकायां त्रयोविंशोऽध्यायः ॥२३॥

( भगवान द्वारा इन्द्र-यज्ञ भङ्ग हुनु ) श्रीशुकदेव भन्नुहुन्छ—व्रजमा बलरामसहित बस्दै एक दिन सबै गोपालाई इन्द्र-यज्ञको तयार गर्नलागेका देख्नुभयो ॥१॥ भगवान कृष्ण ः सर्वका आत्मा र सर्वज्ञ थिए । सबै कुरा जानेर पनि उनले विनयपूर्वक नन्दादि वृद्धजनलाई सोधे—॥ २ ॥ हे पिताजी ! यो कुन उत्सव हुन लागेको हो ? यस यज्ञको के फल प्राप्त हुन्छ ? कुन उद्देश्यले कुन व्यक्ति यो गर्दछन् ? ॥ ३ ॥ हे पिताजी ! यो सबै कुरा जान्ने मलाई प्रबल उत्कण्ठा छ । हजुर मलाई यसको विवरण भन्नुहवस् । सज्जन व्यक्ति सबैलाई आफ्नो आत्मा मान्दछन् । उनलाई आफ्नो र बिरानोको भेदभाव हुँदैन, त्यो शत्रु-मित्र र उदासीनभावले रहित साधु पुरुषका लागि कुनै कुरा लुकाउने योग्य रहन्न र यदि भेदभाव मानियोस् तापनि शत्रुको समान केवल उदासीन नै त्याज्य छ, मित्र त आत्माको समान प्रिय कहिएको छ ॥ ४-५ मानव समाज कुनै कर्म राम्ररी बुझेर गर्दछ र कुनै-कुनै कर्म नबुझेर

नाचजन् ॥५२॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे यज्ञपत्न्युद्धरणं नाम त्रयोविंशोऽध्यायः ॥ २३ ॥

श्रीशुक उवाच ॥ भगवानपि तत्रैव बलदेवेन संयुतः ॥ अपश्यन्निवसन्गोपानिन्द्रयागकृतोद्यमान् ॥ १ ॥ तदभिज्ञोऽपि भगवान्सर्वात्मा सर्वदर्शनः ॥ प्रश्रयावनतोऽपृच्छद्वृद्धान्नन्दपुरोगमान् ॥ २ ॥ कथ्यतां मे पितः कोऽयं सम्भ्रमो व उपागतः ॥ किं फलं कस्य चोद्देशः केन वा साध्यते मखः ॥ ३ ॥ एतद्ब्रूहि महान्कामो मह्यं शुश्रूषवे पितः ॥ न हि गोप्यं हि साधूनां कृत्यं सर्वात्मनामिह ॥ ४ ॥ अस्त्यस्वपरदृष्टीनाममित्रोदास्तविद्विषाम् ॥ उदासीनोऽरिवद्वर्ज्य आत्मवत्सुहृदुच्यते ॥ ५ ॥ ज्ञात्वाऽज्ञात्वा च कर्माणि जनोऽयमनुतिष्ठति । विदुषः कर्मसिद्धिः स्यात्तथा नाविदुषो भवेत् ॥ ६ ॥ तत्र तावत्क्रियायोगो भवतां किं विचारितः ॥ अथवा लौकिकस्तन्मे पृच्छतः साधु भण्यताम् ॥ ७ ॥ नन्द उवाच ॥ पर्जन्यो भगवानिन्द्रो मेघास्तस्यात्ममूर्तयः ॥ तेऽभिवर्षन्ति भूतानां प्रीणनं जीवनं पयः ॥ ८ ॥ तं तात वयमन्ये च वार्मुचां पतिमीश्वरम् ॥ द्रव्यैस्तद्रेतसा सिद्धैर्यजन्ते क्रतुभिर्नराः ॥ ९ ॥ तच्छेषेणोपजीवन्ति त्रिवर्गफलहेतवे ॥ पुंसां पुरुषकाराणां पर्जन्यः फलभावनः ॥ १० ॥ य एवं विसृजेद्धर्मं पारम्पर्यागतं नरः ॥ कामाल्लोभाद्भयाद्द्वेषात्स वै नाप्नोति शोभनम् ॥ ११ ॥ श्रीशुक उवाच ॥ वचो निशम्य नन्दस्य तथाऽन्येषां व्रजौकसाम् ॥ इन्द्राय मन्युं जनय·

गर्दछन् । तर राम्ररी बुझेर नै गर्ने व्यक्तिहरूलाई कर्मका फल जस्तो हुन्छ, त्यस्तो नबुझेर गर्ने व्यक्तिहरूका कर्मको फल प्राप्त हुँदैन ॥ ६ ॥ अतएव यस बखत हजुर जुन कर्म गर्न लाग्दै हुनुहुन्छ, त्यो कर्म शास्त्रसम्मत हो वा केवल लौकिक हो ? म यही जान्न खोजिरहेको छु, कृपया सफा-सफा बुझाउनोस्' ॥७॥ नन्दजीले भने—बाबु ! भगवान इन्द्र जल वर्षा गर्दछन् । मेघ नै इन्द्रका प्रतिमूर्ति हुन् । ती प्राणीहरूलाई प्रसन्न पार्ने जल वर्षाउँछन् जुन सबैको जीवन हो ॥ ८ ॥ हे तात ! हामी र अरू सबैजना तिनले बर्साएका जलद्वारा उत्पन्न अन्न आदिद्वारा यज्ञ गरेर नै मेघपति भगवान् इन्द्रको प्रतिवर्ष पूजा गर्दछौं ॥ ९ ॥ यज्ञबाट उब्रेको अन्न हामी धर्म-अर्थ कामरूपी त्रिवर्ग साधन गर्न। निमित्त आफ्नो जीवन निर्वाह गर्दछौं । मनुष्यका पुरुषार्थको फलदाता मेघ नै हुन् ॥१०॥ जो जन परम्परादेखि चलिआएको आफ्नो धर्मलाई काम, भय, लोभ या द्वेषले छाड्दछन्

तिनको कल्याण हुँदैन ॥११॥ श्रीशुकदेव भन्नुहुन्छ–नन्दजी र अन्याय व्रजवासीहरूका ती वचन सुनेर श्रीकृष्ण इन्द्रलाई क्रोधित पार्दै आफ्ना पितासित भन्नलागे–॥१२॥ श्रीभगवान् भन्नुहुन्छ–सबै जीव आफ्ना कर्मानुसार उत्पन्न हुन्छन् र मर्दछन् । कर्मानुसार नै उनलाई सुख-दुःख, भय र क्षेम प्राप्त हुन्छ ॥ १३ ॥ यदि कर्मफल दिने कुनै अर्को ईश्वर छ भने त्यो पनि कर्मठ पुरुषलाई नै फल दिनसक्छ, अकर्मीहरूलाई फल दिनमा त त्यो पनि असमर्थ हुन्छ ॥१४॥ जीव आफ्नाआफ्ना कर्मको फल नै भोग्दछन् भने इन्द्रका यज्ञको के प्रयोजन छ ? किनकि पूर्वसंस्कारवश मनुष्यको भाग्यमा जे तोकिएको हुन्छ, त्यो स्वयं उसले पनि मेट्नसक्तैन ॥१५॥ मनुष्य आफ्नो बानी ( स्वभाव ) को अधीन रहन्छ । त्यो उसैको अनुसरण गर्दै देवता, असुर र मनुष्य सहित यो सारा जगत् स्वभावमा नै स्थित रहन्छ ॥ १६ ॥ संसारका प्रत्येक जीव आफ्ना कर्मानुसार उत्तम र अधम शरीरहरू ग्रहण गर्दछ र छाड्दै रहन्छ । आफ्ना कर्मको अनुसार नै ती शत्रु, मित्र र उदासीनको व्यवहार गर्दछन् । यसले सिद्ध हुन्छ कि कर्म नै सबैको गुरु र उही सबैको ईश्वर हो ॥ १७ ॥ अतएव

स्वपितरं प्राह केशवः ॥ १२ ॥ श्रीभगवानुवाच ॥ कर्मणा जायते जन्तुः कर्मणैव विलीयते ॥ सुखं दुःखं भयं क्षेमं कर्मणैवाभिपद्यते ॥ १३ ॥
अस्ति चेदीश्वरः कश्चित्फलरूप्यन्यकर्मणाम् ॥ कर्तारं भजते सोऽपि न ह्यकर्तुः प्रभुर्हि सः ॥ १४ ॥ किमिन्द्रेणेह भूतानां स्वस्वकर्मानुवर्तिनाम् ॥
अनीशेनान्यथा कर्तुं स्वभावविहितं नृणाम् ॥ १५ ॥ स्वभावतन्त्रो हि जनः स्वभावमनुवर्तते ॥ स्वभावस्थमिदं सर्वं सदेवासुरमानुषम् ॥ १६ ॥
देहानुच्चावचाञ्जन्तुः प्राप्योत्सृजति कर्मणा ॥ शत्रुर्मित्रमुदासीनः कर्मैव गुरुरीश्वरः ॥ १७ ॥ तस्मात्सम्पूजयेत्कर्म स्वभावस्थः स्वकर्मकृत् ॥ अञ्जसा
येन वर्तेत तदेवास्य हि दैवतम् ॥ १८ ॥ आजीव्यैकतरं भावं यस्त्वन्यमुपजीवति ॥ न तस्माद्विन्दते क्षेमं जारं नार्यसती यथा ॥ १९ ॥ वर्तेत
ब्रह्मणा विप्रो राजन्यो रक्षया भुवः ॥ वैश्यस्तु वार्तया जीवेच्छूद्रस्तु द्विजसेवया ॥ २० ॥ कृषिवाणिज्यगोरक्षा कुसीदं तुर्यमुच्यते ॥ वार्ता
चतुर्विधा तत्र वयं गोवृत्तयोऽनिशम् ॥ २१ ॥ सत्त्वं रजस्तम इति स्थित्युत्पत्त्यन्त तवः ॥ रजसोत्पद्यते विश्वमन्योन्यं विविधं जगत् ॥ २२ ॥
रजसा चोदिता मेघा वर्षन्त्यम्बूनि सर्वतः ॥ प्रजास्तैरेव सिद्ध्यन्ति महेन्द्रः किं करिष्यति ॥ २३ ॥ न नः पुरो जनपदा न ग्रामा न गृहा

विज्ञ पुरुषको कर्तव्य हो–पूर्वसंस्कार अनुसार आफ्नो वर्णाश्रम धर्महरूको पालन गर्दै रहोस् र सदैव कर्मको नै आदर गरोस् किनकि यसैले उसको जीविका सजिलैसित चल्दछ । वास्तवमा कर्म नै उसका इष्टदेव हुन्छ ॥ १८ ॥ जस्तै व्यभिचारिणी स्त्री कहिल्यै शान्ति लाभ गर्न पाउन्न त्यस्तै नै जो पुरुष आफ्नो जीविका चलाउने कुनै यौटा देवतालाई छाडेर अन्य देवताको उपासना गर्न थाल्दछन्, तिनलाई कहिल्यै सुख शान्ति मिल्दैन ॥ १९ ॥ ब्राह्मणको कर्तव्य हो—वेदाध्ययनबाट, क्षत्रिय प्रजापालनबाट वैश्य व्यापारबाट र शूद्र द्विजातिका सेवाबाट आफ्नो आजीविका चलाउन् ॥ २० ॥ वैश्यका वृत्ति चार थरिका हुन्छन्–कृषि, वाणिज्य, गोरक्षा र ब्याज लिनु । हामी गोपालनले नै आफ्नो जीविका चलाउदै आएका छौं ॥ २१ ॥ संसारको उत्पत्ति, स्थिति र संहारको कारण क्रमशः सत्त्वगुण, रजोगुण र तमोगुण नै हुन् । यो सबै संसार स्त्री-पुरुषको रजोगुणद्वारा उत्पन्न हुन्छ ॥ २२ ॥ रजोगुणले प्रेरित भएर नै मेघ पानी पार्दछन् र उसैले अन्न उत्पन्न हुने हुनाले सबै जीवनयापन गर्दछन् । यसमा इन्द्रको के कृपा छ ? ॥ २३ ॥ हाम्रा पुर, नगर,

ग्राम वा घर केही पनि त छैनन् । हे पिताजी ! हामी वन वा पर्वत आदिमा बस्ने वनवासी गोप हौं ॥२४॥ त्यसैले हजुरहरू पनि गाई, ब्राह्मण र गिरिराजको पूजा गर्न तयारी गर्नोस् । हजुरले जुन इन्द्रको यज्ञका लागि सामग्री जम्मा पार्नुभएको छ, त्यसैले यस यज्ञको अनुष्ठान हुन्छ ॥२५॥ अतः दाल, खीर, पूरी आदि सबै पक्वान्न तयार गर्नोस् । सबै गाईको दूध जम्मा पार्नोस् ॥२६॥ वेदवादी ब्राह्मणहरू द्वारा राम्ररी अग्निहोत्र गराई उनलाई दक्षिणामा अनेक थरिका अन्न र गाई दान दिनोस् ॥२७॥ त्यसपछि कुकुर, चाण्डाल र पतित-पर्यन्त सबैलाई यथायोग्य वस्तुहरू दिएर गाईलाई खान दिई गिरिराजलाई भोग लगाउनोस् ॥२८॥ अनि स्वयं खान-पान गरिसकेपछि राम्रा वस्त्र र आभूषणहरू धारण गरेर सुगन्धित चन्दन लगाउन् र गाई, ब्राह्मण, अग्नि तथा पर्वतराजको परिक्रमा गरौं ॥२९॥ हे पिताजी ! मेरो त यही सम्मति छ । यदि हजुरलाई पनि मनपर्छ त्यस्तै गर्नोस् । यो यज्ञ गाई, ब्राह्मण, पर्वतराज र मलाई पनि प्रिय हुनेछ ॥३०॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! कालात्मा भगवान्‌ले इन्द्रको अभिमान धूलो पार्न जुन कुरा भने, त्यो सुनेर नन्दादि

वयम् ॥ वनौकसस्तात नित्यं वनशैलनिवासिनः ॥ २४ ॥ तस्माद्गवां ब्राह्मणानामद्रेश्चारभ्यतां मखः ॥ य इन्द्रयागसम्भारास्तैरयं साध्यतां मखः ॥ २५ ॥ पच्यन्तां विविधाः पाकाः सूपान्ताः पायसादयः ॥ संयावापूपशष्कुल्यः सर्वदोहश्च गृह्यताम् ॥ २६ ॥ हूयन्तामग्नयः सम्यग्ब्राह्मणैर्ब्रह्म-वादिभिः ॥ अन्नं बहुविधं तेभ्यो देयं वो धेनुदक्षिणाः ॥ २७ ॥ अन्येभ्यश्चाश्वचाण्डालपतितेभ्यो यथार्हतः ॥ यवसं च गवां दत्त्वा गिरये दीयतां बलिः ॥ २८ ॥ स्वलंकृता भुक्तवन्तः स्वनुलिप्ताः सुवाससः ॥ प्रदक्षिणं च कुरुत गोविप्रानलपर्वतान् ॥ २९ ॥ एतन्मम मतं तात क्रियतां यदि रोचते ॥ अयं गोब्राह्मणाद्रीणां मह्यं च दयितो मखः ॥ ३० ॥ श्रीशुक उवाच ॥ कालात्मना भगवता शक्रदर्पं जिघांसता ॥ प्रोक्तं निशम्य नन्दाद्याः साध्वगृह्णन्त तद्वचः ॥३१॥ तथा च व्यदधुः सर्वं यथाऽऽह मधुसूदनः ॥ वाचयित्वास्वस्त्ययनं तद्द्रव्येण गिरिद्विजान् ॥ ३२ ॥ उपहृत्य बलीन्सर्वानादृता यवसं गवाम् ॥ गोधनानि पुरस्कृत्य गिरिं चक्रुः प्रदक्षिणम् ॥ ३३ ॥ अनांस्यनडुद्युक्तानि ते चारुह्य स्वलंकृताः ॥ गोप्यश्च कृष्णवीर्याणि गायन्त्यः सद्विजाशिषः ॥ ३४ ॥ कृष्णस्त्वन्यतमं रूपं गोपविश्रम्भणं गतः ॥ शैलोऽस्मीति ब्रुवन्भूरि बलिमादद्बृहद्वपुः ॥ ३५ ॥ तस्मै नमो व्रजजनैः सह कृत्वाऽऽत्मनाऽऽत्मने ॥ अहो पश्यत शैलोऽसौ रूपी नोऽनुग्रहं व्यधात् ॥ ३६ ॥ एषोऽवजानतो मर्त्यान्कामरूपी

गोपगणले प्रसन्नतापूर्वक स्वीकार गरे ॥३१॥ मधुसूदनले जे-जे भनेका थिए, त्यसै अनुसार सबै काम भयो । पहिले स्वस्तिवाचन गराएर त्यही सामग्रीले गिरिराज गोवर्धन र सबै ब्राह्मणको सादर पूजा गरे र गाईहरूलाई हरिया-हरिया घाँस खुवाए । त्यसपछि ब्राह्मणहरूबाट आशिर्वाद लिई नन्दादि गोप र राम्ररी सिंगारिएका सबै व्रजबालाहरू गोधन अघिलाएर गोरूले तान्ने गाडाहरूमा चढी श्रीकृष्णका लीलाहरू गान गर्दै गोवर्धनको प्रदक्षिणा गर्नलागे ॥३२-३४॥ गोपहरूलाई पत्यार पार्नको निम्ति भगवान् कृष्णले गिरि-राजको ठाकुरारा थौटा अर्को विशालकाय रूप प्रकट गरेर 'म गिरिराज हुँ' यस्तो भन्दै पूजा ग्रहण गर्नुभयो ॥३५॥ त्यो आफ्नै स्वरूपलाई अन्य व्रजवासी संगै भगवान्‌ले स्वयं पनि प्रणाम गरे र भने—'लौ हेर, कस्तो आश्चर्य छ ! गिरिराज प्रत्यक्ष प्रकट भएर हामीमाथि कृपा गरे ॥३६॥ यी इच्छानुसार रूप धारण गर्न सक्छन् । जो वनवासी यिनको अनादर

भर्दछन्, तिनलाई नी नष्ट गरिदिन्छन् । आओ, हामीहरू आफ्नो र गोधनको कल्याण गर्न यी गिरिराजमाई प्रणाम गरौं ॥२७॥ भगवान् वासुदेवले यति भनेपछि गिरिराज र ब्राह्मणको पूजा-प्रणाम गरेर कृष्णचन्द्र संगै ती समस्त गोप ब्रजमा फर्किए ॥३८॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपालीभाषाटीकायां चतुर्विंशोऽध्यायः ॥ २४ ॥

( भगवानद्वारा गोवर्धन धारण ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! आफ्नू पूजामा विघ्न परेको देखेर इन्द्रले—कृष्ण जसका रक्षक थिए—ती नन्दादि गोपप्रति क्रोध गरे ॥१॥ स्वयं आफूलाई ईश्वर मान्ने देवराज इन्द्रले प्रलयङ्कर मेघको संवर्तक नामक गणलाई ब्रजमा हमला गर्न आज्ञा दिए र यसो रिसाएर भने—॥ २ ॥ 'अहो ! बनवासी गोपको

वनौकसः ॥ हन्ति ह्यस्मै नमस्यामः शर्मणे आत्मनो गवाम् ॥ ३७ ॥ इत्यद्रिगोद्विजमखं वासुदेवप्रणोदिताः ॥ यथा विधाय ते गोपाः सहकृष्णा ब्रजं ययुः ॥ ३८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे चतुर्विंशतितमोऽध्यायः ॥ २४ ॥

श्रीशुक उवाच ॥ इन्द्रस्तदाऽत्मनः पूजां विज्ञाय विहतां नृप ॥ गोपेभ्यः कृष्णनाथेभ्यो नन्दादिभ्यश्चुकोप सः ॥१॥ गणं सांवर्तकं नाम मेघानां चान्तकारिणाम्॥ इन्द्रः प्राचोदयत्कुद्धो वाक्यं चाहेश मान्युत ॥२॥ अहो श्रीमदमाहात्म्यं गोपानां काननौकसाम्॥कृष्णं मर्त्यमुपाश्रित्य ये चक्रुर्देवहेलनम् ॥३॥ यथा दृढैः कर्ममयैः क्रतुभिर्नाम नौनिभैः ॥ विद्यामान्वीक्षिकीं हित्वा तितीर्षन्ति भवार्णवम् ॥४॥ वाचालंबालिशं स्तब्धमज्ञं पण्डितमानिनम् ॥ कृष्णं मर्त्यमुपाश्रित्य गोपा मे चक्रुरप्रियम् ॥ ५ ॥ एषां श्रियाऽवलिप्तानां कृष्णेनाध्मायितात्मनाम् ॥ धुनुत श्रीमदस्तम्भं पशून्नयत संक्षयम् ॥ ६ ॥ अहं चैरावतं नागमारुह्यानुव्रजे ब्रजम् ॥ मरुद्गणैर्महावीर्यैर्नन्दगोष्ठजिघांसया ॥ ७ ॥ श्रीशुक उवाच ॥ इत्थं मघवताऽऽज्ञप्ता मेघा निर्मुक्तबन्धनाः ॥

धनले उत्पन्न गर्व हेर त ! मनुष्य कृष्णको भरमा तिनले म देवराजको पनि अपमान गरिदिए ॥ ३ ॥ जस्तै कुनै मन्दबुद्धि मनुष्य ब्रह्मविद्या छाडेर अन्य दुर्बल डुङ्गारूप कर्ममय यज्ञले यो भवसागर पारी तर्न खोज्दछ ॥४॥ गोपगणले यो बकवादी, मूर्ख, अभिमानी, अज्ञानी र आफूलाई बुद्धिमान् ठान्ने मरणधर्मा कृष्णको आश्रय लिएर मेरो तिरस्कार गरे ॥५॥ अतः तिमी यी धनोन्मत्त ※अज्ञानी र कृष्णद्वारा उचालिएका ग्वालवालको ऐश्वर्य-मद धूलो पारिदेउ र तिनका पशुहरू नष्ट पार ॥६॥ म पनि ब्रजलाई नाश पार्नको निम्ति महापराक्रमी मरुद्गणलाई लिएर, ऐरावत हात्तीमा चढी तिम्रो पाछ-पछि आउँछु' ॥ ७ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! इन्द्रको यस्तो आज्ञा पाएर

※ ( अज्ञानीहरूको भ्रम )—चार जना अन्धा हात्ती हेर्न हिंडे । पहिला अन्धोले हात्तीको खुट्टा छुन पायो । उसले भन्यो —'हात्ती खाँबो जस्तै हुन्छ ।' अर्को अन्धोले हात्तीको सूँड छोयो र भन्यो—'हे भाइ ! हात्ती त लट्ठा जस्तै हुन्छ ।' तेस्रोले हात्तीको पेट छोयो र भन्यो—'हे भाइ ! हात्ती पहाड जस्तै हुन्छ ।' चौथोले कान छोएर भन्यो—'हात्ती नाङ्लो जस्तो हुन्छ ।' यसै गरी चारै जना अन्धा हात्तीको स्वरूपको विषयमा लड्न थाले । पहिला भन्थ्यो खाँबो जस्तो छ, अर्को भन्थ्यो—होइन लट्ठा जस्तो छ । त्यतिमै पहिला अर्को मानिस आयो र उसले अन्धाहरूसित सोध्यो—'तिमीहरू किन आपसमा लडिरहेका छौ ?' अन्धाहरूले सबै कुरा विस्तार गरिदिएर भने—'तपाईंलाई हामीले पंच मान्यौं, न्याय गर्नुहोस् !' पञ्चले भन्यो—'तिमीहरूमध्ये कसैले पनि हात्ती देखेका छैनौ । हात्ती खाँबो जस्तो हुँदैन—हात्तीका खुट्टा खाँबा जस्ता हुन्छन् । हात्ती लट्ठा जस्तो हुँदैन, उसका सूँड लट्ठा जस्तो हुन्छ । हात्ती नाङ्लो जस्तो हुँदैन, उसका कान नाङ्लो जस्ता हुन्छ । हात्ती पहाड जस्तो पनि हुँदैन, उसको पेट पहाड जस्तो हुन्छ ।' यसै गरी भिन्न भिन्न मत हुने पर्दछ [illegible] भन्दछ—होइन, म यस्तो भन्दछु, उस्तै छ ।

मेघहरूले बन्धन-मुक्त भई पानी पारेर नन्दको व्रजलाई दुःख दिनथाले । बिजुलीको चमक र बादलको ध्वनिका साथै प्रचण्ड वायुले प्रेरित भएर ती मेघसमूह असिना पार्नलागे । मेघले हात्तीको सूँढ झैं पानी पार्नाले पृथ्वी जलमग्न भइन् र उसको अग्लो-होचो भाग पनि देखिन छाड्यो ॥ ८-१० ॥ अत्यन्त वर्षा र प्रबल पवनको वेगले गर्दा पशुहरू काम्नलागे तथा गोपी-गोप आदीले अत्यन्त व्याकुल भएर श्रीकृष्णको शरणमा गए । धारा प्रवाह वृष्टिले व्याकुल गाईहरू आफ्नो शिर र बाछालाई शरीरले ढाकेर थुर-थर काम्दै भगवान्को शरणमा पुगे ॥११॥१२॥ गोपिनीहरूले व्याकुल भएर भने–'हे कृष्ण ! हे महाभाग ! यस गोकुलका एकमात्र स्वामी हजुर नै हुनुहुन्छ । हे प्रभो ! हे भक्त-वत्सल ! यस वर्षाबाट हजुर हाम्रो रक्षा गर्नुहवस्, ॥१३॥ व्रजलाई असिना र पानीको प्रहारले पीडित, अचेत देखेर यो सबै काम रिसाएका इन्द्रको हो भन्ने श्रीकृष्णले बुझे ॥१४॥ हामीद्वारा आफ्नो यज्ञ भङ्ग भएको देखेर इन्द्र नै व्रजलाई नष्ट पार्नको लागि कुसमयमै प्रचण्ड वायु तथा असिना सहित यो घोर वर्षा गराइरहेका छन् ॥ १५ ॥ हुन्छ, म पनि

नन्दगोकुलमासारैः पीडयामासुरोजसा ॥ ८ ॥ विद्योतमाना विद्युद्भिः स्तनन्तः स्तनयित्नुभिः ॥ तीव्रैर्मरुद्गणैर्नुन्ना ववृषुर्जलशर्कराः ॥ ९ ॥ स्थूणास्थूला वर्षधारा मुञ्चत्स्वभ्रेष्वभीक्ष्णशः ॥ जलौघैः प्लाव्यमाना भूर्नादृश्यत नतोन्नतम् ॥ १० ॥ अत्यासारातिवातेन पशवो जातवेपना ॥ गोपा गोप्यश्च शीतार्ता गोविन्दं शरणं ययुः ॥ ११ ॥ शिरः सुतांश्च कायेन प्रच्छाद्यासारपीडिताः ॥ वेपमाना भगवतः पादमूलमुपाययुः ॥१२॥ कृष्ण कृष्ण महाभाग त्वन्नाथं गोकुलं प्रभो ॥ त्रातुमर्हसि देवान्नः कुपिताद्भक्तवत्सल ॥ १३ ॥ शिलावर्षनिपातेन हन्यमानमचेतनम् ॥ निरीक्ष्य भगवान्मेने कुपितेन्द्रकृतं हरिः ॥ १४ ॥ अपर्त्वत्युल्बणं वर्षमतिवातं शिलामयम् ॥ स्वयागे निहतेऽस्माभिरिन्द्रो नाशाय वर्षति ॥ १५ ॥ तत्र प्रतिविधिं सम्यगात्मयोगेन साधये ॥ लोकेशमानिनां मौढ्याद्धरिष्ये श्रीमदं तमः ॥ १६ ॥ नहि सद्भावयुक्तानां सुराणामीशविस्मयः ॥ मत्तोऽसतां मानभङ्गः प्रशमायोपकल्पते ॥१७॥ तस्मान्मच्छरणं गोष्ठं मन्नाथं मत्परिग्रहम् ॥ गोपाये स्वात्मयोगेन सोऽयं मे व्रत आहितः ॥१८॥ इत्युक्त्वैकेन हस्तेन कृत्वा गोवर्धनाचलम् ॥ दधार लीलया कृष्णश्छत्राकमिव बालकः ॥१९॥ अथाह भगवान्गोपान्हेऽम्ब तात व्रजौकसः ॥ यथोपजोषं विशत गिरिगर्तं सगोधनाः ॥ २० ॥ न त्राम इह वः कार्यो मद्धस्तादद्रिपातने ॥ वातवर्षभयेनालं तत्त्राणं विहितं हि वः ॥ २१ ॥ तथा निर्विविशुर्गर्तं

आफ्नो योगमायाद्वारा राम्ररी साटो फेर्नेछु । मूढतावश आफूलाई लोकपाल मान्ने यी इन्द्रादि देवगणको ऐश्वर्यमद मधूलो पारिदिनेछु ॥ १६ ॥ सगुण हुनाले देवगणलाई आफ्नो ईश्वरत्वको अभिमान नहुनु पर्ने । अतः ती दुष्ट देवताहरूलाई मद्वारा हुने मानभङ्ग पनि शान्तिदायक नै हुनेछ ॥ १७ ॥ अतः जसको म नै एकमात्र आश्रय र रक्षक छु, ती शरणागत व्रजवासीहरूको म आफ्नो योगमायाले रक्षा गर्नेछु । यही मेरो निश्चित व्रत, प्रतिज्ञा छ ॥ १८ ॥ यति भनेर श्रीकृष्णले लीला द्वारा आफ्नू यौटा हातले गोवर्धन पर्वत उखेलेर कुनै बालकले गोबरे छाता उचाले झैं उठाएर ॥१९॥ अनि प्रभुले भने–'हे माता ! हे पिता ! हे समस्त व्रजवासी हो ! आफ्ना गाई समेत यस पर्वतको ओढलमा आएर सानन्द बस्नुहोस् ॥२०॥ मेरो हातबाट पर्वत खस्तछ कि भन्ने शंका नगर्नुहोला, किनकि सबैलाई वर्षा र वायुबाट रक्षा गर्न नै मैले यो सजिलो यत्न गरेको हुँ' ॥२१॥

श्रीकृष्णले यति भनेर साहस दिएपछि गोप गोधन, गाडा, आफना पुरोहित र भृत्यगणलाई साथमा लिएर गोवर्धनको त्यो खाडलमा गएर बसे ॥२१॥ भगवान् स्वयं भोक-प्यासको वाधा र विश्रामको अपेक्षाले रहित रहेर तो व्रजवासीले देख्ता-देख्तै सात दिनसम्म पर्वत उचालेर उभिइरहे । त्यतिसम्म ती अलिकति पनि हल-चल गरेनन् ॥ २३ ॥ श्रीकृष्णको त्यस्तो योगशक्ति देखेर इन्द्रलाई विस्मय भयो । तिनको संकल्प नष्ट भयो र उनले छक्क परेर आफना मेघलाई पानी थाम्न लगाए ॥२४॥ भयङ्कर वर्षा र वायुवेग शान्त र आकाश मेघहीन हुनाले सूर्य उदाएका देखेर गोवर्धनधारीले गोपसित भने–॥२५॥ हे गोपगण ! अब तिमी डर फालिदेओ र आफना स्त्री, गोधन तथा बालकहरू सहित बाहिर आओ । अब वर्षा र वायु शान्त भईसकेको छ र नदीको जल पनि प्रायः घटिसकेको छ' ॥२६॥ अनि सबै गोप आफाफना गोधन, स्त्री, बालक र बूढाहरूलाई साथमा लिएर तथा आफ्नो सामग्री हरू गोरु-गाडामा राखेर बिस्तार पर्वतको खाण्डालबाट निस्केर आए ॥२७॥ अनि भगवान्ले पनि सबै प्राणीहरूले देख्ता-देख्तै लीलाले नै त्यस पर्वतलाई

कृष्णाश्वासितमानसाः ॥ यथावकाशं सधनाः सव्रजाः सोपजीविनः ॥ २२ ॥ क्षुत्तृड्व्यथां सुखापेक्षां हित्वा तैर्व्रजवासिभिः ॥ वीक्ष्यमाणो दधावद्रिं सप्ताहं नाचलत्पदात् ॥ २३ ॥ कृष्णयोगानुभावं तं निशाम्येन्द्रोऽतिविस्मितः ॥ निःस्तम्भो भ्रष्टसङ्कल्पः स्वान्मेघान्संन्यवारयत् ॥२४॥ खं व्यभ्रमुदितादित्यं वातवर्षं च दारुणम् ॥ निशाम्योपरतं गोपान्गोवर्धनधरोऽब्रवीत् ॥ २५ ॥ निर्यात त्यजत त्रासं गोपाः सस्त्रीधनार्भकाः ॥ उपारतं वातवर्षं व्युदप्रायाश्च निम्नगाः ॥ २६ ॥ ततस्ते निर्ययुर्गोपाः स्वं स्वमादाय गोधनम् ॥ शकटोढोपकरणं स्त्रीबालस्थविराः शनैः ॥२७॥ भगवानपि तं शैलं स्वस्थाने पूर्ववत्प्रभुः ॥ पश्यतां सर्वभूतानां स्थापयामास लीलया ॥ २८ ॥ तं प्रेमवेगान्निभृता व्रजौकसो यथा समीयुः परिरम्भणादिभिः ॥ गोप्यश्च सस्नेहमपूजयन्मुदा दध्यक्षताद्भिर्युयुजुः सदाशिषः ॥ २९ ॥ यशोदा रोहिणी नन्दो रामश्च बलिनां वरः ॥ कृष्णमालिङ्ग्य युयुजुराशिषः स्नेहकातराः ॥३०॥ दिवि देवगणाः साध्याः सिद्धगन्धर्वचारणाः ॥ तुष्टुवुर्मुमुचुस्तुष्टाः पुष्पवर्षाणि पार्थिव ॥३१॥ शङ्खदुन्दुभयो नेदुर्दिवि देवप्रणोदिताः ॥ जगुर्गन्धर्वपतयस्तुम्बुरुप्रमुखा नृप ॥३२॥ ततोऽनुरक्तैः पशुपैः परिश्रितो राजन्स गोष्ठं सबलोऽव्रजद्धरिः ॥ तथाविधान्यस्य कृतानि गोपिका गायन्त्य ईयुर्मुदिता हृदिस्पृशः ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे पञ्चविंशोऽध्यायः ॥ २५ ॥

पहिले जस्तै यथास्थान राखिदिए ॥२८॥ अनि प्रेमपूर्ण व्रजवासीले भगवान्को नजीकै आएर उनको आलिङ्गनादिले सत्कार गरेर गोपिनीहरूले दही, अक्षता आदिले अति आनन्द र प्रेमपूर्वक पूजा गरेर शुभ आशीर्वाद दिए ॥ २९ ॥ यशोदा, रोहिणी, नन्द र बलवान्हरूमा श्रेष्ठ बलरामले पनि स्नेहातुर भएर भाई श्रीकृष्णचन्द्रको आलिङ्गन गरे र उनलाई आशीर्वाद दिए ॥ ३० ॥ हे राजन् ! त्यस बेला आकाशमा स्थित देवता, साध्य, सिद्ध र चारणादि प्रसन्न भएर भगवान्को स्तुति गर्दै पुष्प वर्षा गर्नलागे ॥३१॥ हे राजन् ! स्वर्गमा देवताहरूले बजाएका शङ्ख र दुन्दुभीहरूको निनाद हुन लाग्यो र तुम्बुरु आदि गन्धर्व गान गर्नलागे ॥३२॥ हे राजन् ! आफ्नो अनुरक्त गोपद्वारा पूजित भगवान् कृष्ण बलराम समेत व्रजमा प्रवेश गरे । उनैसित गोपिनीहरू पनि भगवान्का लीलाहरूको गान गर्दै गए ॥३३॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपालीभाषाटीकायां पञ्चविंशोऽध्यायः ॥२५॥

( श्रीकृष्णको प्रभावको विषयमा ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! भगवान् कृष्णको यस्तो अद्भुत पुरुषार्थ देखेर उनको प्रभावबाट अनभिज्ञ गोपगण सान्है छक्क परेर परस्पर कुरा गर्नलागे–॥ १ ॥ यस बालकका सबै कर्म सान्है विचित्र छन् । यिनले हामी ग्रामीणमा जन्म लिनु कसरी उचित हुन सक्तछ ? अहो ! जस्तै यौटा गजराज कमल-पुष्पलाई उठाउँछ त्यस्तै नै सात वर्षको यस बालकले सात दिनसम्म ख्याल-ख्यालमै यौटै हातमा गिरिराज गोवर्धनलाई उचालिराखे ॥ २-३ ॥ जस्तै काल शरीरलाई नष्ट पार्दछ, त्यसै गरी सानो अवस्थामै आँखा चिम्लेर नै यो बालकले महाबलवती पूतनाको प्राण सहित त्यसको स्तन-पान गरे ॥४॥ जब यी तीन महीनाका थिए तब यौटा गाडाको तल झूलामा पल्टेर रुँदा-रुँदै यिनले मास्तिर पाउ उफारेर यिनको लात्ती लाग्नाले गाडा पल्टियो ॥ ५ ॥ एक वर्षकै अवस्थामा यिनले आँगनमा बसी-बसी तृणावर्त दैत्यले आकाशमा लगेपछि उसको घाँटी थिचेर मारिदिए ॥६॥ एक पल्ट नौनी चोर्दा जब यशोदाले यिनलाई बाँधिदिइन् तब यी घुँडाले घसन्दै गएर दुई अर्जुन वृक्षको माझमा गएर ती वृक्ष मूला उखेलेर

श्रीशुक उवाच ॥ एवंविधानि कर्माणि गोपाः कृष्णस्य वीक्ष्य ते ॥ अतद्वीर्यविदः प्रोचुः समभ्येत्य सुविस्मिताः ॥ १ ॥ बालकस्य यदेतानि कर्माण्यत्यद्भुतानि वै ॥ कथमर्हत्यसौ जन्म ग्राम्येष्वात्मजुगुप्सितम् ॥ २ ॥ यः सप्तहायनो बालः करेणैकेन लीलया ॥ कथं बिभ्रद्गिरिवरं पुष्करं गजराडिव ॥ ३ ॥ तोकेनामीलिताक्षेण पूतनाया महौजसः ॥ पीतः स्तनः सह प्राणैः कालेनेव वयस्तनोः ॥ ४ ॥ हिन्वतोऽधः शयानस्य मास्यस्य चरणावुदक् ॥ अनोऽपतद्विपर्यस्तं रुदतः प्रपदाहतम् ॥ ५ ॥ एकहायन आसीनो ह्रियमाणो विहायसा ॥ दैत्येन यस्तृणावर्तमहन्कण्ठग्रहातुरम् ॥ ६ ॥ क्वचिद्धैयङ्गवस्तैन्ये मात्रा बद्ध उलूखले ॥ गच्छन्नर्जुनयोर्मध्ये बाहुभ्यां तावपातयत् ॥ ७ ॥ वने सञ्चारयन्वत्सान्सरामो बालकैर्वृतः ॥ हन्तुकामं बकं दोर्भ्यां मुखतोऽरिमपाटयत् ॥ ८ ॥ वत्सेषु वत्सरूपेण प्रविशन्तं जिघांसया ॥ हत्वा न्यपातयत्तेन कपित्थानि च लीलया ॥ ९ ॥ हत्वा रासभदैतेयं तद्बन्धूंश्च बलान्वितः ॥ चक्रे तालवनं क्षेमं परिपक्वफलान्वितम् ॥ १० ॥ प्रलम्बं घातयित्वोग्रं बलेन बलशालिना ॥ अमोचयद्व्रजपशून्गोपांश्चारण्यवह्नितः ॥ ११ ॥ आशीविषतमाहीन्द्रं दमित्वा विमदं ह्रदात् ॥ प्रसह्योद्वास्य यमुनां चक्रेऽसौ निर्विषोदकाम् ॥ १२ ॥ दुस्त्यजश्चानुरागोऽस्मिन्सर्वेषां नो व्रजौकसाम् ॥ नन्द ते तनयेऽस्मासु तस्याप्यौत्पत्तिकः कथम् ॥ १३ ॥ क

उखेलेर धराशायी पारिदिए ॥ ७ ॥ यी जब बलरामसित अनेक ग्वाल-बालहरूले घेरिएर गाई चराईरहेका थिए, त्यस बेला यिनले आफ्नू वध गर्न इच्छुक बकासुरलाई देखेपछि आफ्ना बाहुले त्यसको चुच्चो फट्याएर मारिदिए ॥८॥ यसै प्रकार यिनको वध गर्ने इच्छाहरूमा मिसिएको वत्सासुरलाई पनि मारिदिए र त्यसलाई कैथको वृक्षमा पछारेर सबै वृक्षहरू ढलाइदिए ॥९॥ बलरामसित मिलेर यिनले गर्दभरूपधारी धेनुकासुर र त्यसका बन्धु-बान्धवलाई मारे तथा पाकेका फलले पूर्ण तालवनलाई निर्भय पारे ॥१०॥ महाबलवान् बलराम द्वारा घोर दैत्य प्रलम्बासुरको वध गराएर यिनले पशुहरू र ग्वाललाई दावानलबाट बचाए ॥ ११ ॥ यसै प्रकार विषम विषधर नागराज कालीयको दमन गरेर उसका मान मर्दन गरे र बलपूर्वक उसलाई कालिन्द्र-दहबाट निकालेर यमुनाको जल विषहीन पारिदिए ॥१२॥ हे नन्दीनी ! हामी त देख्दैछौं—तिम्रो यी बालकमा हामी व्रजवासीहरूको

बलियो अनुराग छ र यसको पनि मप्रति उस्तै प्रेम छ, यसको कारण के हो ? कहाँ सात वर्षको बालक र कहाँ महान् गोवर्धन उचाल्नु ! अतएव हे व्रजराज ! यी सबै अद्भुत कुराहरूले हामी तिम्रो पुत्रको विषयमा निकै संशय भइरहेछ । नन्दजीले भने–हे गोपगण ! मेरो कुरा सुन–यसले यो बालकको विषयमा उत्पन्न तिमीहरूको शंका निवारण हुनेछ । यस बालकको विषयमा गर्गजीले कुरा भनेका थिए, त्यो म तिमीहरूलाई सुनाउँछु ।। १४-१५ ।। उनले भनेका थिए—'यस बालकले प्रत्येक युगमा अवतार लिएपछि क्रमश सेतो, रातो र पहेलो यी तीन वर्ण थिए । यस बखत यी कृष्णवर्णका उत्पन्न भएका छन् ।। १६ ।। तिम्रो बालक कहिले वसुदेवकहाँ पनि उत्पन्न भएका थिए । यसै निम्ति विद्वानहरू यिनलाई 'वासुदेव' भन्दछन् ।।१७।। गुण र कर्म अनुसार तिम्रो पुत्रका अनेक नाम र रूप छन् । उनलाई म जान्दछु, अरु व्यक्ति जान्दैनन् ।। १८ ।। यी बालक गोप र गोकुललाई आनन्दित पार्नेछन् । यिनको द्वारा तिम्रो ठूलो कल्याण हुनेछ । यिनकै सहायताले तिमीहरू सबै विपत्तिहरूबाट जोगिने छौ ।। १९ ।। हे व्रजराज ! पूर्व समयमा अराजकताको बेला दुष्ट दस्युहरूले

सप्तहायनो बालः क्व महाद्रिविधारणम् ॥ ततो नो जायते शङ्का व्रजनाथ तवात्मजे ॥ १४ ॥ नन्द उवाच ॥ श्रूयतां मे वचो गोपा व्येतु शङ्का च वोऽर्भके ॥ एनं कुमारमुद्दिश्य गर्गो मे यदुवाच ह ॥ १५ ॥ वर्णास्त्रयः किलास्यासन्गृह्णतोऽनुयुगं तनु ॥ शुक्लो रक्तस्तथा पीत इदानीं कृष्णतां गतः ॥ १६ ॥ प्रागयं वसुदेवस्य क्वचिज्जातस्तवात्मजः ॥ वासुदेव इति श्रीमानभिज्ञाः सम्प्रचक्षते ॥ १७ ॥ बहूनि सन्ति नामानि रूपाणि च सुतस्य ते ।। गुणकर्मानुरूपाणि तान्यहं वेद नो जनाः ॥ १८ ॥ एष वः श्रेय आधास्यद्गोपगोकुलनन्दनः ॥ अनेन सर्वदुर्गाणि यूयमञ्जस्तरिष्यथ ॥१९॥ पुराऽनेन व्रजपते साधवो दस्युपीडिताः ॥ अराजके रक्ष्यमाणा जिग्युर्दस्यून्समेधिताः ॥२०॥ य एतस्मिन्महाभागाः प्रीतिं कुर्वन्ति मानवाः ॥ नारयोऽभिभवन्त्येतान्विष्णुपक्षानिवासुराः ॥ २१ ॥ तस्मान्नन्द कुमारोऽयं नारायणसमो गुणैः ॥ श्रिया कीर्त्याऽनुभावेन तत्कर्मसु न विस्मयः ॥ २२ ॥ इत्यद्धा मां समादिश्य गर्गे च स्वगृहं गते ॥ मन्ये नारायणस्यांशं कृष्णमक्लिष्टकारिणम् ॥ २३ ॥ इति नन्दवचः श्रुत्वा गर्गगीतं व्रजौकसः ॥ मुदिता नन्दमानर्चुः कृष्णं च गतविस्मयाः ॥ २४ ॥ देवे वर्षति यज्ञविप्लवरुषा वज्राश्मवर्षानिलैः सीदत्पालपशुस्त्रि आत्मशरणं दृष्ट्वानुकम्प्युत्स्मयन् ॥ उत्पाट्यैककरेण शैलमबलो लीलोच्छिलीन्ध्रं यथा बिभ्रद्गोष्ठमपान्महेन्द्रमदभित्प्रीयान्न इन्द्रो गवाम् ॥ २५ ॥

पीडित साधुजनहरूले यिनै द्वारा सुरक्षित र सबल भएर दस्युमाथि विजय पाएका थिए ।।२०।। जो सौभाग्यशाली पुरुष यसित प्रेम गर्दछन्, तिनलाई शत्रुले जित्न सक्तैनन् जसरी विष्णुभगवानका समर्थक देवतालाई दैत्यले जित्न सक्तैनन् ।।२१।। हे नन्दजी ! यी बालक गुण, श्री, कीर्ति र प्रभावको दृष्टिले साक्षात् नारायण झैं छन् । यिनका कर्महरू देखेर कुनै प्रकारको पनि आश्चर्य गर्नु पर्दैन' ।।२२।। यसरी आदेश दिएर गर्गमुनि आफ्नु घर फर्किए । त्यसै दिनदेखि म सर्वसमर्थ कृष्णलाई नारायणको अंश मानिरहेको छु ।।२३।। नन्दजीको मुखबाट गर्ग मुनिको कथन सुनेर व्रजवासी निकै प्रसन्न भए । तिनको विस्मय हरायो र ती नन्द र कृष्ण भगवानको भूरि-भूरि प्रशंसा तथा स्तुति गर्न लागे ।।२४।। यज्ञभङ्गले कुपित भएर जब इन्द्र घोर वर्षा गरिरहेका थिए, त्यस बेला स्त्रीहरू र गोधनका साथै समस्त व्रजवासी वज्रपात, असिना, वाछिटा र प्रचण्ड वायुले पीडित भई आफ्नु शरणमा आएका

देखेर कृष्णले तिनमा कृपा गर्नको निम्ति कुनै दुर्बल बालकले ख्याल-ख्यालमै गोबरे च्याउ उखेले झैं, हाँसी-हाँसी योटै हातले गोवर्धन पर्वत औंलोमा उचाले र सम्पूर्ण ब्रजको रक्षा गरे। इन्द्रको मद धुलो पार्नेगोविन्द हामीमाथि प्रसन्न रहुन ॥ २५ ॥ इति श्रीमद्भागवते दशमस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां षड्विंशोऽध्यायः ॥२६॥

( भगवान् कृष्णचन्द्रको अभिषेक ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! आफ्नू *कृपाशक्तिले गोवर्धन उचालेर मुसलधारे वृष्टिबाट ब्रजवासीको रक्षा गरिसकेपछि श्रीकृष्णकहाँ गोलोकबाट

इति श्रीमद्भागवते महापुराणे दशमस्न्धे पूर्वार्धे षड्विंशतितमोऽध्यायः ॥ २६ ॥

श्रीशुक उवाच ॥ गोवर्धने धृते शैल आसाराद्रक्षिते व्रजे ॥ गोलोकादाव्रजत्कृष्णं सुरभिःशक्र एव च ॥१॥ विविक्त उपसङ्गम्य व्रीडितःकृतहेलनः॥ पस्पर्श पादयोरेनं किरीटेनार्कवर्चसा॥२॥ दृष्टश्रुतानुभावोऽस्य कृष्णस्यामिततेजसः ॥ नष्टत्रिलोकेशमद इंद्र आह कृताञ्जलिः॥३॥ इंद्र उवाच ॥ विशुद्धसत्त्वं तव धाम शान्तं तपोमयं ध्वस्तरजस्तमस्कम् ॥ मायामयोऽयं गुणसम्प्रवाहो न विद्यतेतेऽनुग्रहणानुबन्धः ॥४॥ कुतो नु तद्धेतव ईश तत्कृतालोभादयो येऽबुध·

कामधेनु र स्वर्गबाट देवराज इन्द्र ब्रजमा आए ॥ १ ॥ भगवानको अवहेलना गरेकोमा मनमनै लज्जित इन्द्रले एकान्तमा गोविन्दको नजीकै गएर सूर्य झैं तेजस्वी मुकुटले उनको चरण स्पर्श गरे ॥ २ ॥ असाधारण तेजस्वी भगवान् कृष्णको प्रभाव देखे सुनेर इन्द्रको त्रिलोक पति हुने मद चूर्ण भयो र हात जोरेर उनले भने ॥३॥ देवराज इन्द्र भन्दछन्–हे प्रभो ! हजुर शुद्ध सत्वमय तेज शान्त, ज्ञानमय र रजोगुण रहित छ। यो गुणप्रवाहस्वरूप प्रपञ्च मायामय छ। हजुरमा यसको लेश पनि छैन। यो हजुरमा अज्ञानले नै भास-

---

* सत्संगका कुरा—१. भगवानको कृपाशक्ति यस्तो बलवती हुन्छे कि सबै शक्ति उसकै अनुगत रहन्छन्। भगवान् पनि उसकै वशमा परेर भक्तको निम्ति थरि-थरिका बन्धन स्वीकार गर्दछन्। २—भगवान्‌का जति लीलाहरू छन् उनमा बाललीला बेरै उदार छ। अन्य लीलाहरूमा यदि भगवान् कसैलाई दिइन, मारिदलाई मारेन अथवा कसैलाई राजा बनाउदछन् तापनि कुनै महत्व छैन। ठूलो बदि ठूलै बन्दछ भने कुनै महत्व छैन, ठूलो सानू बन्दछ भने त्यसमा महत्व छ। बाललीलामा भगवानलाई आठ बालक सम्पुर्णले, आठ बालकहरूसित स्वयं सम्मिलित भएर बस्तै नै लीला गर्नुपर्दछ र यसैमा उदारता छ। ३-भगवान्‌का माता पिता, आभूषण, धन-धाम, लीलावस्तु आदि सबै भगवानका नै रूप हुन् र सबै नित्य छन्। शक्तिको प्रकाशमा तारतम्यको दिलाले अवतारहरूका नाममा तारतम्य मिल्दछ। कुन भगवान् कूर्म हुन्, कुनै मत्स्य हुन् र उनै श्रीकृष्ण हुन्। शक्ति प्राकट्यको भेदानुसार अवतारहरूको संज्ञा हुन्छ। भगवान् मत्स्य-कूर्म आदि देह धारण गर्दछन् भन्ने कुरा होइन। उनको कुन नित्य शुद्ध स्वरूप छ, त्यही संसारमा आविर्भूत हुन्छ। भगवान्‌का जति चिन्मय स्वरूप हुन्, सबै अनादिकालदेखि नित्यधाममा दिव्यलीलाहरूमा नित्य विराजित छन् र कहिलेकाहीं लीलाविलासको निम्ति प्रकट हुन्छन्। योटै भगवान् अनन्त स्वरूपमा अनेका छन्। तिनमा भेद भए पनि अभेद र अभेद भए पनि भेद छ। वस्तुतः तिनमा केही पनि भेद छैन। अंशरूपमा आउन् अथवा अंशीरूपमा। स्वयं भगवान् जब अवतार लिन्छन् तब सारा अवतार आएर उनैमा मिसिन्छन्। भगवान् कृष्णमा मत्स्य कूर्म आदि सबै अवतारहरूका कार्य हुन्छन्। कहीं पनि सानो ठूलोको भाव ठान्नु हुँदैन। यो त भगवानको लीला हो। ५. भगवानको अचिन्त्य महाशक्तिमा विश्वास नगरीकन लीलाहरूमा रस आउँदैन। यसको स्थान-स्थानमा सन्देह उत्पन्न हुन्छ या ती लीलाहरूको आध्यात्मिक अर्थ लगाएर तिनको अर्थ नष्ट पारी दिइन्छ। भगवानका लीलावलि भक्तगणका खाउन्ने नित्य छ र वास्तवमा त्यो सत्य नै छ। ६–भगवान्‌मा सम्पूर्ण शक्तिहरू छन्, तर ती भक्तको प्रेमबाट अलग्ग रहन सक्तैनन्। अतः स्वयं अवतार लिन्छन्। ती अन्य कसैद्वारा भक्तको संकट निवारण गर्न चाहन्नन्। यहाँ कर्तव्य पूरा हुँदैन, किनकि प्रेममा प्रतिनिधित्व हुन सक्तैन। ७–प्रेममा नित्य थोरै भएको बोध हुन्छ। जो व्यक्ति आफूमा बढी र अरुमा थोरै प्रेमको कल्पना गर्दछन्, ती नव प्रेमी होइनन्। प्रेममा आफूमै थोरै छ भन्ने प्रतीति हुन्छ। ८—प्रेमी भक्तगणको प्रेमकै गर्दा भगव नको ऐश्वर्य पाउ पाउमा प्रणाम स्वीकार गर्दछन्। भगवान् आप्तकाम छन्, तर प्रेमी-भक्तहरूको प्रेमोपहार स्वीकार गर्नको निम्ति लालायित हुन्छन्। नित्य अकाममा पनि तीव्रकाम उत्पन्न हुन्छ। ९. प्रेमी भक्तहरूको प्रेम कार्यहरू पालका लागि उनकै जस्तो प्रेमी चित्त चाहिन्छ।

मान गर्दछ ॥ ४ ॥ हजुरको सम्बन्ध अज्ञान र त्यसबाट प्राप्त हुने देहादिबाट पनि छैन । अनि ती देहादिको प्राप्तिका मूल कारण र तिनैबाट हुने लोभादिको त कुरै छैन ती अज्ञानका नै लक्षण हुन् । यसरी यो अज्ञानजनित जगत्‌सित हजुरको कुनै सम्बन्ध छैन तापनि धर्मको रक्षा र दुष्टजनको दमन गर्न हजुर बेला-बेलामा दण्ड धारण गर्ने गर्नुहुन्छ ॥ ५ ॥ हजुर जगत्‌का पिता, गुरु र स्वामी हुनुहुन्छ । हजुर यसको रक्षालन गर्नका लागि कालरूपी दुस्तर दण्ड लिनु भएको छ । हजुर आफ्नो इच्छाले लीलामय शरीर धारण गरेर हामी जस्ता अभिमानीहरूको मद-मर्दन गर्दै संसारको कल्याणार्थ अनेक लीलाहरू गर्दछन् ॥६॥ जुन म जस्ता अभिमानी र जगदीश्वर हुँ भन्ने अज्ञानी छन्, ती हजुरलाई भयका अवसरमा पनि निर्भय रहेको देखेर शीघ्र नै आफ्नू मद छाडी निरभिमानी बिज्ञ जनको योग्य भक्ति मार्गको अवलम्बन गर्दछन् । हजुरका चेष्टा दुष्टजनमा मात्र शासन गर्दछन् ॥७॥ हे भगवन् ! म ऐश्वर्यको मदले मत्त भएर हजुरको प्रभाव जान्न सकिन । हजुर म मन्दमतिको अपराध क्षमा गरिदिनुहवस् र अब यस्तो कृपा गर्नुहवस् कि पहिले पनि ममा

लिङ्गभावाः ॥ तथापि दण्डं भगवान्बिभर्ति धर्मस्य गुप्त्यै खलनिग्रहाय ॥ ५ ॥ पिता गुरुस्त्वं जगतामधीशो दुरत्ययः काल उपात्तदण्डः ॥ हिताय स्वेच्छातनुभिः समीहसे मानं विधुन्वन् जगदीशमानिनाम् ॥ ६ ॥ ये मद्विधाज्ञा जगदीशमानिनस्त्वां वीक्ष्य कालेऽभयमाशु तन्मदम् ॥ हित्वाऽऽर्यमार्गं प्रभजन्त्यपस्मया ईहा खलानामपि तेऽनुशासनम् ॥ ७ ॥ स त्वं ममैश्वर्यमदप्लुतस्य कृतागसस्तेऽविदुषः प्रभावम् ॥ क्षन्तुं प्रभोऽथार्हसि मूढचेतसो मैवं पुनर्भून्मतिरीश मेऽसती ॥ ८ ॥ तवावतारोऽयमधोक्षजेह स्वयम्भराणामुरुभारजन्मनाम् ॥ चमूपतीनामभवाय देव भवाय युष्मच्चरणानुवर्तिनाम् ॥ ९ ॥ नमस्तुभ्यं भगवते पुरुषाय महात्मने ॥ वासुदेवाय कृष्णाय सात्वतां पतये नमः ॥ १० ॥ स्वच्छन्दोपात्तदेहाय विशुद्धज्ञानमूर्तये ॥ सर्वस्मै सर्वबीजाय सर्वभूतात्मने नमः ॥ ११ ॥ मयेदं भगवन्गोष्ठनाशायासारवायुभिः ॥ चेष्टितं विहते यज्ञे मानिना तीव्रमन्युना ॥ १२ ॥ त्वयेशानुगृहीतोऽस्मि ध्वस्तस्तम्भो वृथोद्यमः ॥ ईश्वरं गुरुमात्मानं त्वामहं शरणं गतः ॥ १३ ॥ श्रीशुक उवाच ॥ एवं सङ्कीर्तितः कृष्णो मघोना भगवानमुम् ॥ मेघगम्भीरया वाचा प्रहसन्निदमब्रवीत् ॥ १४ ॥ श्रीभगवानुवाच ॥ मया तेऽकारि मघवन्मखभङ्गोऽनुगृह्णता ॥ मदनु-

यस्तो मूढता उत्पन्न नहोस् ॥ ८ ॥ हे देव ! हे अधोक्षज ! जुन असुर-सेनापति केवल आफ्नू भरण-पोषण गर्ने र पृथ्वीमा ठूलो भार उत्पन्न गर्ने कारण छन्, तिनको नाश गर्न र आफ्ना चरण-चिह्नका अनुगामी भक्तहरूको रक्षाका लागि नै हजुरको अवतार भएको छ ॥ ९ ॥ हे भगवन् ! सबै जीवका अन्तःकरणमा विराजमान सर्वव्यापक वासुदेव तथा यादवाधीश हजुर श्रीकृष्णचन्द्रलाई मेरो बारम्बार नमस्कार छ ॥१०॥ हजुर इच्छित शरीरधारी विशुद्ध विज्ञानस्वरूप, सर्वमय, सबैका मूल कारण र सर्वभूत हुनुहुन्छ । हजुरलाई म नमस्कार गर्दछु ॥ ११ ॥ हे भगवन् ! म ठूलो अभिमानी थिएँ, यसै निम्ति आफ्नू यज्ञ-भङ्ग देखेर मैले अत्यन्त रिसले वर्षा र वायुद्वारा व्रजलाई नष्ट पार्न खोजें ॥ १२ ॥ तर हे ईश ! हजुरले ममाथि ठूलो कृपा गर्नुभयो, किनकि यसरी उद्यम व्यर्थ भएपछि मेरो जगदीश्वरतासम्बन्धी अभिमान हरायो । हजुर मेरा स्वामी, गुरु र आत्मा हुनुहुन्छ । म हजुरको शरणमा छु ॥ १३ ॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! यस प्रकार स्तुति गरेपछि भगवान् कृष्णले हाँसेर आफ्नू मेघ झैं गम्भीर वाणीमा भन्नुभयो ॥ १४ ॥ श्रीभगवान्

गन्नुहुन्छ–हे इन्द्र ! तिमी ऐश्वर्यको मदले उन्मत्त भएका थियौ । अतः तिमीमाथि कृपा गर्नको निम्ति मैले तिम्रो यज्ञ-भङ्ग गरेको हुँ । यसले तिमीलाई मेरो सम्झना भइरहनेछ ॥१५॥ जो ऐश्वर्य र लक्ष्मीको मदले अन्धो भएको हुन्छ, त्यो पुरुष म दण्डपाणिलाई देख्दैन । अतः म जसमाथि कृपा गर्न खोज्दछु, त्यसको ऐश्वर्य हरण गरिदिन्छु ॥१६॥ हे देवराज ! तिम्रो कल्याण होस, अब तिमी जाऊ र मेरो आज्ञा पालन गर्दै आफ्ना गर्वरहित सहयोगीहरूसित आफ्ना अधिकारको उपयोग गर ॥१७॥ त्यसपछि अफ्ना सन्तान सहित महामनस्विनी कामधेनुले गोरूपधारण गरी श्रीकृष्णलाई सम्बोधित गरिन् र उनको वन्दना गर्दै भनिन् ॥१८॥ सुरभी भन्दछिन्–हे कृष्ण ! हे कृष्ण ! हे महायोगिन् ! हे विश्वका उत्पत्तिस्थान ! हे अच्युत ! हजुर त्रिलोकपति द्वारा हामी सबै सनाथ भइरहयौं, किनकि हामीलाई मार्न तत्पर इन्द्रको चेष्टा विफल पार्दै हजुरले हाम्रो रक्षा गर्नुभयो ॥१९॥ हे जगत्पते ! हजुर हाम्रा परम पूजनीय देवता हुनुहुन्छ । यसैनिम्ति हजुर नै गाई, ब्राह्मण, देवता र साधुजनको रक्षाका निम्ति हाम्रा इन्द्र बन्नोस् । हामी ब्रह्माको प्रेरणाले हजुरलाई आफ्ना इन्द्र मानेर हजुरको

स्मृतये नित्यं मत्तस्येन्द्रश्रिया भृशम् ॥१५॥ मामैश्वर्यश्रीमदान्धो दण्डपाणिं न पश्यति ॥ तं भ्रंशयामि सम्पद्भ्यो यस्य चेच्छाम्यनुग्रहम् ॥१६॥ गम्यतां शक्र भद्रं वः क्रियतां मेऽनुशासनम्॥स्थीयतां स्वाधिकारेषु युक्तैर्वः स्तम्भवर्जितैः॥१७॥अथाह सुरभिः कृष्णमभिवन्द्य मनस्विनी ॥ स्वसन्तानैरुपामन्त्र्य गोपरूपिणमीश्वरम् ॥१८॥ सुरभिरुवाच ॥ कृष्ण कृष्ण महायोगिन्विश्वात्मन्विश्वसम्भव ॥ भवता लोकनाथेन समाथा वयमच्युत ॥१९॥ त्वं न. परमकं दैवं त्वं न इन्द्रो जगत्पते ॥ भवाय भव गोविप्रदेवानां ये च साधवः ॥२०॥इन्द्रं नस्त्वाऽभिषेक्ष्यामो ब्रह्मणा नोदिता वयम् ॥ अवतीर्णोऽसि विश्वात्मन्भूमेर्भारापनुत्तये ॥२१॥ श्रीशुक उवाच ॥ एवं कृष्णमुपामन्त्र्य सुरभिः पयसात्मनः ॥ जलैराकाशगङ्गाया ऐरावतकरोद्धृतैः ॥२२॥ इन्द्रःसुरर्षिभिःसाकं नोदितो देवमातृभिः ॥ अभ्यषिञ्चत दाशार्हं गोविन्द इति चाभ्यधात् ॥२३॥ तत्रागतास्तुम्बुरुनारदादयो गन्धर्वविद्याधरसिद्धचारणाः॥ जगुर्यशो लोकमलापहं हरेः सुराङ्गनाः संननृतुर्मुदान्विताः ॥२४॥ तं तुष्टुवुर्देवनिकायकेतवो ह्यवाकिरंश्चाद्भुतपुष्पवृष्टिभिः ॥ लोकाः परां निर्वृतिमाप्नुवंस्त्रयो गावस्तदा गामनयन्पयोद्रुताम् ॥ २५ ॥ नानारसौघाः सरितो वृक्षा आसन्मधुस्रवाः ॥ अकृष्टपच्यौषधयो गिरयोऽबिभ्रदुन्मणीन् ॥ २६ ॥ कृष्णेऽभिषिक्त एतानि सत्त्वानि कुरुनन्दन ॥ निर्वैराण्यभवंस्तात क्रूराण्यपि निसर्गतः ॥ २७ ॥ इति गोगोकुलपतिं गोविन्दमभिषिच्य सः ॥ अनुज्ञातो ययौ

अभिषेक गर्दछौं । हे विश्वात्मन ! हजुरले पृथ्वीको भार हलुको पार्नलाई नै यस भूमण्डलमा अवतार लिनुभयो ॥२०॥२१॥ श्रीशुकदेव भन्नुहुन्छ–कामधेनुले भगवान् कृष्णसित यति भनेर आफ्नू दूधले र देवमाता अदितिको प्रेरणानुसार देवर्षिहरूका साथै इन्द्रले ऐरावत द्वारा आफ्नू सूँढमा ल्याएको आकाशगङ्गाको जलले श्रीकृष्णको अभिषेकगरेर उनलाई 'गोविन्द' नामले डाके ॥२२॥२३॥ त्यसै वेला नारद र तुम्बुरु आदि त्यहाँ आए र गन्धर्व, विद्याधर, सिद्ध र चारण आदि मिलेर भगवान्‌को निखिल दोषापहारी निर्मल गानगर्नलागे । अप्सराहरू अत्यन्त आनन्दित भएर नृत्य गर्नलागे ॥२४॥ त्यस वेला मुख्य-मुख्य देवताहरूले भगवानको स्तुति गर्दै प्रभुमाथि स्वर्गलोकबाट विचित्र पुष्पहरूको वर्षा गरे । तीनै लोकहरूमा परमानन्द व्याप्त भयो र गाईहरूका स्तनबाट स्वयं बगेको दूधले पृथिवी भिजिन् ॥२५॥ सबै नदीहरू थरि-थरिका रसले परिपूर्ण भए, वृक्षबाट मह बग्न लाग्यो र जसले सदा

खन-जोत नगरेका औषधि अर्थात् अन्न उत्पन्न हुन्छन्, त्यस्ता पर्वतले प्रकट रूपबाट मणि धारण गरे ॥२६॥ हे कुरुनन्दन ! कृष्णको अभिषेक भइसकेपछि जुन जीव स्वभावैले क्रूर थिए, ती पनि वैरभावले हीन भए ॥२७॥ गाईहरू र समस्त गोकुलका अधिपति श्रीगोविन्दको यस प्रकार अभिषेक गरेर तथा उनको आज्ञा पाएर इन्द्र आफ्ना साथी देवताहरूसित स्वर्गलोक फर्किए ॥२८॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां सप्तविंशोऽध्यायः ॥२७॥

( भगवान्‌ले नन्दलाई वरुणकहाँबाट फर्काई ल्याउनु )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! एक दिनको कुरा हो, नन्दजीले एकादशीको निराहार व्रत गरेर भगवान्‌को पूजा गरे अनि द्वादशीको स्नान गर्न यमुनाको जलमा पसिए ॥१॥ त्यस वेला केही रात बाँकिनै थियो, तर थाहै नपाई नन्दजीले त्यो आसुरीवेलामा जलप्रवेश गर्नासाथ वरुणको दूत असुरले उनलाई समातेर आफ्ना स्वामी वरुणदेवकहाँ पुऱ्यायो ॥२॥ नन्दजी हराएपछि सबै गोप 'हे कृष्ण ! हे राम !' भन्दै रुन लागे । हे राजन् ! आत्मीय जनहरूका अभयदाता भगवान् गोविन्दले

शक्रो वृतो देवादिभिर्दिवम् ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे इन्द्रस्तुतिर्नाम सप्तविंशोऽध्यायः ॥ २७ ॥

श्रीशुक उवाच ॥ एकादश्यां निराहारः समभ्यर्च्य जनार्दनम् ॥ स्नातुं नन्दस्तु कालिन्द्यां द्वादश्यां जलमाविशत् ॥१॥ तं गृहीत्वाऽनयद्भृत्यो वरुणस्यासुरोऽन्तिकम् ॥ अविज्ञायासुरीं वेलां प्रविष्टमुदकं निशि ॥ २ ॥ चुक्रुशुस्तमपश्यन्तः कृष्ण रामेति गोपकाः ॥ भगवाँस्तदुपश्रुत्य पितरं वरुणाहृतम् ॥ तदन्तिकं गतो राजन्स्वानामभयदो विभुः ॥३॥ प्राप्तं वीक्ष्य हृषीकेशं लोकपालः सपर्यया ॥ महत्या पूजयित्वाऽऽह तद्दर्शनमहोत्सवः ॥ ४ ॥ वरुण उवाच ॥ अद्य मे निभृतो देहोऽद्यैवार्थोऽधिगतः प्रभो ॥ त्वत्पादभाजो भगवन्नवापुः पारमध्वनः ॥ ५ ॥ नमस्तुभ्यं भगवते ब्रह्मणे परमात्मने ॥ न यत्र श्रूयते माया लोकसृष्टिविकल्पना ॥ ६ ॥ अजानता मामकेन मूढेनाकार्यवेदिना ॥ आनीतोऽयं तव पिता तद्भवान्क्षन्तुमर्हति ॥ ७ ॥ ममाप्यनुग्रहं कृष्ण कर्तुमर्हस्यशेषदृक् ॥ गोविन्द नीयतामेष पिता ते पितृवत्सल ॥ ८ ॥ श्रीशुक उवाच ॥ एवं प्रसादितः कृष्णो भगवानीश्वरेश्वरः ॥ आदायागात्स्वपितरं बन्धूनां चावहन्मुदम् ॥ ९ ॥ नन्दस्त्वतीन्द्रियं दृष्ट्वा लोकपालमहोदयम् ॥ कृष्णे च सन्नतिं

तिनको करुण क्रन्दन सुनेर तथा यो थाहा पाएर कि 'पिताजीलाई वरुणका दूतले लगे, वरुणकहाँ पुगे ॥३॥ भगवान् हृषीकेशलाई सम्मुख देखेर लोकपाल वरुणले उनको दर्शनले अत्यन्त आनन्दित भएर धेरै पूजा सामग्री द्वारा उनको पूजा गरेर भने ॥४॥ वरुण भन्दछन्—हे प्रभो ! आज मैले शरीर धारण गरेको सफल भयो र आज मेरा सबै मनोरथ सिद्ध भए । हे भगवन् ! हजुरका चरणको सेवा गर्ने व्यक्तिहरू यस संसारबाट पारी तरेर जान्छन् ॥५॥ जुन महाप्रभुमा लोक सृष्टिको कल्पना गर्ने माया सुन्न पाइन्न, त्यस्ता हजुर षडैश्वर्यले पूर्ण, सर्वत्र व्याप्त र सबैका आत्मा हुनुहुन्छ । हजुरलाई मेरो प्रणाम छ॥६॥ हे प्रभो ! आफ्नो कर्तव्यले अनभिज्ञ मेरो मौटा भृत्यले थाहै नपाई हजुरको पितालाई ल्याएको छ, हजुर त्यसको अपराध क्षमा गर्नुहवस् ॥७॥ हे पितृवत्सल ! यी हजुरका पिता हुन् । यिनलाई लैजानुहवस् । हजुर सबैका साक्षी हुनुहुन्छ । हे गोविन्द ! ममाथि कृपा गर्नोस् ॥८॥ शुकदेव भन्दछन्—ब्रह्मादि ईश्वरका पनि ईश्वर भगवान् कृष्ण वरुणद्वारा यसरी आफ्नो विजय गरेपछि बन्धु-बान्धवहरूलाई प्रसन्न पार्दै पिता नन्दलाई लएर व्रजमा फर्किए ॥९॥ नन्दजीले लोकपाल

बरुणको अतीन्द्रिय वैभव र श्रीकृष्णप्रति उनको विनय देखेका थिए, अतः विस्मित भावले आफ्ना जाति-भाइलाई सारा वृत्तान्त सुनाए ॥१०॥ यसले गोपहरूले श्रीकृष्णलाई ईश्वर ठाने र ती अतिउत्सुक भएर मनमनै विचार्न लागे 'के सर्वेश्वर कृष्ण कहिले हामीलाई पनि आफ्नू यस सूक्ष्मगतिसम्म पुऱ्याउलान् ?॥११॥ अन्तर्यामी स्वजनको त्यस्तो विचारले जानेर त्यसलाई पूर्ण पार्ने उपाय विचार्न लाग्नुभयो–॥१२॥ यस लोकमा जीव, अज्ञान कामना र कर्मले अनेक योनिहरूमा घुम्दै आफ्नू वास्तविक गतिलाई राम्ररी बुझ्न सक्तैन ॥१३॥ मनमा यस्तो विचार गरेर करुणामूर्ति भगवान्ले ती गोपलाई आफ्नो अज्ञानातीत परमधाम देखाउनु भयो ॥१४॥ जुन सत्य, ज्ञान, अनन्त र सनातन ब्रह्मज्योति रूप छ । जसलाई मुनिजन गुणसम्बन्ध त्यागिदिएपछि एकाग्रचित्त भएर देख्दछन् ॥१५॥ त्यस ब्रह्मपदलाई पाएर ती सबै गोप त्यसैमा लीनभए । अनि कृष्णले तिनलाई उसबाट झिक्नुभयो । त्यसबाट बाहिर आएर गोपहरूले सगुण ब्रह्मको त्यो लोक देखे, जुन पहिले अक्रूरले देखिसकेका थिए ॥१६॥ त्यो दिव्यलोक देखेर नन्दादि गोपगणलाई आनन्द प्राप्त भयो । त्यहाँ श्रीकृष्णलाई

तेषां ज्ञातिभ्यो विस्मितोऽब्रवीत् ॥ १० ॥ ते त्वौत्सुक्यधियो राजन्मत्वा गोपास्तमीश्वरम् ॥ अपि नः स्वगतिं सूक्ष्मामुपाधास्यदधीश्वरः ॥ ११ ॥ इति स्वानां स भगवान्विज्ञायाखिलदृक् स्वयम् ॥ सङ्कल्पसिद्धये तेषां कृपयैतदचिन्तयत् ॥ १२ ॥ जनो वै लोक एतस्मिन्नविद्याकामकर्मभिः ॥ उच्चावचासु गतिषु न वेद स्वां गतिं भ्रमन् ॥ १३ ॥ इति सञ्चिन्त्य भगवान्महाकारुणिको हरिः ॥ दर्शयामास लोकं स्वं गोपानां तमसः परम् ॥ १४ ॥ सत्यं ज्ञानमनन्तं यद्ब्रह्मज्योतिः सनातनम् ॥ यद्धि पश्यन्ति मुनयो गुणापाये समाहिताः ॥ १५ ॥ ते तु ब्रह्मह्रदं नीता मग्नाः कृष्णेन चोद्धृताः ॥ ददृशुर्ब्रह्मणो लोकं यत्राक्रूरोऽध्यगात्पुरा ॥ १६ ॥ नन्दादयस्तु तं दृष्ट्वा परमानन्दनिर्वृताः ॥ कृष्णं च तत्र छन्दोभिः स्तूयमानं सुविस्मिताः ॥ १७ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धेऽष्टाविंशतितमोऽध्यायः ॥ २८ ॥

श्रीशुक उवाच ॥ भगवानपि ता रात्रीः शरदोत्फुल्लमल्लिकाः ॥ वीक्ष्य रन्तुं मनश्चक्रे योगमायामुपाश्रितः ॥ १ ॥ तदोडुराजः ककुभः करैर्मुखं प्राच्या विलिम्पन्नरुणेन शन्तमैः ॥ स चर्षणीनामुदगाच्छुचो मृजन् प्रियः प्रियाया इव दीर्घदर्शनः ॥ २ ॥ दृष्ट्वा कुमुद्वन्तमखण्डमण्डलं रमाननाभं नवकुंकुमारुणम् ॥ वनं च तत्कोमलगोभिरञ्जितं जगौ कलं वामदृशां मनोहरम् ॥ ३ ॥ निशम्य गीतं तदनङ्गवर्धनं व्रजस्त्रियः

वेदादि द्वारा स्तूयमान देखेर उनलाई ठूलो विस्मय भयो ॥१७॥ इति श्रीमद्भागवते महापुराणे पूर्वार्धे पं० गौरीशंकरकृत 'वासिष्ठी' भाषाटीकायामष्टाविंशतितमोऽध्यायः ॥२८॥

(रासलीला) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! मल्लिकाको विकसित कुसुम भएको शरद् ऋतुको रमणीय रात्रि देखेर भगवान्ले योगमायाको आश्रय लिई रमण गर्ने इच्छा गरे ॥१॥ जस्तै परदेशबाट धेरै दिनमा फर्केको पति आफ्नी प्रियालाई कुंकुमरागले रंजित गरेर आनन्दित पार्दछ, त्यस्तै नै किरणहरू द्वारा आफ्नो लालिमाले प्राचीदिशाको मुख रंजित पार्दै पूर्ण चन्द्रमा निस्के । किरणहरू उदित हुनासाथ सबै जीवको ताप नष्ट भयो॥२॥ आकाशमा लक्ष्मीको मुखमण्डल समान राम्रो र नवकुसुम समान अरुण अखण्ड चन्द्रदेव तथा तिनका कोमल किरणहरूले रंजित वृन्दावन देखेर भगवान्ले व्रज-सुन्दरीहरूको मन हरण गर्ने मधुर गान गाले ॥३॥ त्यो कामोद्दीपक गान सुन्नासाथ सबै व्रजबालाहरू कृष्णमा संलग्नचित्त भएर

थोटीले अकौंसित आफ्ना चेष्टा झुलाउँदै आफ्ना कान्त कृष्णकहाँ दगुरे । अत्यन्त वेगले हिंड्दा ती गोपिनीका रमनीय कुण्डल हल्लन थाल्दथे॥ ४॥ उस वेला तिनीहरूमध्ये केही गोपिनी दूध दुहिरहेका थिए, ती उत्सुकतावश दुहुन छाडेर हिंडे । कोही चुल्होमा बसालेको दूध त्यहीं छाडेर र कोही छड्कीरहेको लप्सी त्यसै छाडेर दगुरे॥५॥ कतिपय गोपिनीहरू पति-पुत्रको निम्ति खानेकुरा पस्किरहेका थिए, त्यो पस्कन छाडेर दगुरे । यसै प्रकार बालकलाई दूध ख्वाउनलागेका गोपिनी दूध ख्वाउन छाडेर, पतिको सेवा गर्ने त्यो सेवा छाडेर, खानलागेका गोपिनी खानेकुरा छाडेर दगुरे । ती मध्ये कोही चन्दनादि लगाउँदै तथा कोही बुकुवा घस्तै थिए र केही आँखामा अंजन लगाइरहेका थिए । ती सबै आफआफ्ना शृङ्गार छाडेर दगुरे । केही गोपिनी हतारहीमा शरीरमा उल्टो-सुल्टो वस्त्राभूषण लगाई श्रीकृष्णकहाँ भागे र ॥६॥७॥ यद्यपि तिनका पति, पिता, भ्राता र बन्धुहरूले सकेसम्म रोक्न खोजे तापनि श्रीकृष्णले तिनको मन यसरी हरिसकेका थिए कि ती मुग्धा गोपिनी तिनले छेकेर मानेनन् ॥८॥ केही गोपिनी घर भित्र थिए, ती घरवालालेछेकि दिनाले बाहिरनिस्कनपाएनन् अनि

कृष्णगृहीतमानसाः ॥ आजग्मुरन्योन्यमलक्षितोद्यमाः स यत्र कान्तो जवलोलकुण्डलाः ॥ ४ ॥ दुहन्त्योऽभिययुः काश्चिद्दोहं हित्वा समुत्सुकाः ॥ पयोऽधिश्रित्य संयावमनुद्वास्यापरा ययुः ॥ ५ ॥ परिवेषयन्त्यस्तद्धित्वा पाययन्त्यः शिशून्पयः ॥ शुश्रूषन्त्यः पतीन्काश्चिदश्नन्त्योऽपास्य भोजनम् ॥ ६ ॥ लिम्पन्त्यः प्रमृजन्त्योऽन्या अञ्जन्त्यः काश्च लोचने ॥ व्यत्यस्तवस्त्राभरणाः काश्चित्कृष्णान्तिकं ययुः ॥ ७ ॥ ता वार्यमाणाः पतिभिः पितृभिर्भ्रातृबन्धुभिः ॥ गोविन्दापहृतात्मानो न न्यवर्तन्त मोहिताः ॥ ८ ॥ अन्तर्गृहगताः काश्चिद्गोप्योऽलब्धविनिर्गमाः ॥ कृष्णं तद्भावनायुक्ता दध्युर्मीलितलोचनाः ॥ ९ ॥ दुःसहप्रेष्ठविरहतीव्रतापधुताशुभाः ॥ ध्यानप्राप्ताच्युताश्लेषनिर्वृत्या क्षीणमङ्गलाः ॥ १० ॥ तमेव परमात्मानं जारबुद्ध्याऽपि सङ्गताः ॥ जहुर्गुणमयं देहं सद्यः प्रक्षीणबन्धनाः ॥ ११ ॥ राजोवाच ॥ कृष्णं विदुः परं कान्तं न तु ब्रह्मतया मुने ॥ गुणप्रवाहोपरमस्तासां गुणधियां कथम् ॥ १२ ॥ श्रीशुक उवाच ॥ उक्तं पुरस्तादेतत्ते चैद्यः सिद्धिं यथा गतः ॥ द्विषन्नपि हृषीकेशं किमुताधोक्षजप्रियाः ॥ १३ ॥ नृणां निःश्रेयसार्थाय व्यक्तिर्भगवतो नृप ॥ अव्ययस्याप्रमेयस्य निर्गुणस्य गुणात्मनः ॥ १४ ॥ कामं क्रोधं

श्रीकृष्णको भावनाले उनमै तन्मय भएर आँखा चिम्ली आफ्नू हृदयमा नै उनको ध्यान गर्नलागे ॥९॥ आफ्ना प्रियतम कृष्णको दुःसह विरहले तिनका सबै अशुभ कर्म भस्म भएर गए र ध्यानावस्थामा प्राप्त प्रभुको आलिङ्गन गरेको परमानन्दले तिनका शुभकर्म पनि रहेनन् ॥१०॥ यसरी जार बुद्धिले पनि परमात्मा कृष्णको संगति हुनाले तिनका कर्मबन्धन भाँचिएर तिनले तुरुन्त आफ्नू त्रिगुणमयी देह त्यागिदिए ॥११॥ यति कथा सुनेर राजा परीक्षितले सोधे–हे गुरो ! ती व्रजवालाहरू त भगवान् कृष्णचन्द्रलाई आफ्ना परम प्रिय पति मान्दथे, तिनको उनमा ब्रह्मभाव कहिले पनि थिएन । अनि गुणमयी बुद्धिले युक्त भएर पनि तिनको गुणप्रवाहरूपी संसार कसरी समाप्त भयो ? ॥१२॥ शुकदेवले भन्नुभयो—हे राजन् ! मैले पहिल्यै भनिसकेको छु–शिशुपालले द्वेषभावले भगवान्को चिन्तन गरेर पनि परमपद प्राप्त गरेका थियो ; फेरि जो श्रीकृष्णका अनन्य प्रिय थिए, ती गोपिनीको विषयमा के भन्ने ? ॥१३॥ हे राजन् ! वास्तवमा भगवान् अव्यय, अप्रमेय, निर्गुण र गुणहरूका अधिष्ठान हुन् । मनुष्यको कल्याणार्थ नै उनको सगुण अवतार हुन्छ ॥१४॥ जो व्यक्ति सधैं

भगवान्मा काम, क्रोध, भय, स्नेह, ऐक्य वा सौहार्दको भाव राख्दछे, ती पनि उनको तन्मयतामा प्राप्त हुन पुग्दछे ॥ १५ ।. हे राजन् ! पिमीले योगेश्वर र अजन्मा कृष्णको विषयमा यस्तो संशय गर्नु उचित छैन, किनकि उनको कृपाले सारा संसार मुक्त हुन सक्दछ ॥ १६ ॥ अँ, ती व्रजबालाहरूलाई आफूकहाँ आएका देखेर वक्ताहरूमा श्रेष्ठ भगवान् कृष्ण आफ्नू वाक्चतुर्यद्वारा मोहित पार्दै भन्नुभयो ॥ १६ ॥ श्रीकृष्ण भगवान् भन्नुहुन्छ–हे महाभागा हो ! तिमीहरूको स्वागत छ । भन, म तिमीहरूको कुन प्रिय काम गरूँ ? व्रजमा त सबै कुशल छ ? यस बखत तिमीहरू यहाँ आउने कारण बताओ ॥ १८ ॥ हे सुन्दरी हो ! रात निकै डरलाग्दो छ र अनेक हिंसक जीव यता-उता डुलिरहेका छन् । अतएव तिमीहरू तुरुन्त घर फर्क । यहाँ स्त्रीहरूले धेरै बेर बस्नु उचित छैन ॥१९॥ तिमीहरूलाई नदेखेर पिम्रा पिता-माता, पुत्र, दाजु-भाइ र पति आदि खोज्दै होलान् । व्यर्थ आफ्ना बन्धुलाई अत्यास नपार ॥२०॥ यहाँ आएर सबैले चन्द्रमाका किरणले रंगीन, यमुना जलको स्पर्शले शीतल, मन्द पवनको गतिले हल्लने सुशोभित र मनोहर वृन्दावनको शोभा हेरिसक्यौ ॥२१॥

भयं स्नेहमैक्यं सौहृदमेव च ॥ नित्यं हरौ विदधतो यान्ति तन्मयतां हि ते ॥ १५ ॥ न चैवं विस्मयः कार्यो भगवता भगवत्यजे ॥ योगेश्वरेश्वरे कृष्णे यत एतद्विमुच्यते ॥ १६ ॥ ता दृष्ट्वान्तिकमायाता भगवान्व्रजयोषितः ॥ अवदद्वदतां श्रेष्ठो वाचः पेशैर्विमोहयन् ॥ १७ ॥ श्रीभगवानुवाच ॥ स्वागतं वो महाभागाः प्रियं किं करवाणि वः ॥ व्रजस्यानामयं कच्चिद्ब्रूतागमनकारणम् ॥ १८ ॥ रजन्येषा घोररूपा घोरसत्त्वनिषेविता ॥ प्रतियात व्रजं नेह स्थेयं स्त्रीभिः सुमध्यमाः ॥ १६ ॥ मातरः पितरः पुत्रा भ्रातरः पतयश्च वः ॥ विचिन्वन्ति ह्यपश्यन्तो मा कृढ्वं बन्धुसाध्वसम् ॥ २० ॥ दृष्टं वनं कुसुमितं राकेशकररञ्जितम् ॥ यमुनानिललीलैजत्तरुपल्लवशोभितम् ॥ २१ ॥ तद्यात मा चिरं गोष्ठं शुश्रूषध्वं पतीन् सतीः ॥ क्रन्दति वत्सा बालाश्च तान्पाययत दुह्यत ॥ २२ ॥ अथवा मदभिस्नेहाद्भवत्यो यन्त्रिताशयाः ॥ आगता ह्युपपन्नं वः प्रीयन्ते मयि जन्तवः ॥ २३ ॥ भर्तुः शुश्रूषणं स्त्रीणां परो धर्मो ह्यमायया ॥ तद्बन्धूनां च कल्याण्यः प्रजानां चानुपोषणम् ॥ २४ ॥ दुःशीलो दुर्भगो वृद्धो जडो रोग्यधनोऽपि वा ॥ पतिः स्त्रीभिर्न हातव्यो लोकेप्सुभिरपातकी ॥ २५ ॥ अस्वर्ग्यमयशस्यं च फल्गु कृच्छ्रं भयावहम् ॥ जुगुप्सितं च सर्वत्र औपपत्यं कुलस्त्रियाः ॥ २६ ॥ श्रवणाद्दर्शनाद्ध्यानान्मयि भावोऽनुकीर्तनात् ॥ न तथा सन्निकर्षेण प्रतियात ततो गृहान् ॥ २७ ॥

अतः हे सती हो ! अब अबेर नगर, तुरुन्त घरघरै जाओ र आफ्नाफ्ना पतिको सेवा गर । घरमा तिम्रा बालक र बाछाहरू रोइरहेका होलान्, तिनलाई दूध देओ र गाईहरू दुह ॥२२॥ यदि मेरो स्नेहले आसक्त-चित्त भएर सबै यहाँ आएका हौ भने यो पनि अनुचित छैन, किनकि सबै प्राणी मसित प्रेम गर्दछन् ॥ २३ ॥ हे कल्याणी हो ! पति र पतिका बन्धुहरूको निष्कपट भावले सेवा गर्नु र सन्तानको पालन-पोषण गर्नु नै नारीको सर्वश्रेष्ठ धर्म हो ॥ २४ ॥ जुन स्त्रीलाई शुभगति प्राप्त गर्ने इच्छा छ, ती पातकी बाहेक अरू कुनै पनि स्थितिमा पतिलाई नत्यागुन् । फेरि त्यो नजाति बानी भएको, अभागी, वृद्ध, मूर्ख, रोगी र निर्धन भए पनि नत्याग्नु ॥ २५ ॥ कुलवधुहरूको निम्ति जार-सेवा सर्वथा वर्जित छ, निन्दनीय छ । यसले तिनलाई स्वर्ग प्राप्त हुँदैन र संसारमा तिनको अपयश हुन्छ । यो अत्यन्त तुच्छ, कष्टदायक कर्म हो ॥ २६ ॥ यदि तिमीहरूलाई मेरो अनन्य प्रेमको

इच्छा भए मेरो गुण श्रवण, दर्शन ध्यान र नामकीर्तन गर्नाले मप्रति जस्तो प्रेम हुन्छ, त्यस्तो मेरैनेर बस्नाले हुँदैन । अतः तिमीहरू आफ्ना घर जाओ ॥ २७ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! गोविन्दको यो कठोर भाषण सुनेर गोपिनीहरू खिन्न भए र आशा भङ्ग हुनाले तिनीहरूलाई ठूलो चिन्ता पऱ्यो ॥२८॥ शोकवश लामो र तातो निःश्वासले उनका अधरपुट सुकेका थिए, त्यस्तो अनुहार न्यूराएर ती गोपिनी आफ्ना खुट्टाका नङले भूमि कोट्याउन लागे । नेत्रका गाजलको कालिमा मिसिएर निस्कने आँसुले

श्रीशुक उवाच ॥ इति विप्रियमाकर्ण्य गोप्यो गोविन्दभाषितम् ॥ विषण्णा भग्नसङ्कल्पाश्चिन्तामापुर्दुरत्ययाम् ॥ २८ ॥ कृत्वा मुखान्यवशुचः श्वसनेन शुष्यद्बिम्बाधराणि चरणेन भुवं लिखन्त्यः ॥ अस्रैरुपात्तमषिभिः कुचकुंकुमानि तस्थुर्मृजन्त्य उरुदुःखभराः स्म तूष्णीम् ॥ २९ ॥ प्रेष्ठं प्रियेतरमिव प्रतिभाषमाणं कृष्णं तदर्थविनिवर्तितसर्वकामाः ॥ नेत्रे विमृज्य रुदितोपहते स्म किञ्चित्संरम्भगद्गदगिरोऽब्रुवतानुरक्ताः ॥ ३० ॥ गोप्य ऊचुः ॥ मैवं विभोऽर्हति भवान्गदितुं नृशंसं सन्त्यज्य सर्वविषयाँस्तव पादमूलम् ॥ भक्ता भजस्व दुरवग्रह मा त्यजास्मान् देवो यथाऽऽदिपुरुषो भजते

आफ्ना कुच-कुङ्कुम पखाल्दै कष्टको ठूलो भारीले थिचिएर ती मौन उभिइरहे॥ २९॥ आफ्ना प्यारा कृष्णको निम्ति जसले सबै विषय छाडिदिएका थिए, ती अनुरागिणी गोपिनीहरू रुनाले आँसुले भरिएका नेत्र पुछेर प्रणय-कोपयुक्त गद्‌गद् वाणीमा प्रियतम भएर पनि यस्तो अप्रिय भाषण दिने कृष्णचन्द्रसित भन्नलागे ॥ ३० ॥ गोपिनीहरूले भने—हे विभो ! हजुर-ले यस्ता कठोर वचन नभन्नु पर्‍यो, हामी अन्य विषयहरू छाडेर केवल हजुरका चरण-कमलमा नै संलग्न छौं । अतएव हे स्वच्छन्द ! आदिपुरुष नारायण मुमुक्षु जनहरूलाई

---

२८ बालतत्त्वचर्चा—१. भगवानका लीलाको सम्बन्धमा जुन बेला कुनै संदेह हुन्छ, त्यस बेला हामी भगवान्लाई भगवान् मान्दैनौं, उनलाई आफ्नो श्रेणीमा ल्याउँछौं, नभए कुनै सन्देह हुन सक्तैन । भगवानको प्रत्येक कार्य र वाणी देख्दा विषम भए पनि तत्त्वतः सत्य छ । २. कोही आफ्नू बुद्धिले सन्देह मेट्न खोज्छ पनि मेटिंदैन, झन् बढ्दछन् । सन्देह मेट्ने एकमात्र उपाय हो नारायणका चरणमा शरणापन्न हुनु, सन्देह त्यहीं भाग्छ । ३. राधा-कृष्ण हामी जस्तै कर्मले जन्मने पाञ्चभौतिक देहधारी होइनन् र स्त्री-पुरुष पनि होइनन् । साक्षात् सच्चिदानन्दघन स्वस्वरूप हुन् र दुवै लीलाको लागि दुइ रूपमा प्रकट भएका हुन् । राधा श्रीकृष्णकी शक्ति हुन् । राधा नै कृष्ण र कृष्ण नै राधा हुन् । राधा कृष्णकी पत्नी होइनन्, राधा भगवान् हुन् । श्रीकृष्ण राधाका पति होइनन्, भगवान् राधा हुन् । फेरि राधा-कृष्ण स्त्री-पुरुष, पति-पत्नी, प्रकृति-पुरुष र पुरुषोत्तम पनि हुन् । यी दुवैको महिमा कसले भन्न सक्दछ ? ४. भगवान्को देह छैन, त्यहाँ देह-देहीको भेद छैन, भगवान्को देह मायिक पाञ्चभौतिक एवं कर्मफलजन्य छैन । भगवान् र उनको देहमा कुनै भेद छैन । ५. सेवकको धर्म हो —स्वामी-लाई कुन बेला के चाहिन्छ, यो थाहा पाओस् । सेवक सेवाको अवसर स्वयं खोजोस् । स्वामीले आज्ञा दिने मौकै नपाउन् । ६. सेवाका तीन भेद छन्—(क) निकृष्ट—जुन व्यवहार या लोकनिन्दाको डरले गर्नै पर्दछ, तर मनमा गाह्रो लाग्दछ । (ख) मध्यम-सेवा गर्नु कर्तव्य र धर्म हो । नगर्नाले कर्तव्य र धर्मबाट च्युत होइन्छ । (ग) उत्तम—नगरी बसी सकिन्न । यस्तो सेवा प्रेम र स्नेहले या स्वभावले हुन्छ । कर्तव्य र स्वार्थादिले होइन । ७. यो प्रति सबको वास्तविक प्रेम छ, उसको सेवा आफ्नै हातले गर्दछ । प्रेमको परीक्षा सेवाले नै हुन्छ । कुनै रोगीको नजीक मैले दस जना सेवक राखिदिएँ, प्रशस्त धन दिएँ तर त्यो प्रेम हुन सक्तैन । प्रेमले त यस्तो स्थिति उत्पन्न गरिदिन्छ कि स्वयं आफ्नै हातले सेवा नगरी बस्ने सकिन्न । त्यस बीच कुनै स्वार्थ आउन्न । हाम्रो स्वार्थ त्यसैमा छ । ८. प्रेमी भक्त नित्य प्रेमको वरदान माग्दछन् । त्यो प्रेमको आफ्नो स्वभाव नै हो—नित्य प्रेमको इच्छा गर्नु । जुन प्रेम घटी बढी रहन्छ, त्यो प्रेम होइन । ९. सकाम भक्त दुवै भगवान्सित वरदान माग्दछन्, तर सकाम भक्त यस्तो वरदान माग्दछ जसले आफ्नो हित होस् तर शुद्ध भक्त यस्तो वरदान माग्दछ—जसले जगत्को कल्याण होस् र प्रेमी भक्त—भगवान्सित भगवान्कै सुखको वरदान माग्दछ, आफू जहाँसुकै स्थितिमा रहून् । १०. भगवान्लाई बन्धन भन्ने कुरा नहोस् तर बन्धन भगवानलाई कहाँ छैन भने प्रेम भएर पनि हामी भगवान्लाई प्रेम-बन्धनमा राख्न सक्तैनौं ।

भज्दछन्, त्यसै नै हजुर हामीलाई अङ्गीकार गर्नुहवस्–नत्याग्नोस् ॥३१॥ हे कृष्ण ! धर्मका विशेषज्ञ हजुरले भन्नुभएको छ–पति, पुत्र र बान्धवजनको सेवा नै नारीको धर्म हो, त्यही उपदेशको विषयभूत हजुर ईश्वरमा नै हाम्रो बस्ता शाप हुन्, किनकि सबै देहधारीहरूका प्रियतम, बन्धु र आत्मा एकमात्र हजुरनै हुनुहुन्छ ॥३२॥ कुशल पुरुष नित्यप्रिय आत्मस्वरूप हजुरसित नै प्रेम गर्दछन् । संसारमा सदा कष्ट दिने पति-पुत्रादिसित उनलाई के वास्ता ? अतः हे परमेश्वर ! प्रसन्न हुनोस् । हे कमलनयन ! हामीधेरै दिनदेखि आशा गरिरहेका छौं, हजुर हाम्रो आशालाई छिन्न नपार्नोस् ॥३३॥ अबसम्म हाम्रो चित्त घरमा आसक्त थियो, त्यसलाई हजुरले हरण गर्नुभयो । हाम्रा हात घर-धन्धामा लागेका थिए,ती पनि निश्चेष्ट भए र हाम्रा खुट्टा हजुरका चरणकमलको निकटता छाडेर एक पाइला पनि पछि सर्न मान्दैनन्, अनि हामी कसरी व्रजमा फर्कने ? त्यहाँ गए र पनि के गर्ने ? प्रियतम ! हजुरको मन्द-मन्द हास्ययुक्त हेराइ र हजुरको मनोहर गीतले हाम्रो हृदयमा कामानल प्रज्वलित भइरहेछ । त्यसलाई आफ्ना अधरामृतको प्रवाहले भिजाएर शान्त पार्नोन्, नत्र हजुरको विरहले उत्पन्न

मुमुक्षून् ॥ ३१ ॥ यत्पत्यपत्यसुहृदामनुवृत्तिरङ्ग स्त्रीणां स्वधर्म इति धर्मविदा त्वयोक्तम् ॥ अस्त्वेवमेतदुपदेशपदे त्वयीशे प्रेष्ठो भवाँस्तनुभृतां किल बन्धुरात्मा ॥ ३२ ॥ कुर्वन्ति हि त्वयि रतिं कुशलाः स्व आत्मन्नित्यप्रिये पतिसुतादिभिरार्तिदैः किम् ॥ तन्नः प्रसीद परमेश्वर मा स्म छिन्द्या आशां धृतां त्वयि चिरादरविन्दनेत्र ॥ ३३ ॥ चित्तं सुखेन भवताऽपहृतं गृहेषु यन्निर्विशत्युत करावपि गृह्यकृत्ये ॥ पादौ पदं न चलतस्तव पादमूलाद्यामः कथं व्रजमथो करवाम किं वा ॥ ३४ ॥ सिञ्चाङ्ग नस्त्वदधरामृतपूरकेण हासावलोककलगीतजहृच्छयाग्निम् ॥ नोचेद्वयं विरहजाग्न्युपयुक्तदेहा ध्यानेन याम पदयोः पदवीं सखे ते ॥ ३५ ॥ यर्ह्यम्बुजाक्ष तव पादतलं रमाया दत्तक्षणं क्वचिदरण्यजनप्रियस्य ॥ अस्प्राक्ष्म तत्प्रभृति नान्यसमक्षमङ्ग स्थातुं त्वयाभिरमिता बत पारयामः ॥ ३६ ॥ श्रीर्यत्पदाम्बुजरजश्चकमे तुलस्या लब्ध्वाऽपि वक्षसि पदं किल भृत्यजुष्टम् ॥ यस्याः स्ववीक्षणकृतेऽन्यसुरप्रयासस्तद्वद्वयं च तव पादरजःप्रपन्नाः ॥ ३७ ॥ तन्नः प्रसीद वृजिनार्दन तेऽङ्घ्रिमूलं प्राप्ता विसृज्य वसतीस्त्वदुपासनाशाः ॥ त्वत्सुन्दरस्मितनिरीक्षणतीव्रकामतप्तात्मनां पुरुषभूषण देहि दास्यम् ॥३८॥ वीक्ष्यालकावृतमुखं तव कुण्डलश्रीगण्डस्थलाधरसुधं हसितावलोकम् ॥

अग्निमा हाम्रो शरीर भस्म हुनेछ । हे सखे ! हामी हजुरको ध्यान गरेर हजुरका चरणको सामीप्य प्राप्त गर्नेछौं ॥३५॥ हे कमलनयन ! वनवासीहरूका प्रिय हजुर लक्ष्मीलाई पनि आफ्ना जुन चरणको सेवा गर्ने अवसर कहिले काहीं मात्र दिनुहुन्छ, हजुरका ती चरणकमल मैले जुन बेला स्पर्श गरेँ र हामीलाई आनन्दित पार्नु भएको थियो, उहैबेलादेखि अरू कसैको सामुन्ने टिक्न सक्तैनौं ॥३६॥ जसको कृपाकटाक्षका निम्ति सबै देवता प्रयास गरिरहन्छन्, ती लक्ष्मी कुनै प्रतिद्वन्द्वी नभई हजुरको वक्षस्थलमा स्थान पाएर पनि तुलसी र अन्य भक्तजनद्वारा सेवित हजुरका जुन चरणरजको इच्छा गर्दछिन्,उनी जस्तै हामी पनि तिनै चरणको शरणमा आएका छौं ॥३७॥ अतः हे दुःखदलन ! हजुर हामीमाथि प्रसन्न हुनुहवस् । हामी हजुरको सेवा गर्ने आशाले नै आफ्ना घर छाडेर हजुरको शरणमा आएका छौं । हे पुरुषभूषण ! हजुरको मन्दहास्यपूर्ण हेराईले हाम्रो चित्त अत्यन्त काम-सन्तप्त भइरहेको छ, हजुर हामीलाई आफ्ना दासी तुल्याउनोस् ॥३८॥ हे प्रियतम ! अलकावलीले आवृत हजुरको मुख, कुण्डलको कान्तिले शोभित कपोल र अधरामृत, मनोहर हास्ययुक्त हेराइ,

अभयादायक दुवै हात र एकमात्र लक्ष्मीको क्रीडास्थल हजुरको विशाल वक्षस्थल देखेर हामी दासी बनिसकेका छौं ॥३९॥ हामी मात्र होइन–तीनै लोकमा कुन स्त्री होली जो मधुरपदावलीले युक्त र उच्च स्वरले गान गरिने हजुरको स्वरालाप सुनेर, यो त्रिलोक-सुन्दर स्वरूप देखेर–जसले गाई, पक्षी, वृक्ष र मृगादिलाई पनि रोमाञ्च भएर आउँछ— आफ्नू आर्य चरित्रले विचलित हुँदैनन् ? ॥४०॥ यो कुरा स्पष्ट छ कि आदिपुरुष नारायण झैं देवगणका रक्षक हजुरले व्रजमण्डलको भय र दुःख हटाउनका लागि अवतार लिनुभएको छ । अतः हे दीनबन्धो ! हजुर हामी दासीहरूका वक्षःस्थल र शिरमा आफ्ना करकमल राख्नोस् ॥४१॥ श्रीशुकदेव भन्नुहुन्छ–गोपिनीका यस्ता विह्वल कुरा सुनेर योगेश्वर भगवान् कृष्ण मुसुक्क हाँसे र आत्माराम भएर पनि ती गोपिनीहरूसित रमण गर्नलागे ॥४२॥ मनोहर कटाक्ष र प्रफुल्लवदना गोपाङ्गनाले घेरिई उदार-चरित्र भगवान् कृष्ण मनोहर हास्य र कुन्दकली झैं दाँतहरूको कान्तिले यस्तो शोभित भइरहेका थिए, जस्तै तारामण्डलले आवृत चन्द्रमा ॥४३॥ ती सबै स्त्रीका युथपति भगवान् कृष्ण उनीहरूद्वारा कीर्तित

दत्ताभयं च भुजदंडयुगं विलोक्य वक्षः श्रियैकरमणं च भवाम दास्यः ॥ ३९ ॥ का स्त्र्यङ्ग ते कलपदायतमूर्च्छितेन सम्मोहिताऽऽर्यचरितान्न चलेत्त्रिलोक्याम् ॥ त्रैलोक्यसौभगमिदं च निरीक्ष्य रूपं यद्गोद्विजद्रुममृगाः पुलकान्यबिभ्रन् ॥ ४० ॥ व्यक्तं भवान्व्रजभयार्तिहरोऽभिजातो देवो यथादिपुरुषः सुरलोकगोप्ता ॥ तन्नो निधेहि करपङ्कजमार्तबन्धो तप्तस्तनेषु च शिरःसु च किङ्करीणाम् ॥ ४१ ॥ श्रीशुक उवाच ॥ इति विक्लवितं तासां श्रुत्वा योगेश्वरेश्वरः ॥ प्रहस्य सदयं गोपीरात्मारामोऽप्यरीरमत् ॥ ४२ ॥ ताभिः समेताभिरुदारचेष्टितः प्रियेक्षणोत्फुल्लमुखीभिरच्युतः ॥ उदारहासद्विजकुन्ददीधितिर्व्यरोचतैणाङ्क इवोडुभिर्वृतः ॥ ४३ ॥ उपगीयमान उद्गायन्वनिताशतयूथपः ॥ मालां बिभ्रद्वैजयन्तीं व्यचरन्मण्डयन्वनम् ॥ ४४ ॥ नद्याः पुलिनमाविश्य गोपीभिर्हिमवालुकम् ॥ रेमे तत्तरलानन्दकुमुदामोदवायुना ॥ ४५ ॥ बाहुप्रसारपरिरम्भकरालकोरुनीवीस्तनालभननर्मनखाग्रपातैः ॥ क्ष्वेल्यावलोकहसितैर्व्रजसुन्दरीणामुत्तम्भयन्रतिपतिं रमयांचकार ॥ ४६ ॥ एवं भगवतः कृष्णाल्लब्धमाना महात्मनः ॥ आत्मानं मेनिरे स्त्रीणां मानिन्योऽभ्यधिकं भुवि ॥ ४७ ॥ तासां तत्सौभगमदं वीक्ष्य मानं च केशवः ॥ प्रशमाय प्रसादाय तत्रैवान्तरधीयत ॥ ४८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे भगवतो रासक्रीडावर्णनं नामैकोनत्रिंशोऽध्यायः ॥ २९ ॥

भएर पनि उनैसित उच्चस्वरले गाउँदै घाँटीमा वैजयन्ती माला धारण गरेका श्रीकृष्ण त्यो वनलाई विभूषित पार्दै डुल्नलागे । त्यसपछि उनले शीतल बालुकामय यमुनाजीको तटमा गएर गोपिनीहरूसित क्रीडा गरे । त्यो स्थान यमुनाको चञ्चल तरङ्गहरूको सम्पर्कले शीतल र कुमुदिनीको गन्धयुक्त सुगन्धित वायुले सेवित हुनाले गर्दा अतिशय आनन्दप्रद भइरहेको थियो ॥४४॥४५॥ हात फैलाउनु, आलिङ्गन गर्नु, कर,अलक, तिघ्रा,कटि वस्त्रको बन्धन र स्तन आदिको स्पर्श, ठट्टा र नखक्षत गर्न, विनोदपूर्ण चितवनले हेर्नु र मन्द-मन्द मुसकान आदि चेष्टाहरूले व्रजबालाहरूको कामरस उद्दीप्त पार्दै ,भगवान् कृष्ण ती व्रजवनिताहरूसित विहार गर्नलागे ॥४६॥ परमात्मा भगवान् कृष्णद्वारा यस प्रकार सम्मान पाएर ती मानवती गोपाङ्गनाहरूले आफूलाई संसारका सबै नारीभन्दा श्रेष्ठ ठाने ॥४७॥ त्यो सौन्दर्यमदलाई शान्त र तीप्रति कृपा गर्ने इच्छाले भगवान् कृष्णचन्द्र सहसा तिनको माझबाट

अन्तर्धान भए ॥ ४८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकरकृत 'वासिष्ठी' भाषाटीकायामेकोनत्रिंशोऽध्यायः ॥ २९ ॥

( श्रीकृष्णको खोजी ) शुकदेव भन्नुहुन्छ—भगवान् सहसा अन्तर्धान भएपछि उनलाई नदेखेर गोपिनीहरू यस्तो व्याकुल भए, जस्तै यूथपति गजराज नहुनाले हात्तीहरू व्याकुल हुन्छन् ॥ १ ॥ ती कृष्णको चाल-ढाल, प्रेमपूर्ण मुसकान, विलासमयी हेराई, मोहक कुराकानी र लीला विलासले जसको चित्त उनैतिर आकर्षित भइसकेको थियो, ती गोपाङ्गना तन्मय भावले उनका भिन्न–भिन्न चेष्टाका अभिनय गर्नलागे ॥ २ ॥ आफ्ना प्रियतमको गति, हाँसो र भाषणादिमा आसक्त भएर तन्मय हुने ती व्रजबालाहरू भगवान्का लीलाको अभिनय गर्दै 'म नै कृष्ण हुँ' यस्तो भन्नलागे ॥ ३ ॥ ती सबै मिलेर उच्चस्वरले गुणगान गर्दै उन्मत्त झैं यौटा वनबाट अर्को वनमा गएर वनका वृक्षहरूसित सबै प्राणीहरूमा भित्र-बाहिर व्याप्त आकाश झैं सर्वान्तर्यामी हरिको ठेगाना सोध्नलागे ॥ ४ ॥ यौटी भन्छे—हे अश्वत्थ ! हे प्लक्ष ! हे न्यग्रोध ! हाम्रा प्यारा नन्दनन्दन आफ्नू हाँसोले हाम्रो मन हरण गरी हिंडे,

श्रीशुक उवाच ॥ अन्तर्हिते भगवति सहसैव व्रजाङ्गनाः ॥ अतप्यंस्तमचक्षाणाः करिण्य इव यूथपम् ॥१॥ गत्यानुरागस्मितविभ्रमेक्षितैर्मनोरमालापविहार विभ्रमैः ॥ आक्षिप्तचित्ताः प्रमदा रमापतेस्तास्ता विचेष्टा जगृहुस्तदात्मिकाः ॥२॥ गतिस्मितप्रेक्षणभाषणादिषु प्रियाः प्रियस्य प्रतिरूढमूर्तयः ॥ असावहं त्वित्यबलास्तदात्मिकान्यवेदिषुः कृष्णविहारविभ्रमाः ॥३॥ गायन्त्य उच्चैरमुमेव संहता विचिक्युरुन्मत्तकवद्वनाद्वनम् ॥ पप्रच्छुराकाशवदन्तरं बहिर्भूतेषु सन्तं पुरुषं वनस्पतीन् ॥ ४ ॥ दृष्टो वः कच्चिदश्वत्थ प्लक्ष न्यग्रोध नो मनः ॥ नन्दसूनुर्गतो हृत्वा प्रेमहासावलोकनैः ॥ ५ ॥ कच्चित्कुरबकाशोकनागपुन्नागचम्पकाः ॥ रामानुजो मानिनीनामितो दर्पहरस्मितः ॥ ६ ॥ कच्चित्तुलसि कल्याणि गोविन्दचरणप्रिये ॥ सह त्वालिकुलैर्बिभ्रद्दृष्टस्तेऽतिप्रियोऽच्युतः ॥ ७ ॥ मालत्यदर्शि वः कच्चिन्मल्लिके जाति यूथिके ॥ प्रीतिं वो जनयन्यातः करस्पर्शेन माधवः ॥ ८ ॥ चूतप्रियालपनसासनकोविदारजम्ब्वर्कबिल्वबकुलाम्रकदम्बनीपाः ॥ येऽन्ये परार्थभवका यमुनोपकूलाः शंसन्तु कृष्णपदवीं रहितात्मनां नः ॥ ९ ॥ किं ते कृतं क्षिति तपो बत केशवाङ्घ्रिस्पर्शोत्सवोत्पुलकिताङ्गरुहैर्विभासि ॥ अप्यङ्घ्रिसम्भव उरुक्रमविक्रमाद्वा आहो वराहवपुषः परिरम्भणेन ॥ १० ॥ अप्येणपत्न्युपगतः प्रिययेह गात्रैस्तन्वन्दृशां सखि सुनिर्वृतिमच्युतो वः ॥ कान्ताङ्गसङ्गकुचकुङ्कुमरञ्जितायाः कुन्दस्रजः कुलपतेरिह वाति गन्धः

तिमीले कतै देख्यौ ? ॥ ५ ॥ हे कुरबक हे अशोक ! हे नाग ! हे पुन्नाग ! हे चम्पक ! आफ्नो मीठो हाँसोले मानिनीहरूको मान मर्दन गर्ने र बलरामका भाइ कृष्ण यता आए ? ॥ ६ ॥ हे कल्याणि तुलसी ! हे गोविन्दचरणप्रिये ! भ्रमर निकर समेत तिमीलाई धारण गर्ने आफ्ना प्रियतम कृष्णलाई देख्यौ ? हे मालति ! हे मल्लिके ! हे जाति ! हे यूथिके ! तिमीले माधवलाई देख्यौ ? ती आफ्ना करस्पर्शले तिमीलाई आनन्दित पार्दै यताबाट गए ? ॥ ७-८ ॥ हे रसाल ! हे प्रियाल ! हे पनस, हे कोविदार ! हे जामुन ! हे अर्क, हे बिल्व, हे कदम्ब ! हे नीम ! हे परोपकारको निम्ति नै जीवन धारण गर्ने यमुनातटवर्ती अन्य तरुवर हो ! हामी कृष्णको विरहमा अचेत भइरहेका छौं, तिमी हामीलाई बाटो देखाऊ ॥ ९ ॥ हे धरणि ! तिमीले यस्तो कुन तप गरेकी छौ, जो श्रीकृष्णको चरणस्पर्शले आनन्दित भएर तृण-लतादिकोरूपमा आफ्नो रोमाञ्च प्रकट गरिरहेकी छौ ?

तिम्रो यो उल्लास श्रीकृष्णको चरणस्पर्शले नै हो वा वामन भगवान्‌को पादकमलले हो अथवा त्यो भन्दा पनि पहिले वराहको अङ्गस्पर्शले हो ? ॥ १० ॥ ए सखी मृगी हो ! आफ्ना अङ्गको सौन्दर्यले तिम्रा नेत्रलाई प्रसन्न पार्दै श्रीकृष्ण आफ्नी प्रियतमासित यसैबाट गए ? किनकि यहाँ प्रियाका अङ्गसङ्ग तथा उनको कुचकुङ्कुमले रंजित कुलपति श्रीकृष्णको कुन्द कलीको मालाको मीठो गन्ध आइरहेछ ॥११॥ हे तरुवर हो ! जसको पछि-पछि तुलसीका गन्धको लोभी भ्रमर गइरहेछन् ती कृष्णले यौटा हातमा क्रीडाका लागि कमल धारण गरेका र अर्को हात प्रियाका काँधमा राखेर यहाँ डुल्दै आफ्नो प्रणयकटाक्षले तिम्रो वन्दनाको अभिनन्दन गरेका हुन् ? ॥१२॥ अर्की गोपिनी बोली–हे सखि हो ! यी लताहरूसित सोध। हेर, यी आफ्ना भुजाले वृक्षलाई आलिङ्गन गरेका छन्, तापनि भगवान्‌का नङको स्पर्श पाउनाले रोमाञ्चित भइरहेछन् ॥ १३ ॥ यसरी श्रीकृष्णको खोजीमा व्याकुल गोपिनीहरू उन्मत्त जस्तै प्रलाप गर्दै तद्रूप भएर भगवानका लीलाहरूको अनुकरण गर्नलागे॥१४॥ यौटी कृष्ण बनेकी गोपिनीले पूतना बनेकी अर्की गोपिनीको स्तन-पान गरी र यौटी बालक बनेकी

॥ ११ बाहुं प्रियांस उपधाय गृहीतपद्मो रामानुजस्तुलसिकालिकुलैर्मदान्धैः ॥ अन्वीयमान इह वस्तरवः प्रणामं किं वाभिनन्दति चरन्प्रणयावलोकैः ॥ १२ ॥ पृच्छतेमा लता बाहूनप्याश्लिष्टा वनस्पतेः ॥ नूनं तत्करजस्पृष्टा बिभ्रत्युत्पुलकान्यहो ॥ १३ ॥ इत्युन्मत्तवचो गोप्यः कृष्णान्वेषणकातराः ॥ लीला भगवतस्तास्ता ह्यनुचक्रुस्तदात्मिकाः ॥ १४ ॥ कस्याश्चित्पूतनायन्त्याः कृष्णायन्त्यपिबत्स्तनम् ॥ तोकायित्वा रुदत्यन्या पदाऽहञ्छकटायतीम् ॥ १५ ॥ दैत्यायित्वा जहारान्यामेका कृष्णार्भभावनाम् ॥ रिङ्गयामास वाप्यङ्घ्री कर्षन्ती घोषनिःस्वनैः ॥ १६ ॥ कृष्णरामायिते द्वे तु गोपायन्त्यश्च काश्चन ॥ वत्सायतीं हन्ति चान्या तत्रैका तु बकायतीम् ॥ १७ ॥ आहूय दूरगा यद्वत्कृष्णस्तमनुकुर्वतीम् ॥ वेणुं क्वणन्तीं क्रीडन्तीमन्याः शंसन्ति साध्विति ॥ १८ ॥ कस्यांचित्स्वभुजं न्यस्य चलन्त्याहापरा ननु ॥ कृष्णोऽहं पश्यत गतिं ललितामिति तन्मनाः ॥ १९ ॥ मा भैष्ट वातवर्षाभ्यां तत्त्राणं विहितं मया ॥ इत्युक्त्वैकेन हस्तेन यतन्त्युन्निदधेऽम्बरम् ॥ २० ॥ आरुह्यैका पदाक्रम्य शिरस्याहापरां नृप ॥ दुष्टाहे गच्छ जातोऽहं खलानां ननु दण्डधृक् ॥ २१ ॥ तत्रैकोवाच हे गोपा दावाग्निं पश्यतोल्बणम् ॥ चक्षूंष्याश्वपिदध्वं वो विधास्ये

गोपिनीले शकटासुर बनेकी अर्की गोपिनीलाई खुट्टाले हानेर पल्टाइदिई ॥ १५ ॥ यौटी गोपिनी तृणावर्त दैत्य बनी। त्यो कृष्ण बनेकी अर्कीलाई हरेर लगी। एक चाहिं आफ्नू नूपुरको शब्द गर्दै चार हात-खुट्टा टेकेर बामे सर्दै हिंड्नलागी ॥ १६ ॥ दुइटी कृष्ण र बलराम बने; अरु केही ग्वाल-बाल बने। तिनीहरूमध्ये यौटी कृष्णको अनुकरण गर्दै वत्सासुर बनेकी गोपिनीलाई र अर्कीले बकासुर बनेकी गोपिनीलाई मारे झैं गरे ॥ १७ ॥ फेरि अर्की गोपिनीले श्रीकृष्णको अनुकरण गरेर बाँसुरी बजाउँदै पर गएका गाई, बाछा आदि पशुहरूलाई डाक्ने क्रीडा गर्नथाली र अर्को 'स्याबास' भनेर उत्साह दिन थाली ॥ १८ ॥ यौटी सखीको काँधमा हात राखेर हिंड्न थाली र अर्की कृष्णमा मन दिएकी गोपिनीले अन्य गोपाङ्गनाहरूसित भनी–'हे मित्र हो ! म कृष्ण हुँ, तिमी मेरो मनोहर गतितर्फ हेर ॥ १९ ॥ हे व्रजवासी हो ! तिमीहरू वर्षा र वायुका डर नमान, मैले यसबाट जोगिने यत्न गरिसकेको छु'इति भनेर कृष्ण बनेकी गोपिनीले गोवर्धन-धारणको अभिनय गर्दै आफ्नू ओढ्ने फिंजाएर माथितिर उचाली ॥२०॥ हे राजन् ! यौटी गोपिनी कालिय बनेकी गोपिनीको

शिरमा खुट्टा राखेर उक्लिई र भन्नलागी–'ए दुष्ट सर्प ! तँ यहाँबाट हिँडिजा म दुष्टको दमन गर्न नै उत्पन्न भएको हुँ' ॥२१॥ यत्तिकैमा यौटी अर्की गोपिनी बोल्नलागी–हे गोप-गण हो ! उता हेर, भयङ्कर दावानल दन्किरहेछ । तिमीहरू आफाफना आँखा चिम्ल, म तिमीहरूलाई सहजै बचाउनेछु' ॥२२॥ यौटी अर्की गोपिनीलाई यशोदा बनेकी अर्की गोपिनीले फूलको मालाले ओखलमा बाँधिदिई । अनि त्यो सुनयनी गोपिनी दुवै हातले मुख ढाकेर भयको अभिनय गर्नलागी ॥ २३ ॥ यसरी कृष्णलीला गरिसकेपछि वृन्दावनका वृक्ष र लतादिसित कृष्णचन्द्रको ठेगान सोधी सोधी जाने गोपिनीहरूले एक स्थानमा भगवान्‌का चरण-चिह्न देखे ॥२४॥ अनि परस्पर भन्नलागे—हे सखि ! अवश्य नै यी ध्वजा, कमल, वज्र, अंकुश र यवादिका चिह्नले युक्त महात्मा नन्दनन्दनका नै चरण चिह्न ॥२५॥ तिनै चिह्न पैल्याउँदै ती अबलाहरूले अलि पर गएपछि उनकै चिह्नसित कुनै यौटी स्त्रीको पनि चरणचिह्न देखे । त्यो देखेर ती व्याकुल भएर परस्पर भन्न लागे–॥२६॥ 'जसरी ढोई हात्तीसित पछिलाग्छे, त्यसै गरी नन्दनन्दनसित तिनको काँधमा हात राखेर गएकी कुन

क्षेममञ्जसा ॥ २२ ॥ बद्धाऽन्यया स्रजा काचित्तन्वी तत्र उलूखले ॥ भीता सुदृक् पिधायास्यं भेजे भीतिविडम्बनम् ॥ २३ ॥ एवं कृष्णं पृच्छ-माना वृन्दावनलतास्तरून् ॥ व्यचक्षत वनोद्देशे पदानि परमात्मनः ॥ २४ ॥ पदानि व्यक्तमेतानि नन्दसूनोर्महात्मनः ॥ लक्ष्यन्ते हि ध्वजा-म्भोजवज्रांकुशयवादिभिः ॥२५॥ तैस्तैः पदैस्तत्पदवीमन्विच्छन्त्योऽग्रतोऽबलाः ॥ वध्वाः पदैः सुपृक्तानि विलोक्यार्ताः समब्रुवन् ॥२६॥ कस्याः पदानि चैतानि जायाया नन्दसूनुना ॥ अंसन्यस्तप्रकोष्ठायाः करेणोः करिणा यथा ॥ २७ ॥ अनयाऽऽराधितो नूनं भगवान्हरिरीश्वरः ॥ यन्नो विहाय गोविन्दः प्रीतो यामनयद्रहः ॥ २८ ॥ धन्या अहो अमी आल्यो गोविन्दाङ्घ्र्यब्जरेणवः ॥ यान्ब्रह्मेशो रमा देवी दधुर्मूर्ध्न्यघनुत्तये ॥ २९ ॥ तस्या अमूनि नः क्षोभं कुर्वन्त्युच्चैः पदानि यत् ॥ यैकापहृत्य गोपीनां रहो भुंक्तेऽच्युताधरम् ॥ ३० ॥ न लक्ष्यन्ते पदान्यत्र तस्या नूनं तृणा-ङ्कुरैः ॥ खिद्यत्सुजाताङ्घ्रितलामुन्निन्ये प्रेयसीं प्रियः ॥ ३१ ॥ अत्रावरोपिता कांता पुष्पहेतोर्महात्मना ॥ अत्र प्रसूनावचयः प्रियार्थे प्रेयसा कृतः ॥ प्रपदाक्रमणे एते पश्यतासकले पदे ॥ ३२ ॥ केशप्रसाधनं त्वत्र कामिन्याः कामिना कृतम् ॥ तानि चूडयता कांतामुपविष्टमिह ध्रुवम्

भाग्यमानी गोपिनीका यी चरण-चिह्न हुन् ! ॥२७॥ अवश्य नै उसले भगवान् कृष्णको आराधना गरेकी होली । यसै निम्ति त प्रसन्न भएर गोविन्दले हामीलाई छाडेर यसलाई आफूसित एकान्तमा लगेछन् ॥ २८ ॥ अहो सखी हो ! श्रीकृष्णका चरणकमलका ती रजःकण धन्य हुन्, जसलाई ब्रह्मा, शिव र लक्ष्मी पनि आफ्ना पाप नष्ट पार्न शिरमा राख्दछन्' ॥ २९ ॥ अर्की गोपिनी भन्न लागी–'जे भए पनि, यो जुन हामी सबैका सर्वस्व गोविन्दलाई एकान्तमा लगेर एक्लै तिनका अधरामृत पान गरिरहेकी छ । त्यस गोपिनीका उचालिएका चरणचिह्न हाम्रो चित्तमा क्षोभ उत्पन्न गरिरहेका छन्' ॥३०॥ अलि पर गएपछि त्यसका चरणचिह्न नदेखेर ती भन्नलागे–'हेर, यहाँ त्यस स्त्रीका चिह्न देखिन्नन् । यस्तो ज्ञात भइरहेको छ कि यहाँ आफ्नी प्रियाका सुकुमार चरणलाई घाँसका टुप्पाले कष्ट भएको देखेर हाम्रा प्राणप्रियले उसलाई आफ्नू काँधमा बोके होलान् ॥३१॥ यहाँ ती कृष्णले फूल टिप्नको निम्ति आफ्नी प्रियालाई तल झराले छन् यहाँ उसको निम्ति तिनले फूल टिपेछन् । बसैले हेर, तन्केर फूल टिपा यहाँ तिनका चरणको अग्रभागको मात्र चिह्न देखिन्छ ॥३२॥ यहाँ ती कामी कृष्णले

आफ्नी प्रियाको कपाल कोरिदिएछन् । उम्मा पारेका फूलले त्यसको केशपाशलाई विभूषित पार्नका लागि श्रीकृष्ण अवश्य यहाँ बसे हुनन्' ॥३३॥ हे राजन ! स्वयं आफूमै रमण गर्न भएका र निरन्तर आत्मरत भएर पनि भगवान् कृष्णले कामिनीहरूको दीनता र स्त्रीहरूको दुरात्मा देखाउन त्यहाँ वास्तवमा त्यस गोपिनीसित रमण गरेका थिए ॥ ३४ ॥ यस प्रकार

॥ ३३ ॥ रेमे तया चात्मरत आत्मारामोऽप्यखण्डितः ॥ कामिनां दर्शयन्दैन्यं स्त्रीणां चैव दुरात्मताम् ॥ ३४ ॥ इत्येवं दर्शयन्त्यस्ताश्चेरुर्गोप्यो विचेतसः ॥ यां गोपीमनयत्कृष्णो विहायान्याः स्त्रियो वने ॥ ३५ ॥ सा च मेने तदाऽऽत्मानं वरिष्ठं सर्वयोषिताम् ॥ हित्वा गोपीः कामयाना

बौलाहीॐ जस्ती भएर कृष्णलाई खोज्दै ती गोपिनी वनमा भौंतारिन थाले । यता कृष्ण सबै गोपिनीलाई वनमा छाडेर जुन गोपिनीलाई एकान्तमा लिएर गएका थिए, उसले ठानी सबै गोपिनीहरूमा मनै श्रेष्ठ हुँ, त्यसैले त अरु सबै कामातुरा कामिनीहरूलाई छाडेर मेरा प्राणप्रियले मेरो नै सम्मान गरे ॥३५॥३६॥ यसै कारण त्यो प्रेम-गर्विता गोपाङ्गनाले वनमा

---

ॐ यौटी उन्मत्त गोपिनीको प्रलाप—हे मनमोहन ! मबाट अपराध भयो । मैले आफूलाई स्वच्छ राख्दीनथें, अंगराग लगाउन्नथें, लामा र राम्रा कपालको तिम्रो वेणीमा लट्टा परेका थिए । तिनमा तेल हाल्न र कोर्न बाकि देएकी थिए । आँखामा गाजल लगाउन्नथें । हरे, यस्तो मैले किन गरें ? यिनलाई सिंगार्ने तपाईं पूरा अधिकार छ ? यो सबै त तिम्रा वस्तु थिए र अझ पनि छन् । यी तिम्रा मनपरेका वस्तु हुन् । अतः मैले यी सबै सुरक्षित राख्नु पर्ने थियो । तिमी आफ्ना वस्तु छाडेर गयौ, रुगै लागेनौ, मलाई सुम्पेर गएपछि के मैले यसलाई नष्ट हुन दिनु मेरो धर्म हो ? होइन, प्रियतम ! मेरो यो धर्म होइन । मैले बल्ल बुझें । तिमी जुन बेला आउने छौ, थाहा छैन, आएर आफ्ना वस्तुहरू यस अवस्थामा देखेर मलाई के भन्ने छौ ! हेर, प्रियतम ! आज मैले राम्ररी स्नान गरेकी छु, तिमीलाई मनपर्ने गोरो, राम्रो र चिल्लो अंग बनाएकी छु, सुगन्धित अङ्गराग पनि लगाएकी छु । हेर माधव ! मेरो यो वस्त्र कति राम्रो छ ! मेरो आजको यो वेश-भूषा देखन पाए मन्दश्वेत–श्वेत र सुगन्धित पुष्पले युक्त मेरो वेणी कस्तो राम्रो देखिँदैछ ! तर यो सबै त गरिसकें, अब के गरूँ ? हेर ! कतै तिमी कदम्बमा चढेर मीठो स्वरमा मुरली बजाउँथ्यौ, अहिले पनि बसेकै छौ कि के बाट ! यहाँ बसेर के गर्नु छ र बरू उतैतिर जान्छु । घरमा काम नगर्ने भनेर कहलिएकी छु । पति र सासूले हजारौं सुन्ने त पहिले नै बानि परिसकेको छ । अब कहिले काहीं चुटाई पनि खानुपर्दछ । त्यसको पनि मलाई चिन्ता छैन । चुटाई खाँदा म कल्पना गर्दछु—चंचल मोहन मेरो पिठिउँमा बाँसुरीले थाप दिदैछन् । हरे ! कैही पनि नसोच प्रियतम ! अनि थाहै पाउन्न—यो चुट्ने मानिस कहिले फर्केर गयो । अँ, यौटा कुरा सम्झें—मलाई यसरी सुसज्जित देखेर सासूलाई रिस उठ्छ कि यदि यस्तो बखतमा कुटाई खानुपर्‍यो भने तिम्रा प्रिय रूपको अपमान हुनेछ । यस निमित्त बिस्तारै हिड्नु पर्‍यो । अहिले सासू पिँढी बनाउँदै छन् । यो के हो ? यो के हो ? सबै बना भित्र किन हेरिरहेका छन् ? मैले कुनै नयाँ कुरा गरेकी छु र ? कैही दिन अघि त दिनहुँ यस्तै शृङ्गार गर्दथें । अनि आज के कुरा भयो र सबै उचक परेर हेरिरहेका छन् ? हेर्न देऊ । मलाई छिट्टै पाइला चालेर हिँडिदिनु पर्दछ । दुष्ट भ्रमर ! तँ किन पछिलागेको ? सबैका आँखा छलिसकें भनेको तँ आइपुगिस् । तलाई दास बोर्दछु—एक छिनको निमित्त मानिदे । यहाँ जान्छु, यदि प्रिय भेटिए भने पछारि कराएस् । तर तँ किन मान्दैनस्, कालो कुटिल भ्रमरा नै त होस् । तँ निर्दयताको प्रत्यक्ष रूप होस् । दिनभरि अनेक कोपिला माथि गुनगुन गरेर झूठो प्रेम देखाउछस् । ती तँलाई बुझ्न सक्दैनन्, तेरो झूठो प्रेममा भुलिन्छन् र आफ्नो सर्वस्व तँलाई अर्पण गरिदिन्छन् । अनि तँ चाहिं रस लियो, भाग्यो । विचरा कोपिला आफ्नो सर्वस्व गुमाएर हात माड्दै रहन्छन् । जो दिनभरि यसै गरिरहन्छ, त्यसको चित्तमा दया कहाँ ? लौ, म कान थुन्दछु । त्यो कदम्बको वृक्ष पनि नजीकै छ । तँ गइनस् ? तँ पनि निष्ठुरलाई हेर्न जाने हो ? हुन्छ, हिड् तर ममन्दा अघि परै बस् । मेरो कपालबाट निस्केको सुगन्ध झुठो नपार । वृक्ष त देखिन्छ, तर पीताम्बर देखिदैन । मित्र भ्रमर ! सुन, तँ माथि गएर हेरेर आइज—मेरा चित्तचोर कुन हाँगामा छन् । तँ गइनस् ! गयो, मसंग नै हिड् छुट । हरे ! मोहन देखिन्नन् । कुनै पनि हाँगामा छैनन् । हरे ! मेरो त्यस्तो भाग्य छैन भन्ने पहिल्यै जान्दथें । हेर प्रियतम ! म कसरी सिंगारिएर आएकी छु । हरे ! कसलाई देखाऊँ ! पापी भ्रमर ! अब त मेरो प्राण छाडिदे । हेर, म कति असहाय छु, जो पापी भ्रमर पनि मेरो कुरा सुन्दैन । हे भ्रमर ! दया गर ।'

पुगेर भगवान् कृष्णसित भनी–'हे प्रियतम ! अब त म थाकें, हिंड्न सक्किन । तिम्रो जहाँ जाने इच्छा छ, मलाई काँधमा बोकेर लैजाऊ' ॥ ३७ ॥ गोपिनीका यस्ता सुन्दर भगवानले आज्ञा भयो–'हुन्छ आऊ, मेरो काँधमा बस' यति सुनेर जसै त्यो काँधमा बस्न तयार भई, तसै भगवान् अन्तर्धान हुनुभयो, अनि त्यो सुन्दरी मनमनै पछितो गर्दै भन्नलागी– ॥३८॥ हा नाथ ! हा रमण ! प्रियतम ! हे महाबाहो ! तिमी कहाँ छौ–कता छौ ? प्रियतम ! यो दीन दासीको नजीकै आएर मद्दत दर्शन देऊ' ॥ ३९ ॥ त्यसै बेला भगवानका पाइला मार्ग प्रियतमको वियोगले व्याकुल र अचेत अन्य गोपिनीहरू पनि त्यसैकहाँ आइपुगे ॥ ४० ॥ उसको द्वारा कृष्णले सम्मान गरेको र आफ्नै कुटिलताले तिरस्कृत भएका समाचार सुनेर ती सबैलाई ठूलो आश्चर्य भयो ॥४१॥ यस प्रकार जबसम्म वनमा चन्द्रमाको प्रकाश थियो, तबसम्म ती गोपिनीहरू कृष्णलाई खोज्दै रहे र अन्धकार फैलिन लागेको देखेर निराश भई फर्किए ॥ ४२ ॥ श्रीकृष्णमै मन लागि रहनाले, उनकै चर्चा गरिरहनाले उनैका चेष्टाको अनुकरण गर्नाले र उनकै ध्यानमा लीन लीन हुनाले उनकै गुणगान गर्दै रहं । तिनलाई

मामसौ भजते प्रियः ॥ ३६ ॥ ततो गत्वा वनोद्देशं दृप्ता केशवमब्रवीत् ॥ न पारयेऽहं चलितुं नय मां यत्र ते मनः ॥ ३७ ॥ एवमुक्तः प्रियामाह स्कन्ध आरुह्यतामिति ॥ ततश्चान्तर्दधे कृष्णः सा वधूरन्वतप्यत ॥ ३८ ॥ हा नाथ रमण प्रेष्ठ क्वासि क्वासि महाभुज ॥ दास्यास्ते कृपणाया मे सखे दर्शय सन्निधिम् ॥ ३९ ॥ अन्विच्छन्त्यो भगवतो मार्गं गोप्योऽविदूरतः ॥ ददृशुः प्रियविश्लेषमोहितां दुःखितां सखीम् ॥ ४० ॥ तया कथितमाकर्ण्य मानप्राप्तिं च माधवात् ॥ अवमानं च दौरात्म्याद्विस्मयं परमं ययुः ॥ ४१ ॥ ततोऽविशन् वनं चन्द्रज्योत्स्ना यावद्विभाव्यते ॥ तमः प्रविष्टमालक्ष्य ततो निववृतुः स्त्रियः ॥ ४२ ॥ तन्मनस्कास्तदालापास्तद्विचेष्टास्तदात्मिकाः ॥ तद्गुणानेव गायन्त्यो नात्मागाराणि सस्मरुः ॥ ४३ ॥ पुनः पुलिनमागत्य कालिन्द्याः कृष्णभावनाः ॥ समवेता जगुः कृष्णं तदागमनकांक्षिताः ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे रासक्रीडायां कृष्णान्वेषणं नाम त्रिंशोऽध्यायः ॥ ३० ॥

गोप्य ऊचुः ॥ जयति तेऽधिकं जन्मना व्रजः श्रयत इन्दिरा शश्वदत्र हि ॥ दयित दृश्यतां दिक्षु तावकास्त्वयि धृतासवस्त्वां विचिन्वते ॥ १ ॥ शरदुदाशये साधु जातसत्सरसिजोदर श्रीमुषा दृशा ॥ सुरतनाथ तेऽशुल्कदासिका वरद निघ्नतो नेह किं वधः ॥२॥ विषजलाप्ययाद्व्यालराक्षसाद्वर्षमारु-

आफ्नू घरको पनि सम्झना रहेन ॥४३॥ श्रीकृष्णको आगमनको निम्ति उत्सुक सबै गोपिनी उनकै स्मरण गर्दै फेरि यमुनाको बालुवामा फर्के र सबै मिलेर उनकै गुणगान गर्नलागे ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायां त्रिंशोऽध्यायः ॥३०॥

( गोपिका स्तुति ) गोपिनी भन्दछन्–हे प्रियतम ! यो व्रजभूमि तिमीले जन्म लिनाले नै ठूली र धन्य मानिएकी छन् र यसै निम्ति लक्ष्मी पनि यहाँ सदा निवास गर्दछिन् एकमात्र तिम्रो निम्ति नै जीवन धारण गर्ने हामी तिम्रा दासीहरू सबै दिशाहरूमा खोजिरहेका छौं । तिमी हामीलाई आफ्नू मनोहर दर्शन देऊ ॥१॥ हे सुरतनाथ ! तिमी शरत्कालीन सरोवरमा उत्पन्न सुन्दर कमलका मध्य भागको शोभा हरण गर्ने आफ्ना नयनको तीखो प्रहारले हामी सबै विना मूल्य किनिएका दासीहरूलाई मारेर गयौ । हे वरदायक !

के यो खीचन चरित्र ? ॥१॥ हे नरपते ! तिमीले कालीयको विषयुक्त जलबाट हुने मृत्यु, अजिङ्गररूपी अघासुर, वर्षा, आँधी, बिजुली, दावानल, वत्सासुर र मयासुरको छोरो व्योमासुर तथा अरु सबै संकटबाट हाम्रो बारम्बार रक्षा गरेका छौ। तिमी केवल यशोदाका पुत्र होइनौ वरु सबै देहधारीहरूका अन्तरात्माका द्रष्टा हौ। हे सखे ! ब्रह्माको प्रार्थनाले तिमी संसारको रक्षा गर्नका लागि यदुकुलमा जन्मियौ ॥ ३-४ ॥ हे यदुश्रेष्ठ ! जो जन संसारको भयले डराएर तिम्रा कोमल चरणको शरणमा प्राप्त भएका छन्, तिनलाई तिमीले अभय पारिदिएका छौ। हे कान्त ! जसरी तिमीले लक्ष्मीको हात समाएका थियौ, आफ्नू त्यो कामपूरक करकमल हाम्रो शिरमा राख ॥५॥ हे व्रजवासीहरूको कष्ट निवारण गर्ने यदुवीर ! तिम्रो मनोहर हास्य भक्तजनको गर्व नष्ट पारिदिन्छ। हामी तिम्रा दासी हौं। हे सखे ! तिमी हामीलाई स्वीकार गर। हामी अबलाहरूलाई आफ्नू मनोहर मुखकमल देखाऊ ॥६॥ जो शरणागत जीवका पाप नष्ट पार्ने र वनमा पशुका पछि पछि डुल्ने तथा जसलाई तिमीले कालियनागको शिरमा अंकित गरेका थियौ तिनै पवित्र चरणकमल हाम्रा

ताद्वैद्युतानलात् ॥ वृषमयात्मजाद्विश्वतो भयादृषभ ते वयं रक्षिता मुहुः ॥ ३ ॥ न खलु गोपिकानन्दनो भवानखिलदेहिनामन्तरात्मदृक् ॥ विखन-सार्थितो विश्वगुप्तये सख उदेयिवान्सात्वतां कुले ॥४॥ विरचिताभयं वृष्णिधुर्य ते चरणमीयुषां संसृतेर्भयात् ॥ करसरोरुहं कान्त कामदं शिरसि धेहि नः श्रीकरग्रहम् ॥ ५ ॥ व्रजजनार्तिहन्वीरयोषितां निजजनस्मयध्वंसनस्मित ॥ भज सखे भवत्किङ्करीः स्म नो जलरुहाननं चारु दर्शय ॥ ६ ॥ प्रणतदेहिनां पापकर्शनं तृणचरानुगं श्रीनिकेतनम् ॥ फणिफणार्पितं ते पदाम्बुजं कृणु कुचेषु नः कृन्धि हृच्छयम् ॥ ७ ॥ मधुरया गिरा वल्गुवाक्यया बुधमनोज्ञया पुष्करेक्षण ॥ विधिकरीरिमा वीर मुह्यतीरधरसीधुनाप्याययस्व नः ॥ ८ ॥ तव कथामृतं तप्तजीवनं कविभिरीडितं कल्मषापहम् ॥ श्रवणमङ्गलं श्रीमदाततं भुवि गृणन्ति ते भूरिदा जनाः ॥ ९ ॥ प्रहसितं प्रिय प्रेमवीक्षणं विहरणं च ते ध्यानमङ्गलम् ॥ रहसि संविदो या हृदिस्पृशः कुहक नो मनः क्षोभयन्ति हि ॥ १० ॥ चलसि यद्व्रजाच्चारयन्पशून्नलिनसुन्दरं नाथ ते पदम् ॥ शिलतृणाङ्कुरैः सीदतीति नः कलिलतां मनः कान्त गच्छति ॥ ११ ॥ दिनपरिक्षये नीलकुन्तलैर्वनरुहाननं बिभ्रदावृतम् ॥ घनरजस्वलं दर्शयन्मुहुर्मनसि नः स्मरं वीर यच्छसि ॥ १२ ॥ प्रणतकामदं

स्तनमा राखेर हाम्रो कामाग्नि निभाइदेऊ ॥ ७ ॥ हे कमलनयन ! हे वीर ! विद्वानको मनलाई पनि मनपर्ने र मनोहर पदले युक्त तिम्रो वाणीले हामी तिम्रा दासीहरू मोहित भइरहेका छौं। तिमी आफ्नो अधरामृत पिलाएर हामीलाई जीवन-दान देऊ ॥ ८ ॥ हे प्रभो ! जुन सन्तप्त जीवलाई जीवन दिने, कविजन–कीर्तित, पापनाशिनी, सुन्नाले नै मङ्गल पारिदिने र अत्यन्त शान्तिदायिनी तिम्रो अमृतमयी कथाहरूको संसारमा प्रचार गर्दछन्, तिनै सबैभन्दा दानी हुन् ॥ ९ ॥ हे कपटमा कुशल प्रियतम ! ध्यान मात्रले पनि मङ्गल गर्ने तिम्रो मधुर हास्य, प्रेमपूर्ण हेराई, क्रीडाहरू र एकान्तको हृदयहारिणी ठट्टाको सम्झना भएर हाम्रो चित्त क्षुब्ध पारिरहेछ ॥१०॥ हे नाथ ! तिमी गाईहरू चराउनको निम्ति प्रस्थान गर्दछौ तब तिम्रो कमल समान कोमल र सुन्दर चरण तृण, ढुङ्गा र काँडाले व्यथित हुँदा हुनन्। यस चिन्ताले हाम्रो चित्त उद्विग्न भएर आउँछ ॥ ११ ॥ हे वीर ! दिन ढल्केपछि जब तिमी घर फर्कन्छौ, तब धूलि धूसरित र नीलो अलकावलीले ढाकेको आफ्नू मनोहर मुखारविन्द हामी व्रजवासीहरूलाई देखाएर हामीमा कामवासना उत्पन्न गरिदिने गर्दछौ ॥ १२ ॥

हे रमण ! हे मनोव्यथानाशक ! शरणागत भक्तजनका कामनाहरू पूर्ण पार्ने, लक्ष्मीद्वारा पूजित, पृथ्वीलाई विभूषित पार्ने र आपत्तिमा स्मरण गरिने योग्य तिम्रो त्यो परम शान्तिप्रद चरणकमल तिमी हाम्रा तप्त स्तनमा राख ॥ १३ ॥ हे वीर ! कामसुख बढाउने, शोक निवारण गर्ने, बजिरहेको प्रिय बाँसुरी द्वारा राम्ररी चुम्बित र मनुष्यहरूका आसक्तिलाई बिर्साइदिने आफ्नू मधुर अधरामृत हामीलाई पिलाऊ ॥ १४ ॥ जब तिमी दिउँसो वनमा डुल्न जान्छौ तब तिमीलाई हेर्न नपाउनाले हामी एकेक क्षण युग समान मान्न थाल्दछौं । फेरि सायंकालमा जब हामी गुडाकेश अलकावलीले मण्डित तिम्रो मुख देख्दछौं तब हामीलाई परेला बनाउने ब्रह्मा जड झैं लाग्न थाल्दछन् ॥ १५ ॥ हे अच्युत ! हामी गानविद्या जान्ने कामिनीहरू तिम्रो गानले मोहित भएर आफ्ना पति, पुत्र, कुटुम्ब, भ्राता र बन्धुहरू छाडेर तिम्रो नजीक आएका छौं । हे कपटी ! यस प्रकार रात्रिमा आफैं आएका हामी नारीहरूलाई तिमी बाहेक अरु कसले त्याग्न सक्ला ? ॥ १६ ॥ हे प्रिय ! कामोद्दीपक तिम्रो एकान्तमा गरिएको ठट्टा, मधुर हाँसो, वक्रदृष्टि र मुखारविन्द,

पद्मजार्चितं धरणिमण्डनं ध्येयमापदि ॥ चरणपङ्कजं शन्तमं च ते रमण नः स्तनेष्वर्पयाधिहन् ॥ १३ ॥ सुरतवर्धनं शोकनाशनं स्वरितवेणुना सुष्ठु चुम्बितम् ॥ इतररागविस्मारणं नृणां वितर वीर नस्तेऽधरामृतम् ॥ १४ ॥ अटति यद्भवानह्नि काननं त्रुटिर्युगायते त्वामपश्यताम् ॥ कुटिल- कुन्तलं श्रीमुखं च ते जड उदीक्षतां पक्ष्मकृद्दृशाम् ॥ १५ ॥ पतिसुतान्वयभ्रातृबान्धवानतिविलङ्घ्य तेऽन्त्यच्युतागताः ॥ गतिविदस्तवोद्गीत- मोहिताः कितव योषितः कस्त्यजेन्निशि ॥ १६ ॥ रहसि संविदं हृच्छयोदयं प्रहसिताननं प्रेमवीक्षणम् ॥ बृहदुरः श्रियो वीक्ष्य धाम ते मुहुरतिस्पृहा मुह्यते मनः ॥ १७ ॥ व्रजवनौकसां व्यक्तिरङ्ग ते वृजिनहन्त्र्यलं विश्वमङ्गलम् ॥ त्यज मनाक्च नस्त्वत्स्पृहात्मनां स्वजनहृद्रुजां यन्निषूदनम् ॥१८॥ यत्ते सुजातचरणाम्बुरुहं स्तनेषु भीताः शनैः प्रिय दधीमहि कर्कशेषु ॥ तेनाटवीमटसि तद्व्यथते न किंस्वित् कूर्पादिभिर्भ्रमति धीर्भवदायुषां नः ॥ १९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे रासक्रीडायां गोपीगीतं नामैकत्रिंशोऽध्यायः ॥ ३१ ॥

श्रीशुक उवाच ॥ इति गोप्यः प्रगायन्त्यः प्रलपन्त्यश्च चित्रधा ॥ रुरुदुः सुस्वरं राजन्कृष्णदर्शनलालसाः ॥१॥ तासामाविरभूच्छौरिः स्मयमानमु-

प्रेम र सम्पूर्ण हेराई र लक्ष्मीको निवासस्थान विशाल वक्षःस्थल देखेर हामीलाई तिम्रो सामीप्यको इच्छा हुन्छ र हाम्रो मन बारम्बार मोहित हुन थाल्दछ ॥ १७ ॥ हे प्रिय ! तिम्रो अवतार सबै व्रजवासीहरूको दुःख टार्न र संसारको कल्याण गर्नका लागि भएको हो ! हाम्रो मन तिम्रो निम्ति साह्रै व्यग्र छ । हामीलाई कुनै यस्तो औषधि देऊ, जसले हाम्रो हृदयलाई शान्त पार्न सकोस् ॥ १८ ॥ हे प्रियतम ! तिम्रा जुन सुकुमार चरणकमललाई हामी डराई-डराई बिस्तारै आफ्ना कठोर कुचमा राख्दछौं, तिनै चरणले तिमी वनवनै डुल्दा काँढा, ढुङ्गा आदिले केही कष्ट हुँदैन ? तिम्रो निम्ति नै जीवन धारण गर्ने भएका हामी अबलाहरूको बुद्धि यही विचार गरेर भ्रान्त भइरहेको छ ॥ १९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकरकृत 'बालिग्री' भाषाटीकायां एकत्रिंशोऽध्यायः ॥३१॥

( श्रीकृष्ण प्रकट भएर तिनलाई आश्वासन दिनु ) शुकदेव भन्नुहुन्छ—हे राजन् ! यसरी गुणगान र प्रलाप गर्दै ती कृष्ण दर्शनको लालसाले विह्वल भएर रुन लागे

। १ ॥ त्यस बेला कामदेवका मन पनि व्यथित पार्ने भगवान् पीताम्बर र वनमाला धारण गरेर मुसु-मुसु हाँस्तै तिनका सामुन्ने प्रगट भए ॥ २ ॥ आफ्ना प्रियतमलाई सामुन्ने देखेर व्रजबालाका नेत्र विकसित भए र ती सबै एकैपल्ट जुरुक्क उठेर ठिङ्ग उभिए, जस्तै प्राण फर्कन्दा शरीर उठेर बस्तछ ॥३॥ तीमध्ये यौटीले प्रसन्न भएर आफ्ना हत्केलाले उनको करकमल समाती । अर्कीले उनको चन्दन-चर्चित उनको बाहु आफ्नु काँधमा राखी ॥४॥ कुनै कृशाङ्गीले उनले चपाएको पान थापी । अर्की विरहसन्तप्ता गापीले आफ्ना कुचमा उनका चरणकमल टाँसी ॥ ५ ॥ अर्की प्रणयकोपले आफ्ना धनुष झैं बाँगा भृकुटी उचालेर दाँतले ओंठ थिची कटाक्ष बाणले हान्दै उनैतिर एकहरो दृष्टिले हेर्नलागी ॥ ६ ॥ अर्की यौटी निर्निमेष दृष्टिले उनको मुखकमल यसरी हेरी, जस्तै भक्तजन भगवानका चरण जति हेरे पनि अघाउन्नन्, त्यस्तै त्यो बारम्बार प्रियको मुखामृत पान गरेर पनि तृप्त हुन सकिरहे।ी थिइन ॥ ७ ॥ यौटीले भगवान्को मधुर मूर्ति आँखाका प्यालबाट हृदयमा लगेर आँखा चिम्ली । मनमनै आलिङ्गन गर्नाले त्यसको शरीरमा रोमाञ्च भएर आयो र त्यो योगीको

खाम्बुज ॥ पीताम्बरधरःस्रग्वी साक्षान्मन्मथमन्मथः ॥२॥ तं विलोक्यागतं प्रेष्ठं प्रीत्युत्फुल्लदृशोऽबलाः ॥ उत्तस्थुर्युगपत्सर्वास्तन्वः प्राणमिवागतम् ॥३॥ काचित्कराम्बुजं शौरेर्जगृहेऽञ्जलिना मुदा ॥ काचिद्दधार तद्बाहुमंसे चन्दनभूषितम् ॥४॥ काचिदञ्जलिनाऽगृह्णात्तन्वी ताम्बूलचर्वितम् ॥ एका तदङ्घ्रिकमलं सन्तप्ता स्तनयोरधात् ॥५॥ एका भ्रुकुटिमाबध्य प्रेमसंरम्भविह्वला ॥ घ्नतीवैक्षत्कटाक्षेपैः संदष्टदशनच्छदा ॥६॥ अपराऽनिमिषद्दृग्भ्यां जुषाणा तन्मुखाम्बुजम् ॥ आपीतमपि नातृप्यत्सन्तस्तच्चरणं यथा ॥ ७ ॥ तं काचिन्नेत्ररन्ध्रेण हृदि कृत्य निमील्य च ॥ पुलकाङ्ग्युपगुह्यास्ते योगीवानन्दसम्लुता ॥ ८ ॥ सर्वास्ताः केशवालोकपरमोत्सवनिर्वृताः ॥ जहुर्विरहजं तापं प्राज्ञं प्राप्य यथा जनाः ॥९॥ ताभिर्विधूतशोकाभिर्भगवानच्युतो वृतः ॥ व्यरोचताधिकं तात पुरुषः शक्तिभिर्यथा ॥ १० ॥ ताः समादाय कालिन्द्या निर्विश्य पुलिनं विभुः ॥ विकसत्कुन्दमन्दारसुरभ्यनिलषट्पदम् ॥ ११ ॥ शरच्चन्द्रांशुसन्दोहध्वस्तदोषातमः शिवम् ॥ कृष्णाया हस्ततरलाचितकोमलवालुकम् ॥ १२ ॥ तद्दर्शनाह्लादविधूतहृद्रुजो मनोरथान्तं श्रुतयो यथा ययुः ॥ स्वैरुत्तरीयैः कुचकुङ्कुमाङ्कितैरचीक्लृपन्नासनमात्मबन्धवे ॥ १३ ॥ तत्रोपविष्टो भगवान्स ईश्वरो योगेश्वरान्तर्हृदि

समान परमानन्दमा निमग्न भइ ॥ ८ ॥ जस्तै मुमुक्षुजन कुनै ब्रह्मवेत्तालाई पाएर सांसारिक तापबाट मुक्त हुन्छन्, कृष्णदर्शनको उल्लासले प्रसन्न भएर समस्त गोपाङ्गनाको विरहताप हरायो ॥ ९ ॥ हे राजन् ! ती शोकहीन सुकुमारीहरूले घेरिएर श्रीकृष्ण यस्तो शोभित भए जस्तै आफ्ना शक्तिले घेरिएर पुराणपुरुष परमात्मा शोभित हुन्छन् ॥ १० ॥ त्यसपछि भगवान कृष्ण ती सबै व्रजसुन्दरीहरूलाई लिएर यमुनाको किनारमा पुगे । त्यहाँ फक्रेका कुन्द र मन्दारका पुष्पले सुगन्धित वायु चलिरहेको थियो र त्यसैले मदमत्त भ्रमर यता-उता उडिरहेका थिए ॥ ११ ॥ शरत्कालका कमनीय चन्द्रकिरणले अन्धकार हराउनाले त्यो स्थान रमणीक भइरहेको थियो र यमुनाको कररूपी तरङ्गले त्यहाँ त्यो सुकोमल बालुवा बछ्याइदिएको थियो ॥ १२ ॥ कृष्णदर्शनको आनन्दले गोपिनीका हृदयको ताप शान्त भयो, ती ज्ञानकाण्डका श्रुतिहरू झैं पूर्णकाम भए । तिनले आफ्ना प्रियतम कृष्णलाई बस्नको निम्ति आफ्ना कुच-कुङ्कुममण्डित दुकूलको आसन बनाई बछ्याइदिए ॥ १३ ॥ योगीका अन्तःकरणमा निवास गर्ने भगवान् कृष्णचन्द्र